# अभिव्यक्ति

दुईमहिने सामान्य साहित्यिक पत्रिका

वर्ष- ५०/अङ्क- १/पूर्णाङ्क- २००/वैशाख-जेठ- २०७६



अभिव्यक्ति अड्डा

**अभिव्यक्ति परिसर**

पम्बु मार्ग, गौरीनगर, चाबेल, कामपा– ८

फोन : ४११४९८७

इमेल : avibyakti@gmail.com (प्रितिमा मात्र)

वेब : www.abhibyakti.ml

**आवरण**

प्राञ्जल घिमिरे

मुद्रक : बगलामुखी अफसेट प्रेस– कोपुण्डोल, ललितपुर ५५२००९९

प्रकाशक : नगेन्द्रराज शर्मा– अभिव्यक्ति परिसर, पम्बु मार्ग, गौरीनगर, चाबेल- ८

शुल्क :

रु.३००/–

भारतमा– भा.रु.२५०/–

यस अङ्कका सम्पूर्ण सामग्री अभिव्यक्तिका पुराना अङ्कहरूबाट लिइएका हुन्

## पूर्णाङ्क – गीत/गजल/कविता ९ - ७८

## कथा/लघुकथा ७९ - १५२

## लेख/निबन्ध/संस्मरण १५३ - २५५



## पर्यावलोकन २५६ - २७०



## केही सम्पादकीय २७१ - २८३



## अन्य स्तम्भहरु
## हास्य व्यंग्य २८४ - २९५



## साभार २९६ - ३०८

## जमघटहरुबाट



## पुरानो पातो ३०९ - ३१०



## अन्तर्वार्ता ३११-३२४



## मन्तव्य/शुभकामना ३२५ ३८९

# अभिव्यक्ति अक्षय कोष

अभिव्यक्ति'को स्थायित्वका लागि 'अभिव्यक्ति अक्षय कोष' स्थापना गरी कोषवृद्धिका निमित्त सक्षम/इच्छुक अभिव्यक्तिप्रेमी आफन्तहरूसँग सहयोगको अपेक्षा गरिएको व्यहोरा पूर्णाङ्क १४९ तथा १५७ को सम्पादकीयमा उल्लिखित छ । हालसम्म प्राप्त सहयोगको विवरण पारदर्शिताका लागि प्रस्तुत गरेकाछौं ।

संस्थापकहरूबाट

| | |
|---|---|
| जीवा लामिछाने | रु.१,००,०००/- |
| नगेन्द्रराज शर्मा | रु.१,००,०००/- |

सहयोगीहरूबाट

| | |
|---|---|
| १. डा. श्री ध्रुवचन्द्र गौतम- महाराजगञ्ज, काठमाडौं | रु.५,०००/- |
| २. श्री ध्रुव सापकोटा- बानेश्वर, काठमाडौं | रु.५,०००/- |
| ३. श्री पवन आलोक- डिल्लीबजार, काठमाडौं | रु.१५,०००/- |
| ४. श्री जगदीश घिमिरे- चोभार, काठमाडौं | रु.१,००,०००/- |
| ५. श्री साम्ब ढकाल- हेटौंडा, मकवानपुर | रु.५,०००/- |
| ६. श्री रमेश गोर्खाली- वीरगञ्ज, पर्सा | रु.५,०००/- |
| ७. श्री रामेश्वर जलन- बुङ्मती, ललितपुर | रु.५,०००/- |
| ८. श्री रामबाबु घिमिरे- रत्ननगर, चितौन | रु.५,०००/- |
| ९. श्री धनराज गिरी- बछौली, सौराहा, चितौन | रु.१०,०००/- |
| १०. श्रीमती रत्नश्री श्रेष्ठ- त्रिपुरेश्वर, काठमाडौं | रु.५,०००/- |
| ११. श्री शेखर गिरी- सिनामङ्गल, काठमाडौं | रु.१०,०००/- |
| १२. श्री शर्मिला खड्का, अनामनगर, काठमाडौ | रु.५०००/- |
| १३. श्री विनयकुमार श्रेष्ठ- मस्को, रुस | रु.१,००,०००/- |
| १४. श्री मनोज न्यौपाने, विराटनगर,मोरङ | रु.५,०००/- |
| १५. श्री वियोगी बुढाथोकी- हात्तीगौंडा, काठमाडौं | रु.५,१००/- |
| १६. श्री राजेश उपाध्याय, चण्डोल, काठमाडौं | रु.२५,०००/- |
| १७. श्री सपिला राजभण्डारी- मस्को, रुस | रु.३५,०००/- |
| १८. डा. श्री वद्री के.सी.- मस्को, रुस | रु.३५,०००/ |
| १९. श्री माया ठकुरी- धोबीघाट, ललितपुर | रु.५,०००/- |
| २०. श्री आर. आर. चौलागाईं- हेटौंडा, मकवानपुर | रु.१०,०००/- |
| २१. श्रीमती विष्णु ओझा (चौलागाईं)- हेटौंडा, मकवानपुर | रु.१०,०००/- |
| २२. सुश्री अभिलाषा चौलागाईं- ड्युसलडोफ, जर्मनी | रु.१०,०००/- |
| २३. श्री अभियान चौलागाईं- सिड्नी, अस्ट्रेलिया | रु.१०,०००/- |
| २४. श्री ... ... ... (नाम गोप्य)- काठमाडौं | रु.२०,०००/- |
| २५. डा. श्री केशवप्रसाद उपाध्याय- सरस्वतीनगर, काठमाडौं | रु.५,०००/- |
| २६. श्री नृपेन्द्रसिंह केसी- डिल्लीबजार, काठमाडौं | रु.२०,०००/- |
| २७. श्रीमती सरिता उप्रेती खतिवडा- कालिकास्थान | रु.१,००,०००/- |
| २८. श्री बाजुराम पौडेल– जोरपाटी, काठमाडौं- ६ | रु.५,०००/- |
| २९. श्री विष्णुबहादुर सिंह– जुकेना- ६,अर्घाखाँची, हाल, मण्डिखाटार | रु.२०,०००/- |
| ३०. श्रीमती रमा शर्मा– स्वयम्भू, काठमाडा | रु.६,०००/- |
| ३१. श्री प्रतीक ढकाल– मनोहर बस्ती, काठमाडौं | रु.१०,०००/- |
| ३२. श्री प्रदीपकुमार श्रेष्ठ– ललितपुर | रु.५,०००/- |
| ३३. श्री सुदर्शन शाक्य– वीरगञ्ज, पर्सा | रु.५,०००/- |
| ३४. श्री लक्ष्मणबहादुर केसी– पाटन संयुक्त क्याम्पस, ललितपुर | रु.५,००५/- |
| ३५. श्री शीतल गिरी– गौर, हाल : काठमाडौ | रु.५,००५/- |
| ३६. श्री माधव काफ्ले– चन्द्रनिगाहपुर, रौतहट | रु.५,००५/- |
| | रु.८,३१,११०/- |

| | |
|---|---|
| उल्या | रु.८,३१,११०/- |
| ३७. श्री मोहन दुवाल– बनेपा, काभ्रे | रु.१०,०००/- |
| ३८. श्री श्रीराम पाण्डे– हरिसिद्धि- ८, ललितपुर, हाल- हेटौंडा | रु.५,५५५/- |
| ३९. श्री महेश गोर्खाली– ललितपुर | रु.५,०००/- |
| ४०. श्री विनोद दीक्षित– कालिकास्थान | रु.८,०००/- |
| ४१. श्री बाबु त्रिपाठी– नवलपरासी, हाल : काठमाडौं | रु.६,५००/- |
| ४२. श्री गोपाल अश्क– वीरगञ्ज, पर्सा | रु.५,०००/- |
| ४३. श्री गीता पन्थ– तीनकुने, सुविधानगर, हाल : न्यूयोर्क, अमेरिका | रु.१०,०००/- |
| ४४. श्री अञ्जना चाकुबजी शाह– मण्डिखाटार, काठमाडौं | रु.५,०००/- |
| ४५. श्री वसन्त रिजाल– जोरपाटी, काठमाडौं | रु.५,०००/- |
| ४६. डा.श्री मीना ओझा– पाटन संयुक्त क्याम्पस, ललितपुर | रु.५,०००/- |
| ४७. श्रीमती चारू खरेल– कुमारीगाल, चाबेल, काठमाडौं | रु.२५,०००/- |
| ४८. प्रा.श्री तोया गुरुङ– तोयामार्ग, मीनभवन, काठमाडौं | रु.५,०००/- |
| ४९. श्री योगेश गोर्खाली– सेन्ट्रल टेक्सास, संयुक्तराज्य अमेरिका | रु.५,०००/- |
| ५०. श्री घनश्याम राजकर्णिकार– कृष्णपाउरोटी चोक, कमलपोखरी | रु.८,०००/- |
| ५१. श्री रामप्रसाद पन्त– चावहिल– ७, काठमाडौं | रु.५,०००/- |
| ५२. श्री कुवेरप्रसाद शर्मा– बानेश्वर, काठमाडौं | रु.१०,०००/- |
| ५३. श्री अप्सरा तिम्सिना– हेटौंडा– ४, मकवानपुर | रु.५,०००/- |
| ५४. श्री विश्वनाथ खनाल– रत्ननगर (टाँडी), चित्तौन | रु.५,०००/- |
| ५५. डा. श्री वलराम गौतम– सिद्धार्थनगर, भैरहवा/हाल : अमेरिका | रु.५,०००/- |
| ५६. श्री ऋषिराज शर्मा – दाङ, हाल : काठमाडौं | रु.५५५०/- |
| ५७. श्री हिक्मत बहादुर थापा, नाइजेरिया | रु.१०,६००/- |
| ५८. श्री गोपी सापकोटा– गैंडाकोट, हाल : बेलायत | रु.१०,०००/- |
| ५९. श्री कलाधर काफ्ले– नयाँ बानेश्वर, काठमाडौं | रु.५,०००/- |
| ६०. श्री रामकाजी कोने– काठमाडौं | रु.२५,०००/- |
| ६१. श्री गोकुल अधिकारी– विराटनगर-३, गोग्राहा | रु.१०,०००/- |
| ६२. श्री श्रीरामसिंह बस्नेत– बनस्थली, काठमाडौं | रु.५,०००/- |
| ६३. श्री विष्णुप्रसाद शर्मा पराजुली– पर्बत, हाल : कपन, काठमाडौं | रु.५,०००/- |
| ६४. श्री केदारप्रसाद गजुरेल– अभिव्यक्ति परिसर, गौरीनगर, काठमाडौं | रु.१०,०००/- |
| ६५. श्री छविरमण सिलवाल– जडीबुटी, काठमाडौं | रु.५,०००/- |
| ६६. श्री दिव्य गिरी- लोकन्थली, काठमाडौं | रु.५,५५५/- |
| ६७. श्री चन्द्रकान्त आचार्य– वङ्ला, अर्घाखाची, हाल नयाँबानेश्वर | रु.५,०००/- |
| ६८. श्री माधवप्रसाद गौतम– कलैया, बारा | रु.५,५००/- |
| ६९. श्री लीलानाथ श्रेष्ठ– सिराहा, नेपाल | रु.५,०००/- |
| **जम्मा** | **रु. १०,८६,३७५/-** |

*अभिव्यक्ति अक्षय कोष'को उक्त रकम+ब्याज*
*'उपलब्धि वहुउद्देश्यीय सहकारी संस्था लि.', लाजिम्पाटको मुद्दती खातामा*
*राखिएको छ ।*

# हिमकमल

राष्ट्रकवि माधवप्रसाद घिमिरे
अलकाबस्ती, लैनचहुर

कति मिठो वास्ना चल्यो हिमकमल फुली
हिमकमल टिप्न जाऔं दाजुभाइ मिली

ओरालीको यात्रीलाई उकालीमा पर्ख
चौतारीमा भेलाभई सँगै जानपर्छ
हिमकमल भेटिंदैन भाइलाई छली
टिप्न जाऔं दाजुभाइ मिली

कुन यात्री अघि अब कुन यात्री पछि
मालचरीको माला जस्तै लहर चलेपछि
भेटिंदैन एक्ला एक्लै चली
टिप्न जाऔं दाजुभाइ मिली

चढ्यो उत्ति अग्लो हिमालको काँध
दुई भाइको कम्मरमा यौटै डोरी बाँध
हिमकमल भेटिंदैन एक्ला एक्लै चली
हिमकमल टिप्न जाऔं दाजुभाइ मिली

ᏡᏡ

# दुई मुक्तक

अनुपमा करारा विवश
कोहलपुर, बाँके

१. गजलरूपी गुलाफ लिएर आएकी छु
थोरै थोरै आँट लिएर आएकी छु
मनमै लुकाउँन सकिन जव हृदयको उथलपुथल
आँसुको अनुवाद लिएर आएकी छु ।

२. पलाँसमा पनि जसले सुवास छर्न सक्छ
उदासीमा पनि जसले रङ्ग भर्न सक्छ
ऊ महान् हो पूजिने सधैं सधैं
जसले दुश्मनलाई पनि माफ गर्न सक्छ ।

ꙮꙮ

# माछा

अविनास श्रेष्ठ
गुवाहाटी

जान्दछु, मेरो जिन्दगीको नदीमा
प्रेमका अनेक माछा छन् । तर जव पनि
हात अघि सारेको छु तिनलाई छोप्न
ती उम्केका छन् हत्केलासम्म आएर– चिप्लिँदै ।

तर ममा भने केही छैन
केवल तिमी छयौ । रूखभरि हाँगा
र हाँगाभरि-भरि पात भएझैं
घरभरि झ्याल र झ्याल भरि-भरि काँच भएझैं ।

कसले पो जान्दछ–
कतिखेर झरेर खस्ने हो पात ।
कतिखेर चकनाचुर भएर जाने हो काँच ।

ꙮꙮ

# चित्तौन जंगललज वरिपरि

अभि सुवेदी

**हात्ती सवार**

हात्तीले
जंगलभित्र लग्यो र
गैडाका आँखासम्म पुऱ्यायो ।

**बाघ**

यो अल्छीको गेडा हेर्न
पाँचै महादेश जुट्छन्
हात्ती टक्क रोकिएर
सूँडले भन्छ–
हिजो यहाँ बाध थियो ।

**हात्ती**

कुसुम कली फर्केर सोध्छे:
यसपालि संभोगानन्द बाबा आएनन् ?

**गैडा**

कस्ता सभ्य भएछन् यी गैडा
कतै यिनले गैडाका छाला त ओडेका छैनन् ?
पहिलो पटक देखेको गैडा
गइसकेछ खाकमाथि आँखा छाडेर ।

**कवि**

देख्दा डराउँछ
नदेख्दा रुन्छ
कवि ।

**म र त्यो जंगल**

वर्षदिन देखि
यो जंगलले
मचानमा कुरेछ ।

**कविको व्यापार**

गोष्ठी
सिसी भित्र र बाहिर
कविको व्यापार जंगलमा ।

**गैंडाको प्रेम**

गैडाको प्रेम–
दहमा
छाँगो खसेको तरंग ।

**बाघको प्रेम**

कति मस्त भएको बघिनी खोज्न
बाटो छेक्ने मृगलाई
'एक्सक्युज मी' भन्छ ।

**जंगलमा पर्यटन**

जंगलभित्र होटल
गैंडा र बदेल
अंग्रेजी सिक्न आउँछन्

**जंगलमा प्रेम**

गैंडा भयानक करणी गर्छ
जंगललजको सूचनापाटीमा
भैचालो जान्छ ।

**नून चाट्ने ढिको**

जनावरले चाट्ने
नूनको ढिको
तिनकै आँशुको चिहान ।

**बाघ**

बाघ–
डुब्न लागेको घामबाट फुत्त निस्कयो र
आँखाभित्र पस्यो ।

ঙঙ

# हामी विश्राम लिनेहरू
अशेष मल्ल

धेरै लामो भयो हाम्रो विश्राम
उठेर हिड्नु पर्ने थियो हिजो नै
हामीलाई छोएर गएको बतास
धेरै टाढा पुगिसकेको हुनुपर्छ
हामीलाई हेरेर गएका पंक्षीहरु
धेरै टाढा पुगिसकेको हुनुपर्छ
उता नानीहरु
जो हाम्रो विदाइमा हात उठाइरहेका थिए
उनीहरु पनि अब त
खेल्दै होलान्
हामी बीच बाटामै थाकेर
विश्राम लिनेहरु
यही छौं
हिंड्नु पर्थ्यौ हिजो नै
र पुग्नु पर्थ्यौं टुंगोमा हिजो नै ।

ꙮꙮ

# केही मुक्तक
ईश्वर पोखरेल
तीनपाटन, सिन्धुली हाल त्रिवि, कीर्तिपुर

**देश**
हेर्न नपाउँदै देश- आँखाभरी दुख्छ,
बोल्न नपाउँदै देश- छातिभरी दुख्छ,
चारैतिर अव्यवस्था भोग्नु परेर हो कि,
हिजो आज देश- जतातत दुख्छ ।

**हक**
हामीसँग मत खसाल्ने हक छ,
मत खसालेर नेता चुन्ने हक छ,
नेताहरु पारिवारिक स्वार्थको वृत्तमा 'कैद' छन् र पनि
हामीहरुलाई 'हाम्रा नेताहरु' भन्ने हक छ ।

ꙮꙮ

# गजल

आर आर चौलागाईं
अभिकुञ्ज, मित्रनगर, हेटौँडा-४, मकवानपुर

तिमी ज्योति मात्र होइन महाज्योति हुनुपर्छ,
यो धरतीको एउटा अमूल्य सम्पत्ति हुनुपर्छ ।

मान्छेहरू कोही सेता कोही काला मनका छन्,
तिमी काला मनहरूका लागि विपत्ति हुनुपर्छ ।

आज जति छ त्यसमै चित्त बुझाएर हुँदैन,
योभन्दा अझै तिम्रो होनहार प्रगति हुनुपर्छ ।

काँडा रोप्न थुप्रै आउलान् तिमीलाई अनुनय गर्न,
ख्याल गर है ! यसमा तिम्रो बिमति हुनुपर्छ ।

जिन्दगी लामो छ बग्नू अविरल बगिरहनू,
तिमी टुकुचा होइन सङ्लो बाग्मती हुनुपर्छ ।

ꙮꙮ

# गजल

कमला गिरी ज्योति
अभिव्यक्ति परिवार

सास तिमी आश तिमी मधुमास तिमी
यस्तै भनी आजसम्म ढाँट्यो निर्दयीले
हिजोसम्म जिन्दगानी तिमी भन्दै थियो
आज हेर दिल अन्तै साट्यो निर्दयीले
अजर हुन्छ अमर हुन्छ माया पिरती यो
यस्तै भनी आदर्श खुब छाँट्यो निर्दयीले
यो मुटुलाई जलाएर खरानी बनाएर
पिरतीको डोरी अन्तै बाट्यो निर्दयीले
सास तिमी आश तिमी मधुमास तिमी
यस्तै भनी आजसम्म ढाँट्यो निर्दयीले ।

ꙮꙮ

# आज मेरो आकाश रोइरहेछ

इन्दिरा प्रसाई

मुस्कान कता कता हराएको छ
आँखा त्यसै त्यसै टोलाएको छ
शरीर किन किन लोलाएको छ
आज मेरो आकाश– आफैमा हराएको छ ।

स्वरमा कम्पन–कम्पन लरबराएको छ
भावमा उदास–उदासपन छाएको छ
गतिमा सुस्त–सुस्तपन देखिएको छ
आज मेरो आकाशलाई केही भएको छ

घामको उज्यालो केही मधुरो भएको छ
नीलिमालाई कालो बादलले छोपेको छ
तप तप तप तप आशु खसिरहेको छ
आज मेरो आकाश रोइरहेको छ ।

ᏇᏇ

# गजल

ऋचा लुइँटेल
चौमाला–९, मंगलपुर, कैलाली

भावनाहरू साट्ने त्यही रात भएछ
कहीँ नभएको हजुर ! बात भएछ ।
कल्पनालाई यथार्थमा पस्किएर हेर्दा
चाहना र समर्पणको उत्पात भएछ ।
प्रस्ताव र स्वीकृतिले लुकामारी खेल्दै
मायै मायाको त्यहाँ वर्षात् भएछ ।
अँधेरीमा जुनकीरी गीत गाउँदै थिए
थाहै नपाइ कति छिटै प्रभात भएछ ।
मैले त सोचेकी थिएँ जीत मेरै होला
हजुर कै फेरि माथि हात भएछ ।
भावनाहरू साट्ने त्यही रात भएछ
कहीँ नभएको हजुर ! बात भएछ ॥

ᏇᏇ

# गजल

कालीप्रसाद रिजाल

जत्ति दुःख सास्ती देऊ जत्ति देऊ चोट,
मुखमा ऐया आयो भने मलाई मारिदिनू ।

तिमीबाहेक मेरो मनमा अर्को भए कोही,
सत्ते सत्ते रामोराम मलाई मारिदिनू ।

पहिलो पल्ट देखेपछि केभो मलाई केभो ?
रातभरि सुत्या भए मलाई मारिदिनू ।

तिम्रो मेरो बीचको कुरा कसम भन्ने छैन,
एक शब्द मुखमा ल्याए मलाई मारिदिनू ।

अस्ति अस्ति खा'को रक्सी सासमा आयो होला,
आज रक्सी खा'को भए मलाई मारिदिनू ।

जबदेखि गइन् उनी शहर रित्तै पारी,
मनमा शान्ति चयन भए मलाई मारिदिनू ।

रुन्न भन्छु तर फेरि आइहाल्छ आँसु,
कसम अब रोएँ भने मलाई मारिदिनू ।

दुनियाँमा सुन्दरी त कति देखेँ कति,
हजुरजस्तो कोही भए मलाई मारिदिनू ।

अर्कैसित अँगालोमा देख्नुभन्दा पैले,
आफ्नै हातले जहर दिई मलाई मारिदिनू ।

जुन लगनको साइतमा डोली चड्लिन् उनी,
विधाताले त्यै घडीमा मलाई मारिदिनू ।

ᏡᏡ

# हास्य लघु कविताहरू केही

किशोर पहाडी

**१ मुर्ख्याइँ**

कुनै देशमा कुनै देशले घोषणा गरेछ
कि अबदेखि
हाम्रो देशको कानुनलाई यस्तो पारिने छ
कसैले कसैलाई जसरी मार्ने छ
त्यो मान्छे पनि मर्ने मान्छेद्वारा
त्यसरी नै मारिनेछ ।

**२ ब्रह्मचारी**

ब्रह्मचारी हो ऊ बूढो भयो
उसले कुनै स्वास्नी ल्याएन
प्रेम गर्दा गर्दै उसले
विहे गर्न नै भ्याएन ।

**३ सुन्दर धम्की**

हाकिम प्रेमी परेछ,
सँधै 'भोलि भोलि' भनी टार्दो रहेछ
प्रेमिकाले रीसले चुर भएर
धम्की दिइछ-
तिमी मलाई माया गर
होइन भने–
होइन भने– म तिमीलाई माया गर्छु ।'

**४ हन्तकाली**

सराद्ध गर्न गएको बाहुनले
यति धेरै कोचेर खायो
कि खाएर उठ्न लाग्दा त
आफ्नो जनै नै चुडिएको पायो ।

**५ आशंका**

तिमीकहाँ कसरी आउनु, प्रिय
शंका लाग्छ– तिम्रो बुबाले

कस्तो देखाउनुहुनेछ शान,
किनभने
तिम्रो घरको ढोकामा
लेखिएको छ–
'कुकुरदेखि सावधान' ।

**६ सुश्रीच्छा**

आफ्नो भन्न सकिने कोही हुनुपर्छ
आफ्नो भन्न सकिने कोही हुनुपर्छ
जो भए पनि हुन्छ
जस्तो भए पनि हुन्छ
यस संसारमा एक जना
जे पनि गर्न सकिने पोइ हुनुपर्छ ।

ꙮꙮ

# गजल

शकुन्तला जोशी

बगैंचामा यौटा फूल किन होला लर्किएको ?
मलाई हेरी मेरै छाया किन होला तर्किएको ?

रमाउँथ्यौ मैले बोल्दा सारङ्गीको धून ठानी
ओठ मात्रै खोल्दा आज किन होला झर्किएको ?

लामो यात्रा सँगै हिंड्ने बाचाहरू बिर्सिएर
आउँदा-आउँदै बीचबाट किन होला फर्किएको ?

मनभित्र सजाएको विश्वासको धरोहर
बिना कुनै थर्थराहट किन होला चर्किएको ?

वल्ल-तल्ल विसेक हुँदै खाटा बस्या घाउमा
कोट्टयाएर नुन-चुक किन होला छर्किएको ?

ꙮꙮ

# लघु चिन्तन

कृष्णभक्त श्रेष्ठ

१

जन्म एउटा आकस्मिकता हो
र मृत्यु त्यसको औपचारिकता
ती दुईबीच जे जाति बित्छ
मात्र त्यो वाध्यता हो
विवशता हो
वास्तविकता हो ।

२

जिन्दगी खै कसरी बित्छ
कसरी बित्छ बित्छ
कसै गरी बित्छ
बिताउन खोजेर पनि बित्छ
बिताउन नखोजेर पनि बित्छ
बित्न भने
दिन दिनै बित्छ
छिन छिनै बित्छ
बित्नै पर्ने भएर होला
जसरी पनि बित्छ
हो, जीन्दगी बित्छ ।

३

साँपले दूध पिउँछ
र विष बनाउँछ
मैले रक्सी पिउँछु
र कविता लेख्छु
विष भन्दा विषालु
रक्सी भन्दा नशालु ।

४

आँखा चिम्लेर हानेको भए पनि ढुंगा
कतै न कतै अवश्य लाग्छ

लागे तारो हुन्छ
नलागे झटारो ।

६
नेताहरू
बात मार्न जान्दछन्
बातै पिच्छे
लात मार्न जान्दछन्
लात खान जान्दछन्
जतिसुकै सम्पन्न भए पनि
मौका पाउना साथ
कुनै पनि बेला
हात थाप्न जान्दछन् ।

७
छिहिलिनु नहुने अर्ति उपदेश सधैं
पात्तिएकै मन्छेले दिन्छ
अनि पिउनै नहुने सल्लाह पनि
बिहानैदेखि धोकेर
मात्तिएकै मान्छेले दिन्छ
आधि भोटो धेरै फटाउनेको
कुरात सुन्नै पर्‍यो
स्वाभिमान र आत्मसम्मानको कुरा पनि
सधैं लात्तिएकै मान्छेले दिन्छ ।

ЖЖ

## विडम्बना

खुमनारायण पौडेल

फुटपाथमा हिजो हिड्नेहरुको शान आज देखियो
धन प्रतिष्ठा सबै उनीहरुको, मान आज देखियो
देशका लागि केही गर्न जो चुनिएका थिए–उनीहरु
रछ्यानमा बग्दै गरेको उनको इमान आज देखियो ।

ЖЖ

# अब त बिसाऊँ होला थापाजी

कृष्णभूषण बल

पहिलो चुस्की रसाउँदै गलाहरुमा छातिहरुमा क्षय रोपिसक्यौं कि
निरन्तर खन्याउँदै बोतलहरु गिलासमा मृत्यु भरिसक्यौ कि
छहारिमुनि केही विरुवाहरु हुर्कन बाँकी नै छ
चौतारीमाथि केही भारीहरु विसाउँन थाँति नै छ
बेलुकीको घामसँगै राता नीला बोतलहरु गुलुप झैं आँखामा बले पनि
बेलुकीको कलिलो अँधेरीमा घाँटीले तिर्खा मेटाउन तमतमाए पनि
एकछिन बरु बाटाहरु थाकेर भुईंचालोमा कामे पनि
जे सुकै होस्, आज त विसाउ होला थापाजी !
एक रात मात्र कहाँ यसो हो र ? निरन्तर यस्तै छ
एक साझमात्र कहाँ मात्यौं र ? सडक सँधै आफ्नै छ
स्वास्नीको झट्टी खानु चोर बिरालोले झैं बिहान आँखामा विझाउँछ
आयुको हप्की खानु अपराधीले झैं सिरानीमा विहान रसाउँछ
बौद्धिकताहरु पानीमा बेचेर। यो सिङ्गो जिन्दगी
एक निद्रा सुताउन पनि त सकेनौ
दिनभरीको भलाद्मी रातभर ओछ्यानमा पसार्न पनि त सकेनौ
संसारमा सधैं आफैलाई खोज्न हामीले थालेको यात्रा नै भएपनि
जे सुकै होस्, आज त विसाउँ होला भूषणजी !
भीरमा गोरु लडे झैं अडेरी खाएर, सबै हरियो घाँस हुन्न
शीरमा बाध भत्काएर आँखाहरुमा सधैं आँशुको थोपा हुन्न
अँध्यारोमा उज्यालो रोप्न डँडेलो आफै भित्र लगाईरहेका छौ
भुङग्रोमा हामफालेर चुपचाप मुर्दाझै गिलासको मृत्युसँग बात मारिरहेछौ
महालेखाको बेरुजुमा निस्केको हिसाब झैं
मान्छेको गिन्तीमा अभिशाप भइरहेछौ
सृजनाका कैयौ परिच्छेदहरु पानीमा आगोले सल्कायौं
औंला हालेर जिब्रोमा कैयौ पल्ट धारामा कविता छादेर बगायौं
कति पल्ट घाम तुहायौं, कति पल्ट जुन तुहायौं
धूलोमा प्रतिभाहरु पैतालाहरुझैं खियाउँदै
हर रात क्षयसँग बात मारिरहेछौ
हर रात मृत्युसँग बात मारिरहेछौ
हर रात रक्सीसँग बात मारिरहेछौ
जे भयो, भै गयो, अब चैं बिसाउँ होला साकार जी !

ഢഢ

# गजल

घनश्याम न्यौपाने परिश्रमी

सडकमा जब जुट्छन् नारा सहित भोकाहरु
नेता बाँड्छन् तब रित्ता आश्वासनका पोकाहारु

खुला नीति-नियमका विधान बनिसके पनि
जता हेर्‍यो त्यतै देख्छु बन्द नै छन् ढोकाहरु

अन्यायको कडा ताप बढेकै छ सबैतिर
फुटेका छन् जताततै पोलिएका फोकाहरु

अपवित्रहरु निकै चहलपहलमा हुन्छन्
गुफा पस्न विवश छन् आजभोलि चोखाहरु

कोसँग पो जिन्दगीका भिक्षा मागुन् कठैबरा !
देवतालाई चढाउन पर्सिएका बोकाहरु ।

ℬℬ

# अक्षर र ऊर्जा

गोकुल अधिकारी

उघारिंदै जान्छ कलमको विर्को
र भरिदै जान्छन् सादा पानाहरू
अक्षरहरू कोरिन्छन् रित्ता सेता कागजहरूमा
सबै अक्षरहरू आकाशबाट खस्न सक्दैनन्
वर्षाद्को असिनाजस्ता
शब्दका डल्ला बनेर
सुख्खा बाँझा खेतहरूमा
घर सल्काउने आगो अक्षरभित्रै भेटिन्छ
घर उजेल्ने ऊर्जा पनि अक्षरभित्रै हुन्छ
ए आगो बोकेर हिंड्ने अक्षरहरू हो ।.
जाउलो उमाल्ने ऊर्जा नपाएर
तिमीलाई निमन्त्रणा गरिरहेछन्
असंख्य झुपडीका चीसा आँगनहरू ।

ℬℬ

## गजल

गोविन्दराज विनोदी

लिएका चाहना अर्कै यहाँ धेरै बहाना छन्
नयाँका मात्र संज्ञा छन् यहाँ जे छन् पुराना छन् ।

कि कुर्सीमा पिपासा छन् कि पैसाका दिलासा छन्
'म नै खाऊँ, मनै लाऊँ', यिनै मनका निशाना छन् ।

उनै सिद्धान्तका फोस्रा भिरी आदर्श बाँचेका
उनै मान्छे र आकाङ्क्षा उनै सङ्कीर्ण ताना छन् ।

कतै सत्ता पिई मात्ने अभीप्सा छन् र ईर्षा छन्
कतै निर्माण पर्खेका चुहेका जीर्ण छाना छन् ।

दिनूँ विश्वास कसलाई पत्त्याउँ खै कुरा कसको
भनूँ आफन्त जसलाई उनै मान्छे विराना छन् ।

पुरानै अर्थ बोकेको नयाँ भाका र गाना छन्
नयाँ छन् पालुवा मात्रै, यहाँ जे छन् पुराना छन् ।

ꙮꙮ

## गजल

तारा भट्ट 'पल्लवी'
*धनगढी*

धेरै दिनको सपना बल्ल आज साकार भो
फगत दुई आँखाहरू आज दखि चार भो
तिमीबाट पाएको यो स्वीकृति नै मेरो लागि
खुशी अनि सफलताको मीठो आधार भो
पत्थरको मुटुभित्र ढुकढुकी पलाएछ
अचानक आज किन यस्तो चमत्कार भो
यस्तो लाग्छ बल्ल अब म बाँचेको सार भो
डुब्नै लागेको 'पल्लवी'को डुँगा आज पार भो ।

ꙮꙮ

# स्वर्ग त्यहीं मिल्छ

चारु खरेल
मैजुबहाल, चाबेल

कल्नामा स्वर्ग खाज्ने मानिसको जात ।
कहीं अन्त हुन्न स्वर्ग आफैंभित्र खोज ॥

खोजी स्वर्ग भेटिंदैन आकाशको पारी ।
जाहाँ न्म्यौ जाहाँ बढचौ त्यही धरती भारी ॥
पौरख गरे गौरव फल्छ युग युग भरी ।
हुन्छ स्वर्ग सभैंभरि तिम्रै वरिपरी ॥

कल्नामा स्वर्ग खाज्ने मानिसको जात ।
कहीं अन्त हुन्न स्वर्ग आफैंभित्र खोज ॥

मानिसले देखे स्वर्ग जहीं तहीं मिल्छ
दुःख बाँड्न सके सधैं पूर्ण सन्तोष मिल्छ ।
सन्तोषको घडाभरि स्वर्ग लुकी बस्छ ।
सद्गुण छरे जीवनभरि स्वर्ग त्यहीं फल्छ ॥

कल्नामा स्वर्ग खाज्ने मानिसको जात ।
कहीं अन्त हुन्न स्वर्ग आफैंभित्र खोज ॥

स्वर्ग बस्छ शान्तिभित्र त्यसैलाई रोज ।
सम्पूर्ण ती कुराहरू तिमीभित्र नै छ ॥
दुर्गुणलाई फाल्न सके स्वर्ग मौलाउँछ ॥
आत्मसात गर्नसके स्वर्ग त्यहीं फुल्छ

कल्नामा स्वर्ग खाज्ने मानिसको जात ।
कहीं अन्त हुन्न स्वर्ग आफैंभित्र खोज ॥

ଓଓ

# मसिना सुख दुखान्तहरू

जगदीश घिमिरे

## पहिचान

चुच्चे पनि महान् होइन
चिम्से पनि महान् होइन
मुहुडामा जे जे देख्छौ तिमी
त्यही नै मान्छेको पहिचान होइन ।

जे देखिंदैन त्यो मान्छे हुन्छ
जे सुनिंदैन त्यो मान्छे हुन्छ
हुङ्कार, अहङ्कार र आडम्बरले होइन
मान्छेको ढुकढुकीले जे भन्छ
त्यही नै उसको पहिचान हुन्छ ।

## पुनसको साहू

धर्मभीरु आसामीले साह्रै गुन मान्दै
जण्ड साहूलाई विन्ति बिसाएछ–
'यो जुनीमा रिन तिर्न सकिन साहू
के गरुँ क्यै छैन
रिन खाएँ– थाह छ मरेर पनि सुख छैन
अर्को जुनीमा तिम्रो घोडा भएर तिरुँला'

संसार चिनेको साहूले मुसुक्क हाँस्दै भनेछ–
भैगो– त्यस्तो दुःख नगर बा
अर्को जुनीमा म नै तिम्रो छोरो भएर असुल गरौंला ।

## यस्तै हो ?

ठग्नेहरू भन्छन्– 'यो नेपाल यस्तै हो ।'
ठगिनेहरू भन्छन्– 'यो नेपाल यस्तै हो'
मार्ने पनि यसै भन्छन्, मारिने पनि यसै भन्छन्
कति सजिलो 'यो नेपाल यस्तै हो' ।

ဏဏ

# दृष्टिविहीनहरूमा समर्पित गीत

नीलम कार्की 'निहारिका'

एकै हुन्छ मेरा लागि, उस्तै रात दिन
संसार हेर्न पठाइस् दैब, आँखै नदिई किन ?

हरियो छ भन्छन् धर्ती ,आकाश नीलो छ रे
लुक्दै छिप्दै डाँडाबाट, सूर्य उदाउँछ रे
हरियो र नीलो भन्ने, रंग कस्तो होला
आकाशले छोपी राख्या धर्ती कत्रो होला ?
एकै फेर मन भित्र तस्विर खिच्न पाएँ भने
कल्पी बाँच्थे सबैतिर, कालै बादल छाएपनि ।

एकै हुन्छ मेरा लागि, उस्तै रात दिन
संसार हेर्न पठाइस् दैब, आँखै नदिई किन ?

आमा बाबु एकान्तमा, भाग्य छाम्दै रोलान्
दिदी भनी भाइ बोलाउँछन्, हेर्दा कस्ता होलान् ?
छाम्दा तातो हुन्छ आँसु, बग्दा कस्तो होला ?
हो रे मेरो पनि उस्तै, उही मान्छे चोला
बिहान भो कि भन्दै, कोल्टे फेर्नु परेको छ
यी आँखाले नदेखे नि, संसार हेर्नु परेको छ ।

एकै हुन्छ मेरा लागि, उस्तै रात दिन
संसार हेर्न पठाइस् दैब, आँखै नदिई किन ?

# मुक्तक

झमक घिमिरे

आगमनहरू आफैं मूर्त हुँदैनन्
तिनलाई समयले डोऱ्याउनु पर्छ
आशमा विश्वास आफैं बोल्दैनन्
तिनलाई गोरेटो दिनु पर्छ ।

# अनुभूति

जयन्ता पोखरेल
विराटनगर

अडकलबाजीमा जीवनलाई
व्यर्थ परिभाषित गरेछु
आफ्नै अर्थले बाँच्ने
गलत निर्णय गरेछु ।
म जिउनुको न कुनै मान्यता छ
म बाँच्नुको न कुनै अर्थ छ
मयकै एउटा यस्तो राप छ
बाँच्नु परेको छ… …
यति खेर मेरो हालखबर सोध्दै नसोध
यदि सोद्धछ्यौ भने–
बस बाँचेको छु पृथक अनुभूति बोकेर
एक दिन खुशी हुन्छु बाँकी सब दुखेर… … ।

# गजल

जसराज किराती
बुइपा, खोटाङ

हे नाथ ! म अनाथको कुनै नाथ छैन,
बाः मरिन्छ कि नभनेको कुनै रात छैन ।
खालि एकले अर्काको कुरामा छुरा रोप्नु
र 'मैहूँ' भन्नु बाहेक अर्को कुनै बात छैन ।
जो पनि खुट्टा तान्ने मात्र हुँदो रहेछन्
यसो समातेर माथि तान्ने कुनै हात छैन्
औंलो दिँदा डुँडुलो नै निल्न खोज्ने,
यहाँ मान्छे भन्दा बैग्नी अर्को कुनै जात छैन ।
मीठो मसिनो जुर्न त कर्म चाहिन्छ भन्छन्,
रत मेरो भागमा खस्रो बाहेक अर्कै कुनै भात छैन ।
हे नाथ ! म अनाथको कुनै नाथ छैन
बाः मरिन्छ कि नभनेको कुनै रात छैन ।

# विन्ति

ज्योति जंगल
बुधबारे ३, झापा

रातमा रुनै पर्ने कथाको
अब त नशा झैं तल बसिसकेछ
जून ! नचिहाइदेन झ्यालबाट
म बस अध्यारामै रोऔं ।

विह्वल मनस्थितिका पाइलाहरू
हात्ती पाइले लागेर
हदै गाह्रो भो सास फेर्न,
मन ! नझरिदेन यसरी आस्थाहरूबाट
म यिनै आँखाबाटै झरौं ।

प्रश्नैहरू त राख्नै सकेकी छु
अबोला मूर्तिअघि अपराधी झैं
ए अहम् ! नबिलाइदेना स्वाभिमानबाट
म उत्तर भोरसँगै मागौं

हामी यतिका महरू छौ
हरेक सन्नाटाका दाबेदार
आफैभित्र जन्मिएका न छौं ।
ए जनम ! नभत्काइदेन बाँसको पर्खाल
म यिनै परेलीहरूमा बाँचौ !

उडेर चङ्गाझैं आकाश भरिका
तारा समेट्नु छैन,
बस् परिवेशमा अट्नु छ,
ए पवन ! नबहकाइदेन नयन स्वप्ना
म यिनै पलकहरूमा बाँचौ
म यिनै यिनै नयनहरूमा साँचौ ।

# पाँच मुक्तक

ज्ञानुवाकर पौडेल

१
कोशिश नगरेको हैन उडी आकाश छुनलाई
नआँटेको पनि हैन, ठुलै मान्छे हुनलाई
भाग्यले मलाई साथ नदिएर मात्रै हो, नत्र
समय मसँग कहाँ हुन्थ्यो र मसित यसरी रुनलाई

२
कसैको नजरमा म अपुरो कथानक भएछु
कसैको नजरमा म खराब अचानक भएछु
आँखा सबैको उस्तै भएपनि हेराइ फरक हुँदा
कसैको नजरमा म दुश्मन भयानक भएछु
३

नसोध कसरी बितिरहेछ मेरो प्रत्येक रात कोल्टे फेर्दैमा
किन बहकिएछु म पनि यसरी कोही आफूलाई मन पर्दैमा
न छ चैन दिनमा न छ आराम रातमा मलाई
बित्ने भो बाँकी जिन्दगी पनि तिमी आउने बाटो हेर्दैमा

४
धर्मको नाममा ठेकेदारी चलाउनेहरू बदनाम भगवान् गर्दैछन्
जनसेवकहरूनै संस्थागत यहाँ भ्रष्टाचार जानाजान गर्दैछन्
के भा होला यो देशलाई कुन्नि क कस्को आँखा लागेछ ?
बिर्सेर कर्तव्य आफ्नो नेताहरू यहाँ कुर्सी तानातान गर्दैछन्

५
मेरो माया थियो चोखो माया
अरुको माया चाहिँ खोटो मायाँ
तिमीले कहिल्यै पत्याइनौ र पो नत्र
खन्याइदिन्थें म एक डोको माया ।

ଔଔ

# रूख काटें भनेर

ज्ञानेन्द्र खतिवडा
सिलिगुढी, भारत

हिमाललाई 'तिमीभरि पानी आफूसित राखिदेऊ'
भनेकै हो–
यसैले त उसले हिउँ जमाएर पनि धेरै पानी
आफूसित अटायो–

आकाशलाई पनि गुहारेकै हो
उसले पनि बादल बादलमा
बोकिहिंडेकै हो

अन्टार्टिका पनि हिमालझैं
सहमतिमा पुग्यो–

तरै पनि मान्छेको निम्ति जमिन भएन
पानी घटेन

यसैले रूख रूखलाई केही भार थपिइयो–

प्रत्येक रूख रूखलाई केही भार थपिइयो –

प्रत्येक रूखले आफूमा पीपलले झैं
पानी अटाइदिंदा–
तीन भागमा एक भाग जमिन निस्कियो
मान्छे बस्ने उपयुक्त ठाउँ बन्यो

मान्छे बस्न थाल्यो

तर मूर्ख मान्छे !
हाल, रूख काटें भनेर
आफ्नै खुट्टा काट्दै छ ।

ॐॐ

## गजल
### रवि प्राञ्जल

बतासका झोंकासँगै ढलिरहें खालि
आफैंदेखि आफैंलाई छलिरहें खालि ।
कोही छैन छामिदिने जीन्दगीको घाउ
लुकाएर पीडा मनको जलिरहें खालि ।
अन्धकार भगाएर उज्यालो ल्याउन
सल्किएर मैन जस्तै बलिरहें खालि ।
श्रमको मूल्य चुकाउने नभेटेर कोही
पछुताएर रित्तो हात मलिरहें खालि ।
मेरा आफन्त नै आज भएछन् पराई
एक्लो भई जीन्दगीमा गलिरहें खालि ॥

ఌఌ

## गजल
### दिव्य गिरी

खुशीको लहर उर्लनु पर्ने अनुहारमा हाहाकार छ ।
कसरी उठ्ला जीन्दगी माथिमाथि सधैंको हाहाकार छ ।

आफ्नै पीडाको वेदनाले छट्पटाइरहेको मान्छे हुँ म
कसो श्रवणशक्ति छ र सुन्न, मभित्र जुन चीत्कार छ ।

पैसा बल्झउन इज्जत नै च्याँखे थाप्नेहरूको भीडमा
कोसँग विश्वास गर्नु, मेरो बिपनाको सधैं वलात्कार छ ।

को पल्केको छ यहाँ, यो वर्तमानको दाह्रा र नङ्ग्रा तिखार्न
जस्ले जोसुकैलाई बेला कुबेला घरी घरी लल्कार्छ ।

दिन-रात रात्री भोज र प्रीतिभोजमा मात्तिने श्रीमान्हरू
कहिलेकाहीँ सोध्ने गर, मभित्र उज्यालो वा अन्धकार छ ।

विन्ति छ महोदय, यो झूठ बोल्ने बानी अव छोडिदिनोस्
भैगो केही चाहिंदैन बरु, मात्र यही एउटा पुकार छ ।

बाँच्नुको नाममा बाँचेजस्तो गरी मरिरहेको यो क्षण
यस्तोलाई पनि जीन्दगीको नाम दिन्छस् ? 'दिव्य' धिक्कार छ ॥

ఌఌ

# त्यहाँ तिमीलाई मान्छे बनाइन्न

तीर्थ श्रेष्ठ
पोखरा

मेरा बाबु दिन दिनभर
मट्टितेलको लाममा उभिएर
जब थकित अनुहार सहित् साँझतिर घर फर्कनु हुन्छ
त्यो निस्तेज अनुहारमा
मट्टितेलको सहाराले बाँच्ने त्यो टुकीले के तेज दिन्छ ?
र आमा करेसाबारीलाई आँशुले भिजाएर
र अलिकता पसिनाले सिंचाएर जब गोडमेल गर्नुहुन्छ
अनि साझ पखको पसिनापातमा मरेको मन सहित
अलि अलि गरेर मर्नुहुन्छ
भाइ ! तिमी पनि अब पाठशाला जान छाडिदेऊ
त्यहाँ तिमीलाई तिम्रो बुबाको पीर
र तिम्री आमाको झुकेको शीरको पाठ पढाइन्न
तिमीलाई त्यहाँ मान्छे बनाइन्न
जो भोलि स्वाभिमानी छातीसँगै उभिन सकोस् ।

ꙮꙮ

# गजल

डा. टिकाराम भण्डारी

मनको यौटा विश्वासले हो मान्छे बाँच्ने
पालो आउने आशले हो मान्छे बाँच्ने ।
मनको ठूलै हिम्मतले मात्र भन्छु म
अरूले भन्लान् साासले हो मान्छे बाँच्ने
सबथोक पुगे त अडिइहाल्छ नि जिन्दगी
केही न केहीको तलासले हो मान्छे बाँच्ने
कुनैदिन मुर्दाका नेता हुनेछन् यी नेताहरू
भन्देऊ गाँस र बासले हो मान्छे बाँच्ने
मनको यौटा विश्वासले हो मान्छे बाँच्ने
पालो आउने आशले हो मान्छे बाँच्ने ॥

ꙮꙮ

## यात्रा संस्मरण

तुलसी दिवस

हिँड्दा हिड्दै मोडमा
हिँडेको बाटो नै मोडिएपछि
हिँड्नेको पनि केही लाग्दोरहेनछ !

उक्लँदा उक्लँदै उकालोमा
उक्लेको बाटो नै ओर्लिएपछि
उक्लनेको पनि केही लाग्दोरहेनछ !

ओर्लंदा ओर्लंदै ओरालोमा
ओर्लिएको बाटो नै उक्लिएपछि
ओर्लनेको पनि केही लाग्दोरहेनछ !

हिँड्दा हिड्दै मोडमा
हिँडेको बाटो नै मोडिएपछि
हिँड्नेको पनि केही लाग्दोरहेनछ !

ଔଔ

## गजल

धनराज गिरी

माया दिन माया लिन जान्नु पर्छ हजुर
कैलेकाहीँ यस्ता कुरा मान्नु पर्छ हजुर ।

सुन हो कि पित्तल हो हेर्नू राम्रोसित
भीडबाट आफ्नो मान्छे तान्नु पर्छ हजुर ।

चोट, पीडा, वेदनाको मिश्रण हो जीवन
उस्तै परे पहाड नै धान्नु पर्छ हजुर ।

बन्न सके क्षमाशील जित्यौ आफैंलाई
रिसलाई झटारोले हान्नु पर्छ हजुर ।

कहाँ त्यसै फेला पर्छ हृदयको मीत
लाख होइन, करोडमा छान्नु पर्छ हजुर ॥

ଔଔ

# आफ्नोपन

दामोदर पुडासैनी किशोर
गोंगबु, बालाजु

मनमा कसैको तस्वीर बोकेर
आँखाले उकाली ओरालीको यात्रा गर्दा
ठेस लाग्न सक्छ
हरेश जाग्न सक्छ
लक्ष्यमा पुग्नेनै इच्छा हो भने
मनको तस्वीर र आँखाको यात्रा
एक आपसमा साटिनु पर्छ
दुई खुट्टा एउटै गतिमा चालिनु पर्छ

घुम्म आकाश वा
शरद चन्द्रले केही फरक पर्दैन
यात्रा हो, सडक वा गोरेटोमा निस्किएपछि
जति पनि यात्रीहरु भेटिन्छन्
त्यसमा सहयात्री किटिएकै हुनुपर्छ भन्ने केही छैन
हरेकको अन्तिम टुंगो एउटै हुनु हुँदैन, र
हरेकको गन्तव्य पनि एउटै हुने गर्दैन
त्यसैले सृष्टी र संसारलाई सुकिलो र सुवासिलो पार्न
प्रत्येकले एउटा छुट्टै निक्खर बाटो बनाउनु पर्छ ?
प्रत्येकले एउटा छुट्टै निख्खर यात्राको थालनी गर्नु पर्छ

मलाई तिम्रा आँखा मन परेका छन्
मलाई तिम्रा भाखा मन परेको छन्
भन्न त तिमी मेरा सबै कुरा मन पर्छ भन्छचौ
एकाग्र भएर हेर
मान्छेको जिन्दगीमा जस्तै कुनै कुरा पनि स्थिर हुँदैन
क्षण क्षणमा विश्लेशण, घटना र अवलोकनको
तौर तरिकामा फरक आइरहन्छ
एउटालाई आर्को सँधैसबै कुरामा मन पर्दैन
हरेक मान्छेको आफ्नै रूप र रंग हुन्छ
त्यो कसैमा सर्दै सर्दैन ।

ꣻꣻ

# पानीको गाठो

दिनेश अधिकारी

कहाँनेर खुकुलिन्छ
र, कहाँनेर कसिन्छ भनेर
हेर्नेले छुट्याउँनै नसक्ने
पानीको गाँठो जस्तै एउटा सम्बन्ध छ हाम्रो बीचमा
मैले त्ययलाई
मात लागेको रातमा पनि भोगेको छु
घात/प्रतिघातका माझमा पनि भोगेको छु ।
अथवा यसो पनि भन्न सकिन्छ यस सम्बन्धलाई–
मेरो आँसु पिएर ऊ बाँचेकी छ भने
मैले पनि त अहिलेसम्म
उसकै रगत पिएर सास धान्दै आएको छु
म त छुट्याउँनै सक्तिन उसलाई आफूबाट
सुख/दुःखका प्रसंगहरूमा
प्राप्ति/समाप्तिका सन्दर्भहरूमा
ऊ मसँग-
फूलको सुवासजस्तै विछिएकी छ
ऊ मसँग
बत्तीको ज्योति जस्तै मिसिएकी छ ।

कहिलेकाहीं आजित भएर
जब जब म आफू भित्रको ‘लोग्ने’लाई
स्वास्नीबाट टाढा
एउटा अलग्गै शिविरमा उभ्याउने बिचार गर्छु
निमेशमानै भत्कन्छ मेरो घर
र, लाग्छ
नदीको प्रवाहलाई
व्यर्थै म लट्ठीले हानेर टुक्र्याउने प्रयास गरिरहेको छु ।

छिः के भएको मेरो सुद्धी ?
म त उसकै सिन्दुरे विश्वासमा पो
अहिलेसम्म आफूलाई ज्यूँदो पाइरहेको छु ।

ꙮꙮ

## गजल

### नरेन्द्रराज पौडेल

पुराना ती रङ्गमञ्च उठाउँदै म आएँ,
नयाँ नौलो रोधिघर बसाउँदै म आएँ ।

यौवनको भेलबाढी गयो बेसै भयो,
पीरतीको पहरामा रसाउँदै म आएँ ।

वैली जाने रहरहरुलाई उखेलेर फाल्दै,
वैशाखको पालुवामा पलाउँदै म आएँ ।

शून्यताको लेक बेसी धाउनु धाए पछि
मनैभरी जाइ-जुही फुलाउँदै म आएँ ।

तिमीसँग यात्रा गर्ने नौलो धोको बोकी
जीन्दगीको नयाँ गाडी गुडाउँदै म आएँ ।

ඏඏ

## मुक्तक

### उत्तम मजगैंया

देशभित्रै शरणार्थी भयो रातारात
कि त रुँदै सीमाकाटी गयो रातारात
बाँच्न  खोज्दा मर्नुपर्ने नियति यो कस्तो
अशान्तिले सीमा नाघिसक्यो रातारात

ඏඏ

## मुक्तक

### मणि लोहनी

मेरो नामसँगै प्रिय तिम्रो नाम गाँसिएथ्यो
हृदयको धड्कन पनि एकअर्कामा टाँसिएथ्यो
शुभारम्भ सुखद थियो, अन्त्यचाहिं दुखद भयो
'आस्था'को मूल पनि विनाअर्थ मासिएथ्यो ।

ඏඏ

# मित्र-भेला

कन्चन पुडासैनी

काम लाग्ने मित्र नै हो, मित्रलाई साँच साथी !
सम्झनाको टाकुरामा मित्रलाई राख माथि ।
द्वार खोलें हात जोडें, मित्र आए भाँति भाँति,
मुस्कुराए, भित्र आए, मित्र आए आज राति ।

बैंसका दिन गैसकेछन्, तैपनी मन चञ्चलै छ,
जिन्दगीमा लाग्छ तल्तल्, चाहनाको अम्मलै छ ।
शोक बासी, आश ताजा, आश ल्याए, प्यास ल्याए
सुन्न थाले भन्न थाले, सम्झनाको रास ल्याए ।
गीत विह्वल एक टोली नृत्य चञ्चल एक ताँती
मित्र नारी, मित्र मानव : मित्र-भेला आज राती ।

दुष्ट मेरा मित्र दल्थे दोष मेरा नाउँमाथि,
गूढ तिनको स्नेह खुल्दा दुख्न छाड्यो आज छाती ।
क्यै प्रशंसा, क्यै गुनासो, मुग्धकारी मित्र-माया,
आज तिनको भावनामा छुद्रताको छैन छाया ।
भेटिहेर्नु एकबाजी, हुन्छ उल्लू मित्र जाति,
आज मैले मित्र भेटें, मित्र डाकें आज राती ।

आज आधा रात बाँकी, जिन्दगीको म्याद बाँकी
आज बूढी भैसकेकी रूपसीको याद बाँकी
देखिएनन् मित्र यौटा, दुःखका ती मित्र मेरा,
देवताको चेहरा त्यो हेर्ने इच्छा एक फेरा !
आइराख्यो आज तिनका सम्झनाका फूलपाती,
आइराखे जिन्दगीमा, मित्र मेरा आज राती ।

ꙮꙮ

## मुक्तक

मिना चौलागाईं
पाँचखाल, काभ्रे

तिम्रै भयो जिन्दगी यो मनले मानेपछि
के नै कुरा लुकाउनु र आफ्नै ठानेपछि
धेरै आशा राख्या छैन तिमीसँग मैले,
आफ्नै विवेक प्रयोग गर यति जानेपछि !

ꙮꙮ

# अक्षरको आराधना

## निर्मोही व्यास

अर्पी शिक्षणमा त्रिचालिस बिते बेदाग संवत्सर
घुम्दै फन्फन कोलको बयलझैँ धाएर देशान्तर
अर्थोपार्जनको उपाय कहिल्यै चर्को कुनै खोजिन
रम्दै यै 'क‥क…' मै सदा भुलिरहेँ, अर्को कुनै रोजिन ।

☙

के विद्यालय, के कलेज अथवा के विश्वविद्यालय
मेरा मावल, माइती, घर उनै सम्पूर्ण शिक्षालय
मात्रै अक्षरकै सदा गरिरहेँ आराधना-आरती
मेरो जीवन भन्नु 'अक्षर' यिनै, के थालनी ! के इति !

☙

आँधी जत्ति चलोस्, झुकेन कहिल्यै यो स्वाभिमानी शिर
गर्मी जत्ति चढोस्, सुकेन कहिल्यै यो धैर्यको निर्झर
प्यारो जीवन-मार्गमा जतिसुकै आऊन् कि वा अक्कर
यात्रा यो अविराम नै चलिरह्यो झेल्दै सबै ठक्कर

☙

मैले वैभवको अनन्त सपना कैल्यै कतै पालिन
मैले जीवनको कुनै क्षण पनि व्यर्थै कतै फालिन
यै सन्तुष्टिसँगै छु अर्पित सधैँ साहित्यको भक्तिमा
'आफ्ना अक्षरमा जुनीभरि स्वयं चाहन्छु मैँ व्यक्तिन ।'

☙

साँचेको मनले यही छ, तर खै पुग्ला नपुग्ला कुरा !
जे होला पछि, उक्लँदै छु अहिले बामे सरी टाकुरा
पोखूँ, पोखिरहूँ, अहर्निश उसै पोखी स्वयं रित्तिऊँ
मेरो प्राणपखेरु भुर्र नहुँदासम्मै म सिर्जीरहूँ ।

☙☙

# गजल

नीरज भट्टराई

सधैँ-सधैँ दौडिएको अभिनय गर्न उत्सुक झैँ
यो मुलुक छ मर्निङ्ग वाकमा निस्किएको बुज्रुक झैँ ।
उस्तै छ त्यो लिच्चीको बोट, उस्तै छ त्यो आँगन
तर घर फर्कंदा ऊ थियो कुनै आगन्तुक झैँ ।
सर्सराइरहेछ आज यहाँ चिसो-चिसो बतास
धानका बालाहरू देखिन्छन् नाच्न इच्छुक झैँ ।
कैले पिटाइ, कैले मिठाइ, कैले कथा दिन्छ
दुनियाँ पनि छ हजुआमाको जादूको सन्दुक झैँ ।
तैँले सहिरहेको पनि वर्षौं भएछ 'निरज'
तँ पनि भइसकेछस् यौट सिङ्गो युग झैँ ॥

ॐॐ

# गजल

जीवनपानी
स्याङ्जा, ओराष्टे—६, हाल कुलेश्वर, काठमाडौं

कर्म नै हाम्रा हौसला हुन् कसैको ताली चाहिँदैन,
फूल हौ बनका राम्रा छौ ओठमा लाली चाहिदैन ।

तारा र सूर्य एउटै हुन् नजिक टाढा दूरीमा
घरकै स्वास्नी राम्री छिन् नक्कली साली चाहिँदैन ।

छत्तीस वर्ण चार जातको नेपाल हाम्रो फूलवारी
गोडमेल आफै गर्दछौ विदेशी माली चाहिँदैन ।

बाल्मीकि आदि ऋषिले तपस्या गर्ने भुमीमा
बुद्धको शान्ति चाहिन्छ जुलुस र्‍याली चाहिँदैन ।

कसैको पेवा हैन देश बाँडेर भाग लगाउँन,
देशको गुदी सिध्याउने फन्टुस जाली चाहिँदैन ॥

ॐॐ

# गजल

निमेष निखिल
हेटौंडा

हाँसेकै छ बेथितिको पहाडमा मान्छे,
झुमेकै छ मान्छेसँगै खेलबाडमा मान्छे ।

गतिशील पाइला छन् यात्रा लक्ष्यतिर,
हिँडेकै छ तराई, हिमाल, कछाडमा मान्छे ।

सुखदुःख जिन्दगीका साथी सम्झिएर,
रमेकै छ मेलापात चाडबाडमा मान्छे ।

चैत-वैशाख सधैँभरि आउँदैनन् भन्दै,
बाँचेकै छ जेठ अनि आषाढमा मान्छे ।

हाँसेकै छ बेथितिको पहाडमा मान्छे,
झुमेकै छ मान्छेसँगै खेलबाडमा मान्छे ॥

ᴥᴥ

# ठेक्का दिऊँ

पेशल आचार्य
इनरुवा-९, सुनसरी हाल : मन्थली, रामेछाप

जनता गरिबीको समुद्र तर्न
गतिलो नाउको खोजी गर्छ

नेता स्वार्थ पुर्तिको लागि
सधैँ चुनावको रोजी गर्छ

चुनाव सुनाव जतासुकै जावोस्
देश विदेशीलाई दिऊँ ठेक्कामा

गरे उसैले विकास गर्छ
नगरे जे मन लाग्यो त्यही गर्छ ।

ᴥᴥ

# एउटा बुढो रूख

पवन आलोक
कालिकास्थान, डिल्लीबजार

एउटा बुढो रूख
ठिङ्ग उभिरहेछ
युगौं युगदेखि
एकोहोरो, एकनास
दर्शक बनेर
यो युगको
साक्षी बनेको छ
संसारभरका युद्ध, अपराध, झगडा
अन्याय, अत्याचार र व्यभिचारहरूको ।

के के सहेन यसले ?
हावा, हुरी, चट्याङ, असिना सहेको छ
बादल, घाम, पानी सहेको छ ।

संसारलाई ओत दिँदै आयो
प्राणीहरूको कल्याण गर्दै आयो
तर अव सबैबाट उपेक्षित
तर अव सबैबाट तिरस्कृत ।

एउटा बुढो रुख
ठिङ्ग उभिरहेछ
युगौं युगदेखि
काललाई पर्खेर ।

विवश छ
केही गर्न सक्तैन
मृत्यु कुरेर बसेको छ
हो, मृत्यु कुरेर
फगत मृत्यु ॥

# गजल

प्रकट पगेनी शिव
३१३ लेक साइड, पोखरा-६

साँझ पऱ्यो धेरै कुरा गर्न बाँकी रह्यो सानु !
पिरतीको माना पाथी भर्न बाँकी रह्यो सानु !

तिमी भन्थ्यौ फुल्न पर्छ पात-पात डाली-डाली,
फुल्ने मन फुल्नै नपाई झर्न बाँकी रह्यो सानु !

भेल तरें, जँघार तरें, तिम्लाई भेट्न सागर तरें,
खालि तिम्रो मनको खोला तर्न बाँकी रह्यो सानु !

वैलिंदै छ सम्झनाको मालती फूल तगारोमा,
तिर्सनाको मंगले फूल सर्न बाकी रह्यो सानु !

विदाईको अन्तिम चिनो हातमा जौ-तिल लिईराख
अब 'प्रकट' तिम्रै काखमा मर्न बाकी रह्यो सानु !

ශශ

# दुई मुक्तक

मनोज न्यौपाने

जव बीज नै खराब हुन्छ
वृक्षमा त्यसकै प्रभाव हुन्छ
विषवृक्षमा फल्दैन अमृत
नगर कोसिस तनाव हुन्छ ।

२.
सबैकुरा छोडी पहिले हिंड भट्टीमा
भरेभोलि होइन ऐले हिंड भट्टीमा
झूठो कुरा भन्नेभए यहीं भन्थें म
साँचो बोल्नु छ मैले– हिंड भट्टीमा ।

ශශ

# विचरा राष्ट्रसेवकहरू

प्रदीप खतिवडा

विदैविदा, विदैविदा,
नयाँ वर्ष विदा, माघे संक्रान्ति विदा,
आमाको मुख हेर्ने विदा, बाबुको मुख हेर्ने विदा,
गुरु पुर्णिमा विदा, रक्षा वन्धन विदा, गाइजात्रा (उपत्यका) विदा,
ऋषि पञ्चमी र नारी दिवस (महिलालाई) विदा, कृष्णाष्टमी विदा,
रामनवमी विदा, चैते दशै विदा
ठूलो दशै दश दिन विदा, तिहारको चार दिन विदा,
पृथ्वी जयन्ती विदा, त्रिभुवन जयन्ती विदा, शिवरात्री विदा,
सूर्य ग्रहण विदा, घोडेजात्रा उपत्यका विदा, बसन्त पञ्चमी विदा,
इन्द्रजात्रा विदा,
कुनै राजकीय सबारी विदा, कुनै मृत्यु विदा, कुनै हवाई दुर्घटना विदा,
संविधान दिवस विदा, कानुन दिवस (अदालत) विदा, सहिद दिवस विदा,
निजामती दिवस नयाँ विदा, बाउन्न सनिवार विदा, शुक्रबार आधा विदा
त्यसमाथि भैपरि आउने विदा, घर विदा, विरामी विदा सुत्केरी विदा,
काजक्रिया विदा, अध्ययन विदा, पर्व विदा तथा असाधारण विदा
यो देशमा राष्ट्रसेवकहरूलाई विदैविदा

यी त भए हिन्दू अधिराज्यका विदा
अब धर्म निरपेक्ष राज्यको विदाको फेरहिस्त त आउन बाँकी नै छ
यसबाट पनि थप विदा पाउँन बाकी नै छ

यस बाहेक
विदा नभएका दिनमा पनि, अड्डा आएका छिनमा पनि
तारेख धान्न भए पनि, सिनेमा हेर्न भए पनि
टेबिलमा टोपी राखेर जतासुकै गए पनि हुने
कुनै पनि नियम कानुन वा नैतिकताले नछुने
काम गर्नु पर्‍यो भने तलब माथि घुस पनि चाहिने
लोकको सेवा चाहिँ नगरे पनि हुने

यसमाथि पनि
राष्ट्रसेवकहरूलाई नै थप सुविधा चाइने !!

ଓଓ

# रामेछाप

प्रल्हाद पोखरेल

१

चढ्दा माथि चुहुन्छ तप्प पसिना ठाडा उकालीहरू
झर्दा फाँट-उपत्यकातिर हुने आनन्दवर्षा अरू
कोसी कल्कल बग्छ सिञ्चन गरी टारी-गरा-मन्थली
रामेछाप ! रहेछ सुन्दर धरा उत्कृष्ट हाम्रो थरी ।

२

कोदो-धान-जुनार-आलुसँग नै खेती मकैको गरी
स्रष्टा सौरभ कृष्णलाल कविझैँ विख्यात भै बेसरी
नौलो क्रान्ति गरेर चर्चित हुँदा नेपलाको यो जिमी
रामेछाप ! विशिष्ट छाप जनमा छाडी बसेछौ तिमी ।

३

ओजस्वी प्रिय मन्थलीय कविको हो जन्मधर्ती प्रिय
तेजस्वी जगदीशको प्रियथलो जो छन् सधैँ सक्रिय
स्रष्टा-ज्यान नगेन्द्र-रोचक दुबै यो वृक्षका हुन फल
रामेछाप ! बनेर वृक्ष गतिलो छाया दियौ शीतल ।

४

हेर्दै उच्च हिमाल पर्वतहरू लोभ्याउने आकृति
हेर्दै मौलिक सिर्जना प्रकृतिका नौला अनेकौँ कृति
हामी मुग्ध बनेर दर्शक भयौँ हेरी कला संस्कृति
रामेछाप ! दियौ चिरन्तन नयाँ सौन्दर्यको झङ्कृति !

५

छन् नैसर्गिकता अगम्य कविता, आत्मीयता, सभ्यता
उत्साही जनभावना छ बलियो राम्रो कता हो कता !
नेपाली इतिहास अङ्कित हुने धर्ती सदा उर्वरा
रामेछाप छ छन्दकै वरिपरि स्वच्छन्द खेल्ने धरा ।

६

आफ्नै बर्कतबाट गर्न कसिई खेती मकैको घना
अग्लो उन्नतिशील जीवन बनोस् गर्छौं यही कामना
जागून् जाग्रत भावना हृदयमा उत्साह उत्प्रेरणा
रामेछाप ! सदैव सिर्जनमुखी बन्ने मिलोस् प्रेरणा ॥

# गजल

प्रोल्लास सिन्धुलीय
गौयाटार, सिन्धुली

धरतीको धुलो उडी चन्द्रमालाई छुन खोज्नु
उस्तै कुरा भयो नानी मैले तिम्रो हुन खोज्नु ।

आफू जस्तै देख्छ आँखा मन पनि त्यस्तै ठान्छ
बिनायोले व्यर्थै किन सारंगीको धून खोज्नु ।

अहिले त यस्तो लाग्छ आफ्नो मान्छे पाएको छ
भविष्यमा एक्लिएर मैले किन रुन खोज्नु ।

दुई मन मिलेपछि जे कुरा नि जायज हुन्छ
हुने हो कि पित्तलले अकबरी सुन खोज्नु ।

हामी दुईको प्रेममाथि शंका गर्ने ठाउँ छैन
समयले ठग्यो भने अर्को साथी कुन खोज्नु ॥

ᘛᘛ

# दुई टुक्रा

प्रेमप्रकाश मल्ल 'महेन्द्रमधुकर'

१. हिमचुलीको शिखरमा
जति चढे पनि के भा'छ र
व्यथा र वेदनाहरूका शिखरहरू
अविजित छन् अझै
नदी नियन्त्रणका कुराहरू
जति गर्दा पनि के भा'छ र
आँशुका खहरेहरू
अनियन्त्रित छन अझै ।

२. तिम्रो र मेरो
हिमचिम
जस्तै
वरसातको रिमझिम ।

ᘛᘛ

## गजल

बूँद राना

सपूतले कर्तव्य त वल्ल आज चिने अरे ।
लुछाचुँडी गरी-गरी जति पायो लिने अरे ॥

मुद्दामाथि अझै अर्को चर्को मुद्दा थपिंदै छ ।
आफू आफैं न्यायाधीश बनी मुद्दा छिने अरे ॥

बजारमा नाङ्गै हिंड्ने होडबाजी चलेको छ ।
लाज छोप्न लगौंटी नि अब नचाहिने अरे ॥

बिरामीको रोग सन्चो नहुने त कुरै छैन ।
सुसारेले औषधीको साटो कात्रो किने अरे ॥

देख्छु आज जल्ले पनि राँको बोकी हिंडेको छ ।
पालै पालो देशलाई दागबत्ती दिने अरे ॥

ॐॐ

## गजल

बाबु त्रिपाठी

हिन्दूहरू भेटिन्छन्, मुसलमानहरू भेटिन्छन्
पाइलैपिच्छे बेरोजगार जवानहरू भेटिछन् ।

सिंहदरबार अगाडि एकछिन उभिनु पर्छ
देश चलाउने बाँदरका बथानहरू भेटिन्छन् ।

यो सोचेर सरकारले राति छापा माऱ्यो
झुपडीमा वहुमूल्य सामानहरू भेटिन्छन् ।

भर्खर पिरती लाउन सिकेकी युवतीको
मुहारमा थरीथरीका मुस्कानहरू भेटिन्छन् ।

यही आशमा बाँरिहेकाछन् बाउ-आमा
बर्षौं अघि हराएका सन्तानहरू भेटिन्छन् ॥

ॐॐ

# केही मुक्तक

बाबुराम लामिछाने

मैले गाउँन नजानेको मनको त्यो गीत हौ तिमी,
मैले लाउँन नपाएको हृदयको त्यो प्रीत हौ तिमी,
तिम्रो र मेरो सम्बन्ध एउटा सपना जस्तो लाग्छ
मैले हार्न नसकेको जीवनको अकिंचन जीत हौ तिमी ।

१.

हेर हेर तिनलाई पनि नछोड अब हेर लौ छिट्टै,
क्या रूप-लावण्य के हो तिनमा त्यस्तो बिछट्टै,
चाखे कति आँखाले तिनको त्यो आल्हाद कति
तिर्खा उस्तो हो कि हो त्यो चीज आफैं विचित्रै ।

२.

आकास उघ्रन्छ कि भन्छु र हेर्छु म,
क्षितिज उघ्रन्छ कि भन्छु र हेर्छु म,
उही आशा र निराशाको बादल छ
मौसम सुध्रन्छ कि भन्छु र हेर्छु म ।

३.

बादल कति टिक्ला र अब पनि,
कुहिरो कति बिक्ला र अब पनि,
आए मिलनका उज्याला घडी !
सपना कति टुट्ला र अब पनि ।

४.

हेर्दाहेर्दै झरेर गए रूखका कति पातहरू,
नबुझी नबुझी सुनें कति चराका बातहरू,
आफ्नै सपना पनि आज निर्दयीझैं लाग्छ
नसंझाऊ भो अब दुःखका ती रातहरू ।

५.

आँखामा लगाउँने गाजलको पनि के कुरा भयो र ?
कताकता सुनिने मादलको पनि के कुरा भयो र ?
सुने त सुनाउनु हुन्थ्यो– बोलाउनु हुन्थ्यो प्रीतले
आकाशमा उड्ने बादलको पनि के कुरा भयो र ?

६.

ᴓᴓ

# गजल

कृष्ण प्रधान
मञ्जरी भिलेज, ईमाडोल, ललितपुर

दुःखी मरे नि सुखी मरे नि मर्ने त आखिर म नै त हो नि,
डुबी मरे नि उत्री मरे नि मर्ने त आखिर म नै परें नि ।

खाई मरे नि भोकै मरे नि मर्ने त आखिर मैले त हो नि,
न भोकको सुर्ता न भो तीर्खा खोई त चिन्ता तिमीले लियौ नि ?

हाँसेर बाँचे नि बाँचेर हाँसे नि बाँचेको आखिर मैले नै हो नि,
ताकेर तिम्ले बञ्चरो  हान्यौं चोट त आखिर मैले सहें नि ।

पुलै तरे नि खोलै तरे नि तर्नु त आखिर मैले थियो नि,
नाका र बन्दी जसले गरे नि पीडा त आखिर भोगें मैले नि ।

उछाली पछारी जसले गरे नि उचालिएको आखिर मैले नै हो नि,
मच्चिनु थच्चिनु जे भए नि थच्चिएको आखिर म नै त हो नि ।

घोषित वा न हो अघोषित नाकाबन्दी त भोलेकै हो नि,
मुखैमा राम राम कोखीमा छुरा धस्न त तिमीले धसेकै हो नि ।

अति र खती ज-जसले गरे नि सहनु त आखिर सहेकै हो नि !
गोरो भए नि कालो भए नि छिमेकी आखिर म नै त हो नि ।

ळळ

# बहाना

शङ्करकुमार राई
कुलुङ, भोजपुर

आखिर बहाना न हो
अस्ति तिमीले
एउटा बहाना छाडेर गयौ
म पनि
एउटा बहाना छाडेर जाँदैछु
भित्र एउटा कुरा लुकाएर
जिब्रोले कसम खाँदैछु
आउँछु भन्ने बहाना गर्दैछु ।

ळळ

## गजल
मनु ब्राजाकी

जति पाप गऱ्यो उति फल धेरै फल्दो रै'छ ।
यति धेरै फल्दो रै'छ रूख पनि ढल्दो रै'छ ।

पानीभित्र जतिसुकै भए पनि साह्रो ढुङ्गा,
दुई थोपा आँसु पर्दा ढुङ्गा पनि गल्दो रै'छ ।

खाली हात आए पनि संसार नै किन्छु भन्ने,
आज फर्की जाँदा हेर खाली हात मल्दो रै'छ ।

जति धेरै रात कालो भए पनि जिन्दगीमा,
मरेपछि छातीमाथि यौटा बत्ती बल्दो रै'छ ।

आफ्नो भन्ने जिन्दगी यो चलाउँन जानिएन,
सुस्तरी नै भए पनि सास भने चल्दो रै'छ ।

नबोल्ने त्यो ऐनाले त धोका कहाँ दिया हो र,
धेरै बोल्ने आँखाले नै 'मनु'लाई छल्दो रै'छ । ~~

## गजल
माधव काफ्ले

विश्वासको साँधलाई सकेसम्म सारे हुन्छ
नसक्ने र निमुखालाई गोरु बनाई नारे हुन्छ ।

मरिसक्यो राष्ट्रियता छैन कतै स्वाभिमान
राजनीतिको आजैदेखि साथी जुठो बारे हुन्छ ।

अचम्मको संस्कारमा हुर्किरा छौं हामीहरू
धूर्त लाछी योग्य भए हक्की मान्छे तारे हुन्छ ।

सबै चिज भोग्य भए भने अब आजैदेखि
मानिसको मासु पनि मौका पर्दा दारे हुन्छ ।

सिद्धान्तलाई च्याँखे थाप्दै माथि चढ्ने लक्ष भए
मनभित्रको आस्थालाई तुरुन्तै बढारे हुन्छ । ~~

# चरा र धर्म

महेश प्रसाईं

तिमी मुसलमान
म सर्वमान
ऊ हिन्दू
यो बुद्धिष्ट,
त्यो क्रिस्तान
अर्को कोही
शिख बहाई,

एउटा चराले हेर्दा
केही देख्दैन
यी सबैलाई,

उसले आफ्नो दृष्टिमा
यी मान्छे
वस्त्रहरू
जे जेख्छ
आफूभन्दा ठूलो चरा देख्छ
नउड्ने चरा,

निःसन्देह
उसले देख्दैन
कुनै धर्म-वस्त्र,

फगत् चराको धर्म
चरा हुनु हो
र अर्को चरालाई
चराजस्तै देख्नु हो
क्रमशः
आफूभन्दा भिन्न वस्तुलाई
अनौठो चरा देख्नु हो ।

ଓଓ

# गजल

रमेश खकुरेल

आज दुर्दैव ममाथि नै जुटेको छ
म अभागीको पुर्पूरै फुटेको छ !

माओवादीले रात, दिनमा प्रहरीले
बलले मेरो अस्मिता लुटेको छ !

पस्किएकी छु उन्का निम्ति मासु भुजा
मेरो लागि त मकै भुटेको छ !

स्तनमा छन नीलाडामहरु मात्रै
मानुँ कोहीले त्यहीं मात्र कुटेको छ ।

बाँधिए घर पालुवा कुकुर सबै आज
एक नरभक्षी बाघ मात्रै छुटेको छ ।

अर्चना ध्यान उपासनाहरु गरे धेरै
अब भगवानमै विश्वास टुटेको छ ।

ᏋᏋ

# दुई मुक्तक

त्रिपुरा पौडेल

रित्तिएको छैन आँसु मेरो अझै अझै रुने रहर बाँकी छ
सकिएको छैन पिउन मैले अपमानको जहर बाँकी छ
टुट्न दिइन तैपनि मैले भरोसा आफ्नाहरू प्रतिको
कसैले साथ नदिएर के भो ? भगवान्को भर बाँकी छ ।

कसैलाई सहयोगको हात पनि बिझाउँन थालेछ
कसैलाई दुईचार दिनको साथ पनि बिझाउँन थालेछ
झरेको पातझैं टुट्न थालेपछि यहाँ हरेकको विश्वास
कसैलाई अब मेरो बात पनि बिझाउँन थालेछ ।

ᏋᏋ

## गजल

रमेश पौडेल

विचरालाई पाता क्यानाम् कस्नु भएछ,
उसैलाई छुरी क्यानाम् धस्नु भएछ ।

दुधै ख्वार पालेका थे जतन गरेर,
गोमनले झैं राति क्यानाम् डस्नु भएछ ।

चोरको नाइकेले त चिन्नुपर्ने सबै,
डाँकाकै घरमा क्यानाम् पस्नु भएछ ।

पाताल हैन आकाश छुने कुरा गर्नुहुन्थ्यो,
घरकै धुरीबाट क्यानाम् खस्नु भएछ ।

सपनाको महल पनि भत्किएछ क्यार,
दोबाटोमा मागी क्यानाम् बस्नु भएछ ।

ơƠ

## गजल

साम्ब ढकाल

भन्छन् सुविद पात टेक्दा च्वास्स च्वास्स दुख्छ
भन्छन् सुविद आँत छाम्दा च्वास्स च्वास्स दुख्छ ।

यो संसारमा मानिसलाई दुःखै दिने धेरै भए,
भन्छन् सुविद गाथ ताक्दा च्वास्सच्वास्स दुख्छ ।

फूल टिप्ने हातहरूले काँढा किन पन्साए,
भन्छन् सुविद घात लाग्दा च्वास्स च्वास्स दुख्छ ।

नपिउनेले हैन, बरु पिउनेले नपिऊ भन्छन्,
भन्छन् सुविद मात लाग्दा च्वास्स च्वास्स दुख्छ ,

साम्ब थियो, रासा थियो, थिए थुप्रै साथीहरू,
भन्छन् सुविद साथ त्याग्दा च्वास्स च्वास्स दुख्छ ।

ơƠ

# छोटा कविता

राजेन्द्र थापा
लोकन्थली, काठमाडौं

**प्रजातन्त्रको रोग**

प्रजातन्त्रको रोग लागेको मान्छे
खूब बोल्छ खूब बोल्छ
बोल्दा बोल्दा थाक्छ, अनि चुप लाग्छ
र प्रजातन्त्रको रोग निको हुन्छ ।

**ंगम**

चुइंगम चपाइन्छ, चपाइन्छ, चपाइन्छ,
अनि रस सकिएपछि थुक्क थुकिन्छ
तेस्तै हो, रस भएसम्म मान्छेलाई पनि
अनि रस सकिएपछि थुक्क थुकिन्छ ।

**भोको**

यौटा भोकोले माग्छ,
दुईटा भोकोले सोच्छ,
तीनौटा भोकोले घोच्छ,
चारोटा भोकोले खोस्छ,
पाँचओटा भोकोले झ्यालका ऐनामा ढुङ्गा हान्छ
छओटा भोकोले गजुर खसाल्छ
त्योभन्दा बढी भोको भएमा
जगै भत्काउँछ र परिवर्त्तन ल्याउँछ

**भेट्दा**

कुकुर कुकुर भेट्दा
पैले भुक्छन्, पछि सुँघ्छन्
मान्छे मान्छे भेट्दा
पैले सुँघ्छन्, पछि भुक्छन्
नेता नेता भेटिए भने–
न त सुँघ्छन् न त भुक्छन्
भेट्नासाथ चाट्छन्, चाट्छन्, चाट्छन्
छुट्टिनासाथ थुक्छन्, थुक्छन्, थुक्छन् ।

ɷɷ

# केही मुक्तक

रामकाजी कोने

१

थिचोमिचो विरुद्ध परायाको सबै जुट्नुपर्छ
मुखले मात्र हैन मुटुले नेपाल बोल्नुपर्छ
विदेशी रङको पानी हैन नेपाली नसामा-
राष्ट्रभक्तिको तातो रगत बग्नुपर्छ ।

२

रहस्यमयी मुस्कान मोनालिसाको भन्दै भित्तामा टाँगिदिए
सुन्दरताको प्रतीक भेनिस भन्दै सङ्गमरमरमा कुँदिदिए
के नै दियो र माया अनि सृष्टिका आधारलाई पुरुषले–
सधैँ झूटो प्रशंसा र मर्यादाको जन्जीरले बाँधिदिए ।

३

चाहिँदा माया सुनकै भाउमा किन्न पाउने भए त
नचाहिँदा माया नूनकै भाउमा बेच्न पाउने भए त
कति जाती हुन्थ्यो बन्धकी परेको यो मन–
पैसाले सजिलै निखन्न पाउने भए त ।

४

लहलहाउनुअघि नै पालुवा झरेझैं भो जिन्दगी
मेहनत अनि पसिना बालुवामा परेझैं भो जिन्दगी
औंलामा गनूँ भन्छु उपलब्धि केही भेटिँदैन–
शून्यले शून्यलाई गुणा गरेझैं भो जिन्दगी ।

५

जाउलो एक ताउलो भोकाको हुन पाए त
मीठो मसिनो जे पाक्छ सँगै बाँडी खाए त
किरा फट्याङ्ग्रै पनि बाँच्छन् आफ्ना लागि–
कति सार्थक हुन्थ्यो जीवन अरूको काम आए त !

६

माया माया भन्दै धेरै टाढा गएँछु म
झूठो छायाँको पछि एकोहोरो धाएँछु म
आस मात्र दियौ, बास कहिल्यै नदिँदा लाग्छ–
तिम्रो प्रेमनगरको फगत सुकुम्बासी भएँछु म ।

# चाहना

रामप्रसाद ज्ञवाली

यस्तो उच्च उदात्त कर्म म गरूँ
सर्वत्र आराध्य होस्
ज्ञानी, सज्जन, सभ्यनिम्ति महझैँ
सम्पूर्ण आस्वाद्य होस्
मुर्दाझैँ अररो घमन्ड छ भने
त्यो झुक्नमा बाध्य होस्
यस्तो सुन्दर काव्य लेख्न म सकूँ
साँच्चै महाकाव्य होस् ।

यस्तो अद्भुत सृष्टि गर्न सकियोस्
आजन्म आनन्द होस्
मान्छेका मनका तनाव कटुता
विद्वेषको अन्त्य होस्
बारम्बार पढूँ पढूँ भइरहोस्
पढ्दा नयाँ भैरहोस्
झन् झन् तृप्ति बढोस् उदात्त मनको
काव्यान्त कैल्यै नहोस् ।

यस्तो सुन्दर दृश्य देख्न सकियोस्
सौन्दर्य नै मख्ख होस्
यस्ता मार्मिक भाव लेख्न सकियोस्
दुर्भावना नष्ट होस्
यस्ता उच्च विचार सार्न सकियोस्
संसार जागीरहोस्
यस्तो भव्य कला उतार्न सकियोस्
बाँकी कतै क्यै नहोस् ॥

## गजल

**राबत**

दुईटा कुरा बारम्बार उस्तै उस्तै लाग्छ
जिन्दगी र कारागार उस्तै उस्तै लाग्छ ।

सधैं चर्किनै खोज्ने, सधैं फुट्नै खोज्ने
शिशा र मेरो निधार उस्तै उस्तै लाग्छ ।

भो नसोध्नुस् केही, दुखेको दिललाई–
ढुङ्गा र फूलको प्रहार उस्तै उस्तै लाग्छ ।

भोको पेटमा ज्यादा, भरी पेटमा कम लाग्ने
मदिरा र सरकार उस्तै उस्तै लाग्छ ।

हरेक अनुहारमा देखिन्छ ताजा घटना
यहाँ मान्छे र समाचार उस्तै उस्तै लाग्छ ।

ॡॡ

## गजल

**रासा**

थुप्रै काम गरिस् रासा, के पाइस् खै ?
धेरै चोटी मरिस् रासा, के पाइस् खै ?

बोटबाट फूल टिप्नु हुन्न भन्छस्
काँडाबीच परिस् रासा, के पाइस् खै ?

जहाँ बस्छस् त्यो महल तेरो हैन
डेरा मात्र सरिस् रासा, के पाइस् खै ?

खूब परिवार-परिवार जप्छस्
आफैंलाई हरिस् रासा, के पाइस् खै ?

मुटुमाझ राखिस् सबैलाई तैंले
आँखाबाट झरिस् रासा, के पाइस् खै ?

ॡॡ

## मुक्तक
रत्न शम्सेर थापा

अल्झाएर आँखीझ्यालमा मेरा उज्याला बिहानहरू
बल्झाएर ख्यालख्यालमा व्यथाका अमिला मुहानहरू
मनाऊ ए फूलहरू हो ! उत्सव जीतको मेरो हारमा
धसाएर आज मुटुभरि विषालु तीखा बानहरू

ଔଔ

## मुक्तक
हरिकृष्ण काफ्ले

अन्धकार रातको कथा जुनेलीलाई के थाहा ।
बगीजाने आँसुको मोल परेलीलाई के थाहा
सुकोमल मनमा किन घरी घरी घनले ठोक्छौ ?
गोलीको चोट त चरो पो बुज्छ, गुलेलीलाई के थाहा ?

ଔଔ

## नेतृत्व
मोहन घिमिरे

परार साल बजार गर्न गएकी छोरी
गुण्डाहरूको बलत्कार थाम्न नसकेर मरिछ
आउँदै आइन ।

छोराले त केही गर्ला भन्ठानेथे
पोहोरसाल क्याम्पस पढन गएको छोरो
जुलुसमा रहस्यमयी मरेछ
फर्कंदै फर्केन

जागीर खाएर के के न गरुँला भन्थे
यो साल त जनमतको पुर्जीले उसैलाई खाएछ
घरै आएनन् ।

को छ र आफ्नो ? अब हुँदै भएन
आउने साल त हातमा फलामको भाला र
काँधमा राइफल बोकेर आफै नगई भएन ।

ଔଔ

# पहाडी बाला

प्रतिमा दाहाल
मैजूबहाल, चाबेल

पिठ्यूँमा भारी छ
उकालो आरालो गर्नु छ
खुट्टामा जुत्ता छैन
तैपनि थकाई छैन
हँसिलो अनुहार छ
कुनै चित्तदुखाई छैन ।

गलामा मुगाको माला छ
फाटेको चोलो ।
टुमुक्क गुन्यु
ओठमा छैन लिप्स्टिक लाली
तैपनि
मुहारउज्याली- प्राकृतिक लाली ।

दैनिकी गाह्रो छ
पसिनाको धारो छ
तैपनि
सन्तोषै प्यारो छ ।

(ಬಡ

# सलामी र मलामी

ओम आचार्य

जिउँदाहरूका लागि
मेरो सलामी
मरेकाहरूका लागि
म मलामी ।

(ಬಡ

# सम्पादक

रोचक घिमिरे
टंगाल, काठमाडौं

मुटुको न्यानो कुनालाई थर्थर कमाउने
माघे जाडोमा आधारातमै दाईंमा जोतिएको
चैते घामको भुइँ डढाउने बलौटे रापमा
गाडा तान्दै निरन्तर कुदिरहेको
अनि बर्खाको थल्थले हिलोमा
घुँडा घुँडा डुब्दै खेत जोतिरहेको
तराईको परिश्रमी बूढो बयल जस्तै
त्यो सम्पादक
कत्ति झर्को नमानी लगातार
पुस्तक, पत्रिका र अखवारका पानामा जोतिदै
कम्प्युटरको पर्दामा आँखा टट्याएर चिहाउँदै
आफूजस्तै थोत्रिएको कलम अथवा माउस
घस्तछ, घिसार्दछ
ग्रन्थ सम्पादित हुन्छ
युग प्रिन्ट हुन्छ
इतिहास निर्मित हुन्छ
र शाश्वत साहित्य उद्घाटित हुन्छ

तर
ऊ
आफू
डिलिट हुन्छ

भाइरसले भेटेर नामेट हुन्छ
अनि धुलोमा बढारिएर कतै बिलाउँछ
अर्थात्
अस्तित्वहीन मरणलाई वरण गर्दछ
त्यो सम्पादक !

ॐॐ

# गजल

लालिजन रावल

दुनियाँमा गोरा देखेँ, देखेँ कोही काला
भावना हो ठूलो कुरा किन हेर्नु छाला ?

आफ्नो गाउँ-ठाउँ बिर्सी कता लाग्यौ तिमी ?
बिचल्लीमा परेका छन् यहाँ लालाबाला ।

अहिंसाका जति सुकै पाठ पढे पनि
तिमी सधैँ उभिरह्यौ तेर्स्याएर भाला ।

आजैभोलि भेट्नलाई, सक्दिनँ म आउन
वर्षासँगै बढिसके यहाँ खोलानाला ।

खुसी दिएँ, सद्भाव दिएँ, दिएँ हृदय नै
अब के पो बाँकी छ र, गए ज्यानै जाला ।

ꙮꙮ

# गजल

लीलाराज दाहाल

बगरे र सरकार उस्तै उस्तै लाग्छ
भिखारी र खरदार उस्तै उस्तै लाग्छ !

भित्रै सम्म बचनले पार्दो रैछ घाऊ
हप्काई र चिरफार उस्तै उस्तै लाग्छ !

कोही मरे आफ्नै फलिफाप सोच्ने
पुरेत्बा र हकदार उस्तै उस्तै लाग्छ !

अज्ञानी, बेसोमती प्रश्न कर्ता हुँदा
सम्वार्ता र केरकार उस्तै उस्तै लाग्छ !

सिमेन्ट, गिटी, रड पनि निल्दा रहेछन्
अगस्ती र ठेकदार उस्तै उस्तै लाग्छ !

ꙮꙮ

# पृथ्वीको चन्द्रमा

बासु शशी
द्यौपाटन, काठमाडौं

भगवानले आकाशको लागि
एउटा चन्द्रमा बनाइदियो
पृथ्वीको लागि चाहिँ
चन्द्रमाको साटो तिमीलाई बनायो !

कान कान छोपिने तिम्रो
कपालको छायाँ
तिम्रा गलामा परिरहेछ !

तिमी यौटा विरुवा हौ
त्यसको लावण्यको
एउटा फूल फुलिरहेछ !

म भोको भिखारी झैँ तिमीलाई
हेरिरहेछु
शो केश भित्रकोमिठाइ जस्तै !
म बैंकको लाखौ लाखको नोट झैं
गनिरहन्छु तिमीलाई
गरीब क्यासियरले जस्तै ।

तिमी चन्द्रमाको साटो
मात्र एउटा बत्ती भइदिएको भए
म मेरो कोठामा लगेर
बाल्ने थिएँ ।

ठिकै छ, के लाग्छ–
ईश्वर पनि त मानिस
भइदिएको भए
म उसलाई साथी
बनाउँने थिएँ !

# बिहानै बिहानै
विधान आचार्य

तिमीलाई कल्पें बिहानै बिहानै
रहें तिर्सनामा बिहानै बिहानै

कहाँ पुग्छ मनले बिहानै बिहानै
सँगी खोज्छ तनले बिहानै बिहानै

पिलाऊ अरू नै बिहानै बिहानै
कहाँ प्युंछु पानी बिहानै बिहानै ?

उतारेर मनमा बिहानै बिहानै
पिलाऊ नयन् ती बिहानै बिहानै ।

तिमी शाकी बन्नु बिहानै बिहानै
शराबी म बन्छु बिहानै बिहानै ।

ccc

# तीन टुक्रा
विनोद अश्रुमाली

**छोरो**

बाँचुन्जेल हंस खाने
बाबुको
मरेपछि अंश खाने
उही बाबुको ।

**पत्नी**

भलाद्मीलाई पुरा जिन्दगीमा
एकपल्ट पर्ने
शतप्रतिशत आयकर तिर्नुपर्ने एउटा चिट्ठा ।

**रुपैयाँ पैसा**

पानीको व्यहोरा
नभए बाहिरबाट आउँछ
भए बाहिरतिर जान्छ ।

ccc

## नारीको गीत
### विनोद दीक्षित

बग्छ अविरल बाग्मती, बग्छ मेरो सुनकोशी
बग्दैबग्दै जाँदा सागरमा पुग्छ त्रिशुली
ए हजुर सुन्नुस्, म बालिका नौवर्षे
स्कूल जान्छु, पढ्छु, अनि खेल्छु कानकान पिच्चा ।

ø

बग्छ काली, सुनकोशी, बग्छ कोशी कर्णाली
मेरो सगरमाथा उस्तै, गणेशहिमालको अभिवादन पनि उस्तै
ए हजुर सुन्नुस् त, म त तरुनी अठारवर्षे
चाहन्छु चार आँखा मात्र, तर जुध्न पुग्छन् कतिकति ।

ø

बग्छ सेती,गण्डकी, बग्छ कनकाई, नारायणी
चुरे पनि उस्तै, माछापुच्छ्रे दिव्य मुहार जस्तै
ए हजुर सुन्नुस् म त भएँ पचासवर्षे
साना नानी झुम्मिँदै भन्छन्, कथा भन्नोस् हजुर आमा ।

ø

बग्छ कमला, त्रियुगा बग्छ मेरो उजेली माइखोला
देखेदेखि आकाश, जुन, क्षितिज र सूर्य उस्तै
ए हजुर सुन्नुस् भइएछ अब असीवर्षे
बूढा बिते, ओछ्यान परेँ, छैनन् कोही यताउति ।

ø

नियम यस्तै चलन यस्तै, फेरिन्छन् प्रतिपल प्रहर
दुःखै नमान्नु कसैले पनि, जिन्दगीको हो यस्तै लहर ।

øø

## मुक्तक
### पद्मावती सिंह

किरिया खाई भन्छौ तिमी मलाईमात्र प्रेम गर्छौ,
सपनीमा पनि तिमी मलाईमात्र देख्ने गर्छौ ।
सौगन्ध छ तिमीलाई यही अमर प्रेमको,
भन, तिमीले कतिसित यही कथा भन्नेगर्छौ ?

øø

# अहंकार/प्रेम

सरुभक्त श्रेष्ठ
पोखरा

आँखाहरू जुधेपछि सम्भावनामा चिनजान हुन्छ,
हृदय भन्ने ठाउँमा नै जिन्दगीको मीठो ज्ञान हुन्छ ।
कसैले सोधे प्रेमको कुरा म साँचो भन्दिन्छु कि
अहंकार जति महान् हुन्छ प्रेम त्यति नै महान हुन्छ ॥

ᔓᔕ

# गणतन्त्र

लव गाउँले
विनायक बस्ती, थालाजु,

सडकमा उर्लेर कुदिरहेछन् चिल्ला कारहरू
त्यत्तिकै बेपत्ताले हुँइकिदैछन् सरकारहरू
बोल्ने स्वतन्त्रता छ तैपनि चूप लाग्नोस्
नत्र अनाहकमा भेट्नुहोला तरवारहरू ।

ᔓᔕ

# जदौ

विजय बजिमय
पोखरा

एउटा जदौ मेरो
–त्यो भातलाई
जसले मलाई
जिन्दगीमा चाकरीको ढाँचा सिकायो
र आर्को जदौ मेरो
–त्यो आँतलाई
जसले मेरो
सम्पत्तीमा बन्धकीको टाँचा चढायो ! !

ᔓᔕ

# वियोगीका वियोगहरू

वियोगी बुढाथोकी

१. असफल प्रेमका सङ्ला नाम हुन्– वियोगीका वियोगहरू
चिसोबाट बचाउने न्यानो घाम हुन्– वियोगीका वियोगीहरू
घाम र नामको व्याख्या फरक तर सार्थक हुन्छन् यहाँ
अर्न्तमनका सुनामी छाल हुन्– वियोगीका वियोगहरू

२. तीर्थ श्रेष्ठले भन्यो– मुक्तकको बाटो नहिँड् वियोगी
ज्ञानुवाकरले भन्यो– मुक्तकको नियम नमिच् वियोगी
धराबासी, किशोर, ध्रुव, जय र राजकुमारहरू भन्न थाले–
तँ सक्तैनस् समालोचकसँग भिड्न, नभिड् वियोगी ।

३. वियोगीको जीवन सायद पीपलको पातमा छ
जल्दा-बल्दा भाइ मनोज र कृसुको साथमा छ
पिएकै भरमा व्यस्त सडकलाई नाङ्गो देख्छु अचेल
निर्मल भन्छ– पिउन छोडिदे अब बोतल तेरो घातमा छ ।

४.राजु, सुनिल भाइ-बुहारीलाई के भनौं र भन्नु
पिएकै ठाउँमा म मरेमा अन्यथा नमान्नु
एकता, अमिता, नेविस र भाउजूलाई माया गरेर
वियोगी टाडिए पनि उनीहरूलाई आफ्नै ठान्नु ।

५. बारम्बार थिचिएर, पिसिएर खै ! कति बाँच्नु ?
विश्वासको सङ्कटमा छु निर्मल प्रभु, कसरी हाँस्नु
आफन्तले सल्काएको आगोमा जल्दैछु निरन्तर
तैंले पिएको भरमा, नपिई म कसरी नाच्नु ?

६. खै ! कताबाट बुद्धि र दिनेश नजिक आएका छन्
एकता र अमिताले सार्थक साथी पाएका छन्
अजम्मरी रहोस् जीवन आशीर्वाद सधैँ हाम्रो
देख्नेहरूले देखुन्– लैला-मज्नुले जस्तै माया लाएका छन् ।

७. पिउन दियौ मनग्ये, मात लागेपछि रुन्न त ?
सँगै बाँच्ने कसम दियौ, नजिक हुन्न त ?
नजिक हुनु र रुनु एक अर्कालाई बुझ्नु हो
पहिला तिमीले सर्वाङ्ग छाम्यौ, पुरुष हुँ अनि छुन्न त ?

ଓଓ

# गजल

विवश पोखरेल

एकपल्ट तिम्रो गाउँ आउँछु भन्थें, त्यत्तिकै भो
एउटा गीत तिमीसँग गाउँछु भन्थें, त्यत्तिकै भो ।

आँसुको बलेसींमा जिन्दगी नै रुझेपछि
चुहिने मनको छाना छाउँछु भन्थें, त्यत्तिकै भो ।

अँध्यारोमा रात काटचौ, तिम्रो पीडा पढेको छु
जून भई तिमीमाझ उदाउँछु भन्थें, त्यत्तिकै भो ।

कोलाहलमा सधैँ-सधैँ जिन्दगी यो बितेको छ
एकान्तमा तिमीसँग हराउँछु भन्थें, त्यत्तिकै भो ।

हल्लाहरूको सिरक ओढी बाँचेकी छु भन्थ्यौ तिमी
त्यही सिरकमा लुट्पुटिन पाउँछु भन्थें, त्यत्तिकै भो ।

ƆƆ

# कविताका टुक्राहरू

शीतल गिरी

**यात्रा**

यात्रा कसरी गर्ने
पेट जब खालि छ
बैतरणी कुन बुताले तर्ने ?

**अन्धकार**

श्रीमतीको उपमा
बिजुलीसँग दाँज्दै उसले भन्यो
क्षणिक प्रकाश दिई– जीवन अन्धकार बनायो ।

**टुकी**

छरिरहेछ प्रकाश
सबै रात टुकीले
तर ऊ नै छ अन्धकारमा ।

ƆƆ

# गीत

विष्णुबहादुर सिंह

दुखजति जीन्दगीमा मलाईमात्र परोस्
सुख सबै जीन्दगीमा तिमीतिर सरोस्
मेरो एउटा मनको कामना छ ।
माया प्रेम भाँड्नेसँग मेरो सामना छ ।

एउटा कथा तिम्रो मेरो लेखिरहेको छु
त्यो कथाको सुखद अन्त्य देखिरहेको छु
माया प्रेम सद्भावले गाउँ शहर भरोस्
सुख सबै जीन्दगीमा तिमीतिर सरोस्

दुःख जति जीन्दगीमा मलाईमात्र परोस्
सुख सबै जीन्दगीमा तिमीतिर सरोस्
मेरो एउटा मनको कामना छ ।
माया प्रेम भाँड्नेसँग मेरो सामना छ ।

तिम्रो गाउँ खोलापारि मेरो खोलावारि
दोसाँधमा हाम्रो पर्छ त्यही खेतबारी
मन्द मुस्कान हाँसो खुसी सबैतिर छरोस्
दुःख जति जीन्दगीमा मलाईमात्र परोस्

दुःख जति जीन्दगीमा मलाईमात्र परोस्
सुख सबै जीन्दगीमा तिमीतिर सरोस्
मेरो एउटा मनको कामना छ ।
माया प्रेम भाँड्नेसँग मेरो सामना छ ।

ᗢᗢ

# छैन

बालकृष्ण भट्टराई
भैरहवा

लामो यात्रा हिडे पनि नौले बस्ती आ'को छैन
सामन्तीको शोषणको कालो-मैलो गा'को छैन
श्रमजीवी जनताले पेटभरी खा'को छैन
सर्वहारा सुकुम्बासी यौटा धर्सो पा'को छैन ।

ᗢᗢ

# शान्ति

## विष्णु विभु घिमिरे

कुन सपना हो
कुन बिपना हो
एउटा सेतो परेबा
आकाशमा उडिरहेछ
उसका दुवै पँखेटामा ह्वास्स बारुद गनाइरहेछ ।

ঙ্গ

# हामी

## अमर शाह

हामी पैतालामा  सूर्य बोकेर हिंड्छौं
हामी हत्केलामा  सूर्य बोकेर हिंड्छौं
भ्रमहरू हुन् सबै
हामी मस्तिष्कभरि अँध्यारे भविष्य बोकेर हिंड्छौं  ।

ঙ্গ

# गजल

## नरेन्द्रराज प्रसाई

मायालुको छायाभन्दा खुशी कुनै देखिन्न हाँस्नलाई
उनकै अधरभन्दा मीठो अरू केही पाइन्न चुम्नलाई ।

थाकेको बेला विश्रान्ति भन्दा अर्को हुँदैन सुक्ख केही
एकान्त नै प्रिय हुन्छ सधैं कल्पनामा पीङ खेल्नलाई ।

त्यान्द्रे लहराले पनि रूखलाई बेरेर लठ्याउँदोरैछ
विश्वासै ठूलो आड हुँदोरहेछ दुई आत्मा गाँस्नलाई ।

छुटाउँन खोजे बन्धनको साँघु छुट्तैन कसैगरी
चाहन्नन् कोही विछोडमा अल्झी रातोदिन रुनलाई ।

एकान्तमा टोलाउँदा जब एउटै अनुहारले घेर्दछ
मायालुलाई पर्खिनु पर्छ पिरतीको गीत गाउँनलाई ।

ঙ্গ

# माटो

शरद शाहा

यो माटोको म पुरानो गोड्ने व्यक्ति
डल्ला फर्काइ फर्काइ वास्ना सुँङ्दैछु
यसमा विदेशी मल धेरै परिसक्यो
बिदेशीको जिम्मा लगाउन चाल धेरै चलिसक्यो
यो माटोको म पूजारी, मन्दिर छ यही माटोको
खर कै छानो भए पनि नेपाली त्यो वारीको
यो छातीमा गोली नलागी यो देशलाई लाग्दैन कुनै गोली
विदेशीकरणको निस्कन्न कहिल्यै नेपालीबाट बोली
खाने खुवाउने कमाउने प्रवृत्ति बढ्दै गए
हरेक व्यक्ति पिच्छेको मूल्य तोकिँदै गए
रहला यो हिमाली राज्य उच्च शिखरको काखमा ?
अड्ला के हाम्रो अस्तित्व नयाँ शताब्दीको महाजाल मा ?
म भन्दछु– मेरो छातीभित्र पनि त हेर
अनेपालीको अस्तित्वको छैन केही घर
म ता बाँच्दछु मर्दछु सच्चा नेपाली बनी
एउटै प्रार्थना छ इशमा बाँचू मरूँ नेपाली भई ।
म नदी नाला होइन जो बेचिन सकूँ
म भीर पाखा होइन जो पहिरोमा ढलूँ
मेरा छोरा छोरीलाई पढाउन चाकरी गर्न नपरोस्
नेपाली भएर बाँच्न भगवान् ! विदेशीको भर पर्नु नपरोस् ।

ञञ

# चाहना

नैना नेपाल
तानसेन, पाल्पा

तिमी आउँछौ भनेर
मन मन्दिरमा कुचो लगाएँ
मुटुको कोठा सजाएँ
आँखाको द्वार खोलिदिएँ
तर...
आँखाको द्वार त साँघुरो भएछ क्यारे
तिमी त छिर्नै सकेनौ ।

ञञ

## गजल
### शीतल कादम्बिनी

कहाँ थियौ ? रङ्गमञ्च उठेपछि आयौ,
समयले यौवनलाई लुटेपछि आयौ ।

वैलिएका रहरहरू पलाउँदैनन् अब,
विरहका असिनाले चुटेपछि आयौ ।

शून्यताका प्रहारहरू खप्नु खपेकैथें
धैर्यताको बाँध पनि टुटेपछि आयौ ।

तिमी र म साथसाथै गर्नुहुन्थ्यो यात्रा
जिन्दगीलाई बोक्ने गाडी छुटेपछि आयौ ।

ꕥꕥ

## गजल
### सुधा शाही

मान्छेको व्यथा अनुहारले बताउँछ
देश कस्तो छ सरकारले बताउँछ ।

मैलेनै थमाएँ उसको हातमा हतियार
मित्र हो या शत्रु प्रहारले बताउँछ ।

अग्ला ठाउँबाट  जोकोही अग्लै देखिन्छ
वास्तविक कद त विचारले बताउँछ ।

कोही खास आउँदै हुनुपर्छ जरूर
आज उनको शृङ्गारले बताउँछ

परिवर्त्तन हुनेछ अवश्य ठूलो
रहेको अत्याचारले बताउँछ ॥

ꕥꕥ

## आरामै छु

शेखर गिरी

केही खवर नआए यताको
सम्झिनु आरामै छु !

कुनै गम्भीर दुर्घटनाको पो हुन्छ चिट्ठी
त्यसैले शायद यहाँ ठीकै छु
जाडोको याममा जाडो छल्न आफैं हिमाल भएको छु
सूर्यलाई समेत् अलिकति चिसो पैंचो दिने गरेको छु
लुगा-फाटहरूको त्यसैले छैन चाहना
भोजन त रोज आफैंलाई गरिरहेछु ।

केही खवर नआए यताको
सम्झिनु आरामै छु !

निर्जन खोलाको बगरमा बसी तरङ्ग गन्ने राम्रो काम पाएको छु
अपरिचितहरूको माझ हिंडिरहेको छु
सायद त्यसैले बाँचेकै छु ।

केही खवर नआए यताको
सम्झिनु आरामै छु !

ঌঌ

## दुई मुक्तक : रक्सी माथि

हरिभक्त कटुवाल

सपना बोकेर आइदिने रातहरूलाई एउटा सलाम,
सपना खोसेर लैजाने प्रभातहरूलाई पनि सलाम ।
सजिलैसित जिउने एउटा मीठो निहुँ पाइएको छ,
रक्सी बनाइदिने त्यस पहिलो स्रष्टालाई अर्को सलाम ॥

म आफ्नो बाटो हिडेको हुन्छु तर खुट्टा अन्तै कतै गइदिएको हुन्छ ।
तिमीलाई सम्झिरहेको हुन्छु तर अर्कै कसैले मलाई तानिरहेको हुन्छ,
विश्वास गर, म कायल छु तिम्रो मुस्कान जस्तै यो रक्सीसित
कहिले मैले उसलाई खाएको छु कहिले उसले मलाइ खाइरहेको हुन्छ ।

ঌঌ

# गजल

श्रेष्ठ प्रिया पत्थर

डाडु पन्यू आफ्नै हातमा, कसको डर छ र हैन ?
बन्नैं पर्ने नैतिक भन्ने कसको कर छ र हैन ?

उठाउनु पर्छ फाइदा आफ्नो दिन आएको बेला
खुस्काइदिन्छन् मित्रले नै, कसको भर छ र हैन ?

फरियाको साइनो गाँसी बन्नै पर्छ बाबु साहेब
शुद्ध रगत बगिरहेको कसको थर छ र हैन ?

समान ठाउँमा, समान भाउमा आफूलाई बेचेपछि
चार तल्ला नथपिएको कसको घर छ र हैन ?

तालुमाथि फल्ने आलु फर्सी जत्रो भए मात्र
'माल' आउँछ, नत्र निश्चित कसको दर छ र हैन ?

ఴఴ

# गजल

क्षेत्रप्रताप अधिकारी

टोलाउन सम्झनाहरू जोडेर गयौ
बोलाउन यौटा नाम छोडेर गयौ ।
बोलाईरहें तर सुनिनौ क्यारे
घुम्तिमा कानहरू माडेर गयौ ।
कुन्नि किन जोडिए सम्झनाहरू
माया त तोड्नसम्म तोडेर गयौ ।
कसरी फुल्छ खै स्मृतिको फूल
तिमीले त विस्मृति गोडेर गयौ ।
जाडो त मलाई पनि भएकै हो
तर तिमीमात्र कात्रो ओढेर गयौ ।
यो 'क्षेत्रे' अव कहाँ फुल्छ होला
तिमीले त गमला नै फोडेर गयौ ॥

ఴఴ

# पीपलनेटामा उभिएको एउटा बूढो पीपलको रूख

चेतनाथ कणेल 'हरित'
श्रृङ्गा, पीपलनेटा, गुल्मी, फोन : ९८४१ ४४८०९९

ठिङ्ग उभिएको देखेर
पीपलनेटामा एउटा बूढो पीपलको रूख
केटाकेटी हुँदा म सोच्ने गर्थें–
म पनि पीपलको रूखजस्तै
विशाल फैलिएर ठिङ्ग उभिन पाए
आफ्नो शरीरभरि
अरूलाई शीतलता दिने पातहरू
फर्फर फर्फर हल्लाउन पाए
शरीरभरि हजारौं चरा भुलाउन पाउने गुलिया फल
लटरम्म फलाउन र खुवाउन पाए
सबैसबैको एउटा असल 'बोधिवृक्ष' बन्न पाए ... ... !

उमेर ढलेछ,
समय धेरै अगाढि बढेछ
ठिङ्ग उभिएको त्यो पीपल भने अझै पनि
उही ठाउँमा गजधम्म/अटल उभिएको उभियै छ
जसले देख्यो मेरो जिजुबाजेलाई/बाजेलाई यहीँ
जसले देख्यो मेरो बाबालाई र मलाई यहीँ
र, अझै देख्नेछ मेरा छोरा र नाति, पनातिहरूलाई
हजार वर्ष त के हो र एउटा बोधिवृक्षलाई !

बूढो भनौँ वा तरुनो म यसलाई ?
उस्तै रूपमा ठिङ्ग उभिएको छ पुस्तौँपुस्ता
'पीपलनेटा'को अटल सान र मान बनिरहेको छ
हजारौंलाई शीतल छहारी दिने
र असिनपसिन भई आउनेहरूलाई
हावा जसरी दिन्थ्यो बाजेका पाला
त्यसरी नै अहिले पनि निरन्तर दिइरहेछ
फल जसरी फलाउँथ्यो लटरम्म बाजेका पाला
सरी नै फलाइरहेछ फलहरू अहिलेसम्म !
र, यतिबेला म

जिन्दगीका आरोह-अवरोहमा
फन्को मार्दामार्दै / घुम्दैघुम्दै
फेरि उही पीपलको
    विशाल रूखमुनि उभिएर सोच्दैछु–
    कि,
    पीपलजस्तै बन्ने मेरा रहरहरू कहिले पूरा हुने हुन् ?
    पीपलरूपी हँसिला प्रहरहरू ममा कहिले भित्रिने हुन् ??

ꙮꙮ

## गीत

यादव खरेल

म जिन्गीभर हिडिरहें ...... हिडिरहें,
तर कहीं पनि पुगिन छु ।
आज थाहा भयो मलाई,
जहाँ थिएँ, त्यहीं रहें, कहीं पनि पुगिन छु ॥

    म हुरी भै हिडें, बतास भै हिडें,
    पटक निराशामा हतास भै हिडें
    पहाडमा हिडें, भीरमा हिडें
    म सफताको तिर तिरमा हिडें ॥

म जोशमा हिडें, कुदाईमा हिडें
र अरूको जुधाईमा हिडें ।
म खुशीले हिडें करले हिडें
खाफ्नो कहीं अरूको भरले हिडें ।

    म रातमा हिडें  साँझमा हिडें
    कति पटक भुमरीको माझमा हिडें ।
    म आशमा हिडें, त्रासमा हिडें
    सारा उमेर सफलताको आभाषमा हिडें ।

म जिन्गीभर हिंडिरहें ...... हिडिरहें
तर कहीं पनि पुगिन छु ।
आज थाहा भयो मलाई,
जहाँ थिएँ, त्यहीं रहें, कहीं पनि पुगिन छु ॥

# कसरी भनौ ? सेतो, कालोलाई

डा. सुमन कर्माचार्य
मन्थली, रामेछाप

सेतो कसरी भनौं, आमा कालोलाई ?
मैरै अगाडि तिमी भुत्ल्याइएकी थियौ,
बहिनी अपहरणमा परेकी थिई,
भाइ एम्बुसमा मरेको थियो,
दाइ बिदेशिन परेको थियो,
भाइकै पिरले,
न्याय खोज्न ढोका धाउँदा बुबाले सहादत भोग्नु परेको थियो ।
म कसरी भनौं आमा, हामीलाई अन्याय भएकै छैन ।
म कसरी भनौं आमा हाम्रो दिल पटक्कै दुखेकै छैन ।
दुखेको दिल आँशुले जति धोए पनि दाग जादैन रहेछ,
युध्दको नियम जति घोकाएपनि मन मान्दैन रहेछ ।

कसरी भनौं आमा म पीडित नै होइन,
दाइ बस्ने ठाउँ नभनेको भन्दै
थिल्थिलो हुने गरी शरीरभरि रगत पच्छे, बेहोस भोग्ने
म कसरी भनौं, मलाइ दुखेकै छैन ।
मेरै आँखा अगाडि रूखको हाँगामा झुण्डाइएका साईला काका
तर कसरी बयान दिऊँ देखैकै छैन ।
सक्दिन आमा म ती पापिष्टहरू जस्तो बोली फेर्न ।
सक्दिन आमा म ती अधर्मीहरू जस्तो असत्य बोल्न ।
हाम्रो लडाइँ नै त्यही थियो आमा, सत्य सधैं बोलिरहन पाऊँ,
कसैलाइ नदुखाऊँ, कसैलाइ नघोचौं ।
तर किन गान्धी र मण्डेला हारे आमा
तर किन लिंकन र अर्जुन थाके आमा,
जतातते सपना बिपनामा हिटलरहरू फेरि पनि तरवार तेर्स्याउँदै छन्,
अन्तरकुन्तरमा लेन्डुपहरू तपाईं र म बिरुध्द युध्दका तयारीमा छन् ।
के सकौंला, आमा अव,
कालो लाई कालै भन्न गान्धी बोकेर ?
के सकौंला, सत्य बोल्न,
सेतो छैन भन्न मण्डेला घोकेर ?
हामी थाक्नु हुन्न, आमा, हामी नथाक्दै

सत्य र अहिंसाको लडाइँ छेडनै पर्छ,
हामी रुक्नु हुन्न आमा, हामी ननिदाउँदै
उज्यालो र न्यायको बिकुल फुक्नै पर्छ ।
तर सक्दिन कहिल्यै पनि आमा
अँध्यारोलाइ उज्यालो छ भन्न ।
कालोलाई सेतो छ भन्न ।

ଔଔ

# गजल

**शंकर शाह**
*आशियाना, टंगचोक*

अहिले के भयो मुस्किल तिमीसित जिन्दगी बिताउन !

पहिले भन्दथिएँ तिम्रो लागि सक्छु ज्यान चढाउन
अहिले के भयो मुस्किल तिमीसित जिन्दगी बिताउन !

तिमीलाई जब पाएँ लाग्दथियो दुनियाँ जितेको
जमानाले के बेला ल्याउने हो पर्ला कि गुमाउन !

रमा रमिलिदा सुमनको संसार थियो हाम्रो
घर बसाउँन लागिपर्दा काँडा निस्के बिझाउन !

बचनको छुरीले आघात गर्छौं खुबै आपसमा
सम्बन्ध उस्तै छ, रीस मऱ्यो कि सोध्दछौं मनाउन !

आपसमा प्यार छैन कसरी सम्झूँ खै शिकायत
नजरबाट दूर हुँदा आउँछ झझल्को तडपाउन !

सकेँ गर्न न वतनलाई, दिएँ सुख न तिमीलाई
तिमी नभएको भए के सक्दथिएँ गृह चलाउन !

के पऱ्यो कुन्नी घर फर्कदा सधैँ जसो बसेको गमक्क
बोल्नै न हुने किन खुशीले पहिले झैँ मुस्कुराउन !

ଔଔ

# परदेश पीडा

केदारप्रसाद गजुरेल
अभिव्यक्ति परिसर, गौटीघाट

म त हजुर परदेशी बिदेशकै बास
जति पनि बाँचेको छु नेपालकै सास ॥
कर्म राम्रो बिदेशमा सुख राम्रो देशमा
खुशी हुन्छु सधैंभरि नेपालीकै भेषमा ॥
कण कण रगतमा नेपालकै माया
पार्न थाले राजनीतिले हामीलाई छायाँ ॥
बिपनामा बिदेशमा सपनामा देशमा
राष्ट्रियता देशको माया शरीरको हरेक केशमा ॥
आज भन्दा भोलि भन्दा बित्यो बीसौं साल
नेपालमा हुनुपर्छ हामीलाई लाने काल ॥
देश मलाई प्यारो लाग्छ मुटु भन्दा बढी
म त हुन्छु स्वदेशमै बन्द हुँदा मुटु-घडी ॥
तन मन रगतमा नेपाल कै याद
सक्न लागें अब मैले बिदेशको म्याद ॥
पाखा पर्बत् खोला नाला मेरो मनको शान्ति
गर्नुपरे मेरै देशमा गर्छु मैले क्रान्ति ॥

# गजल

कविराज पोखरेल

कविजीको दिमागमा फुर्न थाले कुरा
मान्छे भने मुसुमुन्द्रे मुख रै'छ छुरा ।
रुसित सितनको जोहो गर्दा हेर
अरु खान्छन् पोटी माछा यिनी खान्छन् भुरा ।
लर्बरिँदै घर पुगी श्रीमतीलाई देख्दा
'तिमी को हौ' भन्न थाल्छन् मातेपछि पूरा ।
'तोरीलाउरे' चिन्न अझै बाँकी छ कि भन्दै
टाउकामाथि बजारिन्छन् श्रीमतीका चुरा ।
बिहान उठी अबदेखि खान्न भने पनि
छोड्न चाहिँ सक्ने हैनन् सुन्दरी र सुरा ।

# दिलको फूल

रामेश्वर जलन

जव
तिमीलाई मैले
उपहार दिएँ–
सेतो कमलको फूल

तिमीले त्यसको बास्ना सुँघ्यौ
सोध्न सकिन मैले–
फूलको बास्ना सँगसँगै
मेरो प्रेमको बास्ना पनि थियो कि ?

फूल त तिमी पनि हौ
सौन्दर्य र सुगन्ध छरेर बाँचेकी
मुग्ध मुस्कानका पत्र पत्र खोलेर हाँसेकी

हिस्सी परेको रूपरङ्ग
इन्द्रेणी सपना परेलीमा सजाएर
ढकमक्क फुलेकी

आफू स्निग्ध छ्यौ
र सुस्तरी कोमलता न्यौछावर गरी
अपार स्नेहशीलता
प्रदान गर्दछ्यौ ।

पीडामा आँसु– शीत
खुशीमा ओठमा गीत
सर्बत्र पवित्र प्रीत...

भन,
तिमी कुन फूल हौ ?
गुलाव, चमेली, जाई, जुही ?
शिरफूल या दिलको फूल हौ ?

ƆƆ

# दण्डित

## ध्रुवचन्द्र गौतम

चोर्ने बानी उसको कसरी बस्यो, यसबारे यक्किन थाह छैन, त्यसकारण स्पष्टीकरण दिनु छैन । साँच्चिकै आफ्नो जन्मदेखि लिएर आजसम्म पनि ऊ केही पनि जान्दैन । उसले यस्तो दुनियामा आफूलाई आँखा उघारेदेखि फेला पारेको थियो, जहाँ चोर बन्नु सायद नागरिक बन्नु भन्दा पनि अनिवार्य थियो ।

यो कुनै मनोवैज्ञानिक ग्रन्थिको कुरा होइन । न कुनै सामाजिक समस्या । यसमा खास कुनै राजनीति पनि देखिदैन । परिबन्द परिस्थितिले ऊ चोर ठहरिन गयो, यस्तो पनि होइन । कुनै विवशता, भोक, विद्रोह अथवा कुनै लहडले चोर बनेको होइन भन्ने उनको धारणा छ ।

उ त केवल यत्ति जान्दथ्यो कि उसको बाबु पनि चोर थियो ।

उ पनि चोरै थियो । अझ चोरै जन्मेको थियो भने पनि कुनै मान हानिको प्रश्न छैन; श्रीमान् । भनिन्छ, उसको जन्मभन्दा केही समयमात्र अघि, उनीहरूको टोलको एउटा नामी चोर मरेको थियो । त्यसपछि ऊ जन्म्यो । सबैको अड्कल थियो (हुँदो हो) ऊ त्यही चोरको फेरिएको चाहिँ जुनी हो ।

समानता : मर्ने र जन्मने दुवै चोर प्रायः टाट वातावरणमा सास फेर्ने गर्थे ।

उसमा चोर्नुप्रति कुनै अज्ञात कारणले भनुँ, चोर्नुप्रतिको सबै लगाव रह्यो ।

उसले देख्यो सारा चोर्छन् । र मान्छेको सम्पूर्ण मौलिकता, चोर्ने तरिकाको मौलिकताले मात्र त्यहाँ ठम्मिदोरहेछ । तपाई यसलाई यस शताब्दीको कुरो ठान्नुहुन्न भने पनि ठिक्कै छ । यो कुनै अरू शताब्दीकै कुरो हो । यसले फरक के पर्छ ? अझ भनुँ यो भन्नु त एउटा पेशागत धर्म पनि हो ।

भने हेर्नुस् महानुभावहरू, हरियोस् यो बाटुलो, घुमिफिरी एकै ठाउँमा आइपुग्ने चटक । जति चोऱ्यो त्यति आम्दानी बढ्छ, जति आम्दानी बढ्छ त्यति मान बढ्छ, जति मान बढ्छ, त्यति दर्जा बढ्छ, जति दर्जा बढ्छ, त्यति चोरी बढ्छ ।

चोरी नगरेको दिन, मान्छेहरू पक्राउ पर्थे । किनभने एउटा क्षति र एउटा चिटिक्क पारेर थामेको कुरामा गडबड उत्पन्न गर्ने वा विगार्ने कोशिस हुन्थ्यो ।

ऊ जबसम्म चोरीरहन्थ्यो, उसका दिन र रातहरू सुख चयनमा गुज्रान हुने गर्थे ।

चार दिनदेखि चोर्न पाइएन, सरप्लस धनले गर्दा । उसमाथि टोलेहरूका सदिग्ध आँखा गाडिन थाले ।

अनि हिजो त, ४-५ जना पुलिस आएर उससलाई गिरफ्तार पो गरे बा।

उसले सोध्यो- के अभियोग लाउँछौ ?

–चोरीको । पुलिसले खोक्रो र कठोर शब्द झार्‍यो ।

–चोरी त मैले गरेको छैन ? उसले भन्यो । वास्तवमा ऊ यस एक्कासिको आरोपले अलमलमा परेको थियो ।

–तपाईंले नगरेको कुरा पनि के भो ? चोरी नै भयो होइन ? पुलिस अफिसरले व्याख्या गर्‍यो– वास्तवमा चोरी भन्ने शब्द कुनै न कुनै रूपमा तपाईंमाथि लागु हुन्छ । हामीलाई यति नै प्रशस्त छ, तपाई कहाँ आउन ।

भने ऊ समातियो । थुनियो । एकदिन उसलाई लगेर अड्डामा पेश गरें ।

एउटा राम्रो र सिंगारिएको मेचमा उसको फैसला गर्ने मान्छे बसेको रहेछ । त्यसको नाउँ रहेछ 'नाफनाफ' । त्यसको दारी नचाहिएका बखत पनि हल्लिदो रहेछ । यही एउटा उसमा खास विशेषता रहेछ र सुनिन्छ यसै एउटा अद्भूत विशेषताले गर्दा त्यो न्यायकर्ता नियुक्त भएर बसेको थियो ।

त्यसले उसमाथि धेरै अभियोगहरू लगायो । ती सबै चोरीहरूको उल्लेख गर्‍यो, जुन उसले भूतकालमा सम्पन्न गरेको थियो । त्यसमाथि मूल आरोप के भने, यदि उसले चोरी चालु नै राखेको भए, आज यो परिस्थितिनै आउँदैनथ्यो, धिक्कार भाग्य ।

चलन यो थियो कि 'नाफनाफ'ले चोरी भन्ने अभियोग साबित गर्दा दसी प्रमाण दिएन भने, न्याय अपर्याप्त ठहरिन्थ्यो ।

भने उसले देख्यो 'नाफनाफ' आफ्नो बगलीबाट एक एक गरेर ती प्रमाण वा वस्तुहरू झिक्दै टेबिलमा राख्न थाल्यो, जुन उसले कुनै बखत चोरी गरेर जम्मा पारेको थियो ।

त्यो देखेर उनको पहिलो भाव चिन्ताको थियो– ऊ अब गरिब भएछ । यो जम्मै चोरी नगर्नुको भुक्तमान हो । तिमी चोर भएर पक्राउ पर्छौ राम्रो कुरा होइन ।

दोस्रो भाव अचम्म र उदेकको थियो कि यो मानिसले कुन चटक गरेर उसले चोरेका मालहरू आफ्नो खल्तीबाट झिक्न सकेको हँ ?

त्यसले आफ्नो खल्तीबाट जे पनि झिक्न सक्दोरहेछ ।

उसको आश्चर्यलाई देखेर नाफनाफले सोध्यो– तिमीलाई केही भन्नु छ कि ?

श्रीमान्, मैले चोरेका मालहरू किन हजुरको बगलीबाट निस्किन्छन् ?

नाफनाफ मुसुक्क हाँसेर बसिरह्यो ।

उसलाई पछि थाह भयो, उसलाई सुलीमा हाल्ने आज्ञा भएछ ।

नाफनाफले फैसला गरेपछि, उसले चोरेका बस्तुहरू, एक से एक र दुई कौडीका, एउटै नविराई, आफ्नो घर्राभित्र हाल्यो र उतिर हेऱ्यो ।

त्यसले भन्यो– तिम्रो आखिरी धोको केही छ कि ? भन ।

उसले उत्सुक भएर भन्यो– श्रीमान्, मैले चोरी गरेका सामानहरू हजुरको बगलीबाट कसरी निस्के ?

नाफनाफले हाँसेर भन्यो– मैले यो रहस्य बताइदिएँ भने, म यस मेचमा बस्न पाउन्न । तिमी नाफनाफ हुन्छौ र म तिम्रो ठाउँमा चोर, बुझ्यौ ? जाऊ आफ्नो काम गर ।

उसको काम अब सूलीमाथि चढ्नु मात्र रहेका थियो ।

तपाईंलाई कस्तो लाग्ला, यदि भनियोस् कि ऊ शिर उचाली सूलीतिर लम्किन थाल्यो ।

कस्तो लाग्ला, यदि भनियोस् ऊ फेरि सूली चढेर, नाफनाफको गोजिबाट निस्कने आशामा सूली चढ्न थाल्यो ।

सूलीनिर पुगेपछि उसको आश्चार्यको सीमा रहेन । तिनीहरूले त उसलाई सूलीमा चढाइसकेका रहेछन् ।

ऊ आफ्नो मृत्युमा शोक मनाउन थाल्यो ।

उसलाई फेरि समातियो । यस पल्ट ऊ, बगलीमाराको रूपमा समातिएको रहेछ, किनभने, उसले नाफनाफको बगलीबाट निस्किने रहर पालेर मर्न खोजेको थियो ।

ꙮꙮ

## १६०/टेण्डी रेष्टुराँ नयाँ बानेश्वर (०७१ जेठ)

परशु प्रधान– (दाँत कोट्याउँदै) बूढेसकालमा बडो गाह्रो । जे खाए पनि दाँतैमा अड्किने ।

नराश– खाँदाखेरि दाँतमा अड्किने त सबैको हुन्छ परशुजी ! तर तपाईंको त देख्दा मात्रै पनि आँखामा अड्किँदो रहेछ ।

ध्रुव सापकोटा– केरे आँखामा अड्किँदो रहेछ रे ?

नराश– हो, बूढो भएर के गर्नु ? बेहोर जाँदोरहेनछ । अझै केटी देख्यो कि परशुजीको आँखामा अड्किहाल्दो रहेछ ।

परशु प्रधान– (हाँस्दै) त्यो त एकदम ठीक भन्नु भो । अझै पनि राम्रा केटी देख्यो कि त मेरा आँखामा अड्किहाल्छन् ।

ꙮꙮ

# स्वतन्त्र सम्बन्ध

## अनुपम रोसी

ऊ आयो र उनको पछाडि बस्यो । उसलाई देखेपछि उनी सधैं भाग्थिन् । अर्का पट्टि गएर बस्थिन् । मलाई लाग्यो अब उनी उठेर जानेछिन् । तर अचम्म भयो उनी उठेर गइनन् । र सधैं झैं अँध्यारो अनुहार पनि बनाइनन् ।

झन् हाँसेर बोलिन् । नजिकै बसेको उनको साथीको हात समातेर कुरा गरिरहिन् । मैले पछाडि फर्केर उसलाई हेरें, ऊ मौन थियो । चुपचाप । आँखाले अगाडि हेरेर बसे पनि मनको उथुलपुथुल उसको अनुहारमा सजिलै देख्न सकिन्थ्यो । उसको अनुहारको रङ्ग उडिसकेको थियो । उसले उनलाई वास्ता नहेरेको नाटक गरे पनि  ध्यान उनीतिरै थियो ।

एकाएक उनले समातेको लोग्नेमान्छेको हात देखेर ऊ तनावग्रस्त भयो । उसको अनुहारको रंग नै बदलियो । एक छिन त्यहाँ बसेपछि ऊ विचलित हुँदै गयो । उनको हाँसेर कुरा गर्ने र साथीको हात समात्ने सिलसिला टुटेन, हेरिरहन नसकेपछि ऊ उठेर हिंड्यो ।

त्यसै भनेका होइन रहेछन् मानिसहरूले, लोग्नेमान्छेको मनले छो डिसकेकी स्वास्नीमाथि पनि हैकम जमाउन खोज्छ, भनेर । उनी उसकी छो डिसकेकी स्वास्नी हुन् ।

ऊ र उनी कुनै बेलाका लोग्ने स्वास्नी थिए ।

जति शौन्दर्यले भरिपूर्ण थिइन् उनी, बौद्धिकता र चेतनाको स्तर पनि उत्तिकै उँचो थियो । समय, समाज र परिवेशको आधारमा उनीहरूले बिहे को निर्णय आफैं गरेका थिए । प्रेममा राम्रै समर्पण जनाउने उनले उसप्रति समर्पित भएर प्रेम गरेकी थिइन् । उनको प्रेमलाई छाम्न नसकेको ऊ, सधैं उनको रूप सौर्न्दयको पछि लाग्यो । विवाह उनको  विचारमा जीवनको सबै भन्दा प्रिय मिलन अर्थात् प्रेमको उच्चतम् पूर्णता थियो । यही सोचेर उनले उसलाई अपनाएकी थिइन् ।  तर सबै भ्रम थिए । सम्बन्ध त्यो चिज हो जसले सधैं अपूर्ण बनाउँछ मान्छेलाई । त्यहाँ पनि त्यही भयो हर क्षण सम्झौता गर्नु पऱ्यो उनका सपना रहर र चाहनाहरूले ऊसंग ।

उनलाई जित्नका लागि ऊ हरक्षण लागिपऱ्यो र हाऱ्यो सधैं आफैंसँग ।

ऊ लोग्नेमान्छे हो । ऊ भित्रको लोग्नेमान्छे सधैं आफ्नै भनिएकी स्वास्नीमाथि हैकम चलाउन तल्लिन रह्यो । उनले थाहा हुदाँहुदै पनि स्वीकार्दै गइन् उसको दासत्व । प्रेम गरेर बिहे गरेको लोग्ने एकाएक यसरी बदलिएला भन्ने कहिल्यै सोचेकी थिइनन् उनले । यस बीचमा उनीहरूको सन्तान जन्मियो र पनि उसले उनीमाथि गर्ने ब्यवहार बदलिएन । उसले सधै शंका गरिरह्यो उनलाई ।

चाहिने नचाहिने बोलेर उनलाई गाली गर्नु त उसको स्वभावै भइसके

को थियो । उनले  सोचेकी पनि थिइनन् । जिन्दगीको गोरेटो यसरी साँघुरिदै जान्छ र आफू हिंड्ने बाटो नै यसरी भत्किन्छ भनेर । कल्पना पनि थिएन, ऊसँग हिंड्न खोज्दा उनको आफ्नोपन क्रमशः चोइटिंदै जान्छ भन्ने । जीवनको यात्रामा जे नहुनु पर्थ्यो त्यही भयो ।

उनले पटक पटक सम्झाउने प्रयास गरिन् र पनि उसको ब्यवहार बदलिएन । झन् बढ्दै गयो । आफ्नो कमजोरी छोप्न धेरै लाचार पुरुषहरूले अपनाउने बाटो स्वास्नी कुट्नु हो । उसले पनि त्यसै गऱ्यो । उसले मणनासन्न हुने गरी धेरै पटक कुटयो उनलाई  ।

फूलको थुङ्गाजस्तो उनीहरूको जीवन क्षत विक्षत हुन पुग्यो । स्वास्नी पनि एक मान्छे हो भन्ने बिर्सेको उसको पुरुष अहम्ले अन्ततः उनीहरूलाई दुइ किनारा बनाएरै छोड्यो ।

यतिबेला जिन्दगी जिउनुको परिभाषा बोकेर उनीहरू आ-आफ्नै संसारमा छन् । हेर्दा लाग्छ, दुवै खुसी छन् । तर दुवैको मन भित्रको असन्तुष्टी छर्लंग देख्न सकिन्छ, उनीहरूका आँखामा । जति खुसी र मुक्त देखाउन खोजे पनि उनीहरू भित्रको गहिरो अप्ठयारोलाई सहजै बुझ्न सकिन्छ, अनुहारमा । यहाँनेर अझ उनले भन्दा पनि उसले बढी अप्ठ्यारो भोगेको महसुस हुन्छ ।

उसलाई छोडे पछि उनले निकै प्रगति गरिन् । समाजमा राम्रै नाम कमाइन् । सौन्दर्यले भरिपूर्ण उनको जिन्दगी धेरैको आँखामा प्यास जगाउन सफल थियो । ऊसँग मुक्त भए पनि उनी कहिल्यै एक्लै भइनन् । उनको अघिपछि सधैं लोग्नेमान्छेहरू भइरहे ।

उनी भन्थिन्,– 'म प्रेमको प्रतिमूर्ति हुँ , सबैलाई प्रेम गर्छु । तर मेरो प्रेमले सधैं धोका खान्छ ।' हुन पनि उनको शरीरको सौन्दर्यसँग अलमलिएकाहरूले उनको सागरजस्तै गहिरो प्रेमको सुन्दरतालाई सम्हाल्न सक्थेनन् । जब उनी प्रेम र स्वाभिमानको अनन्तता भित्र राख्न खोज्थिन् कसैलाई, तव उनलाई छोडेर भाग्थ्यो त्यो पुरुषअहम् या आफैं मिल्काउथिन् स्वार्थको शिर पाऊ उनले ।

स्वास्नीमान्छेहरू ओछ्यान तताउने र लोग्नेमान्छेहरूको सन्तान जन्माउने साधन मात्र हो भन्ने परम्परागत मान्यता, आधुनिक र सभ्रान्त भनिएका लोग्नेमान्छेहरूमा पनि देख्दा भने उनलाई निकै आश्चर्य लाग्थ्यो । आफूले जे गरे पनि हुने, स्वास्नी स्वास्नीकै ठाउँमा बस्नु पर्छ भन्ने अभिमानले ग्रसित पुरुष समाज उनलाई नाङ्गो लाग्यो ।

उनी झनै हाँसेर कुरा गर्न थालिन् । उसको उपस्थितिले उनलाई बिथोल्न सकेन ।

औपचारिक रूपमा छुट्टिएपछि एक दिन उसलाई बाटामा भेट्दा उनी डरले भागेकी थिइन् । पहिले उसले पिटेको सम्झेर डरले थरथर काम्दै उनी भागेकी रे । त्यसपछिको भेटमा उनले उसको मुखभरि थुकिदिएकी थिइन् । तर तेस्रो भेटपछि उनी सामान्य बन्दै गइन् । उनले निर्धक्क भएर एकदिन

भनेकी थिइन्, 'मलाई ऊ केही होइन रहेछ भन्ने लाग्यो । मैले पहिल्यै किन उसलाई थुकिदिइन ? किन उसले कुट्दा जवाफ फर्काइन ? भन्ने कुराले आज पनि मलाई रिस उठ्छ ।  उसको अत्याचारलाई प्रतिवाद नगरेकोमा आफैंलाई ग्लानि हुन्छ ।'

एक पटक थुकिदिँदा ऊ खुम्चेर अँध्यारो भएको देखेपछि उनको ऊ प्रतिको डर सबै हराएको थियो, उसको छाँयासम्मले जिरिंग हुने मुटु त्यसदिन देखि निर्धक्क भएको थियो । महिलाहरूको सहनशीलताले नै कमजोर बनाएको रहेछ महिलाहरूलाई र त्यही कमजोरीका कारण शक्तिशाली भएका रहेछन् लोग्नेमान्छे भन्ने बुझेकी थिइन् उनले ।

'एउटी आमालाई सबै भन्दा धेरै पिर सन्तानको हुन्छ, सन्तानकै कारण ऊ चाहेर पनि हिंड्न सक्दिन र मर्न पनि सक्दिन । छोराको कारण दिनरात उसको अत्याचार सहेर बस्नु पऱ्यो मैले ।' उनी शिक्षित र ऊ भन्दा धेरै कुरामा सक्षम भएर पनि सधैं पछाडि परेको विवशतामा धेरै पटक पिरोलिन पुगेकी थिइन् ।

'वास्तवमा पुरुष सधैं नियन्त्रण चहन्छ महिलामा र महिला आश्रय खोज्छे लोग्नेमान्छेसँग । अनि बढ्दै जान्छ विभेदको खाडल । जसको आश्रयमा बस्नु पर्छ ऊ समान छु भन्ने साहस कसरी गर्न सक्नु मैले ? आधारभूत आवश्यकता भन्दा ठूलो आत्मसम्मान हुन सकेन । भोको पेट र रित्तो आङ लिएर स्वाभिमानको लडाइँ कसले लडेको थियो र ? म नौ वर्ष निरीह भएँ । उसको लात्ती र मुक्कासँग सम्झौता गरिरहें । तर नौ वर्ष पछि ममा एकाएक हिम्मत आयो मैले उसलाई छोड्ने निणर्य गरें । आज म स्वतन्त्र छु ।' उनी अलिकति मुस्कुराइन् ।

'र पनि एक्लोपनले त पिरोल्छ होला नि ?' मैले ऊतिर हेर्दै उनलाई सोध्छु ।

'म एक्ली कहाँ छु र ? यो हात मैले त्यसै समातेकी होइन । म प्रेम गर्ने मान्छे हुँ । प्रेम गरेपछि सबै आफ्नै हुन्छन् । साथ निर्वाह गर्न प्रेमी अर्थात् पुरुष भए पुग्छ त्यसलाई लोग्ने बनाइरहनु पर्दैन ।' उनले हात समातिरहेको लोग्नेमान्छेको अनुहारमा हेर्दै बोलिन् । ऊ पनि मुस्कुरायो ।

'अबको सम्बन्ध कस्तो हुन्छ ?' मैले उत्सुकतापूर्वक सोधें ।

'अब म सम्बन्धमा बाँधिएर भन्दा पनि प्रेम गरेर जीवन बिताउन चाहन्छु ।' उनी निर्धक्क भएर बोलिरहिन् ।

'यो त समाजले नपचाउला नि ? अनैतिक सम्बन्ध भनेर गरिएको अपव्याख्या सहन सक्नु हुन्छ ?'

'यो समाजको कुरा नगर्नुस् । के यो समाजले मेरो लोग्ने भनाउँदाले ममाथि गरेको अत्याचारमा औंला उठाउन सक्यो ? भन्न सक्यो यसरी स्वास्नी कुट्नु अपराध हो ? यो समाज अन्धो छ । जुन चिज देख्नु पर्छ त्यो देख्न सक्दैन । यस्तो अन्धो समाजले के भन्छ भनेर सोच्न छाडिसकें मैले ।

लोग्ने नभएकै कारण आइमाईको महत्व हुँदैन भन्ने परम्परा मनोवैज्ञानिक रूपमा स्वास्नीको मनोबल गिराउन भनिएको कुरा हो । हामीले आइमाईलाई लाचार गराउने सभ्यताको विपरीत उभिन सक्नु पर्दोरहेछ । उसलाई छोडेर मैले रोजेको जीवन नितान्त मेरो हो यतिवेला । यसलाई म मेरै इच्छाले जिउँछु । एउटा कुरा बुझिराख्नु– हामी स्वास्नीमान्छेको जीवन कुनै पुरुषको कठपुतली होइन ।' उनले सन्तोषको लामो सास फेरिन् ।

संगै बसिरहेको लोग्नेमान्छेले उनले समाइरहेको आफ्नो हातमाथि अर्को हात ल्याएर राख्यो र उनलाई हेर्दै प्रेमभावमा मुस्कुरायो ।

# ग्यासको समस्या


## अरुण नदी खत्री

९३९/९४ सामाखुसी मार्ग, काठमाडौं, फोन ९८४१७९७६६४


आफ्नो घर नजिकैको ग्यासको डिपोमा गाडीबाट ग्यास झार्दै गरेको आवाज सुनेर सम्झना आफ्नो रित्तो सिलिण्डर बोकेर आज त ग्यास पक्कै पाइने भयो भनेर डिपोमा पुगिन् ।

डिपोमा पुग्नेबित्तिकै ग्यास बेच्ने साहूजीसंग उनले 'दाइ आज मलाई एक सिलिण्डर ग्यास जसरी भए पनि दिनु है ।' भनिन् । 'कुपनवालालाई बाँडेर बच्यो भने तपाईंलाई  दिउँला ।' साहूजीले भने ।

कुपन लिएकाहरूलाई ग्यास बाडेर नसकुन्जेल उनले आज त एक सिलिण्डर ग्यास पाइने भयो भनेर करिब पाँच घण्टा जति कुरेर बसिन् । कुपनवालालाई बाँडीसकेएपछि तीनवटा सिलिण्डर बाँकी बचे । तर ती बढी भएका तीनवटै सिलिण्डरहरू भरखरै खालि सिलिण्डर पनि नलिईकन हल्लिंदै डुल्दै आएको एउटा मान्छेले जबर्जती समायो । साहू चुइँक्क पनि बोल्न सकेन ।

ग्यासको खालि सिलिण्डर बोकेर आए पनि, दिनभरि भोकभोकै कुरे पनि सम्झनाले ग्यास पाउन सकिनन् । 'खै दाइ तपाईले त आज मलाई ठूलो धोका दिनु भयो । ग्यास दिने आश देखाएर पाँचघण्टा सम्म कुराउनु भयो र पनि मलाई दिनु भएन । मभन्दा पछि आएको त्यो मान्छेलाई दिनु भयो ।' सम्झनाले आँखाबाट आँसु झार्दै भनिन् ।

सम्झनाको आँखाबाट आँसु झरेको देखेर साहू पनि द्रवित भयो र भन्यो– 'हो नानी, ग्यास त म तपाईंलाई नै दिन चाहन्थें तर··· म लाचार भएँ– त्यो मान्छेलाई ग्यास नदिए ममाथि विपत्ति आइलाग्ने डर भयो··· मेरा स-साना बालबच्चा छन् । मैले पनि आफ्नो ज्यान त जोगाउनै पर्‍यो ।'

'को हो त त्यो मान्छे ?'

'माओवादी ।'

ঙঙ

# आफन्त

## आनन्दराम पौडेल
हेटौंडा

हुन त गाउँलेहरूले थुकतेल गरेर गाउँमै क्याम्पस स्थापना गरिसकेका थिए, तर विपिनभित्र ज्ञानको तिर्खा अलि चर्को थियो । ज्ञानको प्यासले छट् पटिएको विपिनले २ मा भर्ना भए देखिनै यस्पछिको अध्ययन काठमाडौंमा गर्ने अठोट गरिसकको थियो । संकल्प जति महान् भएपनि घरको अर्थतन्त्रले साथ दिने सम्भावना थिएन । २ सकुन्जेल उसमा तीनौटा बोझ थिए– घरको काम सघाउने, मेरिटमा पास गर्ने र काठमाडौंमा जागिर खोज्ने । जागिरको लागि उस्ले कसैलाई भन्न बाँकी राखेन । चिनेजानेकालाई मात्र हैन, चिनजान गरी गरी पनि भन्यो । आफन्तलाई भन्यो । शिक्षकलाई भन्यो, नेतालाई भन्यो र साथीभाइलाई भन्यो । उस्को अनुरोध र आग्रहलाई अरूसबैले एक कानले सुनेर आर्को कानले उडाइदिए, तर एकजना शिक्षकले भने गम्भीरतासँग लिए । उनैको सत्प्रयासबाट विपिनलाई काठमाडौमा जागिर मिल्ने भयो ।

खबर पाउँनासाथ दौडेर काठमाडौं गयो, नियुक्तिपत्र लियो, क्याम्पस खोज्यो, अफिस र क्याम्पसको बीच पारेर डेरा मिलायो र हस्याँङफस्याँङमै घर आइपुग्यो । भोलिपल्ट काठमाडौं फर्किनु पर्ने भएकोले रातभरि मै आमाबाले सामलतुमलको भारी कसे । आमाले गुन्द्रुक मस्यौरा र सिन्कीका पोका बनाइन् र दालको झोलामा हालिन् । दुई बट्टा घिउ अलग्गै झोलामा हालिन् । बाबाले गुन्टा कसे र चामलको बोरा बलियो गरी बाँधे र सरसापट गरेर सात हजारजति रकम छोराको खल्तीमा राखिदिए । भोलिपल्ट छोरालाई रातो टीका र माला लगाइदिएर बसस्टपसम्म पुऱ्याउन गए ।

बस हिंड्न अघि बाबाले सम्झाउँदै भने,– 'लाजिम्पाटमा बस्ने शरणहरि हाम्रो तेरदिने दाजुभाइ हुन् । हाम्रो हजुरबा एकै हुन् । एउटा हाँगो त्यहाँ पुगेको हो । जाने आउने गर्नु ।'

'उनीहरू त कहिल्यै यता आएका छैनन् । देखादेखसम्म भएको छैन । एक्कासि कसरी नाता जोड्दै जानु ?' विपिनले असहजता दर्शायो ।

'हाम्रो त बोटै एउटै हो नि, हाँगा मात्र पो फरक त । पितृहरू एउटै हुन् । जबर्जस्ती नाता जोड्न खोजेको  त हैननी । जानुपर्छ छोरा, योत गाढा रक्तसम्बन्ध पो होत ।'

बाबाले अलि बढी नै जोडबल गरे । छोराले टाउको हल्लएर स्वीकाऱ्यो। लाजिम्पाटमा फलानो मन्दिरको ठीक सामुन्नेको रातो बंगलो– बाबाले लोकेशन सम्झाए ।

काठमाडौं पुगेपछि विपिनलाई सेटिंग मिलाउन र दिनचर्या व्यवस्थित गर्न दुई हप्ता लाग्यो । दिनभरि अफिस, बेलुका क्याम्पस र भात भान्छा,

उस्लाई भ्याइ नभ्याइ नै थियो । तैपनि बाबाको आज्ञा शिरोपर गरेर शनिवार बिहान मन्दीर अगाडिको रातो बंगलामा पुग्यो । बंगाला जति भव्य थियो त्यही अनुसारको पर्खाल थियो । गेटमा कलिंगबेलको स्वीच रहेछ थिच्यो । कुकुरको भयानक स्वरले एकपल्ट तर्स्यो । १३–१४ वर्षकी किशोरीले गेट खोलिन् र को, कहाँबाट आउनुभएको र कस्लाई खोज्नुभएको इत्यादि सोधिन् । तीनको बडी ल्याग्वेज र सोधाइको शैली यति यान्त्रिक थियो कि आफूसित एउटी किशोरीले हैन कि कुनै रोबोटले डिल गरिरहेछ जस्तो भान हुन्थ्यो । तीनलाई सायद हरेक अपरिचितसँग यस्तै प्रश्न सोध्न र यसैगरी डिल गर्न प्रशिक्षित गरिएको थियो । प्रश्नहरूको जवाफ दिएपछि किशोरीले विपिनलाई भित्र लगिन् र बैठककोठामा राखिन् । धेरैबेरसम्म बैठकमा धुम्धुम्ती बसिरह्यो । बैठक कोठा ठूलो र भव्य थियो । महँगा सामग्री र कलाकृतिहरूले सजाइएको थियो । बैठक कोठा भएकै घरमा मान्छे ओहोर दोहोर गरिरकेका थिए । कसैकसैले उस्लाई क्वार्क्वार्ती हेर्थे, तर एक शब्द नबोली निस्कन्थे । झण्डै एक घण्टा वितेपछि तिनै किशोरीले एक कप चिया ल्याएर राखिदिइन् । त्यही बेला भित्रबाट गुनगुन आवाज सुनियो । कान ठाडो पारेर निकै ध्यान दिएर सुन्यो । उस्कै विषयमा कुरा भैराखेको रहेछ ।

'किन आएको रहेछ ?' एउटाले प्रश्न गर्‍यो ।

'केही परेरै त आएको होला– केही नपरी के आउँथ्यो··· भन्लान नि ।' जवाफ सुनियो ।

त्यतिन्जेलमा उस्ले एक घुट्को चिया पिइसकेको थियो । बाँकी चिया पिउने त परको कुरा, ऊ त्यहाँ एक निमेस बस्न नसक्ने भयो । चिया त्यत्तिकै छाडेर कसैलाई नसोधी सरासर बाहिर निस्क्यो ।

जीवनको आठ वर्ष बितिसकेछ । विपिनलाई अहिले पनि भ्याइनभ्याइ नै छ । फरक यत्ती हो, आठ वर्षअघि विद्यार्थी जीवनको भ्याइनभ्याइ थियो, आज प्राध्यापकको भ्याइनभ्याइ छ । दुइटा क्याम्पसमा पढाउँछ, परिवार र सन्तानको जिम्मेवारी पनि थपिएको छ । भखरै गाउँबाट बाबाले फोनमा भन्नुभो,– 'हरिशरण वितेछन्, हाम्रो तेरदिने दाज्युभाइ हुन्, जुठो लग्छ, पाँच दिन नुन छाड्नू र चोखो खानू है बाबु ।'

तिनै हरिशरण, जस्को घरमा विपिनले आठ वर्षअघि एक घण्टा विताएको थियो र जुन घरको मान्छेले ऊसँग एक शब्द पनि बोलेका थिएनन् । जस्ले सामान्य मान्छेसँग गर्ने व्यवहार समेत् गरेनन्– आज तीनै कालागि नुन छाड्नु पर्ने ? यो प्रश्न विपिनको मनमस्तिष्कभरि डम्म भएर बस्यो । यही प्रश्न बोकेर विपिन अहिले हाम्रो जमघटमा आइपुगेको छ र प्रश्न हामीलाई तेर्स्याएको छ ।

हामीले जवाफ दिन सकेका छैनौं ।

तपाईंसँग जवाफ छ कि ?

ɞɞ

# एकादेशको कथा

इल्या भट्टराई
४४६ ढोंचाः मार्ग, महाराजगंज

यो एउटा एकादेशका कथा हो । जुन देश एउटा सानो चौघेरा भित्र मात्र सिमित छ । जहाँ कि त एउटा राजा हुन्छ कि त एउटी रानी हुन्छे । यस्तो देश जहाँ पनि हुन सक्तछ र जतिवटा भनेपनि हुन सक्तछ ।

एउटा अनौठो जादू थियो त्यो फलामे ढोकामा । त्यो ढोका बाहिर जतिसुकै चुरीफुरी गरेपनि त्यो ढोकाभित्र पस्नासाथ सबैको चुरिफुरि सकिन्थ्यो । त्यसको भित्रपट्टि त सबैको शक्ति अदृश्य ढङ्गबाट खोसिन्थ्यो । शक्ति हराएपछि ती लल्याकलुलुक्क हुन्थे । त्यो शक्ति खोस्ने जादु पनि अनौठोको थियो त्यसमा ती सबैको सोच्ने शक्ति खोस्थ्यो, बोल्ने शक्ति खोस्थ्यो तर काम गर्ने शक्ति भने यथावतै राख्थ्यो । अझै भनू भने अरु सबै शक्ति खोसिएपछि, तिनीहरुको काम गर्ने शक्ति अझै बढेर जान्थ्यो ।

त्यो ठाउँ चारवटा ढोकाभित्र बस्ने एउटी राक्षसनीको साम्राज्य थियो । त्यस साम्राज्यभित्र छिर्ने वित्तिक्कै ती ढोका बाहिरका मुक्त संसारका एक भन्दा एक व्यक्तिहरु पनि कठपुतली झैं हुन्थे र उसको इशारामा नाच्न थाल्थे । उसले जे भन्थी तिनीहरु त्यही बोल्थे । उसले जे सुनाउथी तिनीहरू त्यही सुन्थे । उसले जे भनाउँथी तिनीहरू त्यही भन्थे ।

असमकी कामरुप कामाख्या देवीले आफ्नो समीप आएका लोग्ने मानिसहरुलाई भेडो बनाउँने गरेको कथा बाल्यकालदेखि नै सुनिदै आएको थियो । तिनै देवीको छेउछाउको प्रदेशबाट आएकी यी राक्षसीले त लोग्नेमान्छेलाई मात्र होइन आइमाईलाई पनि, अझै भनौ भर्खरका ती साना कलिला मुनाहरुदेखि लिएर जुँगा भर्खर पलाउन लागका किशोर वा किशोरीहरुलाई पनि एक नाशले भेडा बनाएकी थिई ।

कहिलेकाही भेडा बन्न नमान्ने कोही कोही बहादुर पनि निस्कन्थे, जसले त्यसको आज्ञाको अवहेलना गर्ने साहस गर्थे । यद्यपि त्यो अवहेलना नजानिकन गरेको होस्वा जेसुकै होस् भनेर जानाजानी गरिएको होस् ।त यसपछि तिनीहरुले ठूलो सजाय भोग्न पर्थ्यो ।

सर्वप्रथम त्यस राक्षसनीले कालो नागको रुप लिई त्यस (उदण्ड) ? लाई डरलाग्दो नागदंश दिन्थी । प्रसङ्गवश भनिहालौं, त्यो राक्षसनी जादुगरनी पनि थिई । ऊ बेलाबेलामा कुशलतापूर्वक आफ्नो रुप परिवर्तन गरिरहन्थी । आवश्यकता अनुसार ऊ कहिले नागिनी बन्थी भने कहिले काली विराली, कहिले कालो बर्षिन लागेको घोप्टे बादल बन्थी भने कहिलेकाही सबैलाई अचम्मित पारेर ऊ घाम जस्तो उज्यालो पनि भइदिन्थी । परिस्थिति प्रतिकुल भयो भने ऊ तुरुन्त रझ्केको विरालो पनि हुन बेर लगान्नथिई ।

ऊ कोर्रा लगाउनु पनि सिपालु थिई । तर त्यो कोर्रा लाग्न ऊ हातको प्रयोग हैन, जिब्रोको प्रयोग गर्थी । तर अचम्म उसले हिर्काएको कोर्राको मारले शरीर रन्थनिन्थ्यो, व्यक्तित्व झल्याम्झुर्लुम हुन्थ्यो । तर शरीरमा चोटको कतै पनि दाग देखिन्नथ्यो । चोट मनमा लाग्थ्यो । मनमा लागेको चोटबाट उठेको सुम्ला त्यहाँका सबैले मनकै आँखाले देख्थे । ऊ गोमन जस्तो विशालु थिई, करेत जस्ती विषालु भएर दंश दिन खप्पीस थिई । तर उसको त्यो दंशको दाग उसको काम गर्नेहरुको शरीरमा खोजेर पनि भेटिन्न्थ्यो । विषको प्रभाव शरीरमाथि त कतै पनि पर्दैनथ्यो तर मनहरु भने निलो भएर मर्दै जान्थे ।

उसले त्यस साम्राज्यमा उसको एउटा सहयोगी पनि थियो । अग्लो, हेर्दै डरलाग्दो त्यो सहयोगी केही सन्काहा पनि थियो । ऊ पनि त्यस साम्राज्यमा छिर्नेहरुलाई तर्साउन खोज्थ्यो । उसका अगाडि परेकाहरु उसँग तर्सिएका अभिनय गर्थे । तर ऊ अगडिबाट जानेवित्तिकै आपसमा मुखामुख गरेर नजानिँदो पाराले हास्थे मात्र । उ मात्र एउटा ब्युख्याचा जस्तो थियो ।

अँ, साँच्चि त फेरि रोकिएको प्रसङ्गगिर जाऔ । हो कहिले काहीँ कसैले उसलाई अटेर गर्थे ।, त्यसता अटेर गर्ने व्यक्तिको अपराध हेरिकन त्यसलाई त्यही अनुसारको सजाय दिइन्थ्यो । आफ्नो कठपुतलीपना विर्सेर कसैले आफ्नो व्यक्तित्व प्रदर्शन गर्‍यो भने, उसले तुरुन्त त्यस राज्यबाट निकालाको सजाय भोग्नु पर्थ्यो ।

त्यो ठाउँको नशा पनि झण्डै लागु पदार्थको नशा जस्तै थियो, एकचोटी खाएपछि छोडूँ भनेपनि छोड्न नसकिने–त्यहाँ पनि त्यस्तै थियो । त्यो फलामे ढोकाबाट भित्र गएपछि त्यहाँ सँधै जाउँ जाउँ लाग्ने । तिनीहरु पनि त्यहाँ रोजै छिर्थे, रोजै फर्कन्थे र आर्को दिन फेरि छिर्थे । खै के नशा हो त्यहाँको एकपल्ट मात्र छिरेपछि पनि सँधै छिरुछिरु लाग्ने ।

अँ, त आफ्नो आदेश पालना नगर्ने अटेरीलाई त्यो राक्षसनीले बाङ्गो आँखाले पनि हेर्न सक्तैन थिई । साह्रै ठूलो गल्ती नगरेकोले ऊ त्यस्तालाई राज्य निकाला त गर्दिन थिई तर व्यवहारमा, प्रत्यक्ष रुपमा सबैसँग पानी बराबरको अवस्था सिर्जना गरिदिन्थी ।

कहिलेकाही आक्कल झुक्कल ऊ सित राय बझाउने अटेरीलाई पनि ऊ देख्नै सक्तिन थिई । तर त्यस्तालाई ऊ बेला-बेलामा अति हलुका खालको सर्पदंश दिने गर्थी ।

कहिलेकाहीँ उसको साम्राज्य भित्रका बासिन्दा बन्न आइपुगेका कलिला मुनाहरु पनि आँट गरेर तिनीहरुको विरोध गरिदिन्थे । अटेर गरे भने तिनीहरुलाई त ऊ राज्य निकाला गर्न सक्तैनथिई किन भने तिनीहरुनै उसका अन्नदाता थिए, तर ती विचराहरुलाई पटक पटक गरी धेरैचोटि दंश

दिनुका साथै शारीरिक रुपमा पनि कुट्ने, चुट्ने गरेर शारीरिक तथा मानसिक रुपमा घाइते बनाउन भने बाँकी राख्तिनथी ।

त्यो राक्षसी र त्यसका त्यो बुख्याचा टाढा, कता हो कता टाढा पूर्व दिशातिर बाट आएक रे । त्यहाँ तिनीहरुले यहाँका मानिसलाई वंशीकरण गरेर भेडो बनाउँदै ब्रम्हलुट गर्ने मन्त्र सिकेर झण्डै तीस बत्तीस वर्ष अघि यता आएका रे । यहाँ आउँदा तिनीहरुसँग केही थिएन । त्यसैले धेरैवर्षसम्म तिनीहरु यहाँ नोकर, चाकर, गोठालो भएर मेहनत मजदुरी गरे । दुःख गरे । साथै आफ्नो ज्ञानका हलुका हलुका प्रयोग गरे ।

तिनीहरुको ज्ञानको एउटा के विशेषता थियो भने चौकिल्ला गाडेर आफ्नो एउटा साम्राज्य नभैकन तिनीहरुको त्यो वंशिकरण मन्त्रले काम गर्दैनथ्यो । फलामे ढोका नभएको चौघेरा बाहिर त्यस वंशिकरण मन्त्रको शक्ति साह्रै न्यून हुन्थ्यो ।

यहाँका रैथानेहरुको रगत र पसिना चुस्तै बिस्तारै तिनिहरु शक्तिशाली बन्दै आए । पछि त्यही शक्तिले उनीहरुले आफ्नो साम्राज्य खडा पनि गरे ।

सीमापारिबाट आए पनि त्यो बुख्याचाले कता-कता-कसो-कसो जालझेल गरेर आफुलाई यहीको रैथानेमा परिणत गराइसकेछ । धनको जादु छरेर सम्बन्धित व्यक्तिहरुलाई आफ्नो कठपुतली बनाउन ऊ खप्पिस भइसके को थियो ।

एकदिन त्यो राक्षसनीको साम्राज्यभित्र तिनीहरुले थाहै नपाइकन एउटी अर्की सानो राक्षसनी पसिछे । त्यसले पस्ने बेलामा आफुलाई रुझेको बिरालोको रुपमा प्रस्तुत गरेकी थिइ, त्यसैले ऊ त्यो चौघेराभित्र पस्न सजिलैसँग सफल भई ।

कामाख्यादेवीकै छेउछाउको प्रदेशकी भएकी हुनाले उसले पनि केही मात्रामा जादु जानेकी थिई । त्यस चौघेरा भित्र पस्न सफल भएपछि उसले विस्तारै आफ्नो रुप फेर्न थाली । बोक्सीले अर्को बोक्सीलाई चिन्छे भने झैं त्यो राक्षसनी र त्यसको बुख्याचा लोग्नेले बिरालो भएर पसेकी त्यो अर्की जादुगर्नीलाई चिनीहाले ।



## १४७/चुमरेको अभिनन्दन समारोह, झापा (०६६.१२.२८. ६)

डम्बर घिमिरे : मैले पनि धरमपुर छाडें, टिक्नै नसकिने भो... ।

न.रा.श. : धरमपुर छाडे पनि यो उमेरमा अब कुनै पापपुरतिर लाग्ने सुर त गर्नु'भाछैन होला ।

डम्बर घिमिरे : त्यस्तो सुर गऱ्या त होइन तर जुनै पुर गएपनि के भो र ? पूरै नेपाल अपराधपुर नै अपराधपुर बनाइसके अपराधी नेताहरूले ।



# विभेदना

उषा शेरचन

राष्ट्रियरूपमै आफ्नो प्रतिष्ठा अर्जन गरेपछि एकदिन एउटा भारि सभामा उसले सगर्व घोषणा गऱ्यो– 'बिवाह पूर्व नै कुमार चाहिँ थिइन है म । यो भरिसभामा, समस्त सञ्चार माध्यमसमक्ष यो कुरा उद्घोष गर्न कुनै संकोच छैन मलाई कि मेरो पहिलो शारीरिक सम्बन्ध कुनै एउटी सुन्दरी यौनकर्मीसँग भएको थियो । त्यसपछि जीवनमा कतिजनासँग यौन सम्पर्क गरियो गरियो !'

उसले यसरी सगर्व वयान गरिरहँदा– गललल्ल गललल्ल हाँसोले हलै थर्कियो । कोहीले रात्तोपीरो हुँदै नजर झुकाए । कोही जिब्रो काढेर बसे । कोही कोही आफू पनि उही ड्याङकै मुला न हौं भन्दै मनमनै गर्व र ग्लानी एकै पटक अनुभूत गर्दै चुपचाप साधु विरालो भएर बसे । केही उत्तेजित हुँदै बलेको आगोमा घिउ थपे । कोही कोही अरूले थपेको घिउमा आफैँ घिउझैँ पग्लिरहे । मान्छे पिच्छेका रूप बेग्लाबेग्लै भएझैँ अनुभूति पनि बेग्लाबेग्लै गरे ।

कसैले भने– 'वाह कति बोल्ड ? आफ्नो जीवनजस्तै खुला र उन्मुक्त विचार ।'

उसको कुरा भुइँमा झर्न नपाउँदै अर्को उपबुज्रुकले भन्यो– 'हो त नि हगि ! कस्तोखुला किताबजस्तो मान्छे ?'

अर्कोले थप्यो– 'हा॰॰हा॰॰हा॰॰! यो हो नि त एक्काईसौं अताब्दीको अत्याधुनिक मान्छेको विचार ।' आजको मान्छे यत्तिको खुला त हुनैपर्छ !!

भोलिपल्ट धेरै पत्र पत्रिकाहरूमा भँगेराको टाउकोजत्रा अक्षरमा उसको खुला बिचारको तारिफको पुल बाँधेर समाचार छापियो । पत्रिकाहरूमा उसकी श्रीमतीको पनि नजर पर्‍यो । आफ्नो श्रीमान्को खुला बिचारका बारेमा खुलेर प्रसंसा गरिएको समाचार पढेर श्रीमती रिसाइनन् । बरु उल्टै श्रीमान्को तारिफमा उनले पनि धेरै शब्दहरू खर्च गरिन् ।

श्रीमती रिसाउनुको साटो उल्टै तारिफ गरेको सुनेर भित्रभित्रै मख्ख पर्दै भन्न थाल्यो– 'आफू त खुला किताबजस्तो मान्छे । खुला भएरै बाँचियो, हाँसियो, नाचियो र मोजमज्जा गरियो हेर बुढी ! मरेर लानु केही छैन । दुईदिनको जीवन मस्तले बाँच्न जान्नु पर्छ । तिमीलाई बिहे गर्नु अघि नै कतिलाई भ्याइयो भ्याइयो ? केलाई र कसलाई ढाँट्नु पऱ्यो र ? यस्ता कुराहरू । यसै पनि नाम र दाम दुवै कमाएकै छु । समाजमा प्रतिष्ठा पनि जमाएकै छु । मलाई त संकुचित बिचारधाराका मान्छेहरू पटक्कै मन पर्दैनन् । उहाँभने एक्काईसौं शताब्दीमा छौं भनेर धाकधक्कु लाउँछन् मान्छेहरू । तर सोच र बिचारमा भने उन्नाईसौं शताब्दीका जस्ता । आफू त खुलेरै बोलिन्छ र बोलियो पनि । पत्रपत्रिकाहरूले पनि खुलेरै लेखेछन् ।'

डाइनिङ टेबलमा ब्रेकफाष्टका लागि चिया र खानेकुरा राख्दै श्रीमती पनि टेबलको पल्लो कुर्सी तानेर बस्दै भन्न थालिन् –'चिया चिसो भइसक्यो,

कति त्यही पत्रिका मात्रै मख्ख पर्दै पढिराख्नुभएको भन्या ?'

श्रीमतीको कुराको जवाफ दिनुको साटो आफैं मख्ख पर्दै भनिरह्यो – 'मलाई त दोहोरो मानसिकता बोकेर हिँड्ने मान्छेहरू पटक्कै मन पर्दैनन् । आफू त एक्काईसौँ शताब्दीको आधुनिक मान्छे । बिचार पनि आधुनिकै छ हेर बुढी ! आफू त भित्र जे छ बाहिर पनि त्यही । केलाई लुकाउनु व्यर्थैमा होइन त ? खुलेरै बकिदिएँ सबैसबै !'

श्रीमान्ले त्यसो भनिरहँदा श्रीमती रिसाउनुको साटो झन् झन् खुसी देखिन्थी । आफ्नो श्रीमान् भन्दा पनि सायद धेरै खुसी । श्रीमती पनि उत्साहित हुँदै श्रीमान्को अनुहार हेरेर भन्न थाली– 'तपाईसँग बिहे भएदेखि नै मेरो मनभित्र एउटा पीडाको गरुङ्गो पोकोलाई गाँठो पारेर राखेकी थिएँ ।  कति पटक फुकाउने प्रयत्न गरेँ तर हिम्मतै गर्न सकिन । हुनत त्यो गाँठो खोल्नको निम्ति आजभन्दा राम्रो दिन अरु कुनै हुनै सक्दैन होला !

'निर्धक्क भएर फुकाऊ श्रीमतीजी तिम्रो त्यो पीडाको गाँठोलाई ।' हर्षित मुद्रामा भन्यो श्रीमतीलाई श्रीमानले ।

'म पनि त कुमारी कहाँ थिएँ र ? तपाईंसँग बिहेगर्दा !'

यत्तिकुरा सुन्न नपाउँदै अघिदेखि झलमल्ल घामलागेको श्रीमान्को अनुहारमा एकाएक कालो बादल मडारिएर आएझैँ देखियो र अँध्यारो हुँदै झस्केर कुरा नबुझेझैँ गरी सोध्यो– 'के रे ? के रे?'

'के नि अब ? म पनि त कुमारी थिइन भनेको नि ? तर तपाई कुमार नहुनु र म कुमारी नहुनुका कारण भने ठीक उल्टो छ। तपाई आफ्नै स्वेच्छाले कुमार रहनु भएन । म भने तपाईजस्तै अर्को लोग्ने मान्छेले आफ्नो यौनतृष्णा मेट्नका लागि जबर्जस्ती मेरो अस्मिता लुटीदिएको कारणले गर्दा कुमारी रहन पाइन ।'

यत्ति सुन्नु के थियो ? अघि देखिको फूर्ति त कता हरायो हरायो !

श्रीमान्को चुक घोप्टेजस्तो कालो अँध्यारो अनुहार देखेपछि श्रीमतीले भनिन्– 'किन के भयो र ? अघिदेखि झलमल्ल घाम लागेको अनुहारमा एकाएक किन घाम अस्तायो ? त्यो फूर्ति र गर्व कता हरायो ? एक्काईसौं शताब्दीको दम्भ बोक्ने आधुनिक मान्छेको आधुनिक बिचार कता बिलायो ? लौ भन्नुहोस् त श्रीमान्जी ! म बलात्कृत हुनुमा मेरो गल्ती कहाँनेर छ ? नगरेको गल्तीको पीडा बोकेर र आफ्नै मनको सजायँ आफैंले भोगेर कतिञ्जेल बाँचु म ? तपाईले चाहिँ खुलेर त्यत्रो सञ्चार माध्यमबाट फुक्न हुने ? मैले चाहिँ तपाईलाई सुटुक्कै भन्न पनि नहुने ? तपाई र ममा फरक के छ ? ल तपाई आफै भन्नुहोस् त ?'

उसको श्रीमान् रिसले रातोपीरो हुँदै जुरुक्क उठेर भन्यो– 'पुरुष प्रधान समाजमा लोग्नेमान्छे र स्वास्नी मान्छेको कुरा पनि कहीं एउटै हुन्छ ? फरक के छ रे अझ हेरन ? म भनेको लोग्नेमान्छे तँ भनेको स्वास्नीमान्छे– फरक त्यही छ बुझिस् ?'

ଓଓ

# ब्यूटी पार्लरकी ब्यूटी

कन्हैया नासननी
विराटनगर

आँखाले साफ धोका दिए विभूतिलाई । तिनी निदाउन चाहन्थिन्, आँखाले चिम्लिदिएन । आँखाले बरु रसाएर परेला भिजाइदिए । होइन, मध्यराति यसै बेला किन सुनिन्छ यो गीत –'सम्हालेर राख, सम्हालेर राख, फेरि फेरि फुल्ने होइन जोवनको फूल ।' अहिलेसम्म कसैले सम्हालेर राख्न नसकेको जोवनको फूल विभूतिले मात्र कसरी सक्थिन् ? गीत तिनैलाई लक्षित गरेर रचिएको प्रतीत हुन्छ तिनलाई । गीतले जिस्क्याएको प्रतीत हुन्छ तिनलाई । तिनका आँखा झनै रसाए, परेला झनै भिजिए ।

'यस्तरी थाकिसकेकी छु, तैपनि मलाई निद्रा आउँदैन ।' विभूतिले मनमनै भनिन् । नथाकून् पनि किन ? बिहानको खाना खाएलगत्तै तिनी पार्लर गएकी थिइन् । त्यो दिनको काम सिध्याएर घर फर्कँदा अबेला भइसकेको थियो । आफ्नै नाम राखेर तिनले पार्लर खोलेकी थिइन् । पार्लरको नाम हो– विभूतिज् ब्यूटी पार्लर । तिनको त्यो पार्लर सहरभरिका महँगा पार्लरहरूमा पर्दथ्यो । चल्ती र चर्चित पनि त्यतिकै थियो । राम्री थिइन् तिनी– त्यसैले चर्चित थिइन् तिनी पनि । तिनको नामले 'ब्यूटी पार्लरकी ब्यूटी' संज्ञा पाएको थियो । पार्लरबाट पाइने सेवा र त्यहाँको साजसज्जाले पार्लरको त्यो नामको औचित्यलाई पुष्टि गर्दथ्यो । विवाहको लगनको बेलातिर विभूति अति व्यस्त हुन्थिन् । पार्लरमा तीन वटा क्याबिन थिए । ग्राहकहरूको साजश्रृङ्गारमा लगाउन तिनले तालिमप्राप्त केटीहरू राखेकी थिइन् । एउटामा तिनी आफै काम गर्थिन् । निःसन्देह सेवाग्राहीहरू तिनकै हातबाट श्रृङ्गारयुक्त हुन चाहन्थे । तिनीसँग एक दिनअगावै समय मागिन्थ्यो । तर आज पार्लरमा आएकी केटीको श्रृङ्गारका लागि तिनीसँग तीन दिन अगावै समय मागिएको थियो । त्यो दिन तिनी पार्लरमा पुगेकी मात्र थिइन्, फोनको घन्टी बज्यो । रिसिभर लिएर तिनले 'हैलो' भनिन् ।

"मैले ब्यूटीसँग कुरा गर्न चाहेको ।" उताबाट बोलेको सुनियो ।

"म...म...म विभूति नै बोल्दैछुँ । को बोल्नुभएको ?"

"ब्यूटी म तृष्णा बोलेकी । नयाँ बजार, बालाजु बस्ने क्याम्पस पढ्दा खेरिको तिम्रो साथी ।"

"ए..तृष्णा मोरी ! भन त के छ तिम्रो हालखवर ?"

"हालखवर पछि बताउँला । पर्सी म दशै बजे मेरो साथीलाई लिएर तिम्रो पार्लरमा आउँदैछुँ । उसको पर्सि स्वयम्बर छ । अन्भाउने पनि पर्सि नै हो । ऊ मेरो एकदम मिल्ने साथी । राम्रोसँग सिँगारिदिनु मोरीलाई । उसलाई मात्र चित्त बुझेर नपुग्ने भयो, दुलहा हुनेलाई पनि चित्त बुझ्नुपर्ने भयो ? लौ त फोनमा कति कुरा गर्ने ? अहिलेलाई यति मात्र । पर्सि दश बजे है त, फरक नपरोस् ।"

नभन्दै आज दशै बजे आइपुगिन् तिनकी साथी तृष्णा, आफ्नी केटीसाथीलाई लिएर । विभूतिले दुवै जनालाई प्रतीक्षाकक्षबाट आफ्नो क्याबिनमा लगिन् ।

"यी मेरी साथी सिल्भिया सुब्बा । चिनापर्ची नभएको भए पनि नाम तिमीले सुनेकी हुनुपर्छ ।" तृष्णाले भनिन् ।

"हो नाम बरोबर सुनेकी हूँ । टिभी र पत्रपत्रिकामा उहाँलाई बरोबर देख्छु ।" जवाफमा विभूतिले भनिन् ।

"सिल्भिया, मैले तिमीलाई भनें नि –यी मेरो क्याम्पसमा पढ्दाखेरिको साथी । नाम त यसको विभूति हो । तर राम्री भएकीले यी मोरीलाई सबैले ब्यूटी भन्ने गर्छन ।"

तृष्णालाई केवल आँखा तरेर हेरी विभूति हाँस्न खोजिन् । तबसम्ममा सिल्भियाले विभूतिलाई दुवै हात जोडेर 'नमस्ते' भनिसकेकी थिइन् । विभूति पछि परिन् अभिवादन गर्न । तृष्णाले हाँस्दै भनिन् –"सिल्भिया फर्स्ट् !"

सिल्भिया सुब्बा ! गत बर्षको मिस नेपाल प्रतियोगितामा फर्स्ट रनर अप भएकी केटी ! केही दिन अघि हिमालयन टाइम्स दैनिकको शुक्रबारको सप्लिमेन्टरीमा चौथो पेज पूरै स्विमिङ्ग ड्रेसमा विभिन्न पोजमा खिचिएका तिनका फोटा छापिएका थिए । स्मित मुस्कानमा पनि खोपिल्टा पर्ने गालाभरि छताछुल्ल यौवन पोखिएको देखिने तिनको मोहक मुहार एकछिन टक्क हेरेर विभूतिले भनिन्–"प्रसाधनका सामान मकहाँ धेरै छन् । तपाईको रोजाइमा के के पर्छन्, त्यो थाहा पाउन पाए हुन्थ्यो ।"

सिल्भियाले मुख खोल्न नपाउँदै तृष्णाले भनिन् –"तिमीकहाँ भएका सामानमध्ये सबैभन्दा असलचाहिँ प्रयोग गर्नु । मैले तिमीलाई अघि नै भनें नि, उसलाई मात्र चित्त बुझेर भएन, दुलहालाई पनि चित्त बुझ्ने हुनुपर्‍यो । उहाँकै फमाइसमा हामी तिमीकहाँ आएका हौं । नत्र पार्लरहरू त नयाँबजारमा पनि धेरै छन् । एउटा सानो पार्लर त दुलहाको होटलमै पनि छ । तर उहाँलाई आफ्नी भावी दुलही तिम्रै पार्लरबाट सिँगारिएकी हुनुपर्ने रे । उहाँले नै हो हामीलाई आफ्नै गाडीमा यहाँ पठाउनुभएको । लाजिम्पाटको होटल 'कोहिनूर' उहाँकै हो भन्ने तिमीलाई थाहा भएको हुनुपर्छ । उहाँको नाम श्यामराजा रञ्जित हो । उहाँलाई तिमीले चिनेको भए त्यो कुनै आश्चर्यको कुरा होइन । लौ, काम सुरु गर । मलाई पनि त आज सिँगारिनु छ । तिम्रै एसिस्टैन्टहरूले मात्र सिँगारे पनि पुग्छ मलाई त । दुलही हुने सिल्भिया हो, म होइन । उसलाई चित्त बुझ्ने गरी सिँगारिदेऊ । चित्त बुझ्दो त दुलहालाई बढी हुनुपर्ला जस्तो पो देखिन्छ ।"

श्यामराजाको नाम सुन्नेबित्तिकै विभूतिको अनुहारको रङ्ग फेरियो । त्यो तृष्णाले र सिल्भियाले चाल पाएनन् । तृष्णाले भनेका अर्थपूर्ण कुरा सबै तिनलाई सुनाउन हुन् भन्ने तिनलाई लाग्यो । तर तिनी सम्हालिइन् । जो जहाँ र जस्तोसुकै भए पनि आफूलाई आफ्नो कामसँग मात्र मतलव भएको देखाउन तिनलाई अलि कसरत त गर्नैपर्‍यो ।

तृष्णा क्याबिनबाट निस्केपछि सिल्भियाले भनिन् –“तृष्णाले भनेको कुराको केही ख्याल नगर्नोस् । अँ, मलाई फर्र्युममा शानेल मन पर्छ । वाक्स हल्का मात्र डलिदिनोस् । रोजवाटर र शैम्पु जस्तो भए पनि हुन्छ । बाँकी रो जाइ तपाईंमै छाड्छु ।”

श्रृङ्गारको काम सुरु गर्नुअघि विभूतिले पुनः एकटक शिल्भियाको मोहक मुहार हेरिन् । तिनलाई भन्न मन लाग्यो– ‘सिल्भिया, तिमी त्यसै पनि राम्री छयौ । श्यामराजाले आफ्नो वाचा पूरा गरेरै छाडे । तिमीलाई मेरो शुभकामना !”

सिल्भियाले त्यस्तो के वाचा, कस्ता वाचा भनेर सोधे त्यसको जवाफ सहज नहुने बोध तिनलाई तत्क्षण भयो । तिनले आफ्नो काम सुरु गरिन् ।

‘उहाँ अर्थात् श्यामराजालाई तिमीले चिनेको भए त्यो कुनै आश्चर्यको कुरा होइन ।’ तृष्णाले भनेको यो वाक्य विभूतिको कानमा घोच्ने झीर जस्तै पसेको थियो । तृष्णाले तिनको र श्यामराजाको बारेमा थाहा पाएको हुनुपर्छ । कसरी थाहा पाएकी होलिन् तिनले ? श्यामराजाले नै बताएको हुनुपर्ने सम्भावना धेरै छ । तृष्णाले भनेको त्यो वाक्यप्रति सिल्भियाले चासो नलिएको देखियो । तिनको अनुहारमा प्रतिक्रियाको भाव देखा परेन । के त, तिनलाई पनि श्यामराजा र तिनको बारेमा थाहा थियो ?

हस्पिटालिटी म्यानेज्मेण्टको कोर्स पूरा गरेपछि विभूतिलाई होटल शोल्टीमा रिसेप्सनिष्टको काम सजिलै मिलेको थियो । त्यो काम तिनको योग्यताको हिसावले त्यति ठूलो होइन । तैपनि तिनी सन्तुष्ट थिइन् । आफ्नो आचरणले तिनी सबैको मन जित्न सफल भइन् । तिनको सौन्दर्य तिनको आचरणको परिपूरक बनेको थियो । रिसेप्सन काउण्टरका कर्मचारीहरू मात्र होइन, होटलमा काम गर्ने अरू पनि आफूसँग निकट हुन खोजेको चाल पाउन तिनलाई बेर लागेन ।

श्यामराजा नामको एक युवकले ती सबैलाई उछिने । उनी रिसेप्सन काउण्टरको चीफ पनि थिए । त्यसो त कसैसँग पनि मित्रताको सामान्य सम्बन्धसमेत राख्न नचाहने विभूतिको विचित्र स्वभावलाई धेरैले घमण्डीको संज्ञा दिएका थिए । श्यामराजालाई यो थाहा थियो । केवल उनी हतोत्साहित भएनन् । सम्भवतः तिनी न्यून मात्रामा भए पनि आफूसँग निकट हुन चाहेको संकेत श्यामराजाले पाएका थिए । सशङ्कित भएको देखिने तिनको स्वभावलाई नारीजन्य ठानी उनले सहज र सामान्यरूपमा लिएका थिए । तर निकटताको सम्बन्ध तिनी केवल सामान्य मित्रताको परिधिभित्र सीमित राख्न चाहन्थिन् भन्ने उनलाई के थाहा ?

एक दिन श्यामराजाले विभूतिलाई होटलबाहिरको लाउन्जमा कफी पिउने निम्तो दिए । कफी पिउँदै गर्दा तिनीहरूबीच केही बेर यताउतिको कुराकानी भयो । अन्तमा श्यामराजाले धेरै पहिलेदेखि मनमा राखिछाडेको कुरा मुखमा ल्याइहाले । उनले भने –“विभूति, हामीले एकअर्कालाई राम्ररी चिनीसकेका छौं ! हामी विवाह गर्ने, लौ ? नाईं नभन ।”

सम्भवत: विभूतिलाई श्यामराजाले कुनै दिन यो प्रस्ताव राख्नेछ भन्ने थाहा थियो । तसर्थ तिनीसँग त्यसको तयारी जवाफ थियो । श्यामराजाको प्रस्तावलाई किञ्चित पनि गम्भीरतापूर्वक नलिई तिनले आफ्नो यस्तो तयारी जवाफ दिइन् –"मेरो उमेर भरखर तेइस बर्षको भयो । बिहे गर्ने सोच मैले लिएकै छैन ।"

यही विषयमा कुरा गर्दै श्यामराजाले तिनलाई मनाउने वृथा प्रयास गरिरहे । अन्तमा आवेशमा आएर तिनले भनिन् –"मसँग बिहे गर्न चाहने तपाई पहिलो मान्छे होइन । सुखी दाम्पत्यजीवनको चाहना सबैमा जस्तै ममा पनि छ । मैले चाहेको के भने मसँग बिहे गर्न चाहने मान्छको एउटा भव्य बङ्गला होस्, परिवार सम्पन्न होस् अनि मलाई मर्सिडिज कारमा डुलाउन सक्ने होस् । के तपाईमा छ यी सर्त पूरा गर्ने औकात छ ? मैले तपाईको घर देखिसकेको छु । काममा तपाई सधैँको त्यहीँ थोत्रो मोटरसाइकल चढेर आउनेजाने गर्नु हुन्छ ।"

आफ्नो औकात भुलेर विभूतिले दिएको जवाफबाट श्यामराजाको संवेदना नराम्ररी आहत भयो । त्यसरी नै आवेशमा आएर उनले पनि भने– "विभूति, तिमीले मेरो औकात सोध्दा आफ्नो औकातको ख्याल नगरेकी रहिछौ ! तिमीलाई आफ्नो रूपको मात लागेको हुनुपर्छ । ठीक छ, उसो भए एउटा भव्य बङ्गला नभएसम्म, तिमीभन्दा राम्री केटी नभेटिएसम्म र मर्सिडिजभन्दा महँगो गाडी आफूसँग नभएसम्म म बिहे गर्दिनँ ।"

विभूतिले श्यामराजालाई अर्को दिन काममा देखिनन् । नदेख्नाले उत्पन्न हुने उत्सुकताले तिनलाई बेचैन तुल्यायो । निश्चय पनि एकै ठाउँमा काम गर्नुपर्ने हुनाले तिनी श्यामराजासँग उचित किसिमको सामान्य सम्बन्ध रहिरहोस् भन्ने चाहन्थिन् । श्यामराजालाई तिनले देख्दै देखिनन् । पछि तिनले थाहा पाएअनुसार श्यामराजाले शोल्टी होटलको काम छाडिसकेका रहेछन् । विभूतिले अरू चार बर्ष रिसेप्सनिष्ट नै भएर त्यो होटलमा काम गरिरहिन् । एक दिन तिनको एक जना विदेशी पाहुनासँग नराम्ररी झगडा भयो । दोष तिनको थिएन तापनि तिनलाई त्यहाँबाट हटाई स्टोरको रेखदेखको काममा लगाइयो । त्यो काम गर्न तिनले चाहिनन् र अन्तमा होटल नै छाडिन् । त्यसको केही महिना कामबिना त्यसै बिताएपछि तिनले ब्यूटी पार्लरमा काम गर्ने तालिम लिइन् र पछि त्यो कामलाई नै तिनले आफ्नो पेशा बनाइन् ।

सौन्दर्य, यौवन र अभिमान धेरैजसो केटीहरूमा एकैसाथ देखापर्छन् – यो उक्ति त्यो श्रेणीका केटीहरूका जस्तै विभूतिका लागि पनि चरितार्थ भयो । विवाह समयमै  हुनुपर्छ भन्ने चेत तिनमा ढीलो गरी आयो । बिहे हुनुअघि अक्सर केटाहरूसँगको सान्निध्यमा हुँदा अचानक तर स्वाभाविकरूपमा घट्ने घटनाहरू केही-केही तिनको जीवनमा पनि घटे । त्यस्ता घटनाहरूमध्ये एउटा तिनी बिहेभोजमा छँदा घटेको थियो । एक जना जवान केटो छिनछिनमा तिनको सामुन्ने देखापर्ने, आँखा जुध्दा हाँस्न खोज्ने र केही गरी आमने-सामने परे हेरिरहने गर्थ्यो । अवश्य पनि केटोले त्यसो गर्ने गरेको तिनलाई निको

लागेन र केही ख्यालै नगरी तिनी यसरी बम्कन पुगिन्– "तपाईले के काम हेरिहनुभएको मलाई ? केटीहरू भन्ने पहिले तपाईले देख्नुभएको छैन कि के ?"

पछि तिनले थाहा पाइन्, त्यो केटो तिनको एकदम मिल्ने एउटी सँगिनीको दाजु रहेछ । त्यो दिनदेखि तिनकी सँगिनी र तिनीबीच मनमुटाव हुनु थियो, भयो ।

''तिम्रो आफ्नो बिहेभोज कहिले ख्वाउने ?'' बिहेभोजमा जाँदा तिनलाई अक्सर सोधिने यो प्रश्नको जवाफ तिनले कुनै बेला हल्कारूपमा यस्तो दिने गर्थिन्– "के हतार छ र ? मैले बिहे गर्ने सोच बनाएकै छैन ।"

पछिल्लो समयतिर यस्तो प्रश्न तिनलाई विरलै सोध्ने गरिएको अचानक तिनले चाल पाइन् । आफू यौवनको अन्तिम चरणमा गुज्रिरहे को पनि तिनले अचानक चाल पाइन् । विवाह त बुढेसकालमा पनि गर्न सकिन्छ तर प्रकृतिको नियमअनुसार विवाह गर्ने एउटा निश्चित कालखण्ड र अवधि हुन्छ भन्ने बोध तिनलाई ढीलो गरी भयो । गार्हस्थ्य जीवनको औचित्य र अभिप्रायप्रति संवेदनशील हुनुमा सुखी जीवनको रहस्य लुकेको हुन्छ भन्ने बोध पनि त्यसरी नै तिनलाई ढीलो गरी भयो । आफ्नै मनमाफिकको केटो फेला पारेर अथवा फँसाएर विवाह गर्ने क्षमता र स्वभाव भएकी केटी तिनी थिइनन् । यो सत्य हो । तिनमा संयमित चञ्चलता थियो । उत्ताउली भएर तिनी कहिल्यै नाचिनन् । त्यसो त तिनलाई धेरै ठाउँबाट विवाहका लागि भन्न आएको थियो । तर भन्न आएका ठाउँका केटाहरू तिनको रोजाइमा परेनन् । सम्पन्न परिवारको, एउटा भव्य बङ्गला भएको र मर्सिडिज कारमा तिनलाई डुलाउने औकात भएको केटोसँग बिहे गर्ने तिनको आकांक्षा यथावत् नै थियो । आकंक्षालाई यथावत् राख्न सकिन्छ तर यौवनलाई त्यसो गर्न नसकिने बोधको पीडा अन्ततः तिनलाई बिस्तारै भयो । त्यस्तै उमेर ढाँट्न सकिए पनि छोट्याउन नसकिने वास्तविकताको बोध पनि तिनलाई त्यसरी नै भयो । केटी मान्छे भएर विवाह नगरीकन बस्नुपर्दाको खास पीडाको अनुभूति हुँदा तिनको उमेरले पैंतीस नाघिसकेको थियो ।

तीन बर्षअघि दिवंगत भएकी विभूतिकी आमाले मृत्युशय्यामा छँदा तिनका दाजु र भाउजूलाई भनेकी रहिछन्– 'विभूको विवाह भएको हेर्ने मेरो ठूलो इच्छा थियो । बिचरीको जिन्दगी त्यसै बित्ने भयो । तिमीहरूले जे गरेर भए पनि उसको बिहे गर्दिनु ।'

त्यसो भएर पनि होला तिनका दाजु र भाउजुले अन्ततः लमीको सहारा लिएका थिए । त्यो तिनलाई पटक्कै राम्रो लागेन । बिहे नगरेर बसेकी छोरीले कानुनअनुसार छोरासरह अंश पाउने भएर तिनका दाजु र भाउजूले तिनको बिहेको त्यसरी चासो लिएको हुनुपर्छ भन्ने तिनले ठानिन् । एक पटक लमीले मिलाएको केटोसँग तिनले बिहे गर्न इन्कार

गर्दा तिनका दाजुले भनेका थिए– "उसो भए बूढीकन्या भएर बस्नु तिमी ।"

त्यस बेला त तिनले केही भनिन् तर केही दिनपछि तिनले दाजु र भाउजु सँगै भएको बेला पारी रातो आँसु झारेर भनेकी थिइन् –"म बुढीकन्या भएरै बस्छु । मैले अंशभाग दाबी गरेर अलग्गै बस्ली भन्ने नचिताउनोस् । म त्यसो गर्दिनँ । यो म लेखेरै दिइदिन्छु । म एक जना तपाईहरूलाई भार भएको छ भने बरु म डेरा लिएर अन्त कतै बसिदिन्छु ।"

तिनलाई माया गर्ने तिनकी भाउजूले भनेकी थिइन् –"हामीले त्यसो चिताएका छैनौं, विभू मैयाँ ! तपाई एक जना नभए मैले के गर्ने ?" त्यसपछि तिनले आफ्ना श्रीमानलाई भनेकी थिइन्– "विभू मैयाँलाई चित्त दुख्ने केही भन्नुभयो भने म मलाई नै भनेको बराबर सम्झन्छु । मैयाँले काम गरी कमाएर दिएको पैसाले घरखर्चमा त्यत्रो सघाउ पुगिरहेको छ ।"

एकपटक तिनकी एक जना मिल्ने साथीले कुरैकुराको सिलसिलामा तिनलाई भनेकी थिई– "कुनै निश्चित अवधिभित्र विवाह भएन भने विवाह गर्ने आशा नै ओइलाउँदै गई अन्त्यमा मर्दोरहेछ । विभू, के तिमीलाई मधुमासका रातहरूमा प्रणयक्रीडामा लस्त भएर थाकेपछि श्रीमान्को बलिष्ट पाखुरामा शिर अड्याएर छातीको भुत्ला खेलाउँदै निदाउनुको आनन्दको कल्पनाले कहिल्यै सताएन ?"

साथीले यसो भन्दा विभूति नझोक्रिई रहन सकिनन् । यो तिनलाई नै लक्षित गरेर साथीले भनेको हो भन्ने तिनले बुझिन् । त्यस्तै स्थितिमा रहनुपरेकी साथीले आफ्नो पनि व्यथा सुनाएको हो भन्ने तिनले बुझिन् ।

त्यसको केही दिनपछिको कुरा हो– विभूतिलाई श्यामराजाको सम्झना आयो । शोल्टी होटलमा भएको पछिल्लो भेट र त्यस बेला भएको कुराकानीपछि दुई जनाको भेट भएको थिएन । उनलाई भेट्ने सोच पनि तिनमा कहिल्यै आएन । यदाकदा उनको सम्झना मिलिक्क तिनको स्मृतिपटलमा झुल्के पनि त्यो धेरै बेर रहँदैनथ्यो । आश्चर्य त केमा भने श्यामराजाले गरेको विवाहको प्रस्ताव इन्कार गर्दा तिनले दिएको जवाफबाट आहत भएर उनले त्यसै बेला दिएको प्रत्युत्तरलाई तिनले अलिकति पनि गम्भीरतापूर्वक लिइनन् । ध्यान दिन लायक नै सम्झिनन् तिनले उनको प्रत्युत्तरलाई । दश बर्षपछि आएर तिनमा उनको प्रस्ताव र त्यो अस्विकृत भएपछिको उनको प्रत्युत्तरप्रति गम्भीर हुनुपर्ने सोच आयो । खास त्यस बेला उनको ब्यूटी पार्लरको काम त्यति राम्रो चलेको थिएन र तिनको मन पनि स्थिर थिएन । तिनलाई कतै जाने, कसैलाई भेट्ने इच्छा भइरहन्थ्यो ।

धेरै जनासँग सोधपुछ गरेपछि तिनले थाहा पाइन्, शोल्टी होटलमा काम गर्न छाडेको केही दिनपछि श्यामराजालाई ठमेलको महाराजा गेष्ट हाउसमा चीफ रिसेप्सनिष्ट नै भएर काम गर्ने मौका मिल्यो । केही बर्षपछि पदोन्नति हुँदा-हुदै उनी त्यहाँको म्यानेजर भए । उनको भाग्य चम्कियो । गेष्ट हाउसको सेयरमा धेरै प्रतिशत लगानी गर्दै अन्त्यमा उनी त्यसको प्रोप्राइटर नै बन्न पुगे । हालभन्दा दुई बर्षअघि उनले एक जना धनाढ्य बेपारीलाई

गेष्ट हाउस बेचे । होटल व्यवसायमा पल्केका उनी अहिले लाजिम्पाटको भव्य होटल 'कोहिनूर'को प्रोप्राइटर भएका छन् ।

त्यति विस्तृत जानकारी पाउन सफल भए पनि विभूतिले श्यामराजा विवाहित छन् या छैनन्, त्यो भने थाहा पाउन सकिनन् । बाँकी एक त्यो पनि थाहा पाउने इच्छा तिनमा जागृत भयो । होटलको फोन नम्बर पत्ता लगाउन तिनलाई गाऱ्हो भएन । बरु फोन गर्ने साहस बटुल्न तिनलाई गाऱ्हो भयो ।

एक दिन एकाबिहानै श्यामराजाको मोबाइल फोनमा संगीतमय कलर ट्युन बज्यो । उनले फोन लिएर 'हैलो' भने । उताबाट आवाज आयो– 'म विभूति बोलेकी हुँ । तपाईले मलाई बिर्से पनि मेरो नाम बिर्सनुभएको छैन होला । के छ तपाईको हालखबर ?"

"को विभूति ? अँ..अँ.. अहिले मैले चिनेँ । मैले तपाईको स्वरबाट तपाईलाई चिनेँ । मेरो हालखबर त्यस्तै हो, ठीकै छ भन्नुपऱ्यो । कामको व्यस्ततामा समय गुज्रिरहेको छ । अनि तपाईको के छ हालखबर ? पार्लर कस्तो चलिरहेको छ ?

श्यामराजाको प्रश्नले तिनलाई हर्षित तुल्यायो । भन्नाले चिन्न गाऱ्हो भए पनि अथवा गाऱ्हो भएको बहाना नै गरेको भए पनि तिनी उनीबाट बिर्सिएकी भने रैनछिन् । तिनले पार्लर चलाइरहेकी छिन् भन्ने पनि उनलाई थाहा रहेछ । तर उनले 'तपाई' भनेर सम्बोधन गरेको तिनलाई मन परेन । होटल शोल्टीमा सँगै काम गर्दा आफ्नो हाकिम भएको नाताले सम्बोधनको क्रममा तिनी उनलाई 'तपाई' भन्थिन् र उनी तिनलाई 'तिमी' भन्थे । तिनले भनिन्– "मलाई तपाईसँग भेट्न मन लागिरहेको छ । मलाई... तपाईसँग कुरा गर्न मन लागिरहेको छ ।"

क्षणभरको विलम्बपछि श्यामराजाले भने– "त्यस्तो भेट्नु नै पर्ने खास कुरो के छ र ? अहिले फोनमै भन्नुभए पनि हुन्छ ।"

"के तपाई मसँग भेट् गर्न पनि चाहनुहुन्न ?" उदासीनता मिसिएको स्वरमा विभूतिले यसो भनेको सुनेर श्यामराजाले भने –"ठीक छ, फुर्सत छ भने भोलि दिउँसोतिर आउनोस् न त । म होटलमै हुन्छु ।"

विभूति अर्को दिन होटल गइन् । एक जना रिसेप्सनिष्टले तिनलाई पहिलो तलामा आगन्तुक राखिने एउटा कोठामा लगेर राख्यो । तिनी आउने भन्ने उसलाई थाहा भएको बुझिन्थ्यो । प्रतीक्षाको घडी बितेको अनुपातमा विभूतिको बेचैनी पनि बढ्यो । अनायास तिनलाई त्यहाँ त्यसरी आउनुको कुनै निश्चित उद्देश्य नभएको आभास भयो । मात्र भेटघाटलाई उद्देश्य मान्न सकिंदैन । तिनले चालै नपाई तिनको मुखबाट एउटा सुस्केरा निस्क्यो ।

श्यामराजाले कोठामा प्रवेश गरे । त्यसै-त्यसै जुरुक्क उठेर विभूतिले 'नमस्ते' भन्न पुगिन् । दुवै हात जोडेर श्यमराजाले पनि 'नमस्ते' भने । केही बेरसम्म दुवैको मुखबाट केही शब्द निस्केनन् । श्यामराजाले नै पहिले बोले, तिनको अनुहार नहेरीकन र हालखबर पनि नसोधीकन –"भन्नोस्, कति कामले आउनुभो ? मैले के सेवा गरूँ ?"

विभूतिलाई के भनूँ, के भनूँ भयो । तिनी भन्न पुगिन्– "काम केही छैन । तपाईलाई भेट्न मात्र आएको । तपाई कस्तो हुनुभो, थाहा पाउन मन लाग्यो ।"

अलिकति शिर झुकाएर श्यामराजाले अनुहारमा कुटिल हाँसो उतारे मात्र, केही भनेनन् । विभूतिले नियाँलेर श्यामराजा नाम भएको त्यो मान्छेलाई हेरिन् जो कुनै बेला तिनसँग नजीक हुन पाउँदा हर्षित हुन्थ्यो, तिनीसँग हाँसीहाँसी कुरा गर्न पाउँदा रमाउँथ्यो अनि तिनलाई जीवनसाथी बनाउनेसम्मको अपेक्षा राख्थ्यो । साहस बटुलेर तिनले भनिन् –"सोल्टी होटलमा हाम्रो पछिल्लो भेटमा मैले विचारै नगरी··· तपाईलाई केही भन्न पुगेँ । मलाई पछुताउ भयो । त्यहीँ कुरा मैले··· तपाईलाई अर्कै किसिमले भन्नुपर्थ्यो । मलाई भन्न आएन··· ··· ।"

तिनको कुरा बीचैमा काटी श्यामराजाले भने– "धेरै पहिलेको कुरा भयो । त्यसैले मैले के भनेँ र तपाईले के भन्नुभो ती सबै मैले बिर्सिसकेँ ।"

श्यामराजाले ढाँटेको भन्ने उनको अनुहार हेरेर स्पष्ट बुझ्न सकिन्थ्यो । धेरै पहिलेको भए पनि बिर्सन नसकिने तिनको कुराले उनलाई लागेको चोट निको भइसकेको हुनसक्थ्यो तर चोटको खत अझै नमेटिएको तथ्य उनको उदास चेहरामा प्रतिबिम्बित भइरहेको थियो । त्यो चोटबाट उत्पन्न भएको पीडा वैभवशाली बन्ने संकल्पमा रूपान्तरित भएर नै हाल उनी त्यो हदसम्म सम्पन्न भएको वास्तविकता तिनलाई के थाहा ? वातावरण उदासमय भयो । समय गुज्रन होइन, घस्रन थाल्यो । श्यामराजाले घडी हेरे । त्यसै बेला अघिको रिसेप्सनिष्ट आएर श्यामराजालाई भन्यो– "सिङ्गापुरबाट पर्सि आउने टुरिष्टहरूको रिजर्भेसन कन्फर्म गरिदिएँ । फेवा रिसोर्टबाट दुईचोटि फोन आइसक्यो ।"

"ठीक छ, फेरि आए म कलब्याक गर्छु भनिदेऊ ।" श्यामराजाले भने ।

भेटघाटको अवधि धेरै बाँकी नभएको आभास विभूतिलाई भयो । अघि देखि सोध्ने कि नसोध्नेजस्तो तिनलाई लागेको प्रश्न अखिरमा तिनले सोधेरै छाडिन् –"तपाईको विवाह भइसक्यो ?"

त्यसै बेला श्यामराजाको मोबाइल फोनमा रिङ्गर ट्युन बज्यो । फोन लिएर उनले कुरा गर्न थाले । फोनमा भएको आपसी कुराकानी विभूतिले बुझिनन् । कुराकानी धेरै बेर चल्यो, विभूतिको मन नै आत्तिने गरी । कुराकानी सिद्धिएपछि हड्बडाउँदै श्यामराजाले भने– "मेरो विवाह भएको छैन विभूतिजी ! लौ त, भेट्न आउनुभएकोमा तपाईलाई धन्यवाद छ । म आज अकस्मात् व्यस्त हुन पुगेँ ।"

विभूतिको आँखामा रातो आँसु टलपल भयो । 'के तपाईको विवाह भइसक्यो ?' भनेर तिनलाई सोधिएन । सोधिएको भए तिनीसँग जवाफ र साथै एउटा प्रश्न पनि तयार थियो । नैराश्य र खिन्नताको ओस मिसिएको स्वरमा तिनले भनिन् –"के तपाई मलाई एक कप चिया पिएर जाऊ पनि भन्नुहुन्न ?"

“ए साँच्चै, हड्बडमा मैले बिर्सें । ठीक छ, म अहिले पठाउँछु ।” यति भनेर श्यामराजा निस्किहाले ।

तर चिया आइपुग्नुअगावै तिनी होटलबाट निस्केर सडकमा पुगिसकेकी थिइन् ।

घण्टौँ समय लाग्ने दुलहीसुहाउँदो श्रृङ्गारले सिल्भियालाई विभूतिले सजाउनुअगावै आफ्नो श्रृङ्गार सिध्याई चिटिक्क परेर तृष्णाले क्याबिनमा प्रवेश गरिन् । आफ्नो श्रृङ्गार सिद्धिएपछि सिल्भियाले तृष्णालाई भनिन्समेत– “तृष्णा, दुलहीजस्ती त म होइन, तिमी पो देखियौ !”

“कस्तो हतार लागेको तिमीलाई मेरो बिहेभोज खान ? आउने फागुनसम्म त पर्खिदेऊ ।” तृष्णाले भनिन् । दुवै जनाको हाँसोले क्याबिन गुञ्जियो । कस्तो गाऱ्हो भएको विभूतिलाई हाँसोमा सरिक हुन !

एक पटक फेरि आफ्नो श्रृंगार राम्ररी जाँचिसकेपछि पैसा झिक्न पर्स खोल्दै सिल्भियाले भनिन् –“कति दिनुपऱ्यो ? पन्ध्र हजार भन्ने सुनेकी छु ।”

“पैसा दिनुपर्दैन । तपाईजस्तीलाई आफ्नो सेवा दिन पाएकोमा मलाई खुशी लागेको छ । तपाईबाट मैले पाएको खुशी नै तपाईले मलाई तिर्नुपर्ने रकम सम्झनोस् ।” विभूतिले भनिन् ।

दुवै पक्षको रमाइलो झगडा भयो । सिल्भिया र तृष्णा पैसा नदिई नछाड्ने पक्षमा थिए भने विभूति नलिने नै पक्षमा । अन्तमा विभूतिले ‘प्लिज, मेरो सेवालाई तपाईको शुभविवाहको उपहार सम्झनोस् । जिद्दी नगर्नोस् । नत्र म रिसाउनेछुँ ।’ भनेपछि रमाइलो झगडा साम्य भयो ।

धन्यवाद दिनुपर्ने औपचारिकता निर्वाह गरेर सिल्भिया र तृष्णा पार्लर बाट निस्के । बाहिर पार्क गरिराखेको गाडीमा दुवै जना बसे । चालकले गाडी स्टार्ट गऱ्यो ।

पर्दा पन्छाएर विभूति झ्यालबाट हेरिरहेकी थिइन् । गाडी बी.एम्.डब्लु कम्पनीको थियो, मर्सिडिजभन्दा पनि महँगो । गाडी आँखाबाट ओझेल नभएसम्म तिनले हेरिरहिन् त्यसपछि थचक्क मेचमा बसेर दुवै हातले आफ्नो अनुहार छोपिन् ।

ଔଔ

## १५०/इलाम यात्रा (बाटामा कतै)

विष्णुबहादुर सिंह : म त चार बजेपछि मात्रै पिउन सुरु गर्छु । चार नबजीकन त कहिल्यै पनि छुँदै छुन्न ।

विगोगी बुढाथोकी : बिहानको चारबजे कि बेलुकीको… ?

विष्णुबहादुर सिंह : दुवै । यस्तो यात्रास्यात्रामा हुँदा अल्छी गर्नु हुँदैन– त्यसैले बिहानको चार बजेपछि । घरमा हुँदाचाहिँ बेलुकाको चार बजेपछि मात्र… …।

ଔଔ

# फूलको आँशु

गङ्गा सुवेदी
विराटनगर

गाउँमा हल्लीखल्ली मच्चियो । कारण पूजन कतै थिइन । गाउँले को निक्यौंल सत्य थियो । वास्तवमा पूजनले घर छोडेकै थिई । घरको भेउ पाउनेहरूले कुनै अफसोच मानेनन् । थाहा नपाउनेहरू भने अनेक अड्कलका साथी भइरहेका थिए ।

यति सबेरै कता लागि त हौ··· कि कुनै छट्टुका पञ्जामा परी ?

राम्री मान्छे सबैको आँखाको तारो हुन पनि सक्छे ।

आइमाइको बुद्धि हुँदैन भनेको यही हो । अब बिजोग हुने भो त्यसको । इण्डियाको कुन चैं नर्कमा होमिने भई···।

आमा छोरीको रातोदिन झगडा हुन्थ्यो··· । अनि मूली बिनाको दाईं, यस्तो त हुनु नै थियो··· त्यै पनि त त्यसले घरै छोडेर जानु चैं हुँदैन नै थियो ।

फेरि पनि पो··· ।

कसैसँग लसपस हुनुपर्छ··· ।

त्यो त देखी छ नि ! नत्र भने एकपल्ट फिराइसकेकी मान्छे फेरि भाग्नुको के मतलव हो र··· ?

यसरी कुराहरू अनेक रूपमा साँधिदै थिए ।

यो चिठी छोडेकी रैछै··· लु हेर्नुस् ।

भित्रबाट पल्लाघरे सान्दिदीले एउटा कागजको टुक्रो ल्याएर उनका श्रीमान्लाई दिइन् । सबैको चासो हौसियो । पढे र आफूआफूले निर्णय सुनाए–

मलाई नखोज्नु··· म फर्किन्न भनेर लेखेकी रैछे, ल···अब चैं गई गई··· ।

ए··· त्यसो भए फर्किन्न··· ।

निश्चित भो··· अठार बीस वर्षको उमेर···मति बिग्रिएछ कालीको··· ।

त्यसो चैं होइन हा··· कुरो त यसो पो त । यी आमा गतिली भैदिएकी भए पूजनले त्यसो गर्ने थिइन ।

ऊ जन्मिदा लोग्ने मरेकाले बाउ टोकुई भनेर कस्ले भन्दियो कोनि··· बूढी मान्छेले त्यो छोरीलाई छोरी नै मानिनन् । छेऊघरे हरिप्रसादले साउती मार्दा एकजना ले बुझ्ेजस्तो गर्दै भने ।

ए: त्यसो पो हो ? आफू त जागिरे मान्छे, यतातिरको अत्तोपत्तो छैन ।

कुरामा अनेक कुराहरू मुखै पिच्छे व्यक्त भएका छन् । पूजनकी आमाको अनुहारमा अलिकति पनि पीडा छाएको देखिएन भन्दै सकार्ने र कुरा गर्नेहरू घरतिर लागेका छन् ।

··· ··· ··· ··· ···

शहर । ठूला ठूला घरहरूमा झुत्रेझाम्रे मानिएका पुराना घरहरू ले पासिएका नै छन् । आफूले कल्पनामा पनि नसोचेको । दाउराको भारी बोकेर,

सालका पात टिप्न जङ्गल धाएर छाकमानो जुटाउनु पर्ने ठाउँकी आफू ।

विचित्रको दुनियाँ आफ्ना सामुन्ने शहरको व्याख्या आफूसँगैको साथी पुष्पले गलत गरेको होइन रहेछ । उसले पुष्पलाई हेरी । ऊ फोनमा व्यस्त छ । शहरबाट गाउँ फर्किएर गाउँबाट शहर तर्फ लागेको पुष्पमाथि विश्वास थिएन । यसभन्दा अगाडि घटनाको बन्दी हुनुपर्दाको भोगाइ बिर्सिएकी छैन उसले ।

'अब यहींसम्मको साथ हो तिम्रो पुष्प ।' उसले मनमनै भनी ।

'मैले अर्को बाटो लाग्नुपर्छ ।' उसले मनमनै निर्णय गरी ।

पुष्प घरिघरी ऊतिर हेर्थ्यो । 'म भाग्छु कि भनेर जाँचेको यसले ।' उसले पुष्पलाई पढी ।

... ... ... ... ...

फोनमा कुरा सकेर उसले बाथरुम हेऱ्यो । देखेन । कोठा बाहिर खोज्यो । देखेन । साँझसम्म पर्खियो । रात निकै गहिरिंदा पनि पूजन नआउँदा उसका मनमा सुनामी बौरिएर पुरै आत्तियो । अब के गरूँ ? कसो गरूँका सुर मा छट्पटाउन थाल्यो पुष्प । उसको चाल बेहाल बनेको थियो ।

कामको खोजीमा लाग्नका लागि भोकले उकास्दैछ । मामको बन्दो बस्तका लागि हातमा पच्चीस रूपियाँ मात्र छ, त्यसैलाई सम्झिनु सिवाए उसका लागि अर्को उपाय थिएन ।

ꙮꙮ

# मारमा

## राजव

हाल : अमेरिका

ऊ पच्पन्न वर्षको भयो । ऊ लेखनमा जम्न थालेको पनि पैंतीस वर्ष भइसकेछ । लेख्नु, छापिनु, प्रतिक्रिया सुन्नु, पढ्नु, पढाउनु नै उसको जीवनको अभीष्ट भइसकेको छ । उसको ओढ्ने, ओछ्याउँने, सिरक, डसना, तकिया, तन्ना सब लेखन नै हो ।

स्मगलिंग, भ्रष्टाचार, उद्योग, व्यापार र नेतागिरीतिर ध्यानजानु पूर्व नै उसको ध्यान कवितातिर गयो । र, उसले पहिलो कविता लेख्यो 'आजको बिहान', त्यसपछि उसले 'रात', 'दिन', 'हावा', 'बतास', 'पानी', 'भोक', ' प्यास', 'यौन', 'मौन', आदि धेरै लेख्यो । लेख्ने क्रममै उसले लामा छोटा शीर्षकका तीन सय कथा, चार उपन्यास, तीन नाटक र दुई काव्य लेख्यो ।

यसै सन्दर्भमा एकदिन एउटा पत्रकारले उसँग सोध्यो,– 'तपाईं साहित्यमा किन लाग्नु भयो ?'

'उपेक्षा, तिरस्कार, ईर्ष्या र निन्दाको घोर मारमा पर्न......।' उसको जवाफ थियो ।

ꙮꙮ

# खाशिपुका इण्टरनेशनल

गोविन्द गिरी प्रेरणा
सिनामंगल

खाशिपुका इण्टरनेशनल–काठमाडौं आइपुगेको दस दिन जति भएको थियो होला । नयाँ सडकमा अचानक यौटा गाडीले मछेउवाट हर्न बजाएर झण्डै कानै खालाजस्तो भयो र मैले हर्न वजाउने गाडीतिर आँखा लगाएँ । देख्दछु ड्राइभर सिटमा कालो वर्णको तराईवासी लाग्ने मान्छे सेता दाँत दे खाएर हाँस्दैछ । मलाई एक किसिमले झोंक पनि चल्यो, कान खाने गरी हर्न वजाउँछ, उल्टै दाँत देखाएर हाँस्छ । बेसोमती ।

मैले मुण्टो फर्काउन खोज्दै थिएँ, त्यो मान्छे चिच्यायो,– 'अरे साहुजी, कहिले आउनु भो अम्रिकावाट ?'

यो त मलाई नै भनेको हो । झस्कें म 'साहुजी' शब्दले ।

त्यो मान्छे गाडीवाट ओर्लियो र मेरो नजिक आएर भन्यो,– 'साहुजी चिन्नु भएन हजुरले मलाई ? म रामभरोसे यादव ।'

म झल्याँस्स भएँ, धेरै अघि मैले कुलेश्वर गणेश मन्दिर अगाडि किराना दोकान खोलेको थिएँ र पाँच वर्ष चलाएको थिएँ । म साहुजी भएको थिएँ ।

'म हजुरको दोकानमा खालि शिशी पुरानो कागज, खालि वोरा लिन आउँथें नि !' उसले भन्यो ।

मेरो मस्तिष्कमा रामभरोसेको तस्वीर आयो । तर त्यो रामभरोसे र यो मेरो सामुन्नेको कारवाला बीच सामन्जस्य भइरहेको थिएन ।

'साहुजी, बस्नोस्न कारमा, जाऊँ कतै बसेर चिसो तातो केही लिइलिऊँ ।'

म के गरुँ के जवाफ दिऊँ भन्दै थिएँ, उसले भनिहाल्यो,– 'बसौं न हजुर गाडीमा ।'

म बसें र उसले गाडी अगाडि वढायो ।

नयाँ सडकबाट उसले गाडी रत्नपार्कतिर बढायो । रत्नपार्कमा गाडी पूरै जाम थियो । तर उसलाई त्यो जामले कुनै असर पारेको देखिंन मैले । मैले नै मुख खोलें,– 'कस्तो ट्राफिक जाम हगि ।'

उसले सहजसँग भन्यो,– 'अलि अलि त ट्राफिक जाम भैहाल्छ नि हजुर । जनसंख्या बढेको छ । गाडी बढेको छ । काठमाडौं उत्राको उत्रै छ ।'

त्यसपछि ऊ हाँस्यो र फेरि भन्यो,– 'हजुरसँग कुलेश्वरको दोकानमा भेट हुँदा कहाँ यस्तो थियो । म त्यतिवेला थोत्रो साइकिल चलाउँथें । अहिले हेर्नोस् गाडी छ । काठमाडौं त त्यही हो ।'

रामभरोसे सबथोक सहज रूपमा लिइरहेको र बोलिरहेको थियो ।

विस्तार विस्तार म २०४५ सालतिर पुगें । मैले कुलेश्वर गणेश मदिर अगाडि किराना दोकान शुरु गरेको थिएँ श्रीमतीको जिद्दीले र म अचानकै मेरो व्यक्तित्व पसले हुन पुगेको थियो र म साहुजीमा परिणत भएको थिएँ ।

मेरो परिचय साहुजी भएको थियो । मेरो नाम गुमनाम भएको थियो साहुजी शब्दभित्र । सबैको साहुजी म एकदिन रामभरोसेको पनि साहुजी भएँ ।

'साहुजी खालि शिशी पुराना कागज खालि बोरा के छ म लिन्छु' भन्न आइपुगेको थियो रामभरोसे । सम्भवत गर्मी महिना थियो होला, उसले साहुजी पानी प्यास लाग्यो भनेको पनि सम्झिएँ । त्यसो त ऊ जहिले आउँदा पनि पानी पिउँथ्यो । पछिपछि त चिया समेत पनि खाने सम्वन्ध वनेको थियो ।

मैले किराना दोकान खोल्दा ताका नै रामभरोसे काठमाडौं आएको रहेछ । नयाँ नयाँ थियो । अलिअलि हिन्दी मिसिएको नेपाली बोल्थ्यो, तर छिटै नै पूरै नेपाली बोल्ने भए पनि हिन्दीको लवज, टोन, एकाध शव्द भने मिसिन्थ्यो नै । आइमाई केटाकेटीहरू हेपेर चोर मदिसे, धोती आदि भन्थे । तर ऊ कहिल्यै रिसाउँदैनथ्यो । हाँसी हाँसी भन्थ्यो, तपाईंले चोर भनेर म चोर हुन्न क्यारे ।

एकदिन मेरी श्रीमतीले खालि बोरा बेच्ने क्रममा ठग मदिसे भनेपछि ऊ जहिले पनि दोकानमा श्रीमती हुँदा भन्थ्यो, साहुनी ठग मदिसे आयो, पानी पिलाउनुस् ।

उसको गाली सहने र मीठो बोल्ने बानीले रामभरोसेसँग हाम्रो परिवारकै जस्तो सम्बन्ध हुन पुग्यो । कालिमाटीको गल्लीमा बस्थ्यो तर उसलाई चाहिने सारा किनमेल मेरै दोकानवाट गर्थ्यो, त्यसले गर्दा पनि अव ऊ झन् झन् नजिक भएको थियो । अझ ऊ पानी पिएर, कहिले काहीं चिया पिएर घण्टौं बस्न थालेपछि त दोकानमा सहयोग पनि गर्न थालेको थियो । दोकानअगाडि वढारिदिने, सामानहरू बोकेर तलमाथि गरि दिने गर्न थालेपछि आत्मीय भएको थियो । त्यसवापत् हामी पनि कहिलेकाहीं तरकारी निशुल्क दिन्थ्यौं र ऊ खुशी हुन्थ्यो ।

रामभरोसेको यौटा बानी अचम्मको थियो । उसले कहिल्यै उधारो मागेन । तर उसले किनमेल गर्दा साँझ र भोलि बिहानलाई जति चाहिन्छ, त्यति मात्र किन्थ्यो । दस पैसाको नून, ५० मिलिलिटर खाने तेल, २ वटा खुर्सानी जस्तो थोरै परिमाण किन्दा हामीलाई दिनै दिक्क लाग्थ्यो । तर यो सधैं यस्तै हो भनेपछि हामी सहज भएका थियौं ।

र एकदिन कञ्चटवाट रगतको धारा बगाउँदै दोकानमा आइपुग्यो । मैले के कसो सोध्नुभन्दा पहिले मेरो पसल पारीको मेडिकलमा लगेर प्राथमिक उपचार गराएँ । चोट खास गहिरो नभए पनि २ वटा टाँका लगाउनु पर्‍यो । मेडिकलबाट फर्केर आएपछि मेरो दोकानमा आएर बस्यो । मेरी श्रीमतीले चिया वनाएर ल्याइन् र हामीले सँगसँगै चिया पियौं ।

मेरी श्रीमतीले सोधिन्,– 'रामभरोसे, कस्ले चोट पुर्‍यायो ?'

'बल्खुको पुलनिर पुगेको थिएँ । २ वटा लड्काहरूले मसँग पैसा मागे ।

मैले छैन भनें । तिनीहरूले धमाधम मुड्कीले हान्न थाले । अनि मेरो भित्री खल्तीमा भएको तीनसय पचास पनि लुटेर लिए, मलाई धकेलेर लडाई पनि दिए, अनि म लड्दा मेरो शिर ढुँगामा परेछ तो चोट लागिगयो । तिनीहरूले मेरो थोत्रो साइकिल पनि लिएर गइगए ।' सधैं हाँसी हाँसी वोल्ने रामभरोसेले यतिभन्दा आँखावाट तुरुक्क आँसु चुहायो । मलाई उसको आँखामा आँसु देख्दा ननिको लाग्यो । मैले भनें,– 'जाऊँ हिंड रामभरोसे, साइकिल पाइन्छ कि ।'

अनि हामी बल्खुतिर लाग्यौं । रामभरोसेको पैसा लुट्ने ती केटाहरु कतै देखिएनन् । कतै पुलमुनि पो छन् कि भनेर पुलमुनि पनि हेऱ्यौं । त्यहाँ पनि देखिएनन् । पुलमुनिको यौटा सानु झाडी चल्मलाएको देखें मैले । साइकिल पनि देखें मैले । हामी दुवैजना झाडीतिर लाग्यौं । हामी त्यता जान लाग्दै थियौं, दुई केटाहरू झाडीवाट निस्किए । मैले देखिहालें, ती दुई हाम्रै टोलका लागु पदार्थका दुर्व्यसनी थिए । मलाई र रामभरोसेलाई देख्नेवित्तिकै तिनीहरूले सुइँकुच्चा ठोके साइकल त्यहीं छाडेर ।

यो घटनापछि रामभरोसे मेरो पूरै भक्त भएको थियो ।

'साहुजी, ट्राफिक जामले दिक्क हुनु भाको हो कि ? अव जाम खुलिसक्यो ।' भन्दा मैले पुलुक्क उसको अनुहारमा हेरें, उसको दायाँ आँखामाथि त्यो चोटको दाग अझै रहेछ ।

रामभरोसेले गाडी नक्सालको यौटा रेष्टुँरामा पुऱ्यायो । यौटा ठूलो कम्पाउण्ड सहितको घरलाई रेष्टुँरा बनाइएको रहेछ । हामी रेष्टुँरामा प्रवेश गऱ्यौं र माथिल्लो तल्लाको झ्याल छेऊको टेवुलमा बस्यौं ।

वेटरले मेनु लिएर आयो र मेनु दिंदै भन्यो,– 'के पिउनुहुन्छ ?'

मैले भनें,– 'अरेञ्ज जुस ।'

रामभरोसेले भन्यो,– 'म्याँगो जुस ।'

म मेनु हेर्न थालें । रामभरोसेले पनि मेनु हेर्न थाल्यो । हामीले मेनु हेर्दा हेर्दै वेटरले हाम्रो अर्डर बमोजिमको जुस लिएर आयो र राखेर गयो ।

'हजुर नेपाल कति वस्नुहुन्छ ? अनि परिवार सबलाई कस्तो छ ?' रामभरोसेले सोध्यो ।

'श्रीमती त यहीं आएकी छिन् । घरमै छिन् । छोराछोरी अमेरिकामै छन् ।' मैले भनें ।

'म तपाईंहरूका छोरा छोरीलाई कस्तो याद गर्छु । मसँग कति रमाउँथे ।' रामभरोसेले भन्यो ।

हो त नि, पसलमा भीड भएको बेला पेटीवाट सडकतिर जान खोज्दा सम्हाल्न मद्दत गर्थ्यो । छोराछोरी दुवै उसँग खेल्थे, रत्तिएका थिए । रामभरोसेलाई सब याद रहेछ ।

वेटर अर्डर लिनका लागि टेवुलछेऊ आएर उभियो ।

'के लिनुहुन्छ हजुर । मलाई त यहाँको शाकाहारी मोमो मन पर्छ ।' रामभरोसेले भन्यो ।

'मचाहिं चिकेन मोमो खान्छु ।' मैले भनें ।

वेटर अर्डर लिएर फर्कियो ।

रामभरोसेले उठ्दै भन्यो,– 'म शौचालय गएर आउँछु हजुर ।'

अनि ऊ शौचालय गयो ।

अहो, खालि शिशी पुराना कागज बटुलेर थोत्रो साइकिल घिसार्ने रामभरोसे कार हाँकेर हिंड्ने ? काठमाडौंमा घर पनि पक्कै बनायो होला । कति उन्नति गरेछ । मैले पाँच वर्ष दोकान चलाएँ । मैले दोकान चलाउन्जेल रामभरोसेसँग मेरो नियमित भेट भईनैरह्यो । एकदिन उसले भन्यो,– 'साहुजी, तपाईंसँग केही कुरा गर्नु छ । मलाई यौटा मद्दत चाहिएको छ ।'

मैले भनें,– 'केहो भनन ।'

'यहाँ होइन साहुजी । हजुरको कोठामा जान मिल्छ भने, म त्यहाँ भन्छु । वहुत इम्पोर्टेण्ट कुरा जो छ हजुर ।' रामभरोसेले भन्यो ।

साँझ साँझ पर्ने वेलामा मैले रामभरोसेलाई लिएर कोठामा गएँ । मलाई लाग्यो, कतै पैसा माग्न लागेको कि सापटी । डेरा खोजिदिनुस् भन्नलाई पो हो कि ? म उसले के भन्न खोजेको हो, त्यो अनुमान गर्न सकिरहेको थिइनँ ।

रामभरोसेले भन्यो, 'माफ गर्नुहोला हुजुर, मैले हजुरसँग एउटा झूठ बोलेको थिएँ ।'

म छक्क परें, के झूठ बोलेको थियो यसले र यसरी गोप्य ढँगले कुरा गर्न खोज्दैछ ।

'मैले हजुरलाई मेरो घर महोत्तरी हो, म नेपाली हुँ भनेको थिएँ नि । त्यो त मैले झूठ बोलेको । म त मोतीहारीको हुँ, भारतको ।'

'अनि के भो त ?' मैले सोधें ।

'मलाई नेपालको नागरिकता लिन मद्दत गर्नुस् हजुर । तपाईं पढेलेखेको हुनुहुन्छ, पैसाको चिन्ता लिनुपर्दैन हजुर । मान्छेहरू जापान, अमेरिका जान्छन् तर म भन्छु जापान अमेरिका यहीं छ । खाडी त जानै पर्दैन । यहाँ बाटोबाटोमा सुन फलिराको छ मान्छेहरू टिप्दैनन् ।' रामभरोसेले त भाषण पो छाँट्न थाल्यो । उसको कुराले म आश्चर्यचकित भएँ । झुत्रो लुगा लगाएर थोत्रो साइकल घिच्याउने रामभरोसेबाट मैले यस्तो कुरा अपेक्षा गरेको थिइनँ ।

अझ उसले यतिसम्म भन्यो, 'तपाईं विलायत, अम्रिका जाने भन्नुहुन्छ । यहीं बनाउनुस् जापान, अम्रिका । मलाई नागरिकता दिलाई दिनुस्, तपाईंलाई म पार्टनर वनाउँछु खाशिपुका इण्टरनेशनलको ।'

मैले भनें,– 'रामभरोसे, मबाट यो काम हुँदैन ।'

त्यसपछि मैले दोकान बेचें । दोकान बेचे पनि म त्यही दोकान राखेको घरसँगै वस्थें । म विदेश जाने चक्करमा अनेक प्रयत्नहरू गरिरहेको थिएँ । यदाकदा रामभरोसेसँग भेट हुन्थ्यो र तराईवाट नागरिकता लिन प्रयत्न भइरहेको वताउँथ्यो ।

रामभरोसे शौचालयवाट आयो । मैले सोधें,– 'अनि अरु के छ ?'

'लौ हजुर त विदेश उडिहाल्नु भयो । मैले वहुत पापड बेलेर नागरिकता वनाएँ । अनि त मेरो उन्नति शुरु भैहाल्यो नि । सिडियो, अरू हाकिम सारालाई गरेर दुईलाख जति खर्च गरें । अव आनन्द ही आनन्द छ । खाशिपुका इण्टरनेशनलको सिइयो भैगएको छु नि त । पचासजना भन्दा बढी स्टाफ छन् हजुर । हजुरलाई पार्टनर वनाउँछु भनेको मानिलिनु भएन ।' रामभरोसेले भन्यो ।

म त बडो रन्थनिएँ । मैले ओठ खोल्न सकिरहेको थिइन, मोमो आइहाल्यो र हामी मोमो खान थाल्यौं ।

मोमो खाईसकेपछि रामभरोसेले भन्यो,– 'हजुरलाई मेरो घर देखाउँछु अनि कहाँ छोड्ने हो म छाडिदिउँला । मेरो घर पवित्र वनाईदिनुस् हजुर ।'

मैले नाईं भन्न सकिन र उसले आफ्नो कारमा धापासी, वसुन्धरामा उसको घरमा लिएर गयो ।

आधा रोपनी मात्र पाइयो हजुर जग्गा । ठिकै छ भनेर यत्तिमै चित्त वुझाएँ । जाउँ भित्र । रामभरोसेले बैठक कोठामा लग्यो । बडो भिआईपी लाग्यो घर, कोठा, डेकोरेशन ।

रामभरोसेले भन्यो,– 'हजुर नेपाल बसुन्जेल यहीं वस्नुभए हुन्छ । पूरा एसीवाला अतिथि कोठामा वस्नुस् आफ्नै सम्झेर ।'

मैले भनें,– 'शायद केही दिनका लागि म सिंगापुर जान्छु होला फर्किएपछि भेटौंला नि ।'

राम भरोसेले पुलुक्क मेरो मुखमा हेऱ्यो मात्र, केही भनेन ।

मैले भनें,– 'मलाई नारायणगोपाल चोकमा छाडिदिए हुन्छ । एकछिन त्यहाँ काम छ ।'

रामभरोसेले मलाई नारायण गोपाल चोकमा छाडिदियो ।

मैले एकछिन रामभरोसेको कार हेरिरहें । उसको कार आँखाले नदेख्ने भएपछि ट्याक्सी बोलाएँ र भने,– 'सिनामंगल ।'

सिनामंगल आफ्नो घरमा आएपछि पनि मलाई रामभरोसे सँगै छ जस्तो लागिरह्यो । मैले भाडामा छाडेर गएको घर फुंग उडेको देखिन्थ्यो ।

रामभरोसेको त्यो भव्य घर मेरो आँखामा नाच्न थाल्यो । उसका कुराहरू अझै कानमा गुन्जिरहेका थिए ।

म एकोहोरो चूपचाप लागेको देखेर श्रीमतीले सोधी,– 'के भो हजुरलाई किन यसरी टोलाउनु भएको ?'

'केही हैन ।' मैले भनें ।

रामभरोसेको बारेमा केही भन्नै मन लागेन मलाई ।

३ जुलाई २०१८
काठमाडौं नेपाल ।



# जागिर

## दिनमान गुर्मछान

गर्मी बढेको छ । चर्को घाममा म छिटोछिटो पाइला चाल्दैछु । तीन वर्षपछि यो बाटो हिंड्दै छु । मलाई ऊसित भेट्ने हतारोले गाजेको छ । त्यसैले पाइला निरन्तर अघि बढिरहेका छन् ।

'ओहो ! उसले मलाई चिन्छ त होला नि !' मभित्र अज्ञात भयले डेरा जमाउँछ ।

'न मसित चर्को रिस पालेर पो बसेको छ कि ?'

'म पनि त उस्तै त ठहरिएँ नि ! गरेको बाचा त पुऱ्याउन सकिनँ । अब किन भेट्न जानु पऱ्यो ?' एक मनले मलाई गाली गऱ्यो । तर भेट्ने इच्छा भने प्रवल बनेर आइदियो । त्यसैले म उसको घरतिर लम्किरहेको छु ।

चार वर्षको अन्तरालमा मेरो मनले मानेनँ र म उसलाई भेट्न जाँदैछु । यो बीचमा सम्झना नभएको होइन । समयले साथ दिएन भन्दा हुन्छ । सधैं संविधान बनाउन कै दौडधुप हुन्थ्यो तर विवशता भन्नु पर्छ; संविधान नबनाई म रिटाएर भएको छु । मैले जागिर गुमाएको पक्का हो ।

तपाई पत्याउनुहुन्छ म जागिरे थिएँ ।

सायद पत्याउनु भएन । एउटा बेरोजगारले यस्तो तिलस्मी कुरो भेट्टायो कसरी ? यस्तै सोच्नु भयो होला हैन त ! कुरो ठिकै पनि हो, तर म वास्तवमै जागिरे भएको पक्का थियो । अब यसलाई जागिरनै त भन्नु पर्ला । एउटा देशको बेरोजगारलाई यो भन्दा अरु के चाहियो ? देश चलाउने जागिर पाएको थिएँ । तर न यो अस्थायी न स्थायी नै । त्यसैले त चट भयो जागिर । म एक लाचार नागरिक भएको छु यतिबेला । म हारेको छु । मेरो योग्यता नभएको प्रमाण बोकेर म्याद थपिरहेको जागिर खुस्कियो । यतिबेला तपाईं मलाई सत्तो सरापिरहनु भएको होला । सराप्नुस् जति सक्नु हुन्छ, सराप्नुस् !

म लगातार पाइला बढाइरहेकोछु । उसको घरतिरको गल्ली सम्झिंदै बढ्दै गर्छु । उसको सामुन्ने आफूलाई कसरी प्रस्तुत गर्ने ? एउटा हारेको सिपाहीझैं म चुपचाप बस्नु सिवाय के नै उपाय रहला र !… मभित्र यस्तै तर्कना आउँदै जाँदै गर्न थाले ।

त्यतिबेला जब म उसको घरमा पुगेको थिएँ । जहाँ मेरो भेट ऊसित भयो । उनैले हो, यो बोध गराएको कि म जागिरको खोजीमा भौतारिइरहेको छु । म कुनै प्रवेशिका परीक्षा दिइरहेको छु । लज्जाष्पद अवस्था त अवश्य भएको थियो । तिनैलाई म फेरि भेट्न चाहन्थें ।

कुरो त्यतिखेरको हो, जब म त्यहाँ पुगें ।

आँगनको डिलमा पुग्दानपुग्दै मैले उसलाई देखिहालें । म ढुक्क भएँ ।

आखिर यस घरमा भने कोही त रहेछ, यस्तै सोच्दै आँगनमा पुगें । आँगनमा पुग्दा ऊ केही पढिरहेको थियो । उसले हामी आएको पनि हेर्‍यो ।

"नमस्कार !" मेरा दुबै हात जोडिए ।

ऊ मलाई लाटाले पापा हेरे जतिकै गरेर हेर्न थाल्यो र मेरो नमस्कार फर्कायो । उस्को अघिल्तिर म ठिङ्ग उभिएको अवस्थामै आफू आउनुको कारण बताउन तम्सिएँ । तरमनमा अर्कै कुरो आयो । धेरै पछि आएको छु, आउनासाथ कामको कुरो गर्नु कति उचित होला ? सबै भन्ने गर्थे, माग्न मात्र आउने हुन्, अघिपछि आउने होइनन् ! कोही भन्थे, आश्वासन मात्र दिने त हुन्, गर्ने केही होइनन् । त्यसैले सन्चो बिसन्चो सोधें ।

"जनताको सन्चोबिसन्चोले तपाईंलाई के अर्थ दिन्छ र !" मुस्कानले उसको मुहार उज्यालो देखियो । यो व्यंग्यपूर्ण मुस्कान थियो ।

"वीर बहादुरजी काहाँ हुनुहुन्छ नि ?" यतिबेलासम्म म उभिनैरहेको थिएँ । "कुनैबेला वीर बहादुर र मबीच राम्रै चिनजान थियो । त्यसैले सोधेको हूँ ।"

"बुबा घरमा हुनुहुन्न, बजारतिर जानुभा'छ ।" सरल जवाफ थियो । "बस्नुस् न ।" कुर्सी तान्दै बल्ल उसले बस्न आग्रह गर्‍यो ।

म आँगनको चारैतिर हेर्दैथिएँ । प्रकृतिको सुन्दर सजावट यहाँ देखिन्थ्यो । सुन्दर बगैंचाको सुन्दर दृश्यले मलाई आकर्षित गर्‍यो । उसको हातमा एउटा पुस्तक थियो, 'जीत आपकी' । शिव खेडाको उक्त पुस्तक मैलेपनि निक्कै पटक पढ्ने मौका पाएको थिएँ । त्यो देखेर मलाई औधि खुशी लाग्यो । मलाई आफ्नै जितको झल्को दिएजस्तै लाग्यो ।

"अनि भन्नुस् के कति कामले आउनु भयो ?" उसको प्रश्न थियो । मलाई अकस्मातको यो प्रश्नले अकमकायो, के भनौं कसरी भनौं भएर आयो । एउटा नेता भइसकेको म आफैंमा किन यति डराइरहेको थिएँ, अचम्म लाग्यो ।

"वास्तवमा म चुनावको माहौल बुझ्दै हिडेको हुँ । चुनावमा म पनि उठेको छु ।"

"भनेपछि भोट माग्न आउनुभयो होइन ?" मेरो कुरा सकिन नपाउँदै ऊ बोल्यो । ऊ अलि हतारिएको थियो ।

घामको चर्को प्रकाशभन्दा उसको व्यँग्यवाणले पोल्यो । म त्यसबेला भिखारीझैं उसको सामु भिखमाग्न जो गएको थिएँ । हुन पनि कुनै नेताले भोट माग्नु भनेको भिख माग्नु सरह नै हो । पहिलापहिला मेरा सामु भोट माग्नेको पनि लाइन लाग्थ्यो । त्यति बेला लाग्थ्यो भोट भनेको त हामी जसलाई पनि दिनसक्छौं, र आएका सबैलाई दिने निश्चित गर्थ्यौं । सबैलाई 'हुन्छ' भन्दै पठाउँनु कति सजिलो थियो । तर दिनेबेलामा सही निर्णय हुन्थ्यो

कि हुँदैन थियो थाहा भएन ।

“हो भोट माग्न आएको हुँ ।”

मेरो कुरा सुनेर ऊ एकपल्ट मुस्कुरायो ।

“नरिसाउनुहोला नेता ज्यू, पहिलो कुरा त तपाईं भोट माग्न होइन, यो देश चलाउने जागिर माग्न आउनुभएको छ । त्यसको लागि तपाईंसँग योग्यता छ कि छैन भन्ने जान्नु जरुरी हुन्छ । के म ठिक भन्दै छु ?”

उसले मलाई दोधारमा पुऱ्यायो । यस्तो प्रश्नको अपेक्षा राखेको थिइनँ । तर पनि बाध्य भएर भनें– “हो ठिक भन्नु भयो ।”

भोट माग्न जाँदा जागिरको कुरा आयो । यो कुराले मेरो मथिङ्गल हल्लिएको थियो ।

“तपाईंको योग्यता के छ त ?” उसको प्रश्न थियो ।

“योग्यता भन्नाले, उहाँ राम्रै पार्टीको प्रभावशाली नेता हुनुहुन्छ । पार्टीमा धेरै काम गर्नुभाको छ ।” यसमा मलाई मेरो सहयोगीले सघायो ।

“पार्टीमा काम गरेको भन्दैमा उहाँको योग्यता पुग्छ ? देश चलाउन पार्टीको कामले होइन । अध्यन र चिन्तन चाहियो नि ! देश र जनतालाई स्पष्ट एजेण्डा दिनुपऱ्यो, होइन र नेताज्यू ?” उसले फेरि पनि व्यंग्य प्रहार गऱ्यो । म चुपचाप उसको कुरा सुनिरहेको थिएँ ।

“कति पढ्नु भा’छ ?” प्रश्न फेरि गऱ्यो ।

मलाई दिक्क लाग्न थाल्यो । जावो एउटा भोटको लागि अन्तरवार्तानै लिइरहेको थियो । मलाई भन्न मन लागेको थियो, तिम्रो प्रश्न ती नेताहरुका लागि राख जो दस कक्षा पनि मुस्किलले पास छन् र नेता भईखाएका छन् । देश चलाइरहेका छन् । मेरो योग्यताले के फरक पार्छ ?

“प्रविणता प्रमाणपत्रसम्मको ।” लाज असाध्यै लागिरहेको थियो । तर, मैले यति चाहिं भनिदिएँ ।

“यो देशमा स्नाकोत्तर गर्नेहरू बेरोजगार छन् भन्ने तपाईंलाई थाहा छ ? उनीहरुले रोजगारी पाउँदैनन् । यहाँ भने चुनावमा उठेको भरमा देश चलाउने जागिर खाने !” ऊ के भन्दै थियो म बुझ्दै थिएँ । उसले यतिबेला भनेका कुराहरू म राम्ररी अनुमान लगाउँदै थिएँ । वास्तवमा यो देशलाई युवा बेरोजगारको समस्याले गाँजेको थियो । म त्यही समस्या समाधान गर्न चाहन्थें । जसको लागि यहाँ चुनावमा उठ्नु र जित्नु आवश्यक थियो । र मैले उसलाई कन्भिन्स गराउन सक्नुपर्छ भन्ने ठानें ।

“यही समस्या त छ यहाँ । म त्यही समस्याको हलको लागि यो चुनावमा उठेको हूँ ।” अदबकासाथ भनें । उसले मेरो कुरालाई विश्वास नलिएको हुन सक्छ । त्यसैले ऊ चुपचाप बसिरह्यो । म उसलाई अरुकुरा भन्न चाहन्थेँ । “हेर्नुस् युवा वेरोजगारको समस्याले गाजेको हाम्रो देशलाई

हामी जस्तै युवाहरुको खाचो रहेकोछ र जसकोलागि म तपाईंलाई विश्वास दिलाउन सक्छु कि भोलिकादिनहरुमा अवश्य कोही बेरोजगार हुने छैनन् ।"

यसरी मैले बोलिरहँदा ऊ मलाई ट्वाल्ल परेर हेरिरहेको हुनुपर्ने वा श्रद्धालु भक्तजनझैं सुनिरहेको हुनुपर्ने, तर ऊ आफ्नै सुरमा रहेछ । आँखा किताबमै अडिग । म चुप लागें ।

"अब अन्तै जाऔं ।" मेरो सहयोगीले मसँग साउती गऱ्यो ।

"तपाईंलाई मेरो कुरामा विश्वास लागेन जस्तो छ । तर म आफ्नो वचनमा पक्का छु । यो म गरेरै छाड्ने छु । फेरि हामी युवाहरूलाई युवाले नै विश्वास नगरे कस्ले गर्छ ? तपाई मलाई विश्वास गर्नुस् ।" म उसलाई विश्वास दिलाउन चाहन्थें ।

"तपाईं ढुक्क हुनुस् । म बिचार गर्छु । तपाईंको कुरा मलाई मनपऱ्यो ।" यति मात्र बोल्यो ।

त्यस पछि निद्रा परेको होइन । चुनाव भरिनै यो अन्तरवार्ताको झझल्को आइरह्यो । मेरो कठिन मेहनतले हुनुपर्छ चुनाव जितें । यो बेग्लै खुसीको अनुभव थियो । तर, जति गरे पनि संविधान बनाउन सकिएन ।

आज तिनैलाई भेट्न किन हो मेरो मनले घचघच्याइ रह्यो । मैले चाहेर  पनि आफ्नो बाचा पुऱ्याउन सकेको थिइनँ । यो अवस्थामा उसलाई भेट्न जानु नपर्ने हो । किन हो मलाई सपनीमा पनि उसको त्यो दिनको अन्तरवार्ताले पछ्याइरहेको थियो । त्यसैले म यो पटक फुर्सद निकालेरै भए पनि भेट्न जाँदैछु ।

हुन त हिजोआज बेफुर्सदी काहाँ हो र ! भएको जागिर गुमाएको रनाहामा मन छटपटिनै रहन्छ । तैपनि ऊसँग भने एकपटक भेट्ने रहरले म उसको घरको बाटो पहिल्याउँदै अघि बढिरहेको छु ।

उसको घरको मूल ढोकामा पुगेर म अलमलिएँ । घर त्यही थियो, राम्रैसँग ठम्याएँ । धेरै पछि आउदा पनि चिनें । तर, मेरो मन र विचारको भने एक पटक द्वन्द्व नै चल्यो । मन भन्छ 'जा एक पटक भेटेर कुरा गर्' तर विचार भन्छ 'किन जाने ? कुन मुखले कुरा गर्ने ?' यस्तै तँछाड मछाडको स्थिति भोगें ।

गर्मीमा पाइला भने घर भित्र छिर्नै खोज्छ । पसिना अनुहारबाट तरतरी बगिरहेकै थियो । नजानिदो पाराले घरको आगनसम्म पुगिसकेको रहेछु । बाहिरैबाट बोलाइसकेछु, "जागिर प्रसाद जी ।"

निक्कैबेर कराउनु पऱ्यो ।

अनुहार चिनेकोझैं देखें । बाहिरिंदै गरेको देख्दा म भने आफूलाई सम्हाल्ने कोसिस गर्दै थिएँ । बल्ल घरबाट एकजना अधबैंसेको आगमन भएको थियो । यिनी वीर बहादुर थिए, जागिर प्रसादका बा । मैले दुई हात

जोड्नै पर्ने भयो । हात जोड्दै 'नमस्ते' चाहिं भन्न भ्याएँ ।

उनले चिनिहाले । म भित्रैदेखि लज्जाबोधले थिचिएको थिएँ । संविधान नबनाएको दुखेसो व्यङ्ग्यपूर्ण ढंगले गर्लान् भन्ने पिरले मलाई चाहिं छोप्यो । धेरैपछि अकस्मात् आएकोले उनी चकित थिए । बैठककोठासम्म भने लगे । अतिथिलाईझैं सत्कार गर्न पछि परेनन् । मलाई भने उनको छोरासँग भेट्ने हतारोले च्यापिरहेको थियो । सोधें– "तपाईको छोरो कता छन् ? देख्दिन नि !"

"ऊ विदेश गएको नै दुई वर्ष भइसक्यो ।"

मेरा कान बहिरा भएझैं भइदिए । उनी के के भनिरहेका थिए– म सुन्नु भन्दा पनि विदेशिनेको अनुहार सम्झन थालें । अहँ ! अनुहार फिटिक्क आँखामा आएको होइन । त्यहाँ कतिबेलासम्म बसें र कुन बेला बिदा मागेर हिडें, पत्तो नै पाइन ।

मूल सडकमा लखर लखर हिंडिरहँदा वीर बहादुरजीले भनेको चाहिं कानैमा अहिले पनि बज्न थाल्यो । उनले भनेका थिए– "यो देशमा डिग्रीगर्ने बेरोजगार छन् । पढ्दै नपढेकाले देश चलाएका छन् । पढेलेखेका बेरोजगारले विदेश नगई के गर्ने त ?!

नेपालमा जागिर नपाएर विदेशिएको उनको अनुहार मैले राम्रोसँग सम्झनै सकिरहेको थिइनँ । त्यही रनाहामा म अघि आएकै बाटो फर्किरहे को थिएँ ।



## १७८/राप्रउ निबास, सिफल (०७२ जेठ)

कृष्णमुरारि भण्डारी : (भोड्काको बोतलबाट खन्याएर पिउँदै) रामजी बाबु ! तपाईंले लिनु भएको त्यो लोकल र यो भोडका हेर्दा त उस्तै उस्तै छन्...।

राप्रउ पोखेल : अँ, हेर्दामात्रै होइन– खाँदा पनि उस्तै उस्तै छन् ।

कृष्णमुरारि भण्डारी : (लोकल चाख्दै) हो ! स्वाद पनि उस्तै रहेछ– तपाईंले त्यो लोकललाई भोड्काको बोतलमा हालेर ख्वाउनु भयो भने पनि मान्छे झुक्किने रहेछन् ।

राप्रउ पोखेल : हो झुक्किन्छन् । यो बोतलबाट दियो भने लोकल भनेर हेलाँ गरेर मुखै बिगार्छन्, त्यही लोकललाई भोडकाको बोतलमा हालेर दियो भने मिठो मानेर खान्छन् ।

कृष्णमुरारि भण्डारी : त्यसरी कोही झुक्किएका पनि छन् कि ?

राप्रउ पोखेल : किन नहुनु ? थुप्रै झुक्किन्छन्  अहिले तपाईंनै झुक्किनु भएको पनि हुनसक्छ ।

कृष्णमुरारि भण्डारी :  ट्वाँऽऽऽ... ...।



# भाषा

## ध्रुव सापकोटा

ऊ चियापसलमा पुग्दा एउटा वृद्ध बसिरहेको थियो । त्यो वृद्धसँग उसको सामान्य चिनजान थियो । त्यो वृद्धको घर परिवारको बारेमा उसलाई कुनै जानकारी थिएन । त्यो वृद्धले उसलाई नमस्कार गऱ्यो । उसले मुखले नमस्कार फर्कायो । उसको हातमा एउटा पोको थियो । पोकोमा चामल थियो । उसले त्यो पोकाको चामल सडकको छेउमा छऱ्यो । चामल टिप्न भंगेराहरू आए । तिनीहरूले चामलका दानाहरू आफ्ना चुच्चोले टपाटप टिप्न थाले । त्यसपछि परेवाहरू आए । भँगेराहरूलाई धकेलेर चामलका दानाहरू टिप्न थाले । भंगेराहरू भागेनन् । परेवाको तुलनामा शक्तिमा र आकारमा कमजोर थिए तर पनि दाना टिप्ने काममा फूर्ति देखाइरहेका थिए । उसले पोकाको चामल सडकमा छरिसकेको थियो । ऊ बृद्धको सामुन्नेमा आयो । बेन्जीमा बस्यो ।

'तपाई यहाँ सँधै आउनु हुन्छ ?' त्यो वृद्धले प्रश्न गऱ्यो ।

'आउँछु ।' उसले भन्यो ।

'तपाई आउने समय यही हो ?' त्यो वृद्धले फेरि पश्स्न गऱ्यो ।

'यही समय हो ।' उसले जवाफ दियो ।

'म त यो पसलमा आज मात्र आएको ।' त्यो वृद्धले भन्यो ।

वृद्धको सामुन्नेमा चिया आयो । वृद्धले गिलास समाएन । तातो थियो ।

'चिया खाने हो ? त्यो वृद्धले उसलाई सोध्यो ।

'तपाईं मेरो चिन्ता नलिनोस् । चिया खानोस् ।' उसले भन्यो । वृद्धले हलुका अनुभव गऱ्यो ।

'तपाईको घर यहीं नजिक हो ?' वृद्धले प्रश्न गऱ्यो ।

'यहाँबाट टाडा छ ।' उसले भन्यो ।

'कति टाडा छ ? वृद्धले प्रश्न गऱ्यो ।

'हिंडेर आउँदा पन्ध्र मिनेट जति लाग्छ ।' उसले जवाफ दियो ।

'चराहरूलाई चारा दिन यति टाढासम्म आउनुहुन्छ ?' वृद्धले प्रश्न गऱ्यो ।

'यो देखासिखी हो । हाम्रा पुर्खाहरू पनि चराहरूलाई चारा दिन्थे ।' उसले भन्यो ।

कुकुरहरू कुद्दै आए । एउटा । दुईटा । तीनटा । चारोटा । उसको सामुन्ने चारवटै कुकुरले पुच्छर हल्लाए । उसले पसलेसँग केक माग्यो । सबै कुकुरलाई एक एक वटा केक दियो । कुकुरले फटाफट केक खाए । एउटा कुकुरका दाँत कमजोर थिए । त्यसलाई उसले केक टुक्रा टुक्रा पारेर दियो ।

'म आउँदा न चराहरू आए न त कुकुर नै । तपाईं आउँदा भने सबै आए ।' वृद्धले भन्यो ।

'तपाई पनि तिनीहरूलाई खुवाउन थाल्नोहोस् । यिनीहरू तपाईलाई चिन्न थाल्छन् । माया देखाउन थाल्छन् ।' उसले भन्यो ।

'यो बानी कहिलेदेखि लगाउनु भएको हो ?' वृद्धले सोध्यो ।

पहिले देखि नै हो । यहाँमात्र हैन । म मेरो छतमा जान्छु । कता कताबाट परेवा र भँगेरा आउँछन् । मजासँग दाना खुवाउँछु ।' उसले भन्यो ।

'यिनीहरूले हाम्रो रक्षा गरेका छन् । मानव जातिको रक्षामा यिनीहरू लागेका छन् । हामीले पनि यिनीहरूको रक्षा गर्नु पर्छ । गुन त हामीले कसैको पनि विर्सन हुन्न । बोल्ने जीव होस् वा नबोल्ने जीव ।' उसले भन्यो ।

उसले लामै व्याख्या गरेको थियो तर त्यो वृद्धले चराहरूलाई न त चारा नै दियो न त कुकुरलाई केक दियो । उसलाई लाग्यो, उसको व्याख्या खेर गयो । उसलाई चिन्ता लागेन । उसका कतिपय कुराहरू आजकल खेर गएका छन् । यसमा चित्त दुखाउँदा आफैलाई नोक्सान हुने सोच्यो ।

'तपाईंको घर सडक छेउमा नै छ ?' वृद्धले सोच्यो ।

'छ ।' उसले भन्यो ।

'यसको मतलव तपाईंको घर व्यापारिक महत्वको छ ।' वृद्धले भन्यो ।

'छ ।' उसले भन्यो ।

'मासिक आम्दानी कति हुन्छ ?' वृद्धले सोध्यो ।

'तपाई कुनै दलको मानिस हो कि क्या हो ?' उसले सोध्यो ।

'किन र ?' वृद्धले प्रश्न गर्‍यो ।

'दलका मान्छेहरू मसँग चन्दा माग्न आउँछन् । त्यस्तोमा तपाईले पनि मेरो नाम समावेश गर्न थाल्नु भएका हो कि भनेर ।' उसले भन्यो ।

'दलले पत्याउने हैसियत मेरो छैन ।' वृद्धले भन्यो ।

'मैले तपाईसँग ठट्टा गरेको ।' उसले भन्यो ।

उसको मासिक आम्दानी थाह नपाई नछोड्ने इरादा वृद्धले लियो । वृद्ध ज्याद्रो थियो । अर्काको कुरा थुत्न सिपालु ।

'तपाईंको मासिक आम्दानी कति हुन्छ ? अप्ठयारो लाग्दैन भने भन्नुहोस् ।' वृद्धले भन्यो ।

'मासिक तीन लाख हुन्छ ।' उसले भन्यो । वृद्ध हेरेको हेर्‍यै भयो । वृद्धले उसलाई कम आँकेको थियो । अहिले वृद्धको नजरमा अग्लो न अग्लो देखियो । पसलमा लोग्ने स्वास्नी थिए । तिनीहरू यो घरका मालिक थिए । वर्षौं उसको पसलमा आए पनि यति ठूलो र यति अग्लो लागेको थिएन । यो मासिक आम्दानीको कुराले उसको अवस्था बढ्यो ।

'तपाई आफैले यो घर बनाउनु भएको हो ?' वृद्धले प्रश्न गर्‍यो ।

'म आफैले बनाएको ।' उसले भन्यो ।

'सोच विचार पुर्‍याएर नै बनाउनु भएछ ।' वृद्धले भन्यो ।

'विचार पर्‍याएर नै बनाएको… यो पनि देखासिखी हो ।' उसले भन्यो ।

'तपाईले समयको साथ पाउनु भएछ ।' वृद्धले भन्यो ।

'त्यसै भन्नु पर्‍यो ।' उसले भन्यो ।

उसका लागि कालो चिया आयो । चिनी नभएको । वृद्धले आफ्नो भागको चिया खाइसकेको थियो । तर पनि बसिरहेको थियो ।

'तपाईंका छोराछोरी त विदेशमा नै होलान् ।' वृद्धले भन्यो ।

'छैनन् । यहीं छन् ।' उसले भन्यो ।

'काम धन्दा के गर्छन् ?' वृद्धले सोध्यो ।

'छोरा बुहारी सबै काम गर्छन् । नाति नातिना पढ्न जान्छन् । केही काम नगर्ने निहत्था म नै हो ।' उसले भन्यो ।

'तपाईं अहिले कति वर्षको हुनु भयो ?' वृद्धले सोध्यो ।

'म अहिले बहत्तर वर्षको भएँ ।' उसले भन्यो ।

'यो उमेरको मान्छेसँग कामको आशा गर्न सकिदैन ।' वृद्धले भन्यो ।

'पचहत्तर नाघेको मान्छे हाम्रो देशको प्रधानमन्त्री छन् । देश हाँकिरहेका छन् ।' उसले भन्यो ।

'कसरी हाँकेका छन् त्यो त तपाई हामीले देखेका नै छौ नि ।' वृद्धले भन्यो ।

'मलाई काम गर्ने इच्छा नै छैन न त मसँग क्षमता छ ।' उसले भन्यो ।

'तपाईंकी श्रीमती त हुनुहुन्छ होला ।' वृद्धले प्रश्न गऱ्यो ।

'मेरी श्रीमती मरेको तेह्र वर्ष भयो ।' उसले भन्यो ।

'यसको मतलब उहाँले सुख देख्न पाउनु भएन ।' वृद्धले भन्यो ।

'सुख देखिन कि दुःख त्यो चाहिँ म भन्न सक्तिनँ ।' उसले भन्यो ।

'तपाईंले भनेको कुरा मैले बुझिनँ ।' वृद्धले भन्यो ।

'पैसाले सुख दिन्छ र ?' उसले भन्यो ।

'तपाई त रमाइलो कुरा गर्नु हुन्छ । तपाई घरमा दिउँसो एकलै के गरी समय विताउनु हुन्छ त ?' वृद्धले सोध्यो ।

'म तपाईंजस्ता भलादमीसँग बकम्फुसे काम नलाग्ने कुरा गरेर समय विताउँछु । बेलुका एक क्वा खान्छु र सुत्छु ।' उसले भन्यो ।

'आनन्दको जीवन ! तपाईलाई एकसयवर्ष केही हुँदैन ।' वृद्धले भन्यो ।

'मलाई हर्निया भइसकेको छ । अपरेशन गरेको छु । सुगर छ । थाइराइड छ । यी दुवैको ओखती खाइरहेको छु ।' उसले भन्यो ।

'बाहिरबाट त तगडा नै देखिनु हुन्छ । बरु त्यो तपाईको एउटा कानको भाग त कालो देख्छु नि । के भएको हो ?' वृद्धले भन्यो ।

'पुरै कालो देखिन्छ ?' उसले सोध्यो ।

'डढेको ठुटो काठजस्तो देखिन्छ ।' वृद्धले भन्यो ।

'मैले ऐनामा हेरेको थिएँ । मलाई पनि त्यस्तै लागेको थियो ।' उसले भन्यो ।

'अर्को कानको लोति र त्यस वरिपरिको भाग सामान्य छ । पहिले देखिनै यस्तै हो कि यो के हो ?' वृद्धले सोध्यो ।

'यो पहिले देखिको होइन ।' उसले भन्यो ।

'किन यसरी डढेको काठजस्तो देखिएको होला ? कति भयो ?' वृद्धले सोध्यो ।

'यो एक महिना भयो । हरेकदिन कालोपना बढी रहेको छ । फैलिएको छ ।' उसले भन्यो ।

'असमान्य देखिन्छ' । वृद्ध भन्छ ।

'कान भित्र सेकेको हो । त्यसको प्रतिक्रिया हो यो ।' उसले भन्यो ।

'सेक्दा तपाईंलाई दुख्दैन ?' वृद्धको प्रश्न छ ।

'दु:खेको छ । अहिले पनि दुखिरहेको छ ।' उसले भन्यो ।

'तपाईको त्यो कालो भएको कानको माथिको कपालका रौंहरू पनि झरेका छन् । वृद्धले भन्यो ।

'मेरो कपालमा बाक्ला रौहरू थिए । यो सेक्न थालेपछि त्यो पाटोका रौहरू झर्न थाल्यो ।' उसले भन्यो ।

'अरू के के भैरहेको छ त ?' वृद्धले भन्यो ।

'खानाको स्वाद छैन । खान मन लाग्दैन । वाकवाकी लागिरहन्छ । डाक्टरले पोसिला खानेकुरा खानु भनेको छ । कुनै पनि खानेकुरा पचिरहेको छैन ।' उसले भन्यो ।

'फेरि कान भने राम्ररी सुन्नु हँदोरहेछ ।' वृद्धले भन्यो ।

'एकदम राम्ररी सुन्छु । त्यही नजिकै सेकेको भए पनि श्रवण शक्तिमा असर परेको छैन ।' उसले भन्यो ।

'तपाईको यो भित्री कुरा त कसैलाई थाहा हुँदैन । मान्छेले बाहिर हेर्ने हो । यो ढडेको कान र झरेको कपालले तपाईको अस्वभाविक अवस्था बताउँछ ।' वृद्धले भन्यो ।

'अब स्वभाविक अवस्थामा यो जीवन आउन सकिएला जस्तो लाग्दैन ।' उसले भन्यो ।

'तपाईजस्तो मान्छेले यस्तो निराशावादी  कुरा गर्न सुहाउँदैन ।' वृद्धले भन्यो ।

'म निराशावादी होइन । आफ्नो मनको कुरा गरेको ।' उसलेभन्यो ।

'कान र कपालको कुरा गरेको थियौं । जीवन र जगतमा पुगिएछ ।' वृद्धले भन्यो ।

'ठूल्ठूला कुरा गरिएको छैन । सबै कुरा ममाथि सीमित छ ।' उसले भन्यो ।

'आज तपाई माथि मात्र कुरा गर्ने संजोग मिल्यो ।' वाृद्धले भन्यो ।

'मलाई पनि रमाइलो लागेको छ । आफ्नो कुरा सुन्ने एउटा गतिलो श्रोता पाएको छु । आजकल अर्काको कुरा सुन्ने फुर्सत् कल्लाई हुन्छ ?' उसले भन्यो ।

उसले घडी हेऱ्यो । बूढासँग कुरा गरेको निक्कै समय वितिसकेको थियो । केही दिन देखि ऊ आफ्ना कुरा अरूलाई सुनाउँदै समय विताइरहेको थियो । उसलाई झर्को लाग्दैन थियो । जे सोध्यो त्यही कुराको जवाफ दिन ऊ तत्पर रहन्थ्यो ।

'मेरा मित्रहरू आउने बेला भयो । तिनीहरू अब कुनै पनि समयमा

आउन सक्छन् । जे जे करा सोध्नु छ सोधिहाल्नुहोस् ।' उसले भन्यो ।

'तपाईंको यो ढडेको कानको पाखोले गर्दा तपाईंको बारेमा जानकारी पाइयो ।' वृद्धले भन्यो ।

'तपाईंलाई मेरो जानकारीले फाइदा होस् ।' उसले भन्यो ।

'यो उपचार सुरु गरेको कति भयो ?' वृद्धले सोध्यो ।

'चार हप्ता भयो । मेरो कानबाट पीप बग्न छाडेको छ। सातौं हप्तामा मात्र मेरो उपचार सफल भएको बा असफल भएको थाहा हुन्छ ।' उसले भन्यो ।

'यो डढेको कुरा, पोलेको कुरा त गर्नु भयो तर तपाईको यो के रोग हो अहिलेसम्म  भन्नुभएको छैन ।' वृद्धले भन्यो ।

'तपाईंले मसँग जेकुरा सोध्नु भएको छ जवाफ दिएको छु । नसोधेको कुरा त म कसरी भनूँ ?' उसले भन्यो ।

'तपाईं आफैंले आफ्नो रोगको बारेमा बताउनु हुनेछ भनेर मैले अशिष्टता नदेखाएको ।' बृद्धले भन्यो ।

'अशिष्टता त तपाईले देखाइसक्नु भएको छ ।' उसले भन्यो ।

वृद्धको मुख रातो भयो । यद्यपि अहिलेसम्म उसले गरेको कुरामा कुनै अशिष्टता देखेको थिएन । एउटाले अर्कालाई  सोध्ने सामान्य प्रश्न ठानेको थियो । रोगी मान्छेसँग प्रतिवाद गर्न उचित ठानेन । के शिष्टता के अशिष्टता त्यस बारेमा मज्जासँग बहस गर्न सकिन्थ्यो ।

'यसै म अशिष्ट उसै अशिष्ट, अन्तिम अशिष्टता देखाऊँ ।' वृद्धले अनुमति माग्यो ।

'देखाउनुस् मज्जाले देखाउनुस्' । उसले अनुमति दियो ।

'तपाईंलाई के रोग लागेको हो ?' वृद्धले सोध्यो ।

'यो प्रश्न तपाईले सुरुमै सोधेको भए तत्काल नै म बताउँथे । मसँग लामो भूमिका बाध्नु आवश्यक थिएन । मेरो रोगको नाम सुनेर धेरै मान्छे त्रसित भएका छन् । चिन्तित भएका छन् । आशा छ, तपाईंले यसलाई सहजरूपमा लिनुहुने छ मलाई क्यान्सर भएको हो । त्यो डढाएको, पोलेको भनेको रेडियो थेरापी हो । यसबाट निको भएन भने केमो थेरापी हुन्छ । त्यो उपचार चाहिं मेरो लागि अन्तिम हो ।' उसले भन्यो ।

यो चियापसलमा लोग्ने चिया बनाउन व्यस्त थियो । स्वास्नी जुठा गिलास माझ्न लागेकी थिई । तिनीहरूले उसको रोगका नाम सुने । तिनीहरूको उसप्रति हेर्ने दृष्टि तत्काल बदलियो । तिनीहरूलाई नमज्जा लाग्यो । वर्षौ देखि उसको पसलमा चिया खान आउने गरेका मान्छे क्यान्सर ग्रसत  छ भन्ने कुरा कल्पना नै गर्न सकेका थिएनन् । अनुमान गर्ने आधार पनि भेटेका थिएनन् ।

'क्यान्सर ?' त्यो वृद्धले आश्चार्य प्रकट गऱ्यो ।

'हो मलाई क्यान्सर भएको छ । त्यो फैलिनबाट जोगाउन र क्यान्सरको किरा गर्न अहिले थेरापी गरेको ।' उसले भन्यो ।

'कसरी तपाईले थाह पाउनु भयो ।' वृद्धको प्रश्न थियो ।

वास्तवमा ऊ क्यान्सरको शंकाले अस्पताल गएको थिएन । उसको कानबाट पीप बगिरहन थाल्यो । डाक्टरले कानको पीप रोक्न दस दिनको एण्टिबायोटिक खान दिएको थियो । एघारौ दिन आयो । कानबाट पीप बग्न छाडेन । ओखतीको कुनै असर देखिएन । ऊ फेरि डाक्टरसँग सल्लाह गर्न गयो । यसपल्ट डाक्टरले उसलाई एण्टिबायोटिक दिएन । उसको कानको त्यो पीप आउने स्थानको मासुको टुक्रा निकाल्यो । दस दिन पछि उसलाई आउनु भन्यो । एघारौं दिनमा ऊ अस्पताल गयो । डाक्टरले बायोप्सीको रिपोर्ट हेर्‍यो । त्यो दिन ऊ एक्लै गएको थियो । डाक्टरले छोरालाई साथी ल्याउनु भन्यो । त्यो दिन ऊ एक्लै फर्कियो । भोलिपल्ट छोरालाई लिएर ऊ अस्पताल गयो । त्यहीं नै डाक्टरले उसलाई क्यान्सर भएको घोषणा गरेको थियो ।

'तपाईं कंगाल भए त केही थिएन । तपाई जस्तो सम्पन्न मान्छेले यस्तो खतरनाक रोगको उपचार यही देशमा गराउने हो त ?' त्यो वृद्धले प्रश्न गर्‍यो ।

'तपाईले आम नेपालीको भाषा बोल्नु भएको हो ।' उसले भन्यो

'आम र खास , यस्ता कुरा छाड्नोहोस् । पैसा हुनेले समयमै राम्रो ठाउँमा उपचार  किन नगराउने ? मेरो यति मात्र प्रश्न हो ।' वृद्धले भन्यो ।

'अर्ति त तपाई मज्जासँग दिनु हुँदोरहेछ । सुन्ने मान्छे मेरो भन्दा तपाईको कुराले प्रभावित हुन्छन् ।' उसले भन्यो ।

'मेरो कुरालाई तर्पाइले ठट्टामा उडाउन खोजेको ?' वृद्धले प्रश्न गर्‍यो ।

'होइन ।' उसले भन्यो ।

'किन त तपाई मेरो कुराको सोझा जवाफ दिनु हुन्न ?' वृद्धले प्रश्न गर्न छाडेन ।

'किनभने यो क्यान्सरको उपचार जहाँ गराए पनि उही हो ।' उसले भन्यो ।

'यो महावाणीको पाठ तपाईंलाई कसले कण्ठ गरायो ?' वृद्धले सोध्यो ।

'छोराले ।' उसले भन्यो ।

'आफ्नो पाठ नपढेर तपाईंले छोराको महावाणी किन पढेको ?' वृद्धले सोध्यो ।

'वयस्क नहुन्जेल छोरो मेरो अनुकरण गर्थ्यो । अहिले म बूढो भएँ । उसको अनुशरण गर्न थालें ।' उसले भन्यो ।

'गजब !' वृद्धले भन्यो । वृद्धको मौज्दातमा बोल्नको लागि बाँकी अन्तिम शब्द यही थियो ।

ऊ छुट्टियो ।

भंगेरा र परेवा उसले दिएको चारा टिपेर फर्किसकेका थिए । कुकुरहरू आफ्नै काममा लागे । त्यहाँ थिएनन् । ऊ भने त्यो वृद्धले प्रयोग गरेको 'गजब' शब्द मनमा खेलाउँदै सधैं सँगै घुम्ने साथीहरूलाई पर्खेर बसिरहेको थियो ।

ဆ

# पोथी गोर्खा

नृपेन्द्रसिंह केसी
डिल्लीबजार

एक दिन म कलकत्ता सहरको एउटा नाइट क्लबमा क्याब्रे डान्स हेर्न भनेर छिरेको थिएँ । त्यहाँ अग्रिम बुकिंग द्वारा सुरक्षित गरिएको सिटमा पुगेर बसेको मात्र थिएँ, बत्ती अचानक अन्धकार झैं भयो र पश्चिमे संगीतको धुनमा एउटी केटी नाच्न थालिन । उनलाई रंगीविरंगी एक चहकिलो प्रकाशले छोपेको थियो । उनी (डान्सर) नाच्दै जताजता पुग्थिन् उतै उतै पछ्याउँथ्यो । यसरी झिलिमिली बत्तीको प्रकाशमा डुबेकी ती डान्सर नाइट क्लबको रो माञ्चकारी वातावरणमा, सम्पूर्ण मण्डलमा चम्किरहेको पूर्ण चन्द्र झैं राम्री देखिन्थिन् । आफ्नो देशमा विरलै देख्न पाइने त्यस्तो डान्स देखेर म मक्ख परिरहेको थिएँ । आफु र आफ्नो देशलाई मात्र होइन, रातभरिका लागि बिश्राम गर्न आएको सहर, वास बसेको होटल र भोली बिहान घर फर्कनु पर्छ भन्ने कुरा पनि सबै भुलेको थिएँ । यसरी एक चित्त भै तनमन उनलाई लठ्ठ परिरहेको बेला ती डान्सर नाँच्दै नाँच्दै मेरो अगाडि आइपुगिन् । मेरो शिरको नेपाली टोपी झिकेर आफुले लगाइन । त्यसपछि बान्की परेका अंग प्रत्यंगहरु मडारिदै हल्लाउँदै मेरो अगाडि नाच्न थालिन् । रोमान्सबद्ध युवायुवतीहरुले खचाखच भएको त्यस नाइट क्लबको महफिलमा डान्सरले यसरी महत्व दिई कदर गरिदिएकोले म मनमनै आफुलाई एक विशिष्ट व्यक्ति ठानेर हर्षले गजक्क फुलेको मात्र के थिएँ, ती डान्सर मेरो टोपी लिएर अगाडि बढिन् र अलि परको टेबुलमा पुगेर त्यही भएकी एउटी अत्यन्त राम्री युवतीको शिरमा लगाईदिइन् । युवती जन्ड खालकी रहिछन् । डान्सरले शिरमा टोपी राखीदिने वित्तिक्कै रिसले चुर भइन् । हतपत शिरको टोपी झिकिन् । भुइमा पछारिन् र जुत्ताले टेकेर राखिन् । टोपीको त्यस्तो अवहेलना गरेको त्यो दृष्य देख्ने वित्तिक्कै मेरो रिसको पारा छुट्न थाल्यो । जुरुक्क उठेर त्यो साइदुवा केटीको जगल्टा समातेर लछार पछार पार्न के तम्सिएको मात्र थिए–मेरो मनमा 'पोथी गोर्खा'को सम्झना एक्कासि उब्जिन पुग्यो । कतै त्यो केटी उही 'पोथी गोर्खा' त होइन ? भन्ने लाग्यो र एक पछि आर्को पेग घुट्क्याउदै डान्स खत्तम भएपछि बत्ती चहकिलो हुने दाउमा बसे ।

पोथी गोर्खा यो जंगली जनावर वा पन्छी होइन, छिमेकी राष्ट्रको कुनै एउटा रण्डी कोठीको बन्धनमा परेकी केटी हो । रुप रंग र अंग सबै अति राम्रो भएकी त्यो केटी (पोथी गोर्खा) हिजो आज रण्डी कोठीबाट उम्केर ठूलो ठूला नाइट क्लब औ होटलहरुमा देखा पर्न थालेको छ रे । उसका अगाठि मै हुँ भन्ने गुण्डाहरुपनि नेपाली टोपी लगाएर सामुन्ने पर्ने हिम्मत गर्न सक्दैनन् रे । मान मिजास देखि पैसा टठले समेत काबुमा ल्याउन नसकिने त्यो केटी रिसाएको बखत जस्तै मर्द हुँ भन्नेलाई समेत नामर्द तुल्याइ दिन्छ रे । हाउभाउ कटाक्षले हैन बल र दाउले समेत चित्त बनाइ दिन्छे रे । आफ्नो

मनोरथ नपुगेसम्म झम्टी झम्टी जाइलागिकन सामुन्ने पर्ने नेपाली टोपी खोसेर च्यातचुत पारी फालेपछि मात्र शान्त हुन्छ रे ।

नेपाली टोपीको अनादर गर्न र राष्ट्रियतामा समेत आँच आउने खालको उसको त्यस्तो अनुचित एव अपराधपूर्ण दुष्कार्यबारे काठमाडौमा मेरा एकजना मित्रले सुनाए देखि नै त्यस पण्डितनीलाई भेटेर राष्ट्रियताको पाठ राम्रोसँग पढाउने–सिकाउने मेरो मनको धोको थियो, प्रतिज्ञा नै थियो । त्यसैले आइपर्ने जस्तो सुकै आपत्तिको पनि सामना गर्ने ढृड संकल्प गरी, डान्स खत्तम हुने बित्तिक्कै जब बत्ति चहकिलो भएको थियो, आफ्नो टोपी लिन म त्यस युवतीको अगाडि पुगेर उभिएँ । युवती त मलाई देखेर छक्क परी र मेरो अनुहारलाई धेरै बेरसम्म नियालेर हेर्न थाली त्यसपछि एक हलका मुस्कान उसको रिसाएको मुखमा देखा पर्‍यो । त्यसपछि उसले जुत्तामुनिबाट टोपी हातमा लिई । धुलो टकटकाई । मेचबाट उठी र आफ्नै हातले मेरो शिरमा टोपी लगाइदिदैं शुद्ध नेपाली भाषामा भनी,–'क्या हो तामदाने हजुर ! चिन्यौ मलाई ? म तिम्रो निधारको यो खतभित्र हराएको आफ्नै बगैंचाको एक फूललाई ?' उसका शब्दहरु प्रश्नहरु वाक्य भन्नु वा बोली– त्यो मेरा कानमा पर्ने वित्तिक्कै अंगका नशा नशामा रगतका छालहरू उर्लेर सम्झनाको दैलो घच्घचाउन थाले । हृदयमा एउटा पुरानो घटनाको नौलो र मीठो झस्को छिरेर तुरन्त हामी दुबैलाई कलिलो उमेरका बनाएर काठमाडौंको आफ्नो घरमा पुर्‍याइदियो । त्यसदिन घरमा अरु कोही थिएन । कोठामा विछ्यौना खाली छदा छदै पनि हामी चाहिँ थोत्रा मालसमानले भरिएको बुइगलमा पुगेका थियौं । त्यस दिन त्यही झुण्ड्याइ राखेको तामदानको खुट्टामा ठोक्किएर मेरो निधारमा ठूलो घाउ भएको थियो । त्यस घटनालाई ढाकछोप गरी हामी दुई गोप्य राख्न सफल भएका थियौ । कहिलेकाही गज्जिएको बखत जिस्काउनु पर्दामात्र अरु कसैले नसुन्ने गरी मलाई 'तामदाने हजुर' भन्ने गर्थी र आफै लाजले भुतुक्क हुन्थी । आज यत्तिका वर्ष पछि त्यही अति गोप्य सम्बोधन सुन्ने बित्तिक्कै आफ्नो बगैंचेकी छोरी सृजनालाई मैले चिनीहाले । अनि वातावरणको ख्याले नगरी उही बुइगलमा जस्तै उसलाई अंकमाल भित्र लुकाइ हाले । यसरी कतिन्जेल हामीले समय बितायौ–थाहै भएन । 'लौ हेर यो मोरी लाज नभएकी पोथी गोर्खा त अब टोपीको जालमा परी' भनेर कसैले भनेको सुनेपछि बल्ल हामी वास्तविकता तिर झर्‍यौ । अगि डान्स दे खाउने केटी सृजनाको साथी रहिछ । ऊ हाम्रो चाला देखेर छक्क परेर हाँस्दै थिई । सृजनाले उसग मेरो परिचय गराए पछि हामी सँगै बसेर गफ गर्न थाल्यौ । केही बेर घरायसी कुराहरु गरेपछि कुरै कुराको सिलसिलामा कसरी उसको नाम 'पोथी गोर्खा' भयो औ किन ऊ नेपाली टोपीको त्यस्ती बैरी हुन पुगी भन्ने कुरा कोट्याउँदा उसले अभिव्यक्त गरी–हेर, जब म रण्डीकोठीको बन्धनमा थिएँ- सधैं कल्पना गर्थे- एक न एक दिन आफ्नो देशको कुनै दाजुभाइ वा दिदीबैनी आएर, मलाई मात्र हैन, म जस्तो बन्धनमा परेका अरु धेरै अभागिनीहरुलाई समेत यस बन्धनबाट मुक्त दिलाउने छन् । छुटाएर घर

फर्काउने छन । यही बिश्वास लिई त्यो दिन कुर्दा कुर्दै हैरान भए पछि मेरो मस्तिष्कबाट बीर नेपालीका बीर रुपहरु धमाधम लोप हुन थालेछन् । नेपाली नारीको नेपाली भनेर प्रष्ट पारिदिने कुनै खास बस्त्र नभएकोले र नेपाल र नेपाली भनेर जनाउने नेपाली टोपी चाहिँ सदा आँखैमा टास्सिएर ब्रमाण्ड खलबलाउन थाल्यो । त्यसपछि किन हो किन टोपी भेट्यो कि ज्यानको बाजी लगाएर भए पनि त्यसलाई खोसेर च्यातचुत पारी फालिदिने मेरो आदत भयो- बानी भयो । मेरो यस कारवाहीलाई तिमी राष्ट्र र राष्ट्रीयताको अवहेलना गरेको भन्ने ठानौंला, त्यसो होइन । म एक अशिक्षित  अवला भए पनि मलाई आफ्नो राष्ट्र, राष्ट्रियता र राष्ट्रिय विभूतिहरुको माया छ । माया गर्ने हक छ, अधिकार छ । हो, यसै कारणले नै मेरो मस्तिष्कमा टोपी खोस्ने कुराको विजारोपण भएको हो - मलाई बुझ्यौ । त्यहाँ नेपालमा टोपीभित्र लुकाइ राख्ने राष्ट्रियता होइन । यहाँ विदेशमा नेपाल र नेपालीको इज्जत र गौरव बढाउने, टोपी बाहेकै पनि प्रष्ट देखिने खालको राष्ट्रियता चाहिएको छ । खै त्यो कहाँ छ ? कोसँग छ ? मैले आज सम्म भेटेको देखेको छैन ।

हेर, टोपी भनेको मर्दले लगाउने चिज हो । उनीहरूको माथमा परेपछि राष्टियता खुल्छ, सुहाउँछ पनि । आफ्नो देशको नागरीक दिदी बैनीहरूलाई जालमा फसाएर विदेशको रण्डीकोठीमा थुपार्ने वा थुपारे को जानेर पनि बुझेर पनि बुझ पचाई बस्नेहरु चाहे ती विद्यार्थी होउन, नेता, युवक, वा बूढा पाकाहरु होउन्, ती मर्द होइनन्–नामर्द हुन् । त्यसता नामर्दहरुले त्यहाँ नेपालमा टोपी ढल्काउँदैमा– यहाँ विदेशमा जनावर झैं खुल्लम खुल्ला विक्री भैरहेको नेपाली महिलाहरुको घुइचो छोपिन्न । यस्तो बेइज्जती भएको लुक्दैन । म सदा त्यस्ता व्यक्तिहरुले पहिरेको टोपीको मात्र बैरी बन्छू जसको शीरमा टोपी ढल्किएको त हुन्छ तर व्यवहारमा राष्ट्रियता हुँदैन ।

हेर तिमी नेपालमा बस्नेहरु अति भाग्यमानी छौ । दिनमा जतिसुकै कालो मैलो भए पनि टोपी वा दौरा सुरुवाल लगाएर राष्ट्रियताको प्रदर्शन गर्न सक्छौ । राष्ट्रवादी देखिन सक्छौ । यो कुनै ठूलो कुरा होइन । लुगाबाट राष्ट्रियता देखाउन अति सजिलो हुन्छ । तर काम र कत्तव्यबाट त्यो देखाउन मुश्किल हुन्छ । हेर हामीलाई यहाँ विदेशमा, खुलेको हिमाल झैं छर्लङ्ग भएर ग्राहकलाई रिझाएर पल्काउनु पर्ने हुन्छ । अनेक यातना खेपेर पनि मीठो बोली बचन, सभ्य व्यवहार इमान्दारीपनाका साथै मुहारमा मुस्कान ल्याउन सक्ने क्षमता इत्यादि कुराहरुको प्रयोगद्वारा हामी आफ्नो राष्ट्रियताको परिचय दिदै रण्डीकोठीमै भए पनि नेपालको गौरव बढाउने काम गर्नपछि परेका छैनौ पर्दैनौ पनि । विदेशीहरूको मुट्ठी भित्र परेकाले हामी आफैलाई रुचि नभए पनि हाम्रो यस्तो स्वभाव हाम्रो ग्राहकहरु भने झन मनपराउँछन्– 'फिमेल गोर्खा' भनेर माया गर्छन् । इज्जत गर्छन् । देशभक्त नेपालीहरु कसैलाई पनि मन नपर्ने, उनीहरुका लागि एक कलङ्कित घृणित पेशा जवरजस्ति लिनु पर्ने, आफ्नो कमाइले आफु वा आफ्नो देशलाई होइन विदेशीलाई पोस्नु

पर्ने, र बन्द कोठाको सिमानाभित्र आफ्नो शरीर पराइलाई सुम्पेर आत्मा नेपाललाई चढाउनु पर्नेले आफुलाई 'फिमेल गोर्खा' भनेर तारिफ गरेको सुन्दा त्यो तारिफ नभई एउटा तल्लो तहको नीच गालीमा अनुवाद भएको बुझ्दाबुझ्दै पनि, जान्दा जान्दै पनि मुख खोलेर म विरोध गर्न सक्दिन् । यसैले मुहारमा हाँसो ल्याए पनि मनमा म पिरोलिन्छु–विवशताको ज्वालाले पिल्सिएर । तामदाने हजुर ! फुर्सत छ भने रुक यहाा केही दिन । म डुलाउछु, बुझिदेउ उनीहरुको दर्दमयी व्यथाहरु । बनाउ अनेकौं पुस्तकहरु । तर कोक शास्त्रको होइन तमाम देशभक्तहरुका लागि शोक शास्त्रका अनेकौं किताबहरू बन्नेछन् । यस्ता पुस्तकहरुले त्यहाँ नेपालमा एक विशाल पुस्तकालय टम्म भरे पनि देशका नेताहरुको आँखामा भने त्यो पर्दैन होला । उनीहरुको हृदय छुने कुरा त परै जावस् । ठिक छ । नेपालका मर्दहरु त हाम्रो लागि नामर्दै साबित भए । खै महिलाहरुका सुसंगठित संगठनहरु ! चन्द्रमाको वरपर ताराहरु झै ठूला बडाको वरिपरि झुम्मिएर गरिब तथा अशिक्षित गाउँले महिलाहरुको प्रतिनिधित्व गर्न खोज्नेहरुले खै हाम्रो बारे के गर्दैछन् । किन उनीहरु पनि त्यहाँका मर्द भनाउँदा नेताहरुले झै अन्धा भएका, मौन भएका, कुजो बनेका किन ?··· किन ?··· किन ?···

किन उनीहरु हाम्रो बोर आफ्नो सरकारलाई दबाब दिई यहाँको सरकारलाई अनुरोध गरी हामीलाई स्वतन्त्रता दिलाएर यस घृणित अमानवीय कार्यलाई निर्मूल पार्न नतम्सेको ? रण्डीकोठी बन्धनबाट उम्केपछि मलाई यिनै कुराहरुको पीरले समाएर मानसिक कारागारमा फालिदिएको छु । जतिजति यस नाटकीय बन्धनबाट उम्किने विचार गर्छु, उति उति मानसिक पीडाले घाइते हुन्छु । यसले गर्दा मन सँधै मरेको हुन्छु । त्या बिउझिन्छु कहिले काही जब नामर्दका शिरमा मर्दले लगाउने नेपाली टोपी देखा पर्छ । अब त बुझ्यौ होला प्रष्ट भयो होला··· कसरी र किन मेरो नाम पोथी गोर्खा भयो र म टोपीको बैरी हुन पुगे भन्ने कुरा । हेर ! जब सम्म हाम्रो यर यस देशको बिच खुला सिमाना रहन्छ, हामी गरिब तथा अशिक्षित महिलाहरुले यस खुला सिमानाको बन्धनमा पर्छौ पर्छौ । तामदाने हजुर ! तिमी राष्ट्रवादी हौ भने तोड खुल्ला सिमानाको बन्धनमा यति कुरा गर्‍यौ भने-गर्ने कोसिस मात्र गर्‍यौ भने पनि तिम्रो शीरमा यो टोपी खुल्दछ । शोभा दिन्छ । अंगमा झुत्रो कछाड भए पनि मुहारमा राष्ट्रियता झल्कन्छ ।

यति कुरा भनिसकेपछि आर्को नाइटक्लबमा पनि डान्स देखाउनु पर्ने भएकोले मलाई खुला सिमानाको चक्करमा फसाएर आफु बेपत्ता भई ।

आज उनीहरुसँग छुट्टिएर घर फर्केको पनि धेरै दिा भइ सक्यो । जैले पनि टोपी लगाएर उनामा हेर्छु । मेरो शीरमाथि टोपी हैन कसैले कालो झण्डा तेर्स्याइ दिए झै देख्छु । म एकाएक झस्कन पुग्दछु र झट्ट ऐनाबाट मुख हटाउँछु । यो प्रकृया, ऐनामा कालो झण्डा देखिने कुरा अब रोग झैं भै सक्यो । ज्यान भए सम्म सदा मलाई सताइ रहला जस्तो छ । कारण, मैले खुला सिमानाको बन्धन तोड्ने कामको सुरुवात पनि अझै गर्न सकेको छैन । सायद त्यसैले होला मेरो मुहारमा राष्ट्रियता न झल्केको– सँधै कालो झण्डा मात्र ढल्केको ।

ØØ

# परदेश

## सुशिला देउजा

एउटा दुर्गम गाउँको एक सिधासाधा व्यक्ति, अरूको लहै लहैमा लागेर विदेश जाने भयो । उसलाई विदेश भनेको कस्तो हुन्छ, कसरी जाने, र के काम गर्ने– केही थाहा थिएन । तर विदेश गएर पैसा कमाउने रहर भने औधी थियो । रहर पुरा गर्न आफ्नै गाउँका एक परिचित व्यक्तिसंग सल्लाह गऱ्यो । परिचितले भन्यो– 'मैले चिनेको एउटा मान्छे छ । तिमी साँच्चिकै विदेश जानेहो भने उसले सबै कुरो मिलाई दिन्छ । बदलामा उसलाई केही पैसा दिनु पर्छ ।' ऊ राजी भयो । एउटा बारी बेचेर उसले आवश्य करकम पनि जुटायो । उसको स्वीकृति अनुसार कुरा अघि बढयो । केही समय पछि सबै कुरा मिल्यो भन्ने खवर पनि आयो ।

आफनै देशको राजधानीमा सम्म कहिल्यै पाइला नटेकेको ऊ एकैचोटि विदेश जाँदै थियो । डर मिश्रित खुसी थियो मनमा । सबैसंग बिदावारी भई ऊ राजधानीतिर लाग्यो । राजधानीको चहल पहल देखेर ऊ दङ्ग पऱ्यो । विदेश पठाइदिने मानिस बडो मीठो बोल्ने स्वभावको रहेछ । ऊसंगको पहिलो भेटमा नै उसले भनेबमोजिम पैसा सबै बुझाएर ऊ ढुक्क भयो । विदेश जाने दिनपनि पक्का भयो । गाउँबाट सिधै आएको उसले हवाइजहाज पनि कहिल्यै चढेको थिएन । विदेश पठाई दिने त्यो व्यक्ति, उसलाई एयर पोर्ट सम्म छोडन आयो ।  हवाइजहाज चढनु अघि उसले भन्यो 'अब यस प्लेनले तपाईलाई सिधै विदेश पुऱ्याउछ । त्यहाँ तपाईलाई लिन मानिस आउछन् । कहाँ जाने, के के गर्ने भन्ने कुरा सबै उनैले सम्झाउछन् । ल राम्रो संग जानुस है'भन्दै बिदा भयो । उ फुरुङ्ङ पर्दै प्लेन चढयो । विदेशको कल्पनामा डुब्दै ऊ सफरको आनन्द लिदै गयो ।

निकै वेर उडेपछि प्लेन तल तल ओर्लदै थियो । उसले खुसी हुदै प्लेनको झ्यालबाट बाहिर हेऱ्यो । परिचित जस्ता डाँडा काँडा अनि बाटोमा साईकल, रिक्सा, गोरु गाडाहरू चलिरहेको उसले देख्यो । मनमनै सोच्यो विदेशमा पनि कस्तो हाम्रै जस्तो डाँडा काँडा, अनि हामी कहाँ जस्तै रिक्सा, गोरु गाडा पनि चल्दा रहेछन् ...। रमाउँदै अन्य यात्रुहरूसँगै ऊ प्लेनबाट ओर्लियो ।

कोही लिन आएका छन् कि भनेर चारैतिर हेऱ्यो । कसैलाई नदेखेपछि त्यहीं काम गरिरहेको एक जनालाई सोध्यो– 'भाइ यो विदेशको फलानो ठाउँ हैन ?'

'कहाँ हुनु दाइ यो त हाम्रै देश हो ।' भनेर उसले परिचित ठाउँको नाम लियो । त्यति के सुनेको थियो, मनमा ठुलो आघात पेरेकोले बेहोस भएर त्यहीं भुइँमा ढल्यो ।

# राजिनामा

## प्रदीप नेपाल

रामजीको राजीनामाले देशै हल्लायो । मान्छे सडकमै उत्रिए ।

"मन्त्री अपराधी हो, त्यसैको अपराधका कारण रामजीले राजिनामा दिएका हुन् ।" पूर्वमन्त्रीले सार्वजनिक भाषण गऱ्यो ।

"मन्त्री भ्रष्टाचारी हुन् । कर छल्नेलाई कडा कारबाही गर्नुपर्छ भने वापत् रामजीले मानसिक दवावको सजायँ पाएका हुन् ।" अर्को राज्यमन्त्रीले भन्यो ।

"रामजी र मन्त्रीको पार्टी नमिलेको हुनाले मन्त्रीले रामजीलाई हटाएका हुन् । यो कुरा रामजीले हाम्रो युनियनसँगको साक्षात्कारमा भन्नुभएको हो । मन्त्रीले सार्वजनिक माफ नमागेसम्म र रामजीलाई ससम्मान कुर्चीमा नबसाएसम्म हामी काम गर्दैनौँ । हाम्रो पेनडाउन आन्दोलन अहिले १२ बजेबाट आरम्भ भयो ।" चैतको तातो घाममा सिमण्टीको भुइँमा बसेको तालुखुइले ट्रेडयुनियनकर्मीले पत्रकारलाई अन्तरवार्ता दियो ।

एउटा सचिवले पदबाट राजीनामा दियो र बतासे तरङ्गमा मुलुकलाई हल्लाइदियो ।

धेरै हल्ला भएपछि सत्यतथ्य पत्ता लगाउन मैले रामजीको घर भएको शीतल, सुरम्य र हरियालीले परिपूर्ण गाउँ जाने निधो गरेँ । रामजीको घर पुग्दा दिउँसोको तीन बजेको थियो ।

"तपाईंले नराम्रो काम गर्नुभयो ।" मैले भनेँ, "बिनाकारण राजीनामा दिएर मान्छेलाई बौलाहा बनाइदिनु भयो ।"

"सबै हल्ला सुन्दा मैले एकदम ठीक गरेछु भन्ने लागेको छ। राजीनामा दिइरहँदा मैले निकालेको निष्कर्ष बेठीक पो छ कि भन्ने लागेको थियो । तर होइन रहेछ ।"

रामजीको कुरो सुनेर छक्क पर्ने पालो मेरो थियो । तर मैले केही सोधिन ।

"नीति निर्माणको तहमा मैले आठ वर्ष काम गरेँ । मैले नेपालका सबै पार्टीका मन्त्रीसँग काम गरेँ । मन्त्रीको काम दृष्टिकोण दिने हो । तर आठ वर्षमा मैले बेहोरेका छ जना मन्त्रीमा मैले कुनै दृष्टिकोण देखिन । अहिलेका मन्त्री राजनीतिको देश खाई शेष भएका, ठूलो पार्टीको ठूलै नेतृत्वमा बसेका, पटक पटक मन्त्री भएका, यिनले त केही गर्लान् भन्ने लागेको थियो । यी पनि उही ड्याङका मूला रहेछन् भन्ने ज्ञान पाएपछि अब यहाँ जागिर खानु भनेको जिन्दगी ब्यर्थ फाल्नु भन्ने लागेर मैले राजीनामा गरेको हुँ ।"

"मन्त्रीको चर्को दवावका कारण नै तपाईंले राजीनामा दिनुभएको हो त ?"

"त्यो पनि हो, तर मलाई चर्को मानसिक दवाव दिनेमा यी बूढा मन्त्री

एक्ला होइनन् । यी भन्दा अगाडिकाले पनि मलाई नोकर नै बनाउन खोजेका थिए ।"

हरियो जङ्गलको बीचमा पच्चीस रोपनीजतिको खाली जग्गामा बारीको माथिल्लो भागमा घर बनाएर बसेका रामजीलाई नमस्कार गरेर म बाटो लागेँ । रामजी आज यतै बसौँ भनेर आफ्नो नेपालीपन देखाउँदै थिए । म मन्त्रीपुराण सुन्न शहरतिरै लागेँ ।

१९ चैत ०६७

ᨖᨖ

## क्यालकुलेटर

### श्रीओम श्रेष्ठ रोदन

अमेरिकामा नेपालीहरूको बीचमा थिएँ म । मप्रति सद्भाव व्यक्त गर्दै एक जना मित्रले भने– तपाईं नफर्कनु होला । यहीं बसेर कमाउनुस् र जीवन बनाउनुस् ।

- अर्का मित्रले थपे– हो, तपाईंले ग्रिनकार्ड चाँडै पाउनु हुन्छ । तपाईंका डकुमेन्ट चाहिनेभन्दा बढी छन् । परिवारलाई डाकेर यतै सेटल गर्नुस् ।

- अलि पाका शुभचिन्तकले चिन्ता व्यक्त गर्दै भने– यहाँ आउन मान्छेले लाखौं खर्च गर्छन् । तपाईं सजिलै आउनु भएको छ । पछि आउन मिल्ला नमिल्ला ? सल्लाह मान्नुहुन्छ भने तपाई नफर्कनुस् ।

- सम्मेलनमा गएर देश नफर्केका एक जनाले जोड दिएरै भने– हेर्नुस्, मैले त्यत्रो पद नै त्यागेर यहाँ बसेको छु । त्यहाँ वर्षभरिमा कमाइने पैसा यहाँ महिना दिनमै कमाइन्छ । उनले झन् ठूलो् स्वरमा भने– आखिर, नेपालमा के नै पो छ र ?

- मैले बीचैमा बोलें– हेर्नुस् आफ्नो देशमा पाइने आत्मसम्मान अन्त कहीं पाइँदैन । जीवनको हिसाब नाफा र घाटामा हुँदैन । आमाको र मायाको मूल्य कहीं तोकिंदैन । तपाईहरूले कमाएको डलरलाई क्याकुलेटरले धेरै रुपियाँ बनाउला तर यहाँ गुमाएको प्रेम र आफ्नोपनको मूल्य क्यालकुलेटरमा निकाल्न सक्नुहुन्छ ?

- मित्रहरू, चियर्स गरेर ठोकाएका गिलासहरू ओठसम्म नपुर्‍याई निशब्द मलाई सुनिरहेका थिए ।

- मचाहिं जुरुक्क उठें र बाहिर निस्किएँ ।

ᨖᨖ

# ज्योतिषी

**बखतबहादुर थापा**
नयाँ बस्ती, जोरपाटी

मान्छेहरू मकहाँ जान्ने भनेर आउँछन्, तर म केकति जान्दछु त्यो तपाईंहरूलाई देखाउँछु । मन्दिरको छेउमा बोरा ओछ्याएर बसेको छु । मेरा छेउमा विज्ञापनपाटी छ, त्यसमा लेखेको छु- यहाँ हात हेर्नुका साथै चिना टिपन बनाउने काम गरिन्छ ।बखत बहादुर/ज्योतिषी

कुनै काम गरिन्छ भने कर्मलाई हैन कर्तालाई फाइदा हुन्छ । म कर्ता, हात हेर्ने कर्म गरेर जिवीकोपार्जन गर्छु, मान्छेहरू अनेक अभिलाशा लिएर आउँछन् मकहाँ । कुनै पनि वस्तुको अस्तित्व सब्ल्याँटो र बिब्ल्बाँटोमै कायम छ । यदि म हात हेर्न जान्दछु भने पनि पचास प्रतिशत राम्रो र पचासै प्रतिशत नराम्रो देख्न सक्नुपर्छ भन्ने मेरो मान्यता हो । प्रायः मान्छेहरू दशा ग्रह प्रतिकूल हुँदा नै हात देखाउने र चिना हेराउने काममा लाग्छन् । भन्नाले पचास प्रतिशत अनुकूलमा पनि पच्चिस प्रतिशत ग्रहदशाले बिगारीदिएको हुन्छ । त्यस कारण मसँग हात देखाउन आउनेहरूको प्रायः पच्चीस प्रतिशत मात्रै अनुकुल पाउँछु । यदि मेरो यो मान्यता ठीक हो भने मैले साँचो कुरा गर्नु भनेको मेरा पचहत्तर प्रतिशत ग्राहक भड्काउनु हो !

मेरो गुरु 'हस्तरेखा किताब' खाली समयमा म किताबै पढेर बस्छु । एक दिन २२-२४ वर्षे ठिटो आयो र मेरा अगाडि हात तेर्साउँदै भन्यो, "हात हेर्नु त बाबा ।"

मैले केटाको अनुहारमा हेरेँ, तनाव झल्किन्थ्यो ।

अभिभावकबाट गाली खाएको हो कि ? विदेश पस्न नपाएको हो कि ? कुनै केटीको चक्करमा परेर टेन्सनमा आएको हो कि ! कुन हिसाबले पत्ता लगाउनु ? आँखा उसको हस्त रेखामा भए पनि मेरो मनमा यस्तै कुरा खेल्न थाले ।

"बाबुको बिचार त एकदम ठिक छ तर…," मैले उसको अनुहारतिर हेरेँ ।

केटाले कुरा अगाडि बढाएन । अलिकति मात्र सङ्केत दिएको भए पनि म उसको टेन्सनसम्म पुग्ने बाटो पहिल्याइहाल्थेँ । यस्तो मामिलामा महिलाहरू छिटा हुन्छन् । अलिकति फुर्क्याइदियो भने तिनबाट कुरो फुत्क्याउन सजिलो हुन्छ ।

"पढाइ त..., डिग्रीसम्म लेखिएको छ त ?" मैले फेरि उसको अनुहारमा दृष्टि गाडेँ ।

ऊ खिन्न देखियो ।

यसको मतलब पढाइसम्बन्धी चिन्ता हैन ? भन्ने लाग्यो र मैले उसको विदेशसम्बन्धी चासो बुझ्नलाई हस्तरेखामा आँखा तिखार्दै भनेँ, "विदेशसम्बन्धी भन्ने हो भने सोचेजस्तै ठाउँमा पुग्ने रेखा परेको छ है बाबू !"

यस पटक पनि उत्साहित देखिएन ऊ । अब म प्रेमको बारेमा सोच्न थालेँ । बिवाह रेखा एउटै थियो र हृदय रेखाको नजिक थियो । त्यसले गर्दा

विवाह छिट्टै हुनुपर्छ भन्ने लाग्यो । कान्छी औँलो र साहिँली औँलोको बिचको छिद्रले केटाको स्वभाव केही जिद्दी दर्शाउँथ्यो । सलक्क परेको अनुहार, तिखो नाक, बाक्ला आँखीभौँ समग्रमा केटो आकर्षक देखिन्थ्यो ।

"नाम के रे बाबूको ?"

"राम ।"

मैले उसको जन्म मिती पनि सोधेँ र चिना बनाएजस्तो कापीमा ठाडातेर्सा रेखा कोरेँ, तर म सोच्दै थिएँ- प्रायः लोग्नेस्वास्नीको जिउडाल मिलेको हुन्छ । त्यस अनुपातमा नब्बे प्रतिशत केटी पनि राम्रै भेट्नु पर्ने जस्तो लाग्यो, "राम्री त राम्री नै हो, तर... केही घमन्डी देख्छु है बाबू ?" मैले उसको अनुहारमा हेरेँ ।

"केही मात्रै हैन बाबा ! अति घमन्डी क्या !" केटो झन् दिक्क देखियो ।

बल्ल गाँठी कुरो पत्ता लाग्यो भन्ठानेर दङ्ग परेँ म ।

केटो विवाहितजस्तो लाग्दैनथ्यो, तैपनि 'म आफ्नी स्वास्नीकै बारेमा कुरा गर्दै छु हो बाबा !' भन्यो भने त ट्वाँ परिन्छ भन्ने लागेर मैले भनेँ, "फलामलाई फलामलै काट्छ बाबू ! तिमीले पनि मन बाध्नु पर्ने देखिन्छ त !"

"मन बाँध्नु, खोल्नु मेरो नियन्त्रणमा छैन बाबा ! मेरो तनाव उत्रने उपाय चाहियो ।"

"एउटा मन तिम्रो, अर्को मन केटीको दुवै बराबर, तर तिमी आफ्नै मनको कुरालाई महत्व दिन्छौ भने तनाव त स्विकार्नै पर्छ ।"

"बाबा ! मलाई सम्झाउने बुझाउने कामतिर नलाग्नुस्, मेरो काम कसरी बन्छ त्यो उपाय खोज्नुस् क्या ।" केटाले दिक्दारी जनायो ।

"जातपात पनि मिल्ने नै देखिन्छ ।"

उसले स्विकारोक्ति दियो ।

"जिन्दगी त्यसैसँग बिताउने हो र ?"

"हो ।" केटो ढुक्क देखियो ।

"उपाय लगाऊँ ?"

"छिटै गरौँ ।"

"केही नियमहरू पालन गर्नुपर्छ । थाल्ने हो ?"

"थाल्ने ।"

मैले डब्बाबाट अलिकति सिन्दुर निकालेर कागजमा बेरेँ अनि उसलाई दिँदै भनेँ, "केटीको नाम के हो ?"

"सविता ।"

"साँझ बिहान तीन-तीन पटक निकै गहिरो पाराले उसको नाम लिने । एक हप्तासम्म नभेट्ने । मङ्गल बार, तिमी जन्मेको बुधबार र शनिबार दाह्रीजुगाँ, कपाल र नङहरू नकाट्ने । नवौँ दिनमा आइतबार पर्छ । यो टिका हल्कासँग निधारमा लगाउने र सविताले देख्ने गरेर बस्ने । उसलाई चाहिँ रामले वास्ता गर्न छोड्यो क्यारे भन्ने लागोस् है । साथीहरूलाई पनि राम केटीका पछि लाग्न छोडेर पढ्नलेख्नमा पो डुब्यो त ! भन्ने लागोस् । सोमबार

बिहान आएर मलाई भेट्ने है ?" केटो खुसी हुँदै बिदा भयो ।

दसौँ दिनमा राम आयो, अनुहारमा केही खुसी र हल्का दाह्रीजुगाँ पनि देखिन्थे ।

"काम बन्ला जस्तो छ बाबा । हँसिलो मुख लगाएर हेर्दै थिई । मैले पनि मुस्कुराइ दिएँ ।" केटो दङ्ग देखियो ।

"दाह्री काट्न बिर्सेछौ त ?"

"प्रायः शनिबार र बुधबार हो नङ र दाह्री छाट्ने, तपाईंले ती बार नकाट भन्नुभएको हैन ।"

"ठीकै छ पाली राख, कुनै दिन दाह्रीजुगाँको काम पनि आउन सक्छ ।" मैले केही सम्झेजस्तो गरेर भनेँ, "अब अगिल्लो गोटी चाल्ने ।"

केटाले हुन्छ भन्ने सङ्केत दिएपछि मैले भनेँ, "सवितालाई नै सुनाएर आफ्ना वा उसैका साथीहरूसँग भन्नू– बिहे त्यसैसँग गर्नुपर्छ जसले तिमीलाई मन पराओस् । तिमीले मात्र मन पराउनेसँग बिहे गऱ्यौ भने दुःख पाइन्छ, तर यो कुराको जानकारी हुनुअगावै आफू त फिर्ता हुनै नसक्ने बाटोमा लागियो !' यदि पोजिटिभ सङ्केत पायौ भने आउँदो शुक्रबार त्यसलाई एउटा चिठी लेखेर देऊ वा पठाऊ । खाममा उसको नाम र ठेगाना लेख्नु, भित्र कागज चैं खाली छोड्नू ! म बिना राम कोरा कागज हो अथवा खालीखाली छ भन्ने अनुभूति गर्छे कि ? चिठी दिँदा खुसीसँग समाती भने ठिकै छ, बलजफ्ती नगर्नू । यदि म्यासेज पठाउँछौ भने म्यासेज बक्समा… राख्नु । सबै भन्दा बढी मन बढाइमा नै लगाउनु है । फेरि आठ-नौ दिनमा आएर मलाई भेट्नु ।"

अर्को पटक आउँदा पनि हल्का खुसी थपेरै आयो । दाह्रीजुँगा र नङहरू पनि थपिँदै आएका देखिन्थे ।

"फोटो स्क्याच गर्न आउँछ ?"

"हल्काफुल्का ।" केटा मुस्कुरायो ।

"सवितासँग मिल्दोजुल्दो अनुहार भएको खुब राम्रो छोराको फोटो बनाएर बिचमा राख्ने । एकतर्फ सुटबुटमा तिमी र अर्कोतर्फ रातो सारीमा सविता उभिँएको फोटो बनाउनु । आफ्नो फोटो हल्काफुल्का भए पनि सविताको र छोराको फोटो च्वाँक बनाउनु नि ! सविताले छोरातिर हेरेर मुस्कुराएकी होस्, तिमीले चाहीँ सवितातिर हेरेर मुस्कुराएको देखाउनू । अर्को कागजमा पनि फोटो स्केच गर्नु र त्यसमा आफ्नो दाह्रीजुँगा ठूलै बनाउने, पहेँलो रङको कुर्ता सुरुवाल लगाइदिने, अनि हातमा एउटा लौरो र कमन्डलु पक्राइदिने । मेरो उद्गार बुझ्यौ ?"

"भन्नाले जोगी !"

"गुड । अर्कोतिर सविताको खुब राम्रो फोटो बनाउनु । उसले बाटोतर्फ सङ्केत गरेर 'जा, तेरो गन्तव्य त्यही हो !' भनिरहेकी होस् । लेख्नु- प्यारी सविता, तिमीलाई जति समय चाहिन्छ लेऊ, प्रतीक्षाको फल मिठो हुन्छ भन्ने धारणा धारण गरेरै बस्नेछु । जब प्रतीक्षा टुङ्गिने छ, मेरो निधारको सिन्दुर तिमीले आफ्नो सिउँदोमा थाप्नेछौ भन्ने मेरो कामना पुगोस् ।"

"गज्जबको आइडिया !" केटो उठ्यो ।

मैले भनें, "वेस्ट अफ लक ।"

केटो बुढी औंलो देखाउँदै हिँड्यो । त्यसपछि आउँदै आएन ऊ । उसको काम सफल हुनेबित्तिकै थुप्रै पैसा पाउँछु भन्ने मेरो इच्छा पनि सेलायो । मार खाने बाटोमा लगाएकै थिइनँ मैले ! कहीँ त्यसकी सविताले दोस्रो नम्बरको फोटोमा इङ्गित त गरिन ? यस्तै शङ्का उपशङ्का उठ्दैथिए मनमा, एक दिन आफ्नै छोरी हराई । कुनै सुराग पाइन्थ्यो कि भनेर छोरीको कोठामा तलास गर्दा, त्यही मोरो रामलाई स्क्याच गर्न सिकाएका फोटाहरू भेटिए । स्क्याच गरेका फोटामा आफ्नोजस्तै अनुहार परेको छोरातर्फ हेरिरहेकी थिई मेरी छोरी सविताले । साथमा सुटबुटमा ठाँटिएको मोरो राम मेरी छोरीतिर हेरेर मुस्काइरहेको थियो । मेरी छोरीलाई त्यो फोटो खुबै मन परेछ क्यारे ! रामको फोटोमा मेरी छोरीको ओठको लिपिस्टिक टाँसिएको थियो । हेर्दाहेर्दै मलाई चक्कर आउलाजस्तो भयो । घोप्टिएँ ।

जब जब मलाई छोरीको सम्झना आउँछ; हतारहतार सन्दुक खोल्छु, त्यो फोटो हेर्छु र सम्झन्छु- मेरो आइडियाले दाह्रीजुगा नै काट्न छुटाइदियो रामलाई भन्ने कत्रो घमण्ड चढ्दै थियो ममाथि ! मेरो धन्दा मन नपराउने छोरी पनि आइछ त्यही आइडियाको लपेटामा ! मेरी छोरीको प्रेम सफल होस् र मैले आफ्नो दिमागमाथि गर्व गर्नु परोस् भन्ने कामना गर्दै त्यस फोटालाई फेरि जतनसँग सन्दुकमा राख्छु । अन्तमा यो पढ्ने सुन्ने सबैसँग मेरी छोरी सविताको प्रेम विवाह सफल होस्,भनेर कामना गरिदिनुहुन अनुरोध गर्दछु, धन्यवाद ।

ꟹꟹ

## १५६/यात्रामा कुनै दिन (०६८ ०७)

डा.ध्रुवचन्द्र गौतम : दामोदरजी बिदेश गएर आइएछ । एक दिन बसाउने होइन ?

दामोदर पुडासैनी किशोर : यस्ता साहित्यिक महारथीहरूलाई बसाउन पाए यो किशोर त्यसै रमाउँछ । बसाउने नि एक दिन, तर अल्लि पछि, तिहारपछि ।

सनत रेग्मी : भाका राखेपछि गयो... ।

ध्रुवचन्द्र गौतम : अरूले त यति पनि भन्दैनन् । कमसेकम दामोदरजीले तिहार पछि त भन्नुभयो... । यो कुरा गोप्यै रहोस् है, यायावरले थाहा पायो भने छापिदिन्छ ।

दामोदर पुडासैनी किशोर : हामीसित न अभिव्यक्तिबाबा हुनुहुन्छ न चितवनको गैंडा– कसरी थाहा पाउँछन् ?

ध्रुवचन्द्र गौतम : कसरी थाह पाउँछन् कसरी तर हेर्नु होला– थाह चाहिँ पाउँछन् पाउँछन् । अनि यौटा कुरा याद गर्नुभा'छ ? यो चितवनको गैंडो आफू तल परेको कुरा चाहिँ कहिल्यै पनि लेख्दैन !

सनत रेग्मी : डाक्टर साहब ! चितवनको गैंडा सिरक हो, डसना होइन ।

ꟹꟹ

# चियाको खैरो जालो

मातृका पोखरेल
ताप्ली–४, थामखर्क, उदयपुर shabdayatra@gmail.com

रेडियोमा वि.वि.सि. नेपाली सेवाको समाचार आउनै लागेको थियो । सांसद् हिरादत्तलाई आजको कुनै पनि समाचार सुन्ने मौका मिलेको थिएन । विहानदेखि बेलुकासम्म तीनचार ठाउँहरूमा भेटघाट र मिटिङहरू भ्याएर बेलुका एकजना साथीसँग रेष्टुरेन्ट छिरेका उनी ढिलै गरेर आफ्नो डेरामा आइपुगेका थिए । बाटोमा आफ्ना सांसद साथीहरूको लगातार मोबाइलमा घण्टी बजिरहेको थियो । रेष्टुरेन्टमा उनले निकै पिएका थिए । साथीहरूले पिउने कुरा थाहा पाइहाल्छन् कि भन्ने डरले उनले मोवाइल रिसिभ गरेनन् ।

"तर आज किन धेरै साथीहरूको फोन आयो ?" हिरादत्तभित्र प्रश्न नउब्जेको होइन । घटनाको कुनै अन्दाज सम्म गरेनन् उनले ।

"आज धेरै पिएर आउनु भयो कि के हो ?" खानाको थालीमा तरकारी राख्दै गर्दा पारुले हिरादत्तलाई छांसिन् ।मातृका पोखरेल/चियाको खैरो जालो–

"अरू दिनको भन्दा आज अलिक बढ्तै भएछ ।" स्वीकारोक्तिमै बोले हिरादत्त ।

पारुले किचेन टेबुलमाथि खाना राखिदिइन् । हिरादत्तले खानाको थाली सार्दै रेडियोलाई आफू नजिकै ल्याएर राखे ।

खानाखान सुरु गर्दागर्दै उता वि.वि.सि नेपाली सेवाले पनि समाचार भन्न सुरु गऱ्यो । पारु पनि खानाको थाली लिएर टेबुलको एकाछेउमा बसिन् ।

प्रमुख समाचारमैं रेडियोले भन्यो– "नेपालमा प्रधानमन्त्रीद्वारा गरिएको संसद विघटनको सिफारिस राष्ट्रपतिद्वारा स्वीकृत भएको छ ।"

अचानक दुवै जनाले मुखमा पुग्नै लागेको भातको गाँसलाई टक्क रोके र एकले अर्कोलाई हेरे ।

रेडियोले पुरा समाचार भन्न बाँकी नै थियो ।

एकाएक दुवैको अनुहार ठूलो आँधीबेहरी आउन लागेको समय जस्तै कालो अँध्यारो भयो । तर दुबै जनामौन बसे । केहीबोलेनन् ।

"बाबु र नानीले खानाखाइ सके ?" मौनता तोड्न खोजे हिरादत्तले ।

"अँ ! खाएर पनि सुतिसके ।" संक्षिप्त उत्तरमै टार्न खोजिन् पारुले ।

"भोलि त विदाहो नि उनीहरूको !" हिरादत्तको स्वर मलिनो थियो ।

"विदा त हो, आज स्कूलले बीस हजारको बील पठाएको छ ।" हिरादत्तको अनुहारतिर नहेरिकन बोलिन् पारु ।

"ओ हो ! बीस हजार !" हिरादत्त झस्किए ।

"पहिले पनि त्यस्तै त आउन्थ्यो नि ! त्यस्तो महंगो स्कूल छ ।" पारुले थपिन् ।

"मैले त तिमीलाई भनेकै थिएँ नि ! अलिक साधारण स्कूलमा राखौं है

भनेर !" हिरादत्तको स्वरमा सानो आक्रोस झल्कन्थ्यो ।

"हामी बसेको घर मालिक एउटा सामान्य खरदार हो । उसले पनि आफ्ना छोराछोरीलाई त्यही स्कूलमा राखेको छ । त्यति पनि नसक्ने हो भने यत्रो नेता हुँभनेर किन हिँड्नु पऱ्यो !" पारुले पनि एउटा सानो वाणको झटारो हानिन् ।

हिरादत्तले अरू प्रतिक्रिया दिन आवश्यक ठानेन् । खानाको थालीबाट आँखा उठाएर पारुतिर हेर्न आवश्यक पनि ठानेनन् ।

उनीहरू पहिलेपहिले कहिलेकाहीँ राजनैतिक छलफल पनि गर्थे । संसदमा भइरहेको अर्न्तसंघषबारे पनि कहिलेकाहीं कुराकानी गर्थे । तर उनीहरूले कुनै राजनैतिक छलफल गरेनन् आज ।

ന്ദ

हिरादत्त र पारु सुत्ने कोठामा पुगे । आजै धोएका लुगाहरू असरल्ल ओछ्यानभरि छरिएका थिए । पट्याउने जांगर त पलाएको थिएन, तर काम साँच्न मन लागेन पारुलाई । ओछ्यानका लुगाहरू सोहोरेर भुइँमा थुपारिन् र लोग्नेलाई सुत्ने ठाउँ तयार पारी दिइन् ।

पार्टीमा पिएको 'ह्याङओभर' हिरादत्तमा अझै बाँकी नै थियो । लुगा नफुकालिकनउनी डङ्ग्रङ्ग ओछ्यानमा पल्टिए ।

"अब के गर्ने होला भनेर तपाईंलाई त कुनै चिन्तै छैन जस्तो छ । मलाई त कस्तो छट्पटी भइसक्यो ।" पारुले कपडा पट्याउँदै कुरा निकालिन् ।

"अब गाउँ जाने, काम गर्ने बस्ने !" सन्त्रास भरिएको मनबाट हिरादत्तले खरो कुरा गरे ।

"जानु भो गाउँ ! गाउँमा अचेल तपाईंलाई मान्छेहरूले कस्तो गाली गर्छन् । तपाईंले त के सुन्नुभाको छ र ! मैले पो सुनेकी छु त !" गाउँजाने कुराले पारु त्रस्त थिइन् ।

"चुनाव जितेर गएपछि गाउँमा विकास त कता हो कता भत्तामात्र खाएर बसे । गाउँ पनि फर्किएर आएनन् । यस्तै यस्ते कुरा गरेर चाहिँदो नचाहिँदो गालीगर्दा रहेछन् तपाईंलाई ।" यति भनिसकेर पारुले पुलुक्क फर्किएर हिरादत्तलाई हेरिन् ।

केही नबुझेर मात्रहामीलाई गाली गरेकाहुन् ।" हिरादत्तले मलिनो अनुहार लगाउँदै जवाफ फर्काए ।

"मान्छेहरूले त्यो कुरो बुझ्नु पऱ्यो नि !" पारुले आफूभित्रको डरलाई अलिकति पखालीन् ।

"बुझाउन सिवाय हामीसँग अर्को उपाय पनि त छैन नि ! हामी धेरैजसो सांसदहरू त एक प्रकारले जागिरे जस्ता मात्र थियौँ । सबै कुराको निर्णय त नेताहरूले मात्रगर्थे ।" हिरादत्तले नम्र स्वरमा पारुलाई प्रष्ट बनाउन खोजे ।

"आज म अलिक बढि नै थाकेको छु । म अब निदाउँछु ।" हिरादत्त भित्तातिर कोल्टे फर्किए ।

"चुनाव जित्न लिएको लाखौँ ऋण छ। परिवारमा नबेच भन्ने सल्लाह दिँदादिँदै पनि पैत्रिक अंशमा आएको बजारको परारमात्र बेचेको घडेरी । चुनाव जित्नका लागि गाउँ गाउँका मानिसहरूलाई उनीहरूले मागे जति गरि दिन्छु भनेर दिएको आश्वासन !' उसको मानसपटलमा चलचित्रका दृश्यझैँ सवैकुरा एक एक गरेर आउन थाले। जति सोच्दै जान्थ्यो, उसको हृदयभित्र आतङ्कको एउटा पहाड सिर्जना हुन्थ्यो ।

निद्राआउने त कुनै छनक नै थिएन ।

पारुलाई थाहाथियो– "हिरादत्तलाई बेलाबेलामा चिन्ता र निरासाले गाँज्यो भने सुत्ने बहाना गर्छन् र ओछ्यानमा आँखा चिम्लेर पल्टीरहन्छन् ।"

☙

"किन बोल्दिनौ तिमी ? तिमीलाई निद्रा लागेको छैन जस्तो छ !" सांसद हिरादत्तले बिहान उज्यालो हुने बेलातिर आफूले केही थाहा नपाएझैं गरेर पारुलाई सोधे ।

बिहानको चार बजिसकेको थियो । दुबैजना निदाएका थिएनन् । हिरादत्त र उनकी पत्नी पारु दुवै जनाले रातभरि नै निदाए जस्तो अभिनय गरिरहेका थिए ।

"होइन म निदाएर ब्युँझेकी हुँ ।" हिरादत्तकी पत्नी पारुले कुरा लुकाउँदै भनिन् ।

हिजो बेलुकाको समाचार दुवैले सुनेका थिए। तर दुवैले यो समाचारको बारेमाकुनै चर्चा गरेनन्। दुवैको मनमा आतङ्कको एउटा हुण्डरी चलिरहेको थियो ।

"तपाईं चाहिं निदाउनु भएको छैन कि के हो ?" भित्तातिर फर्केर पारुले हिरादत्तलाई सोधिन् ।

"म पनि निदाएरै ब्युँझेको हुँ ।" पारुले दिएजस्तै उत्तर दिए हिरादत्तले पनि ।

आफूहरू दुवै जनालाई खासै चिन्तानभएको कुरा देखाउन खोजिरहेका थिए उनीहरू । तर हिजो वि.वि.सि. नेपाली सेवाको समाचार पछि दुवै जनाको अनुहारमा आतङ्कको एउटा छायाँ दौडिरहेको थियो ।

उनीहरू उज्यालो हुने वित्तिकै ओछ्यानबाट उठे । घरमा एउटी कामगर्ने मान्छे थिई शान्ता। शान्त गाउँकै केटी हो। ऊ चिया लिएर आई कोठामा ।

शान्ताले चियाका कपहरू टेबुलमा छाडेर गएको पनि निकै समय भइसकेको थियो । कप उठाउन आउँदामात्रै देखी उसले । उसले ल्याएको कपमा जस्ताको तस्तै थियो चिया। चियामा खैरो जालो तैरिरहेको थियो ।

माननीय हिरादत्त सोफाको एउटा छेउमा बसेर झ्यालबाट एक तमासले पूर्वतिर हेरिरहेका थिए । सोफाको अर्को छेउमा बसेर सांसद् पत्नी पारु पश्चिमतिर फर्किरहेकी थिइन् ।

"मालिक्नी साहेब ! चिया त चिसो भइ सकेछ नि ! फेरि तताएर ल्याइदिऊकि !" शान्ताले अचम्म मान्दै भनी ।

"होइन, होइन, तताउनु पर्दैन । धेरै चिसो भइसकेको छैन ।" पारुको बोली थर्थराइरहेको थियो ।

"अँ ! पर्दैन पर्दैन !" हिरादत्तले पनि थपे ।

"आज के भएछ दुवै जनालाई !" मनमनै सोच्दै शान्ता भान्सातिर गई ।

शान्ताबाहिर निस्कने बित्तिकै हिरादत्तले चियाको कप लगेर ओठमा टाँसे ।

"ओहो ! चिया त बरफ जस्तै चिसो भइसकेको रहेछ ।" ओठ बिगार्दै प्रतिकृया दिए हिरादत्तले ।

चियाको कप समातेर ओठमै पुऱ्याउन लागेकी पारुले हिरादत्ततिर फर्किएर हेरिन् । हिरादत्तको ओठमा चियाको खैरो जालो तुन्द्रुङ्ग झुण्डिरहेको थियो ।



## १५६/कृष्णभक्त श्रेष्ठको निबास मण्डिखाटार (२०६८ ६ २६)

ध्रुवचन्द्र गौतम : अलिखितको बाँकी आधा पढ्नुभो कि अझै पढ्नुभा छैन ?

कृष्णभक्त श्रेष्ठ : अ हँ, पढ्या छैन । मदन पुरस्कार पाएको उपलक्ष्यमा एकपल्ट बसाउँछु  भनेका थियौ– तिमीले बसाएका पनि छैनौ । मैले पढ्या पनि छैन, याद छ नगेन्द्रजी तपाईंलाई··· ?

नराश : किन नहुनु ! २०४० सालमा, तपाईंको ठमेलको घरमा यस्तै जमघटमा ध्रुवले सोध्दा ''आधा जति' बाँकी छ, तिमी एक पटक बसाऊ, अनिमात्र पढ्छु ।' भन्नुभाथ्यो । मैले त्यसैबेला यो जोक छाप्न खोज्दा ध्रुवले 'पख्नुस्, एक दिन म बसाउँछु अनि ध्रुवले पनि एकपल्ट बसायो' भनेर छाप्नुहोला नि···' भनेर अलमल्याएकाले त्यसबेला छापिन ।

कृष्णभक्त श्रेष्ठ : ध्रुवले बसाउँदा पनि बसाउँदैन, म त्यो 'बाँकी आधा' पढ्दा पनि पढ्दिन ।

ध्रुवचन्द्र गौतम : पर्खनुहोस् न, एकपल्ट पक्का बसाउँछु··· ···।

नराश : (फर्किंदा बाटामा ) बसाउँछु बसाउँछु भनेर अट्ठाईस् वर्ष बितायौ··· अझै पर्खनुहोस्  भन्दैछौ ···अब चाहिँ म पर्खन्न, छापिदिन्छु ।

ध्रुवचन्द्र गौतम : (दङ्ग पर्दै) त्यसो भए त झन् गज्जब भैहाल्यो नि··· बसाउँनै परेन ।



# छाप्रोभित्र

## रक्ष राई

तल्ला घर बीरबहादुरकोमा सुङ्गुर मारेको आवाजले माथिल्ला घर लछुमनको परिवारमा निद्रा खुल्छ । भालाले घोचेको सुङ्गुरको आवाजले आजाके विहानको पहिलो प्रहर ब्युँझिन्छ । नित्य विहानको, कहाँ, कसरी ब्युझिन्छ ? तर आजको बिहानले विशेष अर्थ बोकेको हुन्छ । उज्यालो राम्रो गरी भुइमा खसेको छैन । त्यसैले प्रायः धरानवासीहरुको उठ्ने समय होइन यो, फाट्ट फुट्ट प्रातः भ्रमणमा निस्कनेहरुको सिवाय । सँधै विहान सखारै जङ्गल जानको लागि डोको र नाम्लो तयार बनाउने लछुमनकी श्रीमतीपनि तर्मराएकी छैनन् आज । तर मरणासन्न सुङ्गुरको चर्को आवाजले सबैको निद्रा विथोलेको छ । भूइँमै लहरै सुतेका लछुमनको परिवार गुहे किरा झैँ एक पछि आर्को सिरकभित्र सग्बगाउँछन् । मर्ममा नलागेको सुङ्गुर कराइरहेछ च्वा…… च्वा…… ! !

लछुमन निद्रा फकाउने प्रयास गर्छ, तर अहँ, तर्सिएको मृगजस्तो निद्रा मरे फर्कदैन । निदाउने हो भने अझैँ एकनिद्रा सुत्ने समय छ, तर निद्रा फर्किन मान्दैनन । अनि प्रष्ट पुरुष आवाजहरु उसको कानले ठम्याउँन थाल्छ ।

'मर्ममा परेन… बिहानै त मुटु अलिक माथि बसेको हुन्छ… भालाले तल हान्यौ… ।' बीरबहादुरको आवाज आउँछ ।

'शोलेले भाला चलायो भने यस्तै हो… साह्रै ज्याद्रो छ हात… यी हेर त फोक्सो भालाको टुप्पोमा… ।' धनबहादुर भन्छ ।

'फेरी हान्नुपर्छ… मरेन… ।' बाह्रगुरु भन्दैछ । त्यतिनै खेर आर्कोचोटी शोलेले भाला चलाउँछ । सुङ्गुर चर्को स्वरले कराउँछ, जसले अर्कोचोटी लछुमनको परिवारलाई ओच्छ्यानमा चल्मलाउँन लगाउँछ ।

काँचुली फेरेर भागेको सर्प झैँ लछुमनको मन प्राण सुटुक्कै कतिखेर सुल्किन्छ, ऊ आफ्नो शरीरलाई मात्र थोत्रो सिरकले छोपिरहेको पाउँछ । लछुमन आफ्नो शरीरलाई कोल्टे फर्काउछ र दिक्क हुँदै बर्बराउँछ… 'हेर, चाचार जनाले पनि एउटा सुङ्गुर मार्न नसकेको… ।'

तल र माथि घरको करेसा जोडिएको छ बीरबहादुरको र लछुमनको । दुबैको जग्गाको लालपुर्जाको सँधियारी खानामा एकअर्काको नाम भेटिन्छ । तर बीरबहादुरको घरको उचाईले लछुमनको छाप्रोको घाम छेक्छ । रातमा जुन पनि सिधा छिर्न पाउँदैन र बाङ्गिएर टेढिएर मात्र आउँछ ।

बीरबहादुर यो टोलको डबल लाहुरे हुन्– ब्रिटिश सेनामा अठार वर्ष नोकरी गरेर सर्जेन्छ दर्जा खाएका । अनि ब्रुनाईका राजा सुल्तानाके दरवारमा नौ वर्ष । सम्पत्ति छेलोखेलो । काठमाडौंमा घर भाडामा दिएका छन् । छोरा छोरी भाले र पोथी छुट्टिसके । यता मधेशमा खेति किनेका छन् । बैंक

ब्यालेन्स प्रसस्त छ । प्रसस्तै सुङ्गुर, कुखुरा र खसी बाख्रा पालेका छन् । जाड र रक्सी पार्छन र तोङ्बा लडाँउछन् । बेलाबेलामा सुङ्गुर, कुखुरा र खसी लडाएर भोज लगाउँदछन् । जीवनको उत्तरार्द्धमा उनी यहाँ मोज गर्न बसेका हुन् ।

यस पटक भने सुङ्गुरको आवाज क्षीण हुँदै जान्छ । त्यसपछि नेपथ्यबाट आएका आवाजहरु झन प्रष्ट सुनिन थाल्छन् । र, नेपथ्यबाट आएका आवाजहरुले त्यो क्षण नाटकिय ढंगले अगाडि बढ्न थाल्छ ।

'...मर्‍यो..., लु लैजाऊँ ...कहाँ ? ऊ पर सिमेन्टमा ...अम्मौ क्या गह्रौ हो... कान र पुच्छरमा पनि समात ...खुन गयो खुन ...टेडी ठोक... लौभयो ... यही... खै मट्टितेल ? ए कान्छी सलाई ल्याऊ ल्याऊ ।' ...झ्वार्र सर्लाइ कोरिन्छ ।

शोले भन्छ–'मट्टितेलको भाउ बढ्यो, अब त ससाना सङ्गुरलाई पानीमा उमालेर नै पिस्लाउँनु पर्ला खसी बाख्रा जस्तो ।'

'राम्रो उपाय । सरकारको हालत यस्तै हो... जनता स्ययम्ले विकल्प नखोजे त कसरी बाँच्ने ?' बाह्रगुरु भर्खरै सुङ्गुरलाई घोचेको भालाभन्दा तीखो व्यङ्ग्य नालायक सरकारतिर तेर्स्याउँछ ।

'आथ्याऽ...था... ! पञ्चेनी जस्तो जलाएर मारौला है साथी हो । मलाई पनि... ।' शोले आतिन्छ, र साथसाथै हाँसोको फोहोरा पनि छुट्छ ।

पञ्चेको श्रीमती अर्थात् पञ्चेनी । भर्खरै स्टोभ पड्केर मरिन् । अहिले छरछिमेक र टोलमा 'हटकेक' को स्थान प्राप्त गरेको छ त्यो खबरले ।

धनबहादुर बोल्छ– 'पाँपाँचजना भल्टाङ भुल्टुङ नानीहरु छाडेर पोइल गएको पाप लागेको हो, पञ्चेनीलाई त ।'

बाह्रगुरु थप्छ– 'कलियुग भन्छन् पापको फल त यसै जुनीमा भोग्नु पर्दोरहेछ... लौ हेरौं त ? कमाउन परदेश गएको लोग्ने र बालक नानीहरुलाई छाडेर गएको पञ्चेनी र बुद्धको मुर्ति भत्काउने तालेवानलाई ता'तात्तै पाप लागेको... ।'

'हो है... हो... पक्कै ।' सबैको समर्थन जुट्छ, जर्ज डब्लु बुसलाई जस्तो ।

'तर कसरी पड्किएछ स्टोभ ? यो दाइजो नल्याउँने बुहारीहरुमाथि घट्ने दाइजो लोभिहरुको घटना प्रवृत्तिसँग मिलेन र ?' बीरबहादुर शङ्का प्रकट गर्छ ।

'हुन पनि सक्छ है ! दुईचारदिन मनोरञ्जन गर्न लगेको थियो होला पाटेले, रहर पुगेपछि जलाएर मार्‍यो । अनि स्टोभ पड्कियो भनिदियो– खेल खत्तम... ।' धनबहादुर सही ठोक्छ ।

'ठीकै पर्‍यो, पाटेले लग्यो भनेर आफ्नो पनि जात नेवार नै भयो भनेर खुबै चढेकी थिई डुम्म्रेनी... ।' शोले कुरालाई झुसी पार्छ ।

बाह्रगुरु प्रसङ्गलाई रोचक पार्छ–'पञ्चेनी जलेर अस्पताल पुगेकै दिन

पञ्चे पनि अरबबाट आइपुगेछ । छिमेकले उसको स्वास्नी पोइला गएको भन्दा जलेर अस्पताल लगेको खबर पहिला सुनाइदिएछन र दौडेर अस्पताल पुग्दा त जारसँग पो जम्काभेट भएछ । पञ्चेनीको दुईटा लोग्ने देखेर उसलाई उपचार गर्ने नर्सहरुपो झण्डै फेन्ट खाएछन्… ।'

हाँसोको फोहोरा छुट्छ– गलल ।

यसपटक प्रसङ्ग मोडिन्छ । बिबीचमा विद्युतीय तरङ्गमा अवरोध उत्पन्न भएको रेडियोझैँ आपुङ्गी बोलेको आवाज मुछिन्छ… खुर फाल्यौं खुर ? …पानी ल्याउ ल्याउँ …पखाल्नु पर्छ …खुकुरी र ब्लेड तयार छ ? हतार नगरी राम्रो बनाउनु पर्छ …पानी खन्याऊ …लु अपरेशन गर्नु त शोले नै सिपालु छ… खुकुरी कदै लाग्नेछ… ?

यसपछि भने निक्कैबेर संवादहरुमा पूर्णविराम लाग्छ । एकोहोरो खुकुरी चलेको आवाज आइरहन्छ । बिबीचमा लबलबाउने कुकुरहरुलाई हकारेको सुनिन्छ । नत्र भने सबै तनमय हुन्छन् काममा ।

'ए शोले भाई, मुटु, कलेजो, कान, पुच्छर र लम्टाको भाग छुट्याउँ त हुमासा (पोलेको मासुको प्रसाद) चढाउनु पर्छ माछाबुमालाई (घरको पित्र/बूढी बज्यै) …अगाडिको फिला पनि निकाल है, छोरा बुहारीलाई माइती ससुराली पठाउँनु पर्नेछ… ।' यसपटक निक्कैबेरको संवादहीनताको क्रमलाई भत्काएर बीरबहादुरकी श्रीमतीको लामो आदेश आउँछ ।

'तुलो ल्याऊ, सिकार जाच्दै पनि गर्नु पर्छ ।' …वीरवहादुको आवाजसँगै तुलो पनि बज्छ ।

'राम… राम… दुन… दुन… तीन… ।' सबै मासु जोख्नमा व्यस्त हुन्छन् । 'कति धार्नी भयो ?' तीखो नारी आवाज बीरबहादुरकी श्रीमतीको ।

'पैतिस धार्नी भयो नाना (दिदी) ।' शोलेको उत्तर ।

'लू, तीन धार्नी छुट्याऊ भाइ, भुटुवा लगाउनु पर्छ …पहिले बोसो बोसो काट है, खानु पर्छ …मज्जाले भुट्नु पर्छ… ए नेप्टिमा नाना…आगो फुक, भाँडा बसाऊँ… ।' यताउति भित्रबाहिर चुरिफुरी छ बीरवहादुरकी श्रीमतीको ।

'बत्तीस भाग हाल्ने हैन भेना ? कति भाग भेजा लाग्यो… ?' शोले सोध्छ ।

'खै कुन्नी, चिम्सिनाम्पालाई सोध्नुपर्छ… ।' दुईजनाको संवादको नेपथ्यमा वीरबहादुरकी श्रीमतीको आवाज आइरहेछ–'बस, भाइ वस सिकार तयार हुनै लाग्यौं… ए बुहारी, मामैलाई पिरा दे है… नेप्टिम्मा नान, मासु मज्जाले भुट है, खुर्सानी हालेर… ए कान्छी, दोकान जाऊ जाऊ ।'

'लौ सिकार तयार भयो …भाग थाप्नु ।' अहिलेसम्म काममा तन्मय रहेकाहरूको आवाजमा खैलाबैला सुरु हुन्छ । सानो-सानो मासु पसलकै हल्ला जन्मिन्छ । 'बाह्रगुरु लेख्नुहोला …को हो त्यो …कति लाने ? …बिसौली भाग फोर्नु पर्‍यो… दाजै सघाउनुहोस् है… चिम्सीनाम्पा कता गयो ? …खोई

बाम्म्रङ्गे ? ...भाँडा ल्याएनौ ? ...खोइ प्लाष्टिक ? ...अहा, चुहिन्छ... चुहिन्छ... ।'

हल्ला खल्ला एकैचोटी बढेर जान्छ र विस्तारै पातलिन्छ । फेरि आर्कोचोटि चुरिफुरि बढ्छ बीरबहादुरकी श्रीमतीको... 'ए भाइ, बाह्न दाजै... लु बस्नुहोस्... आराम गर्नुहोस् ...अब खानु पर्छ ...ए सढिनी ...सोल्टीन ...बाह्ननी बैनी... ठूली... ए चालिसनी दिदी... लु आउनुहोस्, बस्नु पर्छ... ए नेप्टिम्मा नाना, भुटुवा तयारी बनाउ ...कान्छी... ए, बुहारी खाने पिउने तयारी छ ? ...बाँड्न सुरु गर..., मासु राम्रो भुटियो के ? ...नुन मसला कस्तो भयो ? ...लु सुरु... थपी थपी खानु पर्छ है... !

बल्ल छ्यांग उज्यालो खसेको छ भूइमा । अब त झन् मरेकाटे फर्किने वाला छैन लछुमन परिवारको निद्रा । तल्ला घर बिग्रेको रेडियो जस्तो एकोहोरो बोलिरहने बीरबहादुरकी श्रीमतीको संवादले लुछीलुछी लगिदिएको छ मनप्राण लछुमनको परिवारको ।

'आपा, (पिता/बाबु) तल्लो घरमा सुङ्गुर काटेछ हगि... ! ...अति भएपछि नसप्रेको आवाजमा लछुमनको छोरो ओढेको तन्ना भित्रबाटै बोल्छ ।

'चुप लाग... नकरा ।' ओच्छ्यानको पल्लो छेउबाट हकारेको हो वा रोएको छुट्याउनै नसकिने आमाको फितलो आवाज आउँछ । ओछ्यानको वल्लो छेउमा लछुमनको पनि त्यही हविगत छ । अस्ति नै भैसीको एक विसौली सिकारको पैसा तिर्न नसकेर, प्रोटीन र क्यालोरीको अभावमा कुपोषण ग्रस्त । त्यही माथि मनुष्यको जात मंस देखे पछि हंसको दुहाई । मासुको पीडामा आँशु चुहाउनु पर्दा कुन आमाबाबु चित्त रहला ।

दुःखलाई उच्छ्वासमा मुछेर फ्याक्न नपाउँदै छोराछोरीको संयुक्त आवाजले त्यो मक्किन लागेको छाप्रो एकविहानै भत्केला झैं हुन्छ... 'अप्पा ! आज हामी मासु नखानु... ?'

यसै गरी कुनै न कुनै बहानामा यो छाप्रो भित्र दुःखले रन्को छुटाइरहन्छ ।

ભભ

## १९९/ कार्की किचेन गौशाला (०७५. ९. ३०. २)

नराश : (मेनु दिँदै) धमला जी, तपाईं के खाने ? राज्नुहोस् ।

चेतनाथ धमला : यहाँ के के पाइन्छ होला... ।

नराश : यो रेष्ट्राँ/बार हो, यहाँ खाने पिउने सबै चीज पाइन्छ ।

चेतनाथ धमला : मलाई त ग्यास्टिक छ... जिरो पिरो चिल्लो केही नभएको खाने कुरा के छ साहूजी !

मदनकुमार कार्की : त्यस्तो जिरो पिरो चिल्लो केही नभएको खाने कुरा त के हुन्छ र हाटेलमा ? (संझिदै) एः पिरो चिल्लो केही नभएको त बिहानको बासी भातमात्र छ ।

चेतनाथ धमला : ट्वाँ ऽऽऽ ।

ભભ

# पुरस्कार

डा. राजेन्द्र विमल
जनकपुर धाम

बुद्धकालीन शैलीलाई आधार बनाइ मैले लेख्न थालेको उपन्यास आधी मात्र सिद्ध्याएको छु । दिन रात, एक छिन मोबाइलको आवाज रोकिएको छैन । बजिरहेछ निरन्तर । बज्न देऊ । दिक्क लागि सक्यो, अब त । जुन बेलादेखि यस वर्षको जय-श्री पुरस्कार मलाई प्रधान गर्ने घोषणा भएको छ, बधाईको ओइरो छ । कति हाँस्नु, कतिलाई धन्यावाद दिनु ! तर, यो बधाई नआउँदा पनि खल्लो लाग्छ र झन् रिस उठ्छ– यति महान् पुरस्कारलाई पनि शुभच्छुकहरूले महत्व दिएनन् । मुर्दाहरू । मलाई लाग्छ संसारभरि आज मेरै चर्चा हुनुपर्छ । आखिर सानो पुरस्कार होइन यो । साहित्यको सर्वश्रेष्ठ पुरस्कार– दुई लाखको पुरस्कार । एक-एक बधाईमा मलाई एक-एक बोतल रमको नशा चढ्छ । आज सात दिनदेखि यो नशा उत्रेको छैन । अलिक उत्रिन लाग्यो कि एउटा आउँछ र मेरो तारिफ गरेर एक गिलास ख्वाएर जान्छ । म मातिन्छु । सम्पूर्ण संसार यस पुरस्कारको खुशीमा मात्तिएको देख्छु ।

म निम्नमध्यवित्तीय परिवारको एउटा साधारण मान्छे । जीवनमा कहिल्यै दुई लाख रुपैयाँ एकै पटक हात परेन । हुलाकको सुब्बाको हैसियत नै के हुन्छ र !

जुन दिनदेखि मैले कवितामा तुकबन्दी गर्न थालेँ, मलाई सपनामा पनि लागेको थिएन यस खेलले मलाई एकदिन यत्ति महान् बनाइदिन्छ । मेरो लागि यो एउटा आनन्ददायक खेल नै थियो । शब्दहरूको चयन गर्दा, अनुप्रास मिलाउँदा, अरूलाई सुनाएपछि वाहवाही पाउँदा, पत्रिकामा छापिँदा मलाई जुन आनन्द प्राप्त हुन्थ्यो, त्यो अवर्णनीय थियो । वाहवाही भन्दा ठूलो पुरस्कार एउटा कवि वा लेखकको लागि केही हुन सक्तो रहेनछ । म त्यही पुरस्कार पाएर मस्त रहन्थे । अहिले यो विजय-श्री पुरस्कारले त मलाई बौलाहै तुल्याइदिएको छ । मलाई तेनजिङले सगरमाथा टेकेको अनुभूति हुँदैछ । नेपालमा कुनै पनि पद पाएर म यति खुशी हुने थिइन, जति खुशी म यो पुरस्कार पाएर भएको छु ।

अब परिवारमा पुरस्कार ग्रहण गर्न जाने दिनको तयारी सुरु भयो । श्रीमतीले भनिन्– यति महान् पुरस्कार पनि यो थोत्रो सुरुवाल, कुर्ता र टोपी लगाएर जाने हो ? आफ्नो इज्जत नभए पनि पुरस्कारको इज्जत त राख्नु पर्छ नि ! आखिर दुई लाख त आइहाल्छ । पसलेहरूले पनि अब उधारो नदिने होइन क्यार ! कान्तिपुरमा पुरस्कार पाउने खबर त पाएकै होलान् । अब तै तै एउटा नयाँ सुट, नयाँ कमीज, नयाँ टाई र नयाँ जुत्ता मोजा किनिहाल्नुहोस् ।

सुरुमा मलाई चित्त बुझेन– कोट लाए पनि मै जुजुमान, नलाए पन मै जुजुमान । गांधीजीले भनेका छन्– सादा जीवन उच्च विचार । सूटले होइन, प्रतिभाले पो मलाई महान् बनाएको हो । तर बूढीले दिनरात कचकच

गर्न थालेपछि, मेरो मनले पनि उनको कुरा खान थाल्यो । लौ त लौ, भनेर मैले पनि रेमण्डको कपडा किनेर सूट सिलाएँ, कमीज सिलाएँ, टाई किनें जुत्ता मोजा किनें । कुल खर्च भयो रु.बीस हजार । समारोहमा यसरी ठाँट्टिएर जाँदा सानै अर्को भयो । गजबको आत्मविश्वास जाग्यो । भाषणमा आफसे आफ गहकिला कुराहरू निस्किए । अब कुरा गहकिला थिए कि जे भने पनि सूट-टाइको प्रभावले गर्दा श्रोताले गहकिला माने, कुन्नि ! जे भए पनि हरफै पिच्छे तालीको गडगडाहटले धरहरा नै हल्लिरह्यो । नेपालका प्राय सबै पत्र पत्रिकाहरू मेरै विभिन्न मुद्राका तस्विरहरूले भरिएका थिए । विभिन्न टिभी च्यानलका प्रतिनिधिहरूले मसित प्रश्न गरे–'पुरस्कारमा यति ठूलो रकम पाउनु भएको छ, यसको उपयोग कसरी गर्नु हुन्छ ?'

दानवीर कर्णको गम्भीर मुस्कान सम्झँदै म मुस्कुराएँ– 'नेपाली बाङ्मयको सम्बर्द्धनमा लगाउँछु ।' मनभित्र यो सकल्प त दृढ भैसकेको थियो । म छुचो होइन । दानशीलता, त्याग, धैर्य, साधना, मानवीयता जस्ता गुणहरू त म संस्कारमै लिएर आएको छु । जतिसुकै अभावग्रस्त जीवन रहेपनि, मभित्र यो र कम व्यक्तिगत स्वार्थसिद्धिमा लगाउने क्षुद्रता त किमार्थ थिएन ।

अग्रजहरूको आशीष र शुभेच्छुक समकालीन तथा कनिष्ठहरूको शुभकामनाको वर्षाले आत्मा निथ्रुक्क भिजेको थियो । म ईश्वर र संसारप्रति ऋणी थिएँ । म अलौकिक आनन्दातिरकेले चञ्चल गति, उत्फुल्ल हृदय र उदात्त मन लिएर घर फर्किएँ ।

साँच्चै, त्यस दिन मभित्र कुनै व्यक्ति वा सृष्टिको कुनै प्राणीप्रति मेरो कुनै गुनासो थिएन । म पूर्णतया कुण्ठा मुक्त थिएँ । मभित्र सकारात्मक भाव तथा दिव्य तृप्तिको अमृतधारा निरन्तर बगिरहेको थियो । दैलोभित्र खुट्टा मात्रै के टेकेको थिएँ, साथीहरू बगालका बगाल आउन थाले । उनीहरूले एकै स्वरमा एउटा स्यानो पार्टीको आयोजना गर्ने प्रस्ताव गरे । नाईं भन्न सकिनँ । नारायणज्यूलाई यो जिम्मा दिइयो । पार्क भिलेजमा भव्य आयो जना भयो । लगभग एकसय साहित्यकार मित्रहरूलाई आमन्त्रित गरियो । एक लाखको बिल आउँदा मुटुभित्र ठूलो पहिरो गयो, तर बाहिर बाहिर मुस्कुराइरहनु पर्ने बाध्यता भयो ।

काठमाडौंबाट जनकपुर आएँ– हवाइजहाजमा । श्रीमती ठुस्स परे की थिइन्– यत्रो ठूलो पुरस्कार पाएर पनि उनलाई केही नकिनिदिएकोमा । जेठो छोरो बल्लतल्ल दाँतको डाक्टर बन्न सकेको भए पनि उसको क्लिनिक थिएन । एउटा डेन्टल चियर किनिदिन्छु र अलिकति आर्थिक सहयोग दिन्छु भन्ने कत्रो धोको थियो । कान्छोले केही बोलेन भन्दैमा उसको केही हक नलाग्ने होइन क्यारे । दसैं लागिसकेको थियो, भाइहरू बुहारीहरू, भतिजा-भतिजी र नाती नातिनाहरू सबैका आ-आफ्ना अपेक्षा थिए । भगवान् र भागवती कै कृपाले यत्रो ठूलो सम्मान पाएको हुँदा यस पालिको दशैमा सत्य नारायणको पूजा लगाउने र दश दिनसम्म रुद्री-चण्डीका सम्पुट पाठ गराउने रहर वा आमाको थियो ।

यसरी पुरस्कार पाएको दुई महिना पछि मैले हिसाब गरेँ ।

| | | |
|---|---|---|
| क) मयलपोस सुरुवाल र टोपी खरीद | - | १,५००।- |
| ख) आवत-जावत ट्याक्सी | - | २००।- |
| ग) साहित्यकार पार्टी | - | १,००,०००।- |
| घ) श्रीमतीको सिक्री | - | ५०,०००।- |
| ङ) छोराको क्लिनिक | - | १,००,०००।- |
| च) दशैंमा छोरालाई सूट (२ जना) | - | १६,०००।- |
| छ) दुई बुहारी, दुई साना नातिहरूका कपडा | - | ३,५००।- |
| ज) सत्यनारायण पूजा+रुद्री पाठ | - | २०,०००।- |
| झ) भतिजा+भतिजी तथा भाइबुहारीलाई उपहार | - | २५,०००।- |
| ञ) भूमिगत पार्टीलाई गोप्य चन्दा | - | १,००,०००।- |
| जम्मा खर्च | - | ४,१६,२००।- |

दुईलाख सोह्र हजार दुईसय रुपियाँ मलाई घाटा लागिसकेको थियो । पहिले नै सूट सिलाएको रकम त यसमा समावेश नै छैन । नेपाली वाङ्मयको श्रीवृद्धिका लागि प्रारम्भमा दुई लाखको गुठी निर्माण गर्ने मेरो सपना, मेरो नैतिकताले मेरो हृदय आठै याम कुटुकुटु खाँदै थियो । म अशान्त भैसकेको थिएँ । यो पुरस्कार नपाएको भए मेरो उपन्यास पूरा भैसकेको हुन्थ्यो । त्यो पनि भएन ।

टेलिफोनको घन्टी फेरि बज्यो-'हलो, हलो !'

'हजुर !'

'इट इज केट स्पिकिंग फ्रम लन्दन ।...... हजुर बधाई छ । हजुरले लेख्नु भएको यो आधी उपन्यासको मैले अंग्रेजीमा अनुवाद गरिसकेकी छु । समीक्षकहरू भन्छन्– यो आधी उपन्यास होइन, आफैंमा पूर्ण छ । 'कामन वेल्थ अवार्ड'का लागि म यो उपन्यास प्रस्तावित गर्ने भएकी छु । यो अवार्ड बीस हजार पाउण्डको छ– नेपाली रुपैयाँमा... ।

मैले बीचमै कुरा काट्दै भनेँ– 'तिम्रो मायाको लागि धन्यवाद केट । म हृदयदेखि तिम्रो आभारी छु । तर, कृपया मेरो उपन्यासलाई पुरस्कारका लागि प्रस्तावित नगरिदेऊ । पाठकले गरेको 'वाह-वाह' भन्दा ठूलो पुरस्कार मेरो लागि केही छैन । ...पुरस्कार पाएपछि मलाई मात लाग्छ । मेरो साधना खण्डित हुन्छ, मेरो रचनाधर्मिता मर्छ । मलाई लाग्न थाल्छ, अब केही लेख्नुको कुनै अर्थ छैन । ......मैले पाउन जत्ति पाइसकें । ...म यो उपन्यास पूरा गर्छु । मूल्याङ्कन मेरो जीवनमा होइन, म मरेपछि गर्नू । ...अहिले पाठकहरूलाई स्यावास भन्न देऊ, त्यो नै सर्वश्रेष्ठ पुरस्कार हो । पुरस्कार र सम्मानको लागि गुटबन्दीमा खर्च गर्नुपर्ने समय र उर्जा म साहित्यसाधनामै लगाउन चाहन्छु ...... ।'

म फोनमा भट्याउँदै थिएँ, फोन बीचमै काटिएको आवाज आउन थाल्यो... ट्वीं...ट्वीं ...ट्वीं ट्वीं ... ।

ooo

# गाली व्यवस्थापन

कृष्ण बजगाईं
ब्रसेल्स्, बेल्जियम

गालीका सबै शब्द र वाक्यांशहरू महिलालाई नै जोडेर पुरुष तथा महिला दुवैले आदिकालदेखि सरावरी प्रयोग गर्दै आएकोमा लोकतन्त्रका नारीहरूलाई त्यो मन परेन । नारीलाई होच्याउने गालीका शब्द विस्थापित गरेर पुरुषलाई होच्याउने गालीका शब्द प्रयोगमा ल्याउनु पर्छ भन्ने जोडदार जिकिर उनीहरूको थियो ।

गाली गर्नु पर्दा पुरुष जोडिएको त्यस्तो शक्तिशाली शब्द नभेट्टाएपछि उनीहरूलाई गालीका प्रवर्तक तथा शब्दकोश निर्माताप्रति खुब रिस उठ्यो । नारीहरूलाई गाली गर्नुपर्दा होस् या पुरुषलाई गाली गर्नुपर्दा होस् महिलाहरूलाई नै जोडेर प्रयोग गरिएका शब्दका छर्राहरू नै शक्तिशाली देखिए । लोकतन्त्रमा गालीजस्तो विषयमा पनि यस्तो विभेद ! महिला अधिकार वादीहरूलाई चित्त बुझेन ।

अन्ततः पुरुषलाई जोडेर गर्ने गालीका शक्तिशाली शब्द र वाक्यांश विकाश गर्न र त्यसलाई लागु गराउन भनी महिला अधिकारवादीहरूको बैठक बस्यो । बैठकले जातीय, क्षेत्रीय र धार्मिकरूपमा पूर्ण समावेशी एक कार्यदल बनायो ।

केही दिनमा त्यस कार्यदलले आफ्नो कार्य सुरु गर्‍यो । कार्यदलका अनुभवी र विज्ञहरूले विभिन्न गालीका शब्द र वाक्यांश प्रस्तावित गरे । छलफल सुरु भयो । तर ठूला ठूला दलका ठूला ठूला लेताहरूको बैठकमा जस्तै त्यो बैठकमा पनि सहमती हुन सकेन । त्यतिमात्र होइन, असहमति अब विवाद हुँदै गालीगलौजमा परिणत भयो ।

अन्ततः महिलालाई जोडेर गरिने सम्पूर्ण गालीका छर्राहरू नै एक आपसमा प्रहार गर्दै बिना निर्णय बैठक भंग भयो । त्यसपछि उनीहरूले सबै रिस, आक्रोश र कुण्ठाबाट मुक्त भएको महसुस गरे ।

ઉઉ

# दुखाइ
## रोशन थापा 'नीरव'

पहिलो निश्चित कुना अर्थात् मदिरालयमा स्वागत छ :
आजचाहिँ हिजोभन्दा बढी परेछ क्यारे !
पेट पनि भोकै, झ्वाम्मै लागिहालेछ, दुई गिलासमै ।
अलिकति चिउरा-आलुसँगै चार गिलास खाएपछि त झन् झ्वाम्मै पार्ने नै हो नि ।
शरीर तातो भएर आउँदै छ ।
दुब्लो शरीरमा तागत बढेर आएको छ ।
अनि अगिको कर्मचारीमय निरासी अनुहार सट्ट पुछ्छ ।
चारैतिर यसो दृष्टि घुमाउँछ ।
सबै जना आफ्नाआफ्नै धुनमा मदोन्मत्त देखिन्छन् ।
यस मदिरालय अर्थात् भट्टीमा सरकारी समयपछि जहिले पनि हूल देखिने गर्दछ ।
ती हूल-ग्राहकहरूमध्ये एक नियमित ग्राहक ऊ पनि हो ।
एक स्थायी सदस्य भनेजस्तै ।

ଓ

भट्टीको एक कुना :
–हैन, यसपालि त सरकार ढल्नैपर्छ ।
–किन ढल्छ मूला सरकार ?
–ढल्ने त उही जनता न हो ।
–के भो फेरि यहाँहरूलाई ?
–राजनीतिको भूत चढेको ।
–होइन, कुकुरको मूत चढेको ।
–रक्सी खाएपछि ?
–यस्तो साले राजनीति, खालि कुर्सीको हानथाप ।
–जुन भाते आए पनि उस्तै त हो नि ।
–ए साँच्चै, राजनीति भनेको के हो, हँ ?
–घरमा चामल किन्न पैसा छैन, यहाँ चामलको कुहिया झोल घिच्नचाहिँ पैसा छ, यही हो राजनीति ।
–छोड मित्रहो, यस्तो शापित देशका घृणित राजनीतिका कुरा ।
–...    ...    ...!

ଓ

भट्टीको दोस्रो कुना :
–त्यो साहुनीको पछाडिको भाग हेर् त, क्या उत्तेजक उठाइ !

–पेल्ने हो कि ?

–सक्छस् ?

–पाए त किन नसक्नु ?

–बरु त्यसको छोरीको अगाडिको भाग हेर् न !

–खुप मुछ्दो हो ।

–किन, पीठो हो र पेल्ने र मुछ्ने ?

–पीठो होइन, मीठो अर्थात् हार्मोन बढेपछि के गर्ने त ?

–आमाछोरी नै नखरमाउली, क्या 'म्याग्नेटिक बडी' छ यिनीहरूको ।

–टाँसिने हो त ?

–कसरी ?

–चुम्बकसँग फलाम टाँसिन्छ नि त ।

–तर मार्ला नि ।

–किन ?

–जे गर्न दिए पनि 'त्यो' गर्नचाहिँ दिने छैन है ।

–पैसा देखाएपछि त यस्ता चुम्बकहरू तु. ओछ्यान बन्नेछन् तु. ।

–के व्यर्थै अश्लील शब्द बोलेको...खुरुक्क रक्सी घिच् रक्सी...।

–...      ...      ...!



भट्टीको तेस्रो कुना :

–हाम्रो जीवन क्या अर्थहीन, हगि ?

–के हो फेरि यो अर्थहीन भनेको ?

–सारहीन ।

–के हो सारहीन भनेको ?

–विसङ्गतिपूर्ण ।

–के हो विसङ्गतिपूर्ण भनेको ?

–यो रक्सी जस्तो ।

–होइन, यो साले मुलुकमा रक्सी मात्र छ त खानलाई ?

–अरू के चाहिन्छ ?

–जागिर चाहिन्छ ।

–धत् मूला, कहाँ फेरि यो जाँडको रङमा जागिरको कुरा ?

–यस मुलुकमा बुझिस्, यही त एउटा कुरो छ, जुन खाएपछि देश, परिवार र पीडा मात्र होइन, आफूलाई पनि बिर्सन सकिन्छ ।

–तँचाहिँ आज यस्तो कुरो किन गर्दै छस् ?

–मेरी प्रेमिकाले मलाई छोडी मित्र ।

–के रे ?

–हो मित्र, त्यसको आज बिहे भएको छ ।

–कसरी थाहा पाइस् ?

–मलाई पनि निम्तो दिएकी छे त्यो मोरीले ।

–किन नगएको त ?

–कसरी जानु, के भनेर जानु र किन जानु ?

–...  ...  ...!

ᢀ

भट्टीको चौथो कुना :

ऊ एक्लै सबैका संवादहरू सुनिरहेको छ ।

चासो केही नलिई ।

आफ्नै सोचाइमा ऊ झुमिरहेको छ ।

गिलास । मदिरा । रमरम मथिङ्गल ।

यति हो आजका लागि बिर्सिने पदार्थहरू ।

यसैले उसलाई पीर छैन आफू कार्यरत कार्यालयको, आफूमाथिका तह-पदस्थहरूको र चासो छैन घरको, परिवारको ।

घर छ । घरमा स्वास्नी छिन् । छोराछोरीहरू छन् । जीवन जसोतसो चलिरहेकै छ । सामान्य नागरिकको जीवनसरि ।

कहिलेकाहीँ सोच्ता । आफ्नी स्वास्नीका बारे सोच्ता उसलाई अचेल लाग्न थालेको छ; स्वास्नी शब्दमा जस्तो जति गरुङ्ग्याइ छ यथार्थमा उसकी स्वास्नीमा चाहिँ पहिलाको जस्तो कुनै मादकता छैन, कसिलोपना छैन, खालि खुकुला, झोल्लिएका अवयव र उत्साहहीन भिँजापनहरू मात्र छन्, गुनासा अनि झर्काइहरू छन्...थुक्क साले पुरुषीय जीवन...आनन्द र सानै भए पनि उष्णताको तातोपनाको लागि कति कुण्ठित हुने...थुक्क...। थुक्छ र सोच्छ र एक घुट्को मदिराको सिप घुट्क्याउँछ । साँच्चै बरु यही रक्सीमा छन् स्वादहरू, मादकताहरू र अथाह आनन्दताका प्राप्तिहरू ।

ऊ अब यति बेला पूरै मातिसकेको छ ।

फेरि स्वाट्ट पार्छ ।

झुम्छ ।

तिरमिर दृष्टि यसो घुमाउँछ ।

अनि उठ्छ ।

काउन्टरमा लरबरिँदै पुग्छ र पैसा तिर्छ ।

सूप चपाउँछ र बाहिरिन्छ ।

ᢀ

पाँचौं अथाह कुना अर्थात् बाहिर चिसो संसार यथावत् छ :

बाहिर पुगेर एकफेर लरबरिएरै अड्छ ।

अनि यसो दृष्टि घुमाउँछ ।

अँध्यारो भइसकेको रहेछ ।

अलिअलि जाडाको अनुभूति पनि फैलिएको छ ।

अगि छिर्दा चार मात्र बजेको थियो ।

अहिले आठ बजिसकेको छ ।

ऊ हल्लिएर अगाडि बढ्छ ।

शरीर मातले तातै छ ।

'पिउँदापिउँदै म...' कुनचाहिँ ट्वाँटिस गायकको हो, यो गीत गाएर सुसेल्दै हिँडिरहेको छ ऊ ।

बाटो शून्यप्राय भइसकेको छ ।

ऊ बाटाको परिवेश मुटुमा नलिएरै हिँडिरहेको छ ।

हिँड्दाहिँड्दै बाटाको एक गल्लीभित्र पसेपछि उसलाई लघुशङ्काले बाउँठिने गरी च्याप्छ ।

टक्क अडेर दायाँबायाँ यसो हेर्छ ।

कतै कुनै घरका झ्यालबाट कसैले चियाएको त छैन ?

मुटुले सोध्छ ।

छैन ।

आँखाले भन्छ ।

घरहरू मौन देखिन्छन्, मौन नै भइसकेका छन् ।

बत्ती पिलपिलाउँदो देखिन्छ ।

लघुशङ्काको खोलो बगाएपछि आफ्नो प्यान्टको जिप्पर पनि लगाउनु आफ्नो पछाडि एक नारीस्वर उसले सुन्छ ।

–सुन्नुहोस् त !

ऊ झस्किन्छ र झस्किएरै पछाडि फर्केर हेर्न पुग्छ ।

फर्कंदा उसले देख्छ; एक गोरी, राम्री युवती उसका सामु उभिएकी छिन् ।

झसक्क एउटा नजानिँदो शङ्का उसभित्र पस्छ, कतै यी किचकन्नी हुन् कि...!

यस युगमा त किचकन्नीको भन्दा पुरुषीय आसक्तिको उन्माद बढी हुने गर्दछ । मुलुकमा यसका थुप्रै उदाहरणहरू देखिँदै छन् । कुनचाहिँ 'मल्ल राजा'ले हो, उहिल्यै नै यसको प्रमाणित गरिदिइसकेका छन् भने अब अहिले के डराउनु ?

–भन्नोस् ।

–तपाईंसँग चुरोट होला ?

–चुरोट छैन, खैनी छ ।

–के काम ?

–किन ?

–जाडो लागिरहेछ ।

–खुरुक्क घर जानोस् न त ।

–तपाईं लाने हो ?

–कहाँ ?

–तपाईंको घर, कोठामा ।

–किन ?

–किन नि, शरीर तातो पार्न ।

–तर...!

–'नारीदिवस'का दिन भए सित्तै जाने म, आज 'प्रजातन्त्र दिवस' भएकाले दुई सय भए पुग्छ ।

–केको ?

–मेरो यो सुन्दर शरीरको ।

–तर मसँग पचास रुपियाँ मात्र छ ।

–उसो भए यहीँ गर्नोस्, पुग्छ ।

–कहाँ ?

–उः त्यो कुनामा; अँध्यारो पनि छ, जाऔँ ।

–... ... ...!

ꙮ

छैटौँ खाडल कुना अर्थात् शारीरिक क्षणिक उष्णता :

युवतीले उसलाई तानेर अँध्यारो कुनामा लग्छिन् ।

त्यहाँ अँध्यारो कुनामा केही झ्याङ पनि छन् ।

उनीहरू त्यही झ्याङमा पस्छन् ।

युवतीले उसको आवश्यकीय कार्योचित वस्त्रका उद्धत भागहरू खोलिदिन्छिन् ।

ऊ मौन लडलडिँदो खुट्टामा तातिँदो बोध लिई उभि नै रहन्छ ।

रक्सीको मात घटेर शारीरिक तापक्रम बढ्न थाल्छ ।

युवतीलाई उसले बेसरी अँठ्याउँछ ।

युवतीले 'आउच्च' मात्र बोल्छिन् ।

त्यसपछि दुवैको शरीर एक हुन पुग्छ ।

त्यहाँ केही छिनका लागि सानोतिनो उफान उफ्रिएको भान हुन्छ ।

अनि झ्याङका अबोध मुन्टाहरू कुल्चिइन्छन् ।

उपेक्षित ढङ्गमा मिल्काइएका काँचहरू फुटेको ध्वनि उत्पन्न हुन्छ ।

उनीहरूको क्रियाशील टँसाइमा केही मादकयुक्त कऱ्याककुरुक स्वर उब्जन्छ ।

ती सबै ध्वनि र कार्यको सिद्धिपछि अर्थात् केही समयपछि ती दुवै छुट्टिन्छन् ।

लुगालाई यथावत् मिलान गर्छन् ।

मिलान गरेपछि दुवै उज्यालो भागमा आउँछन् ।

उसले युवतीलाई पचास रुपियाँ दिन्छ ।

युवतीले लिएर मुसुक्क शरीरको बजारवादलाई मुस्कानका साथ सटही गर्छिन् ।

उसको अझै नसेलाएको शरीरमा अरू मातको सञ्चरण हुन पुग्छ ।

आफूलाई फेरि नियन्त्रण गर्न नसकी युवतीलाई झम्टेर आफ्नो बाहुमा च्याप्छ र मातलाग्दो स्वरमा बरबराउन पुग्छ ।

–आइ लभ यु डार्लिङ ।

–उस्...!

युवतीले यति बोलेर उसलाई घचेटिदिन्छिन् ।

ऊ मात र कामको स्वरमा बरबरिन्छ ।

–म तिमीलाई सधैँ यसरी लभ गर्न चाहन्छु ।

–हा...हा...हा...यस्तो 'मु...' लभ त जीवनमा कति गरिएको छ कति...।

युवती पहिला हाँसेर पछि आफ्नो वास्तविक वाक्य फकालेर उसको कुनै चासो नराखी त्यो गल्लीको लामो डोरी जस्तो अँध्यारोमा बिलाउँदै जान्छिन् ।

ऊ एकछिन निरर्थक गाडिएको खम्बा जस्तै त्यसै उभिएर हेरिरहन्छ ।

ൻ

सातौँ घरायसी कुना अर्थात् अन्ततः गुँड फर्केपछि :

केही समयपछि आफू एक्लो हुनुको होसले सम्झाएपछि ऊ झस्किन्छ र तातेको शरीर बोकेर घर फर्किन्छ ।

घर पुग्छ ।

ढोका ढकढक्याउँछ ।

ढोका खोलिन्छ ।

ढोका खोलिएपछि देखिन्छ, स्वास्नी उभिएकी छिन् ।

दुब्ली-पातली स्वास्नी, असह्य रोगले वा मानसिक औडाहाले ग्रस्त भएकी जस्तो देखिन्छिन् ।

ऊ केही नबोली भित्र छिर्छ र मौन भएरै पलङमा बस्छ ।

छोराछोरी सुतिसकेका छन् ।

ऊ मौन कसैलाई नहेरी जुत्ता फुकाल्छ ।

जुत्ता फुकालेपछि मोजा फुकालेर दुवै मोजालाई डल्लो पारेर कोठाको कुनातिर फाल्छ ।

त्यसो गरेपछि उसको दृष्टि एकफेर स्वास्नीतिर फर्किन्छ ।

ऊ झस्किन्छ ।

मुटु ढक्क फुल्छ ।

स्वास्नीले उसलाई नै एकटक हेरिरहेकी छिन् ।

–के हेरिरहेकी ?

–तपाईं...!

–के...?

–खुट्टामा रगत...!

–हँ...!

उसले झस्केर हेर्छ ।

पिँडौलाबाट रगत बगेको रहेछ ।

रगत देखेपछि झ्वाट्ट केही घोचिएको अनुभव गर्छ ।

अब पो दुखेर आउँछ घाउ ।

काँचले काटेको होला त्यस युद्धमैदानमा युद्ध गर्दा, ऊ सोच्छ ।

काटिएको घाउ त्यसपछि झन् दुख्तै आउन थाल्छ ।

खुट्टा, हातभरि फोकैफोका परपराएर दुख्तै पोलेर आउँछ ।

सिस्नाको झाडीमा शारीरिक युद्ध अर्थात् त्यस्तो काम गरिएछ र यसरी परपराएर पोलको, ऊ फेरि सोच्छ ।

त्यसपछि त झन्झन् घाउ र फोकाहरू दुख्तै आउँछन् ।

बेसरी दुख्छ, सहनै नसक्ने गरी ।

त्यस दुखाइमा ती सम्पूर्ण उन्माद, मात, बल र आसक्ति कता हराउँछ कता ।

ऊ छटपटिएर उफ्रन थाल्छ ।

उसकी स्वास्नीचाहिँ केही नबुझेर उसलाई पहिला त हेरिरहन्छिन् ।

अनि त्यसपछि आतिँदै सोध्न थाल्छिन् ।

–के भो तपाईंलाई ?

–खै, के भो के ?

–कहाँ भएको यस्तो ?

–त्यो गल्लीमा...।

–ए, पक्कै भूत लागेछ तपाईंलाई । पर्खनोस् म चामल लेराएर मन्छाइदिन्छु ।

–पर्दैन, व्यर्थमा चामलको नाश...।

–भूत लागेजस्तो छ, कि नाग लागेको हो...!

–केही पनि लागेको होइन, मान्छे लाग्ने युगमा कहाँ भूत र नाग लाग्ने भनेको...डिटोल लेरा डिटोल...।

–हुँदैन, यो त मन्छाउनैपर्छ....।

–नकरा साली, बढ्ता कराउँछेस्...!

–...     ...     ...!

ऊ त्यसपछि पनि आर्तले कराइरहन्छ ।

स्वास्नीचाहिँ एकटक भएर आफ्नो लोग्नेतिर हेरिरहन्छिन् ।

त्यो दुखाइ चाँडै बिसेक होला जस्तो छैन ।



# ट्याक्सी ड्राइभर जुजुमान

सूर्य सुवेदी
ज्ञानेश्वर

जुजुमानले चलाएको ट्याक्सीमा तीनजना पहिले नै कतै देखेजस्ता राम्राराम्रा हृष्टपुष्ट अनुहार भएका खैरो रङको कोट सेतो कमेज, कालो पेन्ट र कालै जुत्ता लगाएका तीस वर्षभन्दा माथिका जस्ता देखिने मानिसले बालाजुबाट पाटन ‘जाउलाखेल हिँड भाइ’ भनेर सिटमा बस्छन् । जुजुमानले अनुहार छोप्ने खालको क्याप लगाएको हुन्छ । ती एउटै रङ्को सफा र राम्रा ड्रेस लाएर हिँड्ने मानिसले त्यो ड्राइभर को हो भनेर चिन्ने प्रयत्न पनि गर्दैनन् । सामान्यत ट्याक्सी वाला जुजुमानलाई दुईटा कुराको मात्रै फिक्री हुन्छ । ट्याक्सीले बाटो हिँड्ने बटुवालाई ठक्कर नदेओस् र ट्याक्सीमा चढेको यात्रु जँड्याहा र झगडालु खालको नहोस्, अनि निश्चित ठाउँमा पुगेपछि किचकिच नगरिकन खुरुक्क भाडा तिरोस् । तर त्यस दिन ट्याक्सी चढेका ती तीनैजना मानिसलाई केही बेर ट्याक्सी गुडाएपछि तिनीहरूका कुरा गराई, हँसाइ र आवाजहरुलाई जुजुमानले राम्रोसँग चिन्यो ।

माओवादी पार्टीमा लागेका केही ट्याक्सी चालक ड्राइभर साथीभाईको संगतले जुजुमानले पनि एकदिन साहुको ग्यारेजमा भाडाको ट्याक्सी छोडेर साहुलाई एक महिनाको ट्याक्सीको भाडा नबुझाइकन माओवादी विद्रोहमा लागेको थियो । ट्याक्सीको साँचो पनि साहुको ट्याक्सीमा नै छोडेर जुजुमान आन्दोलनमा होमिएको थियो । ती ट्याक्सी चढ्ने तीनजना मध्येको रामसींह ठकुरी माओवादी पार्टीको ललितपुर जिल्ला कमाण्डर थियो । जुजुमान, भक्तमान, वीरबहादुर, गोले दमाई र अरुअरु पनि ड्राइभर पेशा छोडेर माओवादी आन्दोलनमा लागेका आन्दोलनकारीहरुले चन्दा उठाएर, लुटेर र कमाएर ल्याएका रुपियाँ कमरेड रामसींह ठकुरीलाई नै बुझाउनु पर्दथ्यो । किनभने ऊ माओवादी पार्टीको जिल्ला कमाण्डर थियो । माओवादी आन्दोलनमा पार्टीको खास सुराकीले नाम र ठेगाना दिएको मानिसबाट चन्दा असुली गर्नु, नगद तथा जिन्सी असुली गर्नु र पार्टीको वा कमाण्डरको खास निर्देशन भए त्यस्ता व्यक्तिलाई अपहरण गर्नु र अङ्गभङ्ग हुने गरी पिटेर ठाउँ कुठाउँ फ्याँकिदिनुसम्म पनि हुन्थ्यो । त्यस्तो काममा जुजुमान पनि संलग्न थियो ।

२०६३ साल बैशाखमा आन्दोलन सकियो । जुजुमानका आन्दोलनका बेला भेट भएका केही खास कमरेडहरु आन्दोलन सकिएपछि देखिन छोडे । कोही कतै गए कोही कतै गए । एक दुईजना त मन्त्री भएर टेलिभिजनको पर्दामा पनि देखिन थाले । जनयुद्धमा सम्पूर्ण क्रान्ति हुन्छ र सबै सरकार तथा मुलुकको सबै सम्पत्ति हाम्रो पार्टीको हुन्छ र युद्धमा होमिएका कमरेडहरुले केही न केही पेशा वा व्यवसाय अवश्य पाउनेछन् भनेर लडाईका मोर्चामा गुरिल्लाहरुलाई उक्साई उक्साई पठाउने कमरेड चट्टान नै सञ्चारमन्त्री भई

सकेछन् । उनको रेडियोले भन्ने नाम हरिप्रसाद शर्मा रहेछ । अर्को कमरेड मकर सांसद भएछ । तीनजना मध्येको अलि पातलो र बोल्न सिपालु चाहीँ कमरेड भऱ्याङ रहेछ। पाँच छ महिनापछि मन्त्रीमण्डल पुर्नगठन हुँदा कमरेड चट्टान उर्फ हरिप्रसाद शर्मा विघटनमा परिसकेछ ।

कमरेड चट्टानबाट हरिप्रसाद भइसकेको पूर्वमन्त्रीलाई राम्रो गाडी चढ्ने, राम्रो रक्सी खाने, महङ्गामहङ्गा रेष्टुराँ र रिसोर्ट घुम्ने र साथमा राम्रा राम्रा तरुनी कमरेडहरु घुमाउने लत पनि लागिसकेको रहेछ। तर कमरेडलाई गाडी हाँक्न भने नआउने रहेछ। पुराना कमरेडहरु एउटा राम्रो रेष्टुराँमा बसेर दुःखसुखका कुरा गर्न भनेर गोदावरी रिसोर्टमा जाने कमरेडहरुको योजना रहेछ। जाउलाखेलबाट अर्को ट्याक्सीमा गोदावरी रिसोर्ट जाने कमरेडहरुको विचार रहेछ । ट्याक्सी बदल्न ओर्लिएका कमरेडहरु जाउलाखेलको ओम रेष्टुराँमा केही बेर कफी खाएर पुनः सडकमा ट्याक्सी कुरेर बसेका कमरेडहरुलाई उभिएको जुजुमानले देख्यो । बिहान टाउको छोप्ने क्याप र कालो ज्याकेट लगाएको जुजुमानले दिउँसोको गर्मीले गर्दा क्याप र कालो ज्याकेट फुकालेको थियो । कमरेडहरुले जुजुमान र पहिले चढेको ट्याक्सी चिनेनन् । गोदावरी रिसोर्ट जाने हो गुरुजी भनेर पुनः क. हरिप्रसाद शर्माले ट्याक्सी ड्राइभरलाई सोध्यो । खाना खान ढिलो भई सक्यो । गोदावरीबाट फिर्दा ट्याक्सी रित्तै हुन्छ। म त दोहोरो भाडा दिने भए मात्रै जाने हो भनेर जुजुमानले भनेपछि पाँचसय रुपियाँ ट्याक्सी भाडा तय भयो । जुजुमानले ट्याक्सी गोदावरी रिसोर्टको छेउमा पुऱ्यायो र कमरेडहरूले गाडी रोक्ने इसारा गरेपछि रोक्यो ।

जुजुमानले गोदावरीको सेन्ट जेभियर स्कुल छेउको साधारण होटलमा पचास रुपियाँमा सादा खाना खायो । ट्याक्सी खाना खाएको होटल छेउमै बिसाएर दुई तीन घण्टा वरिपरि त्यत्तिकै टहलिएर बस्यो । पुनः ट्याक्सी राखे कै ठाउँमा आएर दुई तीन घण्टा

आराम गऱ्यो । अनि पुनः गोदावरी रिसोर्टको छेउमा ट्याक्सी रोकेर कसैलाई कुरेर बसे झैं ट्याक्सी भित्रै बसिरह्यो ।

करिब पाँच बजेतिर कमरेडहरू रातापिरा हुँदै रिसोर्टबाट बाहिरिए । उनीहरु रक्सीका मातले चन्द्र शमशेरको हात्ती किन्ने झगडिया जस्ता भइसकेका थिए । जुजुमानलाई अर्को कमरेड टाइगरले आदेशात्मक शैलीले बालाजु लिएर हिँड्न आदेश दिए । जुजुमानले भाडा अलि बढी दिने भए मात्र त्यति टाढा जाने भन्यो। कमरेड टाइगरले एक हज्जार भाडा दिने भने। जुजुमानले ट्याक्सी गुडाए । बालाजु बगैंचा नपुग्दै कमरेड चट्टान उर्फ हरिप्रसादले ट्याक्सी रोक्ने आदेश दिए । कमरेड हरिप्रसाद त सिधै हिँड्न नसक्ने भएका रहेछन् । खुट्टै लर्बर लर्बर ।

जुजुमानलाई मन्त्री भईसकेका र अन्य सांसद कामरेडहरु बारे जान्ने उत्सुकता बढ्यो । बीचबीचमा कमरेडहरुलाई कतैकतै देख्थ्यो जुजुमान । एकदिन सामान्य अवस्थामा हिँड्दै गर्दा कमरेड चट्टानलाई अनायासै जुजुमानले

देख्यो । कमरेड चट्टान कुनै ठूलै
कमरेडकहाँ जान लागेजस्ता देखिन्थे । जुजुमानले ट्याक्सी रोक्यो । कमरेडलाई जुजुमानलाई कही देखे जस्तो लागेछ । जुजुमानले पनि अनायासै लालसलाम कमरेड भन्यो । कमरेड चट्टान उर्फ हरिप्रसादले कता हो कमरेड ? के गरिँदैछ भनेर हात मिलाए ।

माओवादी विद्रोहमा झण्डै एक वर्ष बिताएर पुलिस र सेनाको चुटाई खाएर जुजुमान झण्डै एक महिना खँजाहा भएको थियो । पुराना साहुमहाजनले शंकाको दृष्टिले हेर्ने
गरेकोले काममा बिक्नलाई निकै धौधौ भएको थियो । महँगीले चौपट्टै भएको । श्रीमतीले कम्युनिष्ट भएको जुजुमानसँग बस्न इन्कार गरेको । माया गर्ने आमाको मृत्यु भइसकेको आदि आदि कुरा जुजुमानले पूर्वमन्त्री कमरेड हरिप्रसादसँग फिराद गऱ्यो ।

तपाई कमरेडहरूले आमूल परिवर्तनको झुट्टा सपना देखाएकोले गर्दा आफू त फसियो नि कमरेड । कमरेड मन्त्री हुँदा पनि एउटा गाडी जोड्न सकिएन ? घर त राम्रै जोड्नुभएको थाहा पाएँ । तपाईहरूको पछि लाग्ने हामी मात्रै त बिचल्लीमा पऱ्यौं नि । खै कमरेड थोरै महिना मात्र मन्त्री भइयो । त्यो पनि खासै आमदानी हुने परेन ! के गर्ने ?

जुजुमानले थुप्रै साथीहरू सेना र प्रहरीबाट मारिएका, अङ्गभङ्ग भएका, स्कूल छुटेका, घर बिग्रिएका कुरा सम्झियो । अनि कमरेड चट्टानलाई सोध्यो । अब कहिले त कमरेड आमुल परिवर्तन हुने ?

कमरेड चट्टानले केही बेर घोसेमुण्टो लायो र भन्यो, कमरेड म पनि त तपाई जस्तै भुलभुलैयामा र फोस्रा नारामा परेर माओवादीका फोस्रा नारामा फुस्लिएको थिएँ नि । म स्कूलको हेडमास्टर भई सकेको मान्छे, कति कलिला विद्यार्थीलाई डुबाएको रहेछु । हाम्रा ठूला कमरेडहरू त विदेशीको इसारामा काम गर्दा रहेछन् भन्ने बल्ल त खुल्दै छ । दुवै कामरेडहरू आफ्नो विगतसँग सन्तुष्ट देखिँदैनन् । जुजुमान ट्याक्सी गुडाउँछ । कमरेड हरि प्रसादले चिउँडोमा हात राख्छन् । ट्याक्सी कता लान गुडाउँदैछ जुजुमान ? कता जाँदैछन् कमरेड चट्टान उर्फ हरिप्रसाद । अहिले हेर्दा दुवै कामरेडहरू भूतपूर्व क्रान्तिकारी जस्ता । कसैबाट उपयोग मात्रै गरिएका जस्ता ।

ᨀᨀ

## १४४/टेली वार्ता ( ०६६. कार्तिक)

धनराज गिरी : हरि दादा ! यसरी सबको आलोचना मात्र गर्दा भोलि मलामी पनि नपाइएला नि हौ !

हरि अधिकारी : के गर्नु ? नानीदेखि लाग्या बानी । ढाँट कुरा त गर्दै गर्दिन । बरु मलामी नपाए खाँचैसिति ।

ᨀᨀ

# पत्रकारितानिम्ति तयारीको मेरो वर्ष : २०१४

मदनमणि दीक्षित

पत्रकारिता सुरु गर्नु भन्दा केही महिना अघिका मेरा दिनहरु कठिन रहेका हुन् । २०१३ सालको चैत्रमा माताजी र परिवार लिएर बीरगञ्जबाट काठमाडौं बसाई सरिसकेको थिएँ । बसन्तपुरमा डेरा थियो । महिनाको ४५ रुपैयाँ भाडा तिर्नु पर्ने तर मुसाको दुला जस्ता तीनवटा कोठा । माताजी चाहिँ त्यसबेलासम्ममा झण्डै २६ वर्षदेखि अपस्मारको रोगी रहेर कुनै पनि क्षण जीवन त्याग्न तयार रहेकी र राजी पनि भइसकेकी ।

म राम्रैसित सम्झन्छु सन् १९३०को त्यो दिउँसो । माताजी जिन्सी अड्डामा खरिदार र केशर समशेर उहाँको हाकिम । उहाँ अड्डामा नै हुनुहुन्थ्यो । दिउँसो धोबीले बुझाएको लुगा दराजमा मिलाएर राख्दा, बस्याबस्यै माताजी कोठामा ढल्नु भयो र डरलाग्दो किसिमले छट्पटाउनु थाल्नु भयो । बिहे भइसकेकी ११ वर्षकी ठूली दिदी केही दिन अघि पहिलो पटक माइत बस्न विदा भएर आउनु भएको थियो । माताजीले चारै हात खुट्टा मर्काउँदै मुखबाट फिज काड्दै आँखा पल्टाएर छट्पटाएको देख्नासाथ दिदी कराउँनु भयो, म र माइली दिदी त्यही कोठामा थियौं । हामी चिच्याउँदै रुन थाल्यो र घरको सइसलाई अड्डातिर कुदाएर पठाई पिताजीलाई खबर गर्‍यौं । उहाँ आउनु भयो ।

त्यो अपस्मार (एपिलेप्सी)को अझै पनि भरपर्दो औषधि छैन । यद्यपि आजका केही ‘वन्डर ड्रग’हरु त्यस बेला रहेका भए माताजीको जीवन लम्बिने थियो होला । तर त्यसबेलाको एकमात्र औषधि डाक्टरबाले लेख्ने गर्नुभएको पोटासियम ब्रोमाड र भ्यालेरियनका ‘मिक्सर’ खुवाउने गर्‍यौं । त्यसबाट कुन्नी के लाभ भयो, तर माताश्रीलाई बारम्बार मुर्छाको आक्रमण हुनथाले । झारफुक पनि गरिए, बोझो खाए निको हुने सल्लाह कतिले दिए– चपाएरै निल्नु पर्ने । त्यस्तो गन्हाउने र तीतो टर्रो स्वादको त्यो बोझो चपाउँन माताजीको लागि असम्भव प्रायः हुँदै गएपछि पिताजीले चपाएर तयार पारी माताजीको मुखमा आफ्नै मुखले हालिदिनु पर्ने हुनथाल्यो । कसैले बोझो काटेर दुधमा पकाएर खुवाउनु भने र तर काम लागेन, नत्र नियमित खानु विर्सनु हुन्थ्यो । मुच्छाको लहर चर्को भएपछि घोडताप्रे अर्थात ब्रम्हीको पात पिंधेर खुवाउनु भने । त्यो झार मनग्गे नपाइने, बजारमा किन्न नपाइने । गोकर्णबाट ल्याउने गरेकाले पुगेन । अनि काइ परेको चिसा ठाउँमा खोजेर ब्राम्ही ल्याउने काम मेरो भागमा पर्‍यो । जहाँ तहाँ खोजेर म ल्याउने गर्थे ।

समय वित्दै गयो । भीम सम्शेरको यन्त्रणावादले हाम्रो त्यो सानो घर र परिवार माथि विपन्नता थुपार्दै लग्यो । हरेक साता माताजीको कुनै न कुनै गहना लिएर जगन्नाथ भान्दाइ इन्द्रचोकका बाँडा छेउ पुर्‍याई बेचेर पैसा ल्याउनु हुन्थ्यो । इष्ट-मित्र नाता-गोता समेत् हाम्रो घरमा आवत-जावत रोक्नु पर्ने स्थिति आयो । राज रिसाएको घरमा गएर आफूमाथि समेत ‘बोल्ने

पशुपतिनाथ'को 'तेस्रो आँखा उघ्रिने' स्थिति उत्पन्न गर्न चाहँदैन थिए । आर्थिक विपन्नतामाथि मानसिक पीडा थपिंदै गए । ममा त्यसैबेलादेखि बढको हीनताबोध निम्ति रुग्नता र शारीरिक दुर्बलता बाहेक त्यो पीडा पनि थियो । माता-पिताको त्यो सम्पूर्ण पीडामा म नै पूर्ण सहानुभूतियुक्त र मनमनै उत्तिकै सहभागी हुने गर्थे ।

माताजीको अनियन्त्रित मूर्च्छा बढ्दै जानाले पनि पिताजीलाई साहै अधिर र त्रस्त तुल्याउन थाल्यो । त्यसमाथि उहाँको प्रकृति नै हठी, क्रोधी र अत्यन्त स्वभिमानी तर साथै अबोध बालकको जस्तो थियो । परिवार भित्रको पर्यावरणमा शान्ति र सामुहिक प्रसन्नता टाढा टाढा हुँदै जान थाल्यो । माताजीले शान्ति, प्रसन्नता र स्वास्थ्यको परिवारीक पर्यावरणलाई अन्त्यसम्म पनि अनुभव गर्न पाउनु भएन । हामी प्रत्येक सदस्य विक्षुब्ध रहन थाल्यौं । सन १९४५देखि झण्डै हरेकसाता माताजी मृत्युशैया जस्तैमा पुग्नु हुन्थ्यो, म चाहिँ उहाँको डाक्टर र मेरी देवीजी उहाँको मुख्य नर्स हुँदै गयौं । पटक पटक डाक्टरले आशा त्याग गरे तर म आफ्ना होमियोप्याथिक औषधिका समेत सहायताद्वारा माताजीलाई जीवनमा अड्याउन थाले ।

सन् १९५०को अन्त्यतिर म कम्युनिष्ट राजनीतिमा सकृय भएपछि पिताजीको घृणा र वैत्यभाव झन् उग्र नै भएका थिए । त्यसैबेला माताजीको र मेरी देवीजीको यावत गहना सिद्धिएर, परिवारको आर्थिक अवस्थालाई हामीले न्यूनतममा घटाउँदा पनि मैले ससुरालीबाट आर्थिक अन्य सहायता माथि भरपर्दै जानु पर्‍यो । आफ्नो स्वतन्त्र विचार र राजनीतिमा म अडिग नै रहें, पिताजी सामु निहुरिने र हातजोर्ने काममा म असमर्थ रहें ।

त्यस्तो अवस्थामा सन १९५७ मा मैले परिवारलाई काठमाडौं ल्याएर यहाँ ट्युशन गरे र तस्वीर स्टुडियोद्वारा उपार्जन गर्ने योजना गरी सानातिना काम पनि सुरु गरे । तैपनि हाम्रा छाकहरु भोजन बेगर नै टर्ने गर्न थाले । भोजन वेगर त नभनु म,–एक मोहर सापटी मागी ३–४ पाउ आलु ल्याएर १३ जनाको परिवारको भोजन चल्थ्यो । कति छाक त त्यो पनि हुँदैनथ्यो । साथीहरुबाट त्यही एकमोहर सापटी पाउनु पनि गाह्रो हुँदैगयो । सापटी फिर्ता गर्न जानाजान विर्सन थालेर बाँकी बढ्दै गएपछि मित्रहरुबाट सापटी भन्दा सहानुभुति बढी पाउन थाले मैले ।

हाम्रो विपन्नता, भोक र माताजीको मृत्यु प्रतीक्षाका कठिन अवस्था निश्चयनै मेरो मुखमा झल्किदो हो । श्री टङ्कप्रसाद आचार्यले केही महिनाअघिमात्र प्रधानमन्त्रीको पदबाट राजिनामा गर्नु भएको थियो । उहाँ छेउ म समय समयमा जान्थे । मेरा मुखाकृतिबाट स्थिति बुझेर हो कि ' मदनबाबु कस्तो छ भाउजुलाई ? मैले केही गर्नु पर्छ कि ? सङ्कोच नमान्नुहोला मसित ।' भनी उहाँले दुई महिनामा पटक पटक सोध्नु भयो । तर 'सबै ठिक छ चिन्ता नगरौ सान्दाई ।' भन्दै मैले टारे । दुई पटक त कस्तो सम्म भयो भने आठजना केटाकटी भएको तेह्रजनाको हाम्रो परिवारले एकमोहर तीनसुकाको आलुमानै ४-५ छाक टार्नुपर्ने भयो । ती दुबै पटक परिवारको

जिदि्दले गर्दा म आचार्यज्यूको कोठामा पुगे, सहायता माग्न भनेर । दुवै पटक उहाँले नै कस्तो कुनै सहायता गर्नु पर्छ कि भनी सोध्नु पनि भयो तर दुवै पटक मनका कुरा आँखाबाट आँशु झार्न खोज्दापनि आफ्नै विरुद्ध बलमिच्याइ गरेर 'सान्दाई सबै ठिक छ, चाहियो भने भनिहाल्छु नि ।' भन्दै जवाफ दिई घर फर्किएर सबैबाट प्रातडना पाएँ । आफ्नो रोग बाहेक आफ्नो भोकबारे समेत माताजीमा ज्ञान हराउन थालिसकेको थियो ।

त्यस्तैमा २०१३ सालको नाग पञ्चमीको साँझ उहाँ वित्नु भयो । उहाँको अन्त्यष्टि गर्दा आर्यघाटमा ९२ रुपैयाँ खर्च भयो । अन्त्येष्टि सिद्धिने बेला सबै कुरा थाह पाएर भिनाजु श्री मित्रनाथ देवकोटाले आफ्नो घरबाट ल्याएर मलाई त्यति रकम सापट दिनु भएकोले आर्यघाटमा सम्मान जोगाई स-सम्मान म घर फर्किन पाएको थिएँ ।

सन् १९४७ पछि माताजीको निम्ति डाक्टर त भएकै थिए, उपचारको र घर खर्चका यावत् भार पनि मै माथि थिए । सन् १९५० पछि पिताजीले ठ्याम्मै कसिदिनु भएपछिको अवस्थाबारे भनिहालें । जिम्मा मेरो थियो, तर पुरा गर्थिन् मेरी देवीजी । आफ्नो माइतबाट ल्याएर । त्यसो गर्दा तिनले आफ्नो आत्मप्रतिष्ठालाई के कसरी जोगाइन्– आजसम्म मलाई थाहै छन् । सोधेर पनि के गर्ने ? आज नै पनि के सुखी छन् र मैले पुराना घाउमा नुन छर्किने साहस गर्नु ?

माताजीको तेह्रदिनको काजक्रिया निम्ति पितृव्यहरुबाट सहायता माग्ने र पाउने मेरो हक देखेर मैले किरियाबाटै पत्रहरु लेख्नु पर्‍यो । आफ्नो देवर जेठाजु माथि मृत्युपछि मेरी माताजीको हक स्थापित भएको रहेछ । मैले यस्तो कुरा सुनेर विस्वास नगर्ने स्थिति पनि थिएन । उहाँहरुले पनि अग्रसरता देखाउनु भयो । जेठा बाले ४० भार, माहिला बाले आधा बोरा धान, काहिँला बाले र कान्छा बाले बलरामपुरबाट ४०० र २०० भारु, ठूला कान्छा बाले २०० रुपैयाँ । साना कान्छाबामा मैले केही लेखिन । उहाँ आफै निक्कै विरामी हुनुहुन्थ्यो ।

भा.रु. ७७० लिएर ती १३ दिनको कार्य गर्ने तयारी गर्न थाल्दा केदार मणि दाजु भाउजु सातौंदिन पनि हामीलाई भेट्न आउनु भयो । उहाँहरु एकदिन विराएर आउनु हुन्थ्यो, कमल प्रकाश रोजिन्दा घाटसम्म नै सँधै जाने आउने गर्थे ।

माताजीको अवसान भएको दिन व्यवहारको माग अनुसार मैले सबै मणि घरमा गएर खबर गरेको थिएँ, तर केदार दाजु चाहिँ विर्सिएको थिएँ । उहाँसित पनि मैले सहायता मागेको थिइन, उहाँमाथि मेरी मृत आमाको हक पनि स्थापित हुँदैनथ्यो ।

किरियामा बसेको मसित आधा घण्टाजति मौकामा चर्चाहरु गरेर केदार दाजु भाउजु त्यो सातौ दिन फर्किन खोज्दै भन्नुभयो–'बाबु मदन, साहिली आमाको सबै काम गर्नु पर्छ नै । तिमी सबै गरिहाल्छौ तैपनि हामी पनि केही गरौं है । यहाँ एघार सय छ । रानी साहेबले पठाइबक्स्येको ५००,

मेरो २०० र भाउजुको २००, प्रकाश र कमलको १००-१०० । केही नठाने है ।' उहाँले आफु बसेको राडीको पत्रमुनि त्यो रुपैयाँ राखिदिनु भयो र दुवै जना जानु भयो ।

कोठामा म एक्लै भएँ, उहाँहरुले नमागेको सहायता मात्र गर्नु भएन कि मेरो आत्मसम्मानमाथि कुनै पनि दबाब नपरोस्, प्रहार नहोबोस, चोट नलागोस् भन्नेमा त्यसरी विचार गर्नु भएको थियो । म विह्वल भइँ र आँखाबाट आँशुका न्याना ढिक्का बगिरहे । दाजु भाउजु त्यसरी जानु भएपछि मेरी देवीजी र दिदी बहिनीहरु त्यस कोठामा आए । मणि खलकका सबैसित मेरो परिवारमा मेरो आर्थिक स्थितिले गर्दा साह्रै साह्रै लाज मान्थ्यो । भो कै बसेर छाक टार्नु परेकोबारे उहाँहरुमा जानकारी थियो भन्ने डरबाट त्यो अति संकोच उत्पन्न भएको थियो । तर ममा त्यस्तो संकोच रत्तिभर पनि थिएन । पैसा कमाएर उत्पन्न हुने तथा उस्तै अभिजात्यको जीवन बिताउन चाहिनेजति शैक्षिक योग्यता ममा रहँदा पनि त्यस्ता मौका उपलब्ध हुँदा हुदै पनि मैले आत्मबिग्रहलाई कायम राखेर कम्युनिष्टको जीवनमा अनिवार्य तवरमा विपन्नता र कठिनाईको बाटो खुशीराजीले आफै रोजेको थिएँ–मैले किन संकोच मान्ने ? आदि मेरा मनोभाव थिए । तथापि संकोचबाट म पूर्ण मुक्त त थिइन नै ।

'दाजु-भाउजुले त्यहाँ राडी मुन्तिर रुपैयाँ राखेर जानुभयो, हेर त ।' देवीजीलाई भने । भारु एघार सय रहेछ ! भएको सबै कुरा मैले बताएँ ।

तर केदार भाउजुले केही महिनापछि मेरो ठूलो अपमान पनि गर्नु भयो–कुनै पनि कारण नहुँदा पनि । त्यो अपमानलाई मैले बिषको कचौराझैं घुटुक्क निलेर विर्सने कोशिश गर्दैरहे तर आजसम्म पनि बिर्सन सकेको छैन । मेरो अवस्था जे जस्तो होस् तर त्यसले गर्दा मेरो अपमान गर्ने अधिकार कसैलाई थिएन ।

त्यसरी माताजीको तेह्र दिनको काम सिध्याएपछि मसित सके ५०० भारु बाँकी पनि रहे । दाजु-भाउजूको घरमा म जान थालें, कमलसित घनिष्ट हुन थालें । त्यो सातौं दिनको सहायताप्रति कृतज्ञता जनाउननै मैले पुलचोकमा उहाँहरूछेउ जाने गरेको थिएँ, तर तेस्रो पटकपछि कमलका साहित्यिक अध्ययनप्रति मेरो रुचि र प्रशंसाले मलाई त्यहाँ तान्न थाले । अनि मदन मेमोरियल हाइस्कुलमा मैले हेडमास्टरी पाएँ तर त्यो स्कुलको आन्तरिक गोलमालले गर्दा स्कुल चल्न नसकी सम्भवत: चारमहिनाको जम्मा बाह्रसय रुपैयाँ तलब लिएर तर एक दिन पनि काम गर्नु नपरी म विदा भएँ ।

ती केही महिना सुविस्तैसित बिते । पार्टीको केन्द्रिय कार्यालयमा म रोजै नै जान्थे । पार्टीको अखबार 'मशाल'को हिसाब किताब हेर्नेकाम मलाई दिइएको थियो । मुद्रण गराउने काममा बटुकचन्द्र गौतमलाई पनि म मदत गर्थे । त्यो वर्षको जेठतिरनै पार्टीको दोस्रो महाअधिवेशन फोहोरा दरवारमा सञ्चालन भइसकेको थियो । त्यस अधिवेशनमा र त्यसको तयारीको क्रममा पुष्पलाल श्रेष्ठले अत्यन्तै अस्थिर र छिटो छिटो बदलिने राजनीतिको स्थापना

गर्ने प्रकृति देखाए । शैलेन्द्र निस्किसके, मनमोहन चीनबाट छिट्टै फर्किने छैनन्, भर्सक फर्किनेनै छैनन्, शम्भुराम र तुलसीलाल असक्षम छन् । त्यसकारण पुष्पलाललाई सखापपार अनि केशरजंग रायमाझीलाई विदा गरेर आफ्नो निम्ति बाटो खोल भन्ने निजात्मक कार्यनीति डी.पि.अधिकारीको थियो । मलाई नै तिनले आफै त्यसो भनेका थिए । पुष्पलाल चाहिँ जसरी जे गरेर भएपनि, नेतृत्व प्रदान गर्नु सट्टा कार्यकर्ताको तुष्टि निम्ति उग्र राजनीतिको बाटो लिएर आफुलाई पार्टीको महासचिव बनाउने चेष्टामा कार्यरत थिए । तिनको उग्र भारत विरोध, नेपाली काँग्रेस र राजाप्रति कहिले नरम कहिले निक्के गरमका तिनका मनोभाव, निर्वाचन होस् नहोस् तर हुने हो भने सम्बिधान परिषद् निम्ति मात्र हुनुपर्छ भन्ने तिनको विचार, मनमोहन अधिकारीले राजतन्त्रलाई माने, ससस्त्र संघर्षको बाटो र गणराज्यको सिद्धान्तलाई त्यागे भन्ने तिनका विचारहरुलाई म अव्यवहारिकता, किताबका गफ र औसरवादका अभिव्यक्ति ठान्थे । शैलेन्द्र, कमर शाह, कृष्णराज वर्मा, केदार उपाध्यायहरू अर्थात् कोशी किनारदेखि गण्डकीसम्मका हामीसबै कम्युनिष्टहरूमा पुष्पलालका विचार प्रति पूर्ण अस्वीकृति थियो ।

डा.केशरजंग रायमाझीमा पनि हाम्रै जस्तो विचार रहेको हामी पाउन थाल्यौ र पुष्पलाल विरुद्धका संघर्षमा हाम्रो समर्थन रायमाझितिर जान थाल्यो । झगडा नगर्ने, सबैलाई मिलाउन खोज्ने, धैर्य रसमयमाथि जोड दिने, 'साथी हो नआत्तिऔ, सबै कुरा ठिक हुनेछ' भन्ने वाक्य पहिलो महाअधिवेशनमानै तिनको थेगो झै बारम्बार सुनेको हामीहरुले आपसमा तिनकाबारे चर्चा हुँदा 'मिष्टर एभ्रीथिग बिल वि अलराइट !' भन्ने तिनको नाउँ राखेका थियौं । रायमाझी प्रबल तर्क गर्थे, किसान नभएतापनि र काठमाडौं पाटनका ताता युवकहरुलाई मन नपरे तापनि हामीचाहिँ उत्कृष्ट हुन्थ्यौं ।

मदन मेमोरियल बन्द रहेर मैले त्यसबाट केही महिनामै विदाहुनु परेपछि मेरो आर्थिक स्थिति फेरि फर्किएर जस्ताको त्यस्तै भयो । तैपनि टङ्कप्रसादज्यूले सके मलाई सहायता गर्ने उदेश्यले एकदिन मलाई भन्नु भयो,– 'मदनबाबु तपाईं खालि हुनुहुन्छ रे । अंग्रेजीबाट अनुवाद गर्न सकिहाल्नुहुन्छ । सामान्यज्ञान बढाउने केही राम्रा पुस्तक नेपालीमा तयार पार्ने विचार गर्दैछु । लौ फुर्सद झिकेर काम गर्ने भए यो पुस्तक जेम्स जिन्स र आर्थर एडिङटनका विज्ञान सम्बन्धी यी लेखहरुलाई नेपालीमा अनुवाद गर्नुहोस् । अहिलेलाई एक पाताको डेढ रुपैयाँको दरले बन्दोवस्त गरुला, पछि छापिएपछि फेरी देखा जायगा हुन्न ?'

'के खोज्छस् काना ? आँखा !' भयो मलाई । फलामको चिउरा चपाउनु पर्ने जस्तो त्यो अति कठिन पुस्तकको अनुवादको राती र विहान मैले घुडा धसें । त्यो कामले मलाई श्यामप्रसाद शर्मासित बरोबर भेट गर्नुपर्ने गरायो । तिनी 'नयाँ समाज' दैनिकमा अनुवादक थिए । तिनको भाषा शुद्ध र राम्रो थियो । अनुवादको आफ्नो गाह्रो साँघुरोलाई तिनीसित नै सल्लाह गरेर मैले मिलाउने गरे ।

'मशाल'मा म थिएँ तर काम चाहिँ थिएन ।

बास्तवमा पार्टीको अखबार 'मशाल' हेर्नुपर्ने वा हेर्नु पाइने कुनै ' हिसाब' रहदैन थियो । त्यसकारण त्यहाँ मेरो काम पनि थिएन । 'सम्पादक' भनेर बटुकचन्द्रको नाम अखबारमा भएतापनि केन्द्रिय कार्यालयको जिम्मा बोकेको पोलिटब्युरो सदस्य नै वास्तविक सम्पादक हुने गर्थ्यो ।

एकदिन पुष्पलाई श्रेष्ठलाई मैले भने,–'कामरेड, मशालमा मैले हिसाब तर्फ गर्नुपर्ने काम केही छैन । हिसाब जाँच्ने काम तीन महिना अघि नै सम्पन्न भइहाल्यो । अब मलाई लेख्ने तर्फ काम दिनुहोस् ।'

'तपाईं लेख्नु जान्नु हुन्न, पार्टी अखबारमा जे पायो त्यही लेख्नु कहाँ हुन्छ र ?' भन्ने ठाडो जवाफ पुष्पलालज्यूबाट पाएँ । हो, पार्टीको अखवार हो, गम्भीर राजनीति म आफु बुझ्दा पनि बुझ्दिन, लेख्न पनि सिकिसकेको छैन, आदि विचारह मनमा उठे । चुपलागें । तर यो कुरा श्यामप्रसादजीलाई चाहिँ बताएँ ।

'पार्टी महाअधिवेशनमा तपाईं डाक्टरतिर लाग्नु भएको थियो । पुष्पलाललाई मन परेको थिएन भन्ने थाह पाउनु भएको थिएन, माष्टर साहब ?' श्यामजीले गाँठी कुरा खोले ।

यस्को परिणाम के भयो भने दशै पछि एकदिन श्यामजीले मलाई दैनिक 'हाल खबर'मा काम पाउन सकिने सूचना दिए । श्री रंगनाथ शर्मालाई आफ्नो अखवारको निम्ती मानिस चाहिएको रहेछ । मेरो बारे कताबाट हो थाह पाएछन् र श्यामजीलाई भन्न लगाएको रहेछन् ।

श्यामजीबाट त्यो प्रस्ताव सुन्नासाथ म पड्किहालें– 'त्यो अखवार दरवारिया हो भन्ने आफैले मलाई बताउँनु भएको बिर्सनु भयो ?'

'त्यो त हो ।'

'त्यसो भए राजावादी अखवारको सेवामा म आफ्नो शिक्षा र अनुभव अर्पित गरुँ श्यामजी ?'

'माष्टर साहेब, म पनि कम्युनिष्ट भएर यो काँग्रेसी अखवारको नोकरी गरिरहेछु । नत्र कसरी परिवार धान्ने ?'

'भैगो म चाहिँ गर्दिन श्यामजी ।'

तर त्यसबेल पितृव्य श्री नरेन्द्रमणि दीक्षित मलाई त्रिचन्द्र कलेजमा दर्शनशास्त्रको शिक्षकमा हाल्ने कोशिशमा हुनुहुन्थ्यो । उहाँ,–'यो सरकारीया सेवा हो । तिमी कम्युनिष्ट पार्टीमा छौ । भित्र भित्र आफ्नो काम गर पार्टीबाट राजिनामा गरे भनेर एउटा वक्तव्य कुनै अखवारबाट झिक्न लगायौं भने तिमीलाई नियुक्त गराउन मलाई सजिलो पर्नेछ ।' भन्ने सल्लाह मैले एकदिन डा.रायमाझी र कमर शाहलाई बताए र 'हुन्छ, पार्टीले दिएको काम गर्दै जानुहोस्, कलेजको जागिर पाउन तपाईंको राजीनामाको वक्तव्यले मदत गर्छ भने पार्टी भित्र विरोध हुँने छैन ।' भन्ने शब्दको स्वीकृति पाएपछि मैले त्यस्तै वक्तव्य मंगलमानको त्यसबेलाको अखबारबाट प्रकाशित पनि गराएँ । तर कुन्नि के भयो, न मेरो वक्तव्य काम लाग्यो न मैले कलेजमा जागिर पाएँ ।

त्यस्तैमा एकदिन पितृव्यले मेरो निम्ति USOM मा काम खोजेर मलाई भन्नुभयो,–'बाबु, कुनै ठाउँमा एकपटक राम्रोसँग खुट्टा टेक्यौ भने आफुलाई जोगाउँदै पार्टीको काम आफुले चाहेजति गरे कसो होला ?' त्यो काम अमेरिकाली सहायता आयोजनामा पाइनेबारे पनि उहाँले भन्नु भयो । महिनाको सातसय रुपैयाँ जति हुनेछ ।

यसपाली पार्टीसित सल्लाह माग्न मैले फुर्सत पाइन र कलेजको सम्बन्धमा प्राप्त सल्लाहलाई नै पर्याप्त ठानेर मैले सल्लाह पनि मागिन । ठूलो कान्छा बाले 'अन्य कुनै व्यक्तिबाट पनि एउटा गहकिलो सिफारिश लिन सक्छौ भने त्योपनि लिएर भोलिनै कालिमाटी गइहाल ।' भन्नुभए अनुसार वीरगञ्जका पुराना परिचित र त्यसबेला डा.के.आई. सिंहको मन्त्रीमण्डलमा रक्षामन्त्री रहनु भएका साहेबज्यू श्री सुरेन्द्रविक्रम शाहबाट एउटा सिफारिश पत्र लिएर दोस्रो दिन नौ बजे बिहान म USOM का निर्देशक सामु पुगे ।

काकाले टेलिफोनबाट भनिसक्नु भएको रहेछ, रक्षा मन्त्रीको सिफारिस पत्र पनि हेरेर ती सज्जनले प्रसन्न भएर मलाई निवेदन पत्रको दुईप्रति हो क्यार दिए र त्यो प्रश्नावलीलाई भरेर 'भोलि ल्याउन र पर्सिदेखि काम शुरु गरिहाल्न' पनि भने ।

आवेदनकारीको जीवन तथ्य बुझ्ने त्यो निवेदन-प्रश्नावलीमा सत्य जवाफ दिदै मैले आफ्नो कम्युनिष्टपार्टी जीवनका कुराहरु समेत उल्लेख गरेको देखेपछि ती सज्जन अमेरिकालीले भने–'दीक्षितज्यू, तपाईंले कुरा लुकाउनु नखोज्नुभएकोमा धन्यावाद छ । सत्य नै सर्वोच्च हो । तर वर्तमान अमेरिकाली ऐन-कानुनले कम्युनिष्ट पृष्ठभुमि भएकोलाई सेवामा लिनबाट मनाही गरेको छ। तपाईंलाई मदत गर्न म चाहन्थे तर म आफ्नो सरकार र ऐन-कानुन प्रति निष्ठावान व्यक्ति हुँ । म तपाईंलाई मदत गर्न सक्तिन । तपाईंले यो पृष्ठभुमिको उल्लेख नगर्नुभएको भए म खोज्दै हिड्ने थिइन, तर मेरो जनाकारीमा आइसकेको या निवेदन फेर्नुहोस् भनी तपाईलाई भन्न पनि मैले हुँदैन । म क्षमा प्रार्थी छु ।'

ती अमेरीकालीका स्पष्टवादिता र निष्ठाले ममा गहिरो छाप छोड्यो । अहिलेसम्म आलै छ ।

तर मेरो दुरुह स्थिति असह्य भएर लम्बिदै गयो । कसैगरी एकछाक टार्न पनि धौ धौ पर्न थाल्यौ । माताजीको चिन्ता गर्नु पर्दैनथ्यो तर ४-५ छाक सम्म पनि मेरो पुरै परिवार प्रायः भोकै बस्न थाल्यो । छोरा-छोरीको क्रन्दन सुन्न नपरोस् भनी चौविस घण्टामा सोह्र घण्टाजति 'रुपैयाँ खोज्न जान्छु' भन्दै घरबाट बाहिर बिताउने गर्न थाले म । त्यो अन्तिम पटक, २०१४ माघमा घरमा आगोसम्म नबलेको दशौ छाक विहानै 'रुपैयाँ खोज्न' म घर बाट निस्किएँ । कहाँ खोज्ने रुपैयाँ ? त्यो रुखमा पाइदैन, आकाशबाट झर्दैन । सडकमा हिड्दा बेसुरजस्तो अवस्थामा रहेकोहुँदा तीनपटक मोटरले किचिन आँटेको सम्झिएर भर्सक गल्लीहरुमै मात्र हिड्ने गर्थे म ।

विहानदेखि रातपर्न थाल्दासम्म जति ठाउँमा गएर मैले एकदुई रुपैयाँ

नत्र एक मोहरका सापट मागें सबै ठाउँमा निराश भएर फर्किनु पर्‍यो । बटुकका गोविन्द नापित मेरा अन्तिम सहारा हुने गर्थे, तिनकै घर गएँ तर भेट भएन । आफु हताश भएर र मेरा आशामा बसिरहेकालाई घरमा सान्त्वनादिन म रञ्जना सिनेमा घर तिरको गल्ली हुँदै प्युखातिर फर्किएँ ।

उग्र थकाइ, केही कम भोक र प्रचण्ड मानसिक पीडा लिएर लर्बराउँदो पाइलाले हिंड्दै आउँदा त्यो अँध्यारो हुन लागेको गल्लीमा मारवाडी सेवा समितिको ढोकाबाट दुई मिटर उत्तरतिरको सडकमा एक रुपैयाँको नोट देखियो । मैले दिनभर सापट खोज्दा नपाएको नोट त्यहाँ त्यसै अरक्षित रत्नको रूपमा रहेको । आँखा पर्नासाथ चिनिहाले र कसैले देख्ला भनेर पहिले जुत्ताले छोपेर त्यसमा उभिएँ । तर सडक शून्य र रित्तो थियो ।

त्यो नोट टिपेर तीन मिटर जति अघाडि जाँदा त्यहाँ त्यसै गरी एक एक रुपैयाँका दुइटा नोट सँगै रहेछन् । यो कस्तो अद्‌भूत घटना, आकाशबाट पनि रुपैयाँ खस्दोरहेछ ! अघि बढ्दा फेरि पाँच रुपैयाँ अनि फेरी फेरी । कुनै नारीले कम्मरमा घुसारेकी थिइन् होली, सारी केही खुकुलो हुँदै गयो नोट खस्तै गए– झण्डै लहरै । गुच्चा टोलको गल्लीमा पुग्दासम्म झण्डै बाइस रुपैयाँ फेलापारें मैले । त्यो दिनको प्रसन्नतालाई वर्णन गर्नमैले आजसम्म पनि शब्द पाएको छैन । तर त्यो घटनाबारे देवीजी आज पनि पत्याउन्नन् । अत्यधिक साँचो बोल्ने गरेको मैले त्यो दिनको त्यो बाइस रुपैयाँको परिबन्द बताउँन लाज मानेर 'एकजनासित सापट लिएको' भनेको पनि थिएँ । आजसम्म पनि देवीजी त्यही कुरा पत्याउन चाहन्छिन् ।

जीवनलाई कसरी बेहोर्ने ? जीवनलाई कसरी पनि बेर्होन पर्दो रहेछ । त्यही पैसाबाट देवीजी आफ्नो माइत गएकी थिइन, आफ्नो खेतको धानबाट पैसा लिन ।

२०१४को चैत्रमा २२ दिन जति बिरामी रहेर उठेकै दिन पितृव्य श्री नरेन्द्रमणि दीक्षितले बोलाई पठाउनु भयो । त्यसैरात मैले महिनाको ३०० रुपैयाँ पाउनेगरी दैनिक 'हालखबर'मा 'प्रधान सम्पादक' भन्ने अखवारमा होइन कि हिसाब कापीमा लेखिने गरी श्री रंगनाथ शर्माबाट काम पाएँ । २९ चैत्रको त्यो रात 'हाल खबर'मा काम गर्न इन्कार गर्ने स्थितिमा आफू नरहेको सत्य मलाई अत्यन्त स्पष्ट भइसकेको थियो । काठमाडौंमा परिवार लिएर बसेको त्यो पहिलो वर्षले मेरो कम परीक्षा गरेन तर मलाई इस्पात चाहिँ बनाइदियो । तर सबैले वा कसैले पनि मलाई इस्पात भनुन भन्ने मेरो आग्रह छैन, म आफूमात्र यस्तो ठान्छु ।

आत्माको विक्रय नगरी, आत्म-सम्मान विरुद्ध कतै कुनै सम्झौता नगरी पनि आफ्ना आस्था र विश्वासमा धैर्य गरेर सुदृढ बस्न सकिन्छ र संघर्षलाई, निजात्मक विजयमा परिणत गर्न सकिन्छ भन्नेमा २०१४ले मलाई चट्टान झैं स्थिर गराइदियो ।



# एउटा पत्र अपरिचित मित्रको

CARMEL SCHOOL                                                        Date 12.9.1980

DIGBOI, Upper Assam Pin 789171 Phone No 79

सेवामा,
श्री नगेन्द्रराज शर्माज्यू,
चावहिल, काठमाडौं
नेपाल ।

सहृदयी शर्माज्यू,

यो पत्र पाउनु भन्दा पहिले नै मैले आज विहान पठाएको तार पाइसक्नु भयो होला भन्ने अडकल गरें । आजको यस मध्यरातको निस्तब्धतामा जीवनको पहिलो पत्र लेख्दैछु– सोच्दैछु– सम्झदैछु त्यो महान कलाकारको शब्दहरू फगत शब्दहरू ।

'सर ! भन्नुहोस् म के के ल्याइदिउँ ? खाने बस्तु केही ? आवश्यक वस्तुहरू केही ?' प्रत्युत्तरमा त्यो कलाकारबाट आज्ञा पाउँथे,– 'पाकेको मेवा, आँप र पातलो रंग हालेको चियाका साथमा मीठो चुरोटको प्याकेट एउटा ।' 'चुरोट' भन्ने वित्तिक्कै विन्ति गरिन्थ्यो,– 'सर ! कृपया चुरोट छाड्दिनोहोस् टि वी भएको रोगीले चुरोट खानु हुँदैन' । फेरि आज्ञा हुन्थ्यो,– उसोभए आज मात्र ल्याइदिनु ल, आज खाएपछि छाडिदिन्छु ।' निराश हुँदै बजार जान कर लाग्थ्यो । एकदिन हठात् अस्पतालमा पुग्ने वित्तिक्कै भन्न थाल्नु भो,– 'भाइ, आज मलाई एउटा कापी र कलम ल्याइदेऊ ल ।' मैले सोधे 'सर, के लेख्नु सक्नु हुन्छ र ?' 'होइन, कतिपय जरुरी कुराहरू लेख्न मन लाग्छ ।' बजार बाट कपी र कलम एउटा ल्याइदिएथेँ त्यस दिन । कलम समात्दै सोच्न थाल्नु भयो । मैले कष्ट दिँदै भनें– 'सर, लेखिहेर्नुहोस् यस कलमले लेख्दा आराम हुन्छ कि हुँदैन । राम्रो नभए मेरो कलमले लेख्नुहोला । कापीमा लेख्ने प्रयास गर्नु भन्दा पहिले एकछिन घोरिनु भयो– त्यस पछि लेख्नु थाल्नु भयो–

DR. NAGENDRA,

I SHALL DROP THE FIRST LETTER TO YOU MY GREAT FRIEND IF I COULD NOT RESPONSE I SHALL DIE UNHEARD.

YOURS KATUWAL

9.8.1980

त्यसपछि भन्नु भयो–'DR. DOCTOR होइन DEAR हो- साँच्ची नगेन्द्र मेरो महान् साथी हो । उसको गुण म कहिल्यै बिर्सन सक्तिन । उसलाई नलेखी अरूलाई लेख्न सक्तिन ।'

त्यसपछि मेरो आफ्नै कलम दिदैं आग्रह गरें– 'सर, यसले कस्तो लेख्छ हेर्नुहोस् त'– अनि लेख्न थाल्नु भयो–

D/ JAGDISH,

WRITE MORE DEAR I AM WAITING TO READ YOUR NEW NOVEL.

KATUWAL

9.8.80

यसरी प्रत्येक सप्ताह ASSAM MEDICAL COLLEGE HOSPITAL, DIBRUGARH मा (डिगबोईबाट प्रायः ६५ किलोमिटर पर अवस्थित) कटुवाललाई भेट्न जान्थ्यौ हामी । औषधी र आवश्यक सामाग्री किनेर छोड्दथ्यौ । निकै बेर बस्दथ्यौ-सन्त्वना दिदै-तर सपना जस्तो भैरहेछ-विधिको यो कस्तो विडम्बना-के यस्तो कुठाराघात यो तीजको बेला आज कटुवालको परिवारमात्र होइन सारा नेपालीमात्रका परिवारमा बज्रपात भैदियो–त्यो महान आत्मा उडेर गयो– सम्झनाहरू धेरै धेरै छाडेर ।

अझै सम्झन्छु म कटुवालका शब्दहरू–'म मरिहालेछु भने यी मेरा महान् साथीहरूलाई धन्यवाद दिन तिमीले नर्बिसनु । मेरो निमित्त उहाँहरूले धेरै कष्ट उठाउनु भएको थियो–म काठमाडौंमा छँदा । शुभकामना छ है भनिदिनु मेरो, काठमाडौंमा छँदा मलाई जस जसले सघाए ।' केही घोरिएर भन्नु हुन्थ्यो– 'अन्तिम अवस्थामा यत्ति स्याहार सुसार पाउने नेपाली साहित्यको म नै भाग्यमानी कवि हूँ ।' तर मलाई यी शब्दहरूले खट्किन्थे । उचित स्याहार सुसार कविको भनाईअनुसार भएको जस्तो मलाई लागेको थिएन । शुरु शुरुमा काठमाडौ अस्पतालमा मेरा हितैषीले सँधै भेट्न आएर मलाई उत्साहित पारेका थिए । आदि ।

जेष्ठ १८ गते कवि कटुवाल यहाँ आफ्नो घरमा आइपुग्नु भएको हो । ज्येष्ठ २२ गते आफ्नो बाबुको ४५ दिनको काम गरेर २४ गते टिबी रोगले पीडित भएकाले ASSAM MEDICAL COLLEGE HOSPITAL, DIBRUGARH मा भर्ना हुनु भएको थियो । शुरु देखि नै BED NO. 8 मा लडिरहेर प्रायः १ महिना भित्र केही निको भएको थियो– बजारसम्म पनि जानु सक्नु हुन्थ्यो– तर जुलाई २५ गतेबाट हठात् पीडित् हुँदै जानु भयो– हात खुट्टाहरू अचल हुनथाले । यसरी हठात् १० सेप्टेम्बरका दिन (बुधवार) राती ११ बजे स्वर्ग हुनु भयो । त्यस पछि लाश बाहिर बराण्डामा राखिएछ । भोलिपल्ट यता डिगबोइबाट दिदीहरू रीता दर्नाल, पूर्णमाला थापा र सन्ध्या प्रधान कटुवाललाई भेट्न रेलद्वारा, बसद्वारा भेट्न प्राय १२ बजे दिउँसो BED NO. 8 मा जाँदा रित्तो । बाहिर कटुवालको लाशको दर्शन गरेर श्रद्धाञ्जली दिनु भएछ । त्यसपछि कटुवालको जेठान श्री कुञ्जन शाहीज्यूको घरमा सूचना दिनु भएछ जहाँ कटुवालको छोरो दानु र छोरी कल्पना केही दिन अघिबाट थिए । त्यसपछि प्रायः १२ जना मानिस जुटाएर राती ७.३० बजे दाह संस्कार गरिएछ । यो समाचार दिदीहरूले त्यसै दिन दिनु भो । त्यसपछि डिगबोइ शोकविह्ल भयो– कटुवालको सम्झनामा– डिगबोईका प्रायः ५ हजार नेपालीमा अन्धकारमय वातावरण भयो । अर्को दिन दिनांक १३.९.८०का दिन विहानै सर्वप्रथम पूर्वाञ्चल विद्यालयको आयोजनामा शोकशभा मनाइयो । भरे विराट जनसभामा कवि कटुवाललाई डिगबोईका नेपाली जन समुदायले श्रदान्जली

दियो । यसको प्रत्यक्ष विवरण राखेका छौ ।

यसरी डिगबोई, असम, भारत र नेपालको प्रिय खेलाडी, नायक, निर्देशक, सम्पादक, उपन्यासकार, कथाकार, जोकर, नृत्यकार र शिक्षक र महान् आधुनिक कविको निधन भयो । 'मन्थन' पत्रिका मलाई राख्न दिनु भएको हो । सम्पादकज्यूको पत्रको उत्तर दिने काम गर्नु भएको छ सो दिनेछु । काठमाडौंमा तार यहाँलाई र राष्ट्रिय प्रज्ञा प्रतिष्ठानमा चाहिँ हरिहर शर्मालाई पठाएको छु । यस बाहेक अरू निक्कै कुरा छन् जुन कटुवाल मार्फत् मैले भन्नुछ– सो भनुँला । यस पत्रद्वारा सबै सबैमा यो दुःखद समाचार प्राप्त हुनेछ– कटुवालको महान् साथीको रूपमा यहाँलाई गहिरो चोट लागेको हामी अनुभव गर्दछौ । कटुवालको मित्र भएर (इच्छानुसार) काठमाडौंमा छँदा गर्नु भएको सबै सहयोग निमित्त कटुवाल लगायत् हामी आभारी छौं ।

पत्रको उत्तरको प्रतीक्षा गर्दै पत्र आज समाप्त गर्दै विदा चाहन्छु ।

धन्यवाद !

भवदीय

**एनबी. रिजाल**

डिगबोई, असम

ᏡᏡ

## १५७/मन्थलीमा धुनी गफ (२०६८ ९ १६)

कमल दीक्षित : नगेन्द्रजी, तपाईं धेरैबेरदेखि चुपचाप हुनुहुन्छ– केही सुनाउनुस् न ।

नराश : ल सुन्नुस् त एउटा तपाईंसँगै सम्बन्धित कुरा । कुरा धेरै पुरानो हो, वासु शशी छँदैको । उनलाई एकदिन जयवागेश्वरीमा ढनमनाउँदै हिँडेको भेटेर सोधें– केहो शशीजी यस्तो ? दिउँसै ?

'आज कुसंगतमा परें ।' उनले भने ।

'कस्तो कुसंगतमा पर्नुभो ?'

'हामी पाँचजना थियौं । त्यसै हिसावले वाशः मगाइयो तर चारजना पापीहरू कमलमणिमार्का परेछन्– छुँदैनछुने । अनि फाल्नु भएन किनेको माल, कुसंगतमा पर्दा यस्तै भयो हाल ।'

जगदीश : ओहो तपाईंसँगको संगत त खतरनाक पो हुँदोरहेछ । तपाईंले कहिल्यै वाश लिनु भएन, अभिव्यक्ति दादाले पनि तपाईंकै सिको गर्नु भयो भने गएन ?

न.रा.श. : धन्दा मान्नु पर्दैन । कमल बाबु र उहाँका कोक कविहरूको कुसंगतमा परिएला भन्ने डरले काठमाडौंदेखि नै लिएर आएको छु– सुसंगतका लागि सुप्रसिद्ध कविद्वय ह्विस्की बहादुर सिंह (विष्णुबहादुर सिंह) र बियर बहादुर बुढाथोकी (वियोगी बुढाथोकी) ।

ᏡᏡ

# जगदीशजी

## कमल दीक्षित

हो, यही सम्बोधन गर्थें म जगदीश घिमिरेलाई शुरूदेखि अन्तिमसम्म । शुरू भनेको २०२२-०२३ साल र अन्तिम भनेको २०७१ सालमा उहाँ पछिल्लो पटक ओम हस्पिटल पसेर कोमामा नजाउञ्जेल हो । तर, यो पछिल्लो समयमा पुगुञ्जेलसम्म हामीहरूको सम्बन्धमा आकाश जमीनको परिवर्तन आइसकेको थियो । भनूँ भने हामी एकै परिवार भैसकेका थियौं । म त्यसरी उहाँको पारिवारिक घेराभित्र पर्ने कारण थिइन् जगदीशजीकी छोरी जून । जून रातो बङ्गला स्कूलकी विद्यार्थी थिइन् । म त्यो स्कूलमा केटाकेटीलाई नेपाली छन्द पाठ गर्ने तरीका सिकाउँथें शुरूदेखि नै । त्यहाँ तल कुनै क्लासमा जून घिमिरे पढ्थिन् । उनी जगदीश-पुत्री रहिछन् । पैले थाहा थिएन मलाई, पछि थाहा पाएँ । जूनले घरमा मेरो कुरा गरिन् होला । जगदीशजीले आफूले कमल दीक्षितलाई चिनेको भनेपछि उनको आँखामा मेरो इज्जत बढेछ क्यारे, उनले सगौरव आएर मलाई क्लासमा भनिन्– 'मेरो बुवाले हजुर लाई चिन्नु भएको छ रे ।' चेली र छोरी नेपाली भाषामा समानार्थी शब्द हुन् । त्यस हिसाबले जून हामी दुवैकी 'चेली/छोरी' भइन् ! जून मेरा नाति र नातिनीको 'क्लासमेट' पनि भएकीले स्कूलका समारोहहरूमा दीक्षित र घिमिरेहरूको पारिवारिक किसिमको भेटघाट हुने गर्थ्यो । सम्बन्ध झ्याङ्गिन त्यसले पनि मदत गऱ्यो ।

त्यसैबीच जगदीशलाई 'माइलोमा'ले आक्रमण गऱ्यो अनि उहाँको पारिवारिक धरातल नै भासिएजस्तो भयो । केही वर्ष हामीहरू सम्पर्क विहीन भयौं । त्यसपछि, अकस्मात् जगदीशजीको 'अन्तर्मनको यात्रा' ले मदन पुरस्कार पायो । त्यो पुरस्कारपछि मौलाएको हाम्रो मित्रता अझ घनिष्ठ हुँदै पूरै पारिवारिक हुनपुग्यो जब जूनको विवाह भयो । जून त मेरी भाञ्जीबुहारी पो हुन आइपुगिन् अनि जगदीशजी हुनुभयो 'सन्धीज्यू' ! तर मैले कैल्यै पनि उहाँलाई त्यस नाताले बोलाइनं । हो, जूनकी मुमा, दुर्गाजीलाई भने मैले त्यसै दिनदेखि 'सम्धिनी' भन्न थालें । तर, यो हाम्रो सम्धी-सम्धी नाता अलि व्याख्या नगरी बुझिंदैन । नाता यस्तो : जूनकी सासू डा. सुधा शर्मा मेरी बहिनी, अंग्रेजीमा भन्दा 'सेकेन्ड कजिन' हुन् । नेपाली काइदाले बताउँदा म जेठाको नाति हुँ (राममणिको), सुधा माहिलाकी नातिनी हुन् (भरतमणिकी छोरीपट्टिकी) ।

आफ्नो जीवन 'प्यारोल' (ज्यानको जमानी) मा छुटाएर ल्याएपछि जगदीशजी त्यस ज्यानको अधिकतम उपयोग गर्न चाहनुहुन्थ्यो । जीवनको कुनै पनि सुखमय क्षणको अधिकतम उपयोग गर्न लालायित हुनुहुन्थ्यो

उहाँ । हामीले त्यो बुझेका थियौं । हामी भन्नाले यहाँ मुख्यतः पाँच जनालाई मात्र इङ्गित गरिएको हो भन्ने बुझियोस् र ती पाँच जना भनेको जगदीशजीकी सहधर्मिणी दुर्गाजी, दाजु नगेन्द्रजी, साहित्यिक सहकर्मी रोचकजी, ज्ञानुवाकर र म हौं । हामीहरूले यौटा मौन सल्लाह र सहमति गऱ्यौं– जगदीशजीसँग हामी चार जनाले नियमित रूपमा भेटघाट गरी रमाइलो गर्ने । त्यो रमाइलोलाई हामीले यौटा नाम दियौं 'साहित्यिक खीर पार्टी' । पालैपालो एक जनाको घरमा पाँचै जना जम्मा हुने, साहित्यिक आदानप्रदान गर्दै हाँसखेल गर्ने र खाजा खाने । त्यो खाजामा खीर अनिवार्य हुनु पर्ने । यो कार्य हामीले गर्न थाल्यौं, यसलाई निरन्तरता नै दियौं भनूँ जगदीशजी अशक्त नभएसम्म । पालै पालो हामी कैले चोभारमै भेट्थ्यौं, कैले पाटनढोका, कैले टङ्गाल र गौशाला अनि कैले गौरीघाटमा हुन्थ्यो हाम्रो खीर पार्टी । यी सबै जमघटमा जगदीशजी हौसिएरै भाग लिनुहुन्थ्यो । हाँसो ठट्टाका पर्रा छुट्थे त्यहाँ र त्यो ठट्टाको ' अचानो' चाँहि सँधैजसो ज्ञानु वाकर नै बन्नुहुन्थ्यो ।

बाहिरबाट हेर्दा हाम्रा त्यस्ता जमघटहरूमा जगदीशजी रमाएरै बसेको र भाग लिएको देख्थ्यौं तापनि मलाई भित्र लाग्थ्यो उहाँको मनचित्त त्यहाँ हुन्नथ्यो । 'वीतराग' भैसक्नुभएको जस्तो देख्थें जगदीशजीलाई म, सांसारिक मोहबन्धनभन्दा पर अर्कै दुनियाँमा विचरण गरिरहे जस्तै । यो कुरा मैले ऐले अजमाएर भनेको होइन । त्यसै बखतका भावनाहरू हुन् यी । यद्यपि उस बेला मैले आफ्ना यस्ता भावना ती जमघटमा कसैलाई अथवा अन्यत्र कतै पोख्ने आँट गरेको थिइनँ ।

जगदीशजीलाई सम्झन अथवा भनौं उहाँको स्मृति कायम राख्न भनेर 'खीर पार्टी'का बाँकी सहभागी हामी चार जनाले फेरि त्यसलाई निरन्तरता दिने निधो गऱ्यौं र दुई ओटा पार्टी चलाइ पनि सक्यौं । तर कसोकसो पार्टीमा त्यो रौनक नै आएन । जगदीशजीको अनुपस्थिति खट्कीरह्यो तापनि यो ऐ तिहासिक 'खीर पार्टी'लाई निरन्तरता दिइरहने अठोट हामीले गरेका छौं । हामी के अनुभव गर्न चाहन्छौं भने हाम्रा मित्र जगदीश घिमिरे ऐले पनि हामीमाझै छन् र हाम्रा स्मृतिमा जैले पनि रहीरहनेछन् ।

कसो जगदीशजी ?

### १५४/रचना कार्यालय टंगाल

ज्ञानुवाकर पौडेल : म बिहान-बिहान रामदेव गर्छु ।

कमलमणि दीक्षित : अनि साँझ-साँझ झ्वामदेव गर्नुहुन्छ– होइन ?

ज्ञानुवाकर पौडेल : ··· ··· ··· ··· ।

जगदीश घिमिरे : उहाँको दिनचर्या यस्तो छ– बिहान रामदेव, दिउँसो मामदेव, साँझ झ्वामदेव, राति कामदेव ।

ꕥꕥ

# फरेन फोबिया

**कालूसिंह रनपहेंली**
गान्तोक, सिक्किम

पानी पर्दैं थियो सिमसिम । दिन पिलपिल गर्दै थियो । त्यतैमा म सिलगढीको हङकङ मार्केटभित्र पसे । विदेशका सामानहरु पाइन्छन यहाँ । आफ्नो बचाईको शरीरमा फरेन सामाग्रीको तेल घस्ने विचारले पसें म आज यहाँ ।

साधारण चाकरी छ, सिक्किमको राजधानी गान्तोकमा कार्यरत आफु । सिलगढी आउँदा कहिले काही हङकङ मार्केट पस्ने गर्छु । कहिले यहाँबाट जिन्स पाइन्छ लगेको छु, कहिले छाता, कहिले चाइनिज बाम त कहिले चप्पलहरु ।

आज गोजीमा अलिक रुपैयाँ थियो । म पसें हङकङ मार्केट भित्र । के के थोकहरु हेरे । नाडी घडी नापेर हेरें, पेन्ट कम्मरदेखि उँधो लर्काएर हेरें । ब्याट्री हालेर चल्ने गुडीयाहरु हेरें । श्रीमतीलाई क्रिम र स्याम्पुहरु हेर । किनेको छैन तर कुनै थोक पनि । मार्केट विचार नगरीकन एकै ठाउँमा प्याट्ट सामान किन्नु कहाँ हुन्छ ? ठगिन पनि त सकिन्छ ! म मार्केट चाहार्दैछु ।

एउटा दोकानमा मैले देखि फरेन ट्रेको सेट । घरमा पाहुनापात आउँदा चिया टक्र्याउन एउटा चियाको आवश्यकता थियो । श्रीमतीले भनेको कुरा कानमा गुञ्जियो– यसो हङकङ मार्केट तिरबाट फरेनको ट्रे ल्याए पनि हुने । घरमा पाहुना आउँदा चिया ओसार्ने एउटा ट्रे पनि छैन । तल्लो घर कृष्णदाजुकहाँ कति राम्रा राम्रा फरेनका सामानहरु छन् । चिया ल्याउँदा पनि फरेनको ट्रेमा सजाएर राखिदिन्छन् ।

मैले पनि ध्यान लगाएर हेरेको छु त्यो ट्रेमा चित्रित जापानी बुट्टाहरु । कालो रंगको भुइँ, बीचमा भगवान् बुद्धको नक्सा ! त्यो ट्रे हेरेर म भुतुक्कै भएको थिएँ । श्रीमती झन् हुरुक्क थिइन् । कहिलेकाही घरमा कुराकानी पनि नभएकोहैन आज बल्ल यो ट्रे फेलापारे । मैले दोकानदारलाई भने, 'भैयाँ, यो ट्रेको सेट देखाउनुस् त !' (दोकानेसँग हाम्रो सबै कुराकानी हिन्दी भाषामा नै भएको थियो ।)

बढो आदरसित दोकानेले मलाई दोकानभित्रै बोलाएर ट्रेका सेटहरू देखायो । बाहिर उज्यालो थियो । दोकानभित्रको केही अँध्यारो अवश्य थियो तर दोकानेले दुई तिर गुलुप बालेर दोकान उज्यालेको थियो । दोकानेले भन्यो–'तपाईं के लिनु हुन्छ, गरम अथवा ठण्डा ?'

मैले हतपत भनिदिएँ, 'गरम ! गरम !'

'कफि कि चिया ?'

म कहाँ कम ! कफि नै भनिदिएँ । उसले दोकानको एउटो केटो लाई झट्ट राम्रो कफि लिएर आउन अह्रायो । दोकानेले ट्रेका सेटहरु दे

खाउन लाग्यो–'यो इटालियन, यो हंगेरियन, यो ताइवानी, यो चिनियाँ, यो जापानी··· ।' ऊ बताउँदै र देखाउँदै गयो ।

अँ यो जापानी ठिक छ। जापानी जिनिसहरु खप्नमा एक नम्बर ! त्यो ट्रेको समात्ने पनि पहेँला नाइलनको मसिना फिता कलात्मक बुनेर बनाइएको । त्यहीं कालो भुईमा रातो रंगले बनाइएको बुद्धको चित्र । मलाई लोभ लाग्यो त्यो सेट किन्ने । सेटमा तीनवटा ट्रेहरु छन् । एउटा केही ठूलो, एउटा मझौलो र आर्को निक्कै सानो ।

मैले दाम सोधे, 'यसको दाम कति होला ?'

'पूरा आठ सौ । तपाईंको च्वाइस विल्कुल ठिक छ ।' दोकानेले मलाई ग्वाक्क पार्‍यो । म गजक्कै परेको थिएँ, तर म मोलमोलाई गर्न पनि सिपालु थिएँ र भनें–'के कुरा गर्नुहुन्छ तपाईं ? यसलाई म पाँचसयसम्म दिनसक्छु । त्यतिमा हुन्छ भने दिनुस् होइन भने आफ्नो सामान आफै राख्नुहोस् ।'

दोकानेले भन्यो–'तपाईंको बचन त अवश्य राख्ने छु··· तर एकसय रुपैयाँ थपिदिनुहोस् छसय भन्दा कममा चाहिँ हुँदैन ।'

लऽऽऽ यो दोकानेले त देखेकै जस्तो गरेर भन्यो । कोटको गोजिभित्र अर्कोपट्टी अलिक पैसा लुकाइराखेको थिएँ । सिलगढीतिर आउँदा अलिक चलाक र होशियार भइएन भने आपत्मा परिन्छ भन्ने कुरो मलाई थाह छ । कति मान्छेहरु पाकेटमाराको चुंग्लमा परेपछि फुंगुटाँसी बनेको पनि नसुनिएको हैन । यसैले त म होसियार भएर दुइटा पाकीटमा पैसा राख्छु । मनीपर्स हराए पनि पाकेटको पैसाले घर पुग्न सकिन्छ ।

मैले भित्री पाकेटबाट पचास रुपैयाँको नोट निकालेर थपिदिदै भने, ' लिनोस्, यहाँ भन्दा बढी त अह हुँदैन ।'

'तपाईंलाई नाराज गराएर के म लक्ष्मीमातालाई पनि नाराज गराउन सक्छु र ? बढो नरम भएर उसले भन्यो अनि मेरो हातबाट पैसा लिएर गल्लामा हाल्दै फेरि सोध्यो–'यस आइटममा मलाई धरोधर्म एकपैसा मुनाफा छैन ।'

'राम्रोसँग प्याक गरिदिनुहोस् है !' मैले भने

उ ट्रेमा खप्ट्याएर बाँध्न थाल्यो । म अरु फरेन गुडहरु हेर्नथाले । त्यो इर्मजेन्सी लाईट ! घरमा विजुली बत्ती जाँदा कस्तो चाहिने कुरा । तर पैसा छैन यसपाली । आर्कोपालीलाई किन्नै पर्ने सामानको मनको सुचिमा दर्ता गराई राखे ।

यतिकैमा दुई जना आदिवासी स्त्रीहरु त्यहाँ आइपुगे । पुड्की डालका तर मोटा मोटा शरीरका । यति मोटा, मान्छे नभएर यिनीहरु पिपाहरु हुन् । यी दुई नारीहरुको हातमा ठूलठूला गुण्टाहरु पनि थिए । तिनीहरु भित्र पसे । एकै छिनमा तिनीहरु बाहिर निस्कि पनि हाले । अरे वाफरे फर्कदा त तिनिहरु सिन्का जस्ता सुकुटी पो रहेछन् । मैले बुझे फरेनका सामानहरु शरीरभरि बाधेर पो पसेका रहेछजन । मैले यी दृष्यहरु हेरिरहे । ती महिलाहरु गइसके

पछि मैले दोकानेसित मैले विस्तारै सोधें–'क्या हो साहुजी ? यी कस्ता खाले बहिनीहरु हुन ?'

दोकानदारले बताए–'उनीहरु 'क्यारीयर' भन्दा रहेछन । उनीहरु धुलावारीबाट विदेशी सामानहरु लिएर आउँदा रहेछन् । उनीहरु काकर भिट्टा आउँदाखेरी मेची खोला तरेर नक्सलवारी आइपुग्दा रहेछन् । शरीरभरी विदेशी सामानहरु बेरेर यसरी यिनीहरु सिलगढी आइपुग्दा रहेछन् । यसरी सामान ओसारेकोमा उनीहरु दश प्रतिशत कमिशन पाउँदा रहेछन् । अन्त्यमा दोकानेले मलाई भने–हेर्नुहोस यो पनि बाँच्ने एउटा तरिका रहेछ । यी गरीबहरु यसरी आफ्नो जीवन धान्ने बाटो पहिल्याउन बाँध्य  छन् ।'

मैले थाह पाए–गरीबहरुको निम्ती जिउनका लागि संघर्ष जहीँ पनि व्याप्त छ । कुरा यति हो, मान्छेको बेग्ला बेग्लै अनुहार भए जस्तो त्यसको अनुहार मात्र फरक छ ।

अघि किनिएका सब्जीहरुका झोला दाहिने हातमा झुण्डाएर अनि बाधिएको ट्रेको पोको देब्रे काखीमुनी च्यापेर म पुगे एस. एन. टि. बस स्टाण्ड । बसहरु सबै छुटिसकेछन् । अब सानो भ्यानमा नगई भएन··· ।

एकजना भाइले सोध्यो– 'दाज्यू कता, गान्तोक ?'

'हो, हो गान्तोक ।' मैले भने ।

'एकै सिट छ ब्याकमा, जानु हुन्छ ? गाडी हिडिहाल्छ ।'

'अब ब्याक छ भने पनि जानै पर्ला ! भाडा अलि कम्ता गर है ।'

'ल ल नब्बे हो, अस्सी दिनुहोस् ।'

म खुशी भएर भ्यानको ब्याक सिटमा गएर बसें । सब्जीको झोला आफ्नो खुट्टा छेउमा राखें र त्यो ट्रेलाई चाहिँ आफ्नो सिट छेउमै राखें ।

नभन्दै गाडी पनि हिडि पनि हाल्यो ।

म बसेको छु ब्याक सिटमा । सेकेण्ड सिटमा दुईजना स्त्रीहरु पनि चढेका रहेछन् । उनीहरु जोडजोडले बात मारिरहेका थिए । तिनीहरुको बात सुन्न लागें ।

'हिजो आज काम चलाउन निक्कै गाह्रो पर्‍यौ हौ !'

'हो त नि ! त्यो जुँगे पुलिस कस्तो मापाको छैन । रम्फु चेक पोष्टमा त्यो जुंगे छ भने मलाई साह्रो रिस उठ्छ ।'

'त्यसको बाबुको सामान लगिदिएजस्तो गर्छ ।'

'जोगिदा जोगिदै पनि आजकल त चिनिहाल्छ र पो पीर त ।'

मैले गेडा छुट्याइन कुराको र सोधें ती अधबैसे महिलालाई, 'हन के भो र त्यस्तो रिसाउनुभएको त्यो जुँगे पुलिससित दिदी ?'

'के भन्छौ र भाइ त्यो जुंगेको कुरा ? हामी दुई चार पैसा हुन्छ कि भनेर यताबाट केही चिज गान्तोक पुर्‍याएर बेच्छौ । तर त्यो जुँगेले गरिखान दिदैन । कतिपल्ट हो हाम्रो झोला खोसेको ! तर हामी पनि तीनवटा झो लामा एउटा मात्र देखाउँछौ र त्यो एउटा मात्रै लिएर उत्रन्छौ । आर्को दुईवटा

चाहिँ ड्राइभर भाइले ठिक ठाउँमा लगेर छाडिदिन्छन् र त्यहाँबाट फेरी हामी लिन्छौ ।'

'ए चाला त त्यस्तो पो रहेछ ।'

'अँ नी त्यो पापी कम्तीको छ ! फरेन गुड्सको ट्याक्स नबुझाइकन, कस्टम डयुटी अबुझाइकन ल्याउनु हुँदैन कानुन लाग्छ भन्छ ।'

'अन्त दिदी अरुको सामान पनि चेक गर्छ ?' मैले आफ्नो मनको डर शब्दहरुमा अवतरित गरें ।

'ए किन गर्दैन ? हिजो अस्ती एकजना भाइले एउटा डल्लो पहेला पितल जस्तो धातुको त्यो रंगिन बत्ती बल्ने फाइबर ल्याम्प हङकङ मार्केटबाट ल्याएको रहेछ । सामान पनि खोस्यो फाइन पनि तिरायो । त्यो भाइले मुख चलाएको थियो लगेर थुनेछ दुई दिन ।'

मन चिसो भयो । दुई दिन हाजतमा बस्नु भनेको म सस्पेण्ड हुनु हो । कामबाट निलम्बित हुनु हो । त्यसो भयो भने मेरो घर परिवारको के दशा होला ? म डरले लगलग भएँ, निलो कालो भएँ । गाडी बंगालको रम्फु काटेर अगाडि बढिसकेको थियो, बंगाल सिक्किमको सिमाना पुलमा पुगिसकेको थियो । एक मनले भन्यो 'घुइँक्याइदे माइला त्यो फरेनको ट्रे । पक्रा खाइस भने जेल पनि गइस अनि नौकरी पनि उडाइस् ।'

तर उपाय थिएन । गाडी रम्फु चेक पोष्ट पुगिसकेको थियो ।

साँच्चै त्यही जुंगे पुलिस तैनाथ रहेछ ड्युटीमा । मेरो हंसले ठाउँ छाड्यो । अब भने मेरो नोकरी गयो । म जेलभित्र कैदीहरुसित बसेर सुक्खा रोटी टोकेको कल्पना गर्न थाले । चिसो बेलाइतिमा सुतेर आफु उपियाँ र मच्छडसित सङ्घर्ष गरिरहेको सम्झे । जुंगे पुलिसले आएर ती दुई महिलालाई भने, 'आफ्नो सामान सहित उत्रनुहोस् हामीलाई पुरा रिपोर्ट छ ।'

दुइवटी महिला एक एकवटा झोला बोकेर गाडीबाट उत्रे । मेरो मुटुले छातिभित्र ढ्याँग्रो ठोक्न थाल्यो । यो मुटुले गर्जे हामीलाई पनि उफ्रनुमा लङ्कै छोड्ने रहेछ । म खलखल भएँ ।

जुंगेले मेरो झोला छोएर भन्यो–'यसमा के छ ?'

'केही छैन, यो एउटा झोलामा अलिक सब्जी छ अलि यो आर्को प्याकेटमा चाहिँ नानीले पेन्टीग गर्दा रंग पोत्ने दुई तीन वटा भाडाहरु छन् ।' अकमकाउँदै झुठ बोले मैले ।

'ल ल ठिक छ ।' जुंगेको यति चार शब्दले मलाई बाह्रमनको भारी विसाएझै ढुक्क भयो ।

दुई महिला उत्रेका थिए । गाडीलाई जाने आदेश दियो उसले । अब समस्या टर्‍यो । 'अब जिन्दगीमा फरेन गुड्स किनेछु भने के' भने मनमनमा ।

गाडी अघि बढ्यो बाटोमा ड्राइभरले भन्यो–'दिदीहरुको एउटा गुन्टा चाहिँ गाडी माथि नै छ । लाल बजारमा लगेर छोडिदिनु पर्छ ।'

मलाई तर अरुको भन्दा आफ्नै चिन्ता बेसी थियो । म कमसेकम पक्रा

खान बाट बचेको थिएँ ।

यतिञ्जेल सेकेण्ड सीटमा चुप्प बसिरहेका एक बुजुर्ग व्यक्तिले मुख खोले,–'हन हाम्रो देशका मानिसहरुमा यो फरेन फोबिया चाहिँ किन छ ? बास्तवमा इंडियामा बनेको चिजहरुको विश्वबजारमा ठूलो महत्व छ तर हाम्रा मान्छेहरु फरेनका चिजहरु राख्ना आफ्नो शान, मान र सम्मान सम्झन्छन् । घरमा फरेन गुड राखेर धाक जमाउँछन । मलाई त लाग्छ यो फरेन फोबिया एकदम गलत कुरो हो ।'

फ्रन्ट सिटमा बसेका एक भद्र व्यक्तिले पछाडिपट्टि मुन्टो फर्काएर भने–'राष्ट्रपिता माहात्मा गान्धीले विदेशी सामान बहिस्कार गरेर स्वदेशी आन्दोलन चलाए पनि भारतवर्षलाई स्वाधिन गराए । हामी नागरीकहरुचाहिँ विदेशी सामानमा धाक गर्नु ?'

सेकेण्ड सिटका बुज्रुक व्यक्तिले भने–'त्यतिमात्र कहाँ हो ज्यू ! देशको सामान देशवासीले किन्नु देशको आर्थिक उन्नति गराउनु पनि त हो ।'

अघिल्लो सिटको मान्छे फेरि पछाडि फर्केरु बोल्यो –'ज्यू ठिक भन्नु भयो । खादीको लुगा प्रयोग गर्न हामी लाज मान्छौ । तर जान्नेहरु खादीको प्रयोगमा गौरव अनुभव गर्छन ।'

सेकेण्ड सिटको व्यक्तिले मनशाय पोखे,–'अब हाम्रै सिक्किममा हेर्नुहोस् 'सिक्किम खादी अनि ग्राम उद्योग बोर्ड'ले उत्पादन गरेको सामग्री कति महत्वपूर्ण छन् । हाम्रै बेकारी भाई बहिनीहरुको उत्पादन । सरकारी कुटीर उद्योग संस्थानमा कति राम्रा राम्रा जिनिसहरु बनिन्छन् । त्यहाँ बनिएका थान्का, गलैचा, काठ, बेत-वासका सामग्रीहरु विश्व प्रसिद्ध छन् । हाम्रा नेत्रहिन कलाकारहरुले बनाएका बेतका मुडाहरुमा किनेर त्यसमा बस्दा पनि मलाई त गर्व लाग्छ । हामीले आफ्ना मसिना उत्पादनहरुलाई पनि विस्तार गरेर व्यवसाय बढाउनु पर्छ । हामीले पनि उपभोक्ता मात्र नभएर उत्पादक बनिनु पर्ने आवश्यकता छ । हाम्रा देशमा उत्पादकहरुलाई अनि हाम्रै देशको उपभोक्ताहरुले नै उत्साहित गर्नु पर्छ ।'

अघिल्लो सिटको मानिस अलिक हासेर भने,–'मलाई त लाग्छ ज्यू , यो फरेन फोबिया पनि एउटा रोग हो रोग !'

'के को रोगमात्रै महारोग हो महारोग' अर्कोले थप्यो ।

त्यसपछि दुवै खिलखिलाएर हाँसे । त्यो हाँसोको छुरिले मेरो मन टुक्रा टुक्रा पारेर काट्यो ।

तिनीहरूको वार्तालापको तराजुमा म आफुलाई तौलिदै थिएँ । जतिपल्ट पनि तर म मेरो ओजन पल्ला हलुङ भएर माथि नै रहेका पाउँथे । यस्तैमा हामी गान्तोक आइपुग्यौं ।

म घर पुगें । तर मेरो मन बदलिसकेको थियो । मसित फरेन ट्रे घरमा लिएर आउँदाका कुनै उन्माद र उत्साह थिएन । ट्रे श्रीमतीको हातमा थमाएर मैले भने–'ईः मैले यो फरेनको ट्रे लिएर आएँ ।'

श्रीमती ट्रेको पोको समातेर हाँसी । शरद पुर्णिमा जून कोठाभित्र पसे जस्तो वातावरण बनाई अनि मीठो मुस्कानसित भनी,–'अब साथी भाइ आउँदा हाम्रो पनि इज्जत बढ्ने भयो । आज त्यो ट्रेको ओपेनिग तपाई वर म मिलेर गरौं । तपाईं हात र मुख धुनुहोस् । म हाम्रो लागि दुई कपि कफि बनाएर यही ट्रेमा सजाएर ल्याउँछु र सँगै बसेर पिऊँ ।'

श्रीमती दंग परेर कुनै पुरानो गीत गुन्गुनाउँदै भान्सा कोठाभित्र पसी ।

म जुत्ता खोल्न लागें । एकै छिनमा भित्रबाट ट्रेको सेट हातमा लिएर झोक्किदै आई । उसले मलाई भनी– 'कस्तो हुस्सु मान्छे ! फरेनको ट्रे भनेर अरुले झुक्याएको पनि थाहा नपाउँने ! तिमीलाई त सिलगढीको छट्टुहरुले बेचिदिएछन् । कस्ता लाटा मान्छे ! घरमा त निक्कै बाठा हुँ भनेर धाक लाउँछौ त !'

'किन के भो र ?' म बसिरहेको चौकिबाट जुरुक्क उठेर सोधे ।

उसले भनी,–'यीः हेर्नुहोस् त यहाँ के लेखेको छ··· : पढन सक्नुहुन्न··· ?'

मैले आँखा माडेर बलैले पढे, त्यहाँ त साहै साना साना अक्षरमा लेखिएको थियो 'मेड इन इन्डिया' ।

म थ्याच्च चौकिमा बसें अनि लामो खुइ काडेर भने,–'धिक्कार छ फरेन फोबिया !!'



## १५४/गौरीघाटतिर बाटामा (०६८. २. २१)

राप्रउ पोखेल : (अभिव्यक्ति अड्डाबाट टुईक्क परेर निस्केपछि ) ओहो कत्रो मृग ! हेनुस् त ज्ञानुजी, यति ठूलो मृग मैले त कहिल्यै देख्या थिइन ।

ज्ञानुवाकर पौडेल : (हाँस्तै) त्यो मृग होइन रामजी बाबु– त्यो त साँढे हो साँढे !

राप्रउ पोखेल : हैन, नगेन्द्रदाइको घरबाट मृग देखिन्थ्यो– हैन र ?

ज्ञानुवाकर पौडेल : हो, तर त्यो त गुह्येश्वरीको श्लेष्मान्तक वनमा पो देखिन्छ त । तपाईं अहिले उमाकुण्डनिर हुनुहुन्छ– बाटामा ।

राप्रउ पोखेल : एः बुझेँ । नगेन्द्रदाइले आज बिहानै बिहानै 'धेरै कडा' स्कच ख्वाउनु भएछ··· ।

ज्ञानुवाकर पौडेल : उहाँले 'धेरै कडा' ख्वाउनु भा होइन, तपाईंले बिहानै 'धेरै पेग' बजाउँनुभा हो ।

राप्रउ पोखेल : त्यो त हो क्यारे– आँखा पनि तिर्मिराएछन्··· ।



# दाइ यो भन्दा बढी के लेखुँ ?

**गगन विरही**

...जुन कटुवाल दाईलाई ट्याक्सीमा राखेर कन्काई बसको अफिस पुतली सडकमा छाडेर घर फर्कदा म यी कुराहरु सोच्दै थिएँ–

'सायद, कटुवाल दाईसँगको यो भेट अन्तिम होला, अब हाम्रो भेट हुन सक्तैन ।'

...र पनि मनको छेउमा चस्स चस्स घोचिरहन्थ्यो–कटुवाल दाई घर जान्छु भनेर धेरै पटक फर्किसक्यो, त्यसैले यस पल्ट पनि... । केही शंका थियो । तर कटुवालदाईलाई अब कसैले भेट्न सक्तैन, अस्ति २५ गते (भाद्र २५, २०३७) मा निधन भयो । विमल कोइरालाले साँझ न्यूरोडमा खबर सुनायो । म एकछिन अकमकिए... कत्रो विडम्बना यो !

'दाई ! लेख्नु भो ?'

'गगनलाई बल्ल तल्ल सकें । तर सबै युवाहरुका लागि नै लेखें... अँ ' बाह्रविशे' भन्ने कविता साह्रै राम्रो लाग्यो–अरु एक दोटा पनि... तिमी प्रति मैले निकै आशा राखेकोछु, लेख्दै गर ! लेख्दै जाउ ।' यति भन्नु हुँदै सिसीमा भएको रक्सी खन्याउँदै मलाई दिनु भो ।

'दाई ! मेरो पिउने बानी छैन, नपिउँ कि ?'

'ज्याँदै राम्रो पिउने बानी राम्रो होइन, भोली छाड्न गाह्रो पर्छ ।' यति भनेर आफैले पिउनु भयो । 'होइन दाई, यसरी एकविहानै किन पिउनु हुन्छ ?' 'मलाई रक्सी अति प्यारो लाग्छ, म रक्सी बिना बाँच्न सक्तिन । सम्पूर्ण कुराहरु त्यागे तर यसलाई त्याग्न सकिन । यसले पनि निकै फाइदा गरेको छ मेरो जिन्दगीमा... ।'

यी कुराहरु २०३५ श्रावण २५ गते पुतलीसडकको कटुवाल दाईको डेरामा चलेथ्यो । त्यतिखेर मेरो कविता सङ्ग्रहको लागि भुमिका बारे कुरा गर्न एकविहानै पुगेथे । धेरै दिन पछि लेखिदिनु भएथ्यो ।

धेरै जमघटमा, कहिलेकाही भट्टीमा र आफ्नै कविता र गीतहरुमा निराश हुनु भएको छ । एक दिन सानो रक्सी खाने पसलमा भन्नु भएथ्यो–' भाई, निराशा पनि जिन्दगी हो । जिन्दगी निराशा विना टिक्न सक्तैन... ।'

वास्तवमा यो कुरा सत्य पनि हो कि कटुवाल दाईले निराशा मात्र भोगे नन्–भोगे त एउटा बाध्यता, जसले धेरै पिउन सिकायो, गल्ली, चोक, सडक र यत्रतत्र ढल्न सिकायो । र पनि जिन्दगी प्रति कहिल्यै हताश भएनन् । यो कटुवाल दाईको वास्तविक जीवन थियो । त्यो जीवन अब वित्यो । अब त्यो जिन्दगीले कहिल्यै कविता पाठ गर्न मञ्च, गोष्ठी र जमघटमा प्रवेश गर्न सक्तैन । अब गल्ली, भट्टी र यत्रतत्रले जड्याहा, कवि, गीतकार हरिभक्त कटुवाललाई भेटाउन सक्तैन ।

कटुवाल दाई ! कला, साहित्य र संस्कृतिले देशलाई बलियो तुल्याउँदछ ।

साहित्यकार, कलाकारहरुले नै देशको गौरव बढाउँदछन् । तर साहित्यकार कलाकारलाई सम्मान गर्न यो देशले कहिल्यै पो व्यवस्था गर्ला ? जे होस् दाईले नेपाली काव्य जगतलाई दिनभएको गुण कसले विर्सनु सक्छ र ? हुन सक्छ हामीले नै केही भुल गर्‍यौ होला, कुनै दिन केही चित्त दुख्ने कुरा गर्‍यौ होला, तर यो भन्दा बढी दाईलाई हामीले मायाँ गरेका थियौं, सहयोग गरेका थियौं । र पनि तपाईंले प्रवास जानु भन्दा अघि–'मलाई कसैले हेरेनन । कसैले मायाँ गरेनन्' भनेर भन्नु भयो । दाई ! यहाँनिर हामी अलि दुःखी भयौ र पनि हामीले दाई आउने बाटो कुरिरहेका थियौ, तपाईं जाने बाटो कुरेका थिएनौ ।

···ट्याक्सीमा कटुवाल दाइ र म निकै गम्भीर देखिन्थ्यौ शायद । फसिकेवको संगम लजबाट ट्याक्सी पुतलीसडक, कन्काईबसको अफिसतिर जाँदै थियो । केहीबेर हामी दुवै मौन रह्यौं–के कुरा गर्ने भनेर । ज्याँदै नरमाइलो लागिरहेथ्यो,–'गगनभाई म जाँदैछु, अब नेपालमा कहिल्यै पस्तिन, काठमाडौंले मलाई माया गर्न जानेन, तिमीहरु पनि··· जेहोस् जाँदैछु, तिमीहरुको समूहले केही गर्ला भन्ने मलाई आशा छ, तिमीहरुलमा लेख्ने प्रतिभा छ, गगनभाई लेख्दै गर लेख्दै गर···तर तथाकथित लोकप्रिय हुँ भन्ने एक दुईजना साहित्यकारहरु छन् । उनीहरुबाट तिमीहरु टाढा रहनु बचेर रहनु उनीहरुसँग बढो कष्टसँग धेरै वर्ष काटे शायद आज मलाई··· । मेरो दुःखको दिनहरुमा नगेन्द्रले भने निक्कै साथ दियो, लाग्छ उही नै मेरो सबभन्दा ठूलो इश्वर हो ।'

सोध्न मन लागेथ्यो–'उनीहरूले तपाईंलाई के गरे ?'

तर यतिखेर ट्याक्सीको रोकावटले मैले प्रश्न गर्न सकिन । ट्याक्सी पछि पछि मोटरसाइकलमा आउनु भएका नगेन्द्र दाइले कटुवाल दाइलाई सुस्तरी ट्याक्सीबाट ओरालेर खाटमा राख्नु भयो । कटुवालको आँखाभरी रोदन थियो । मुहार भरी पीडा । कठै कटुवालदाई··· । दाई यो भन्दा बढी म के लेखुँ··· ?

ᏈᏈ

## १५१ कार्की किचेन (०६६ १० ६ ५)

गीता पन्थ : दाइ ! तपाईंको मन्थलीको साहित्यिक यात्रामा हामी कहिल्यै जान नपाउने ?

जगदीश घिमिरे : किन नपाउने··· पहिले भन्नु भएन त···

गीता पन्थ + तारा सुवेदी : त्यसो भए अहिले भन्छौं··· कोमल ओलीको जस्तो ··· त हैन तर पनि त्यसैगरी गाएरै भन्छौं–

अर्को पटक त हामी पनि मन्थली जान पाम् पाम् पाम् !

ᏈᏈ

# गोबरबाट निस्केको बिजुली

डा. गोविन्दराज भट्टराई
सुकर्म टोल, कीर्तिपुर

नेपाल प्रज्ञा-प्रतिष्ठानको हीरक जयन्तीका दिन आए– जेठ ७-८-९ गते २०७४ साल। यसलाई धुमधामसँग मनाउने निर्णय भयो र लामो तयारी शुरु भयो । तीनचार महीना अघिदेखिको सो अवसरमा अनेक विषयमा कार्यपत्र प्रस्तुत हुने भए, अनेक विषयमा गोष्ठी प्रवचन, पुस्तक प्रदर्शनी एउटा व्यापक कला महोत्सव हुने भयो ।

मलाई पनि एकेडेमीका दुईवटै विभागले जिम्मेदारी प्रदान गरे– अनुवाद विभागले एउटा र गद्य तथा समालोचना विभागले अर्को । दुवै विभाग नारी प्रधान रहेका छन्– क्रमशः प्राडा उषा ठाकुर एवम् प्राडा ज्ञानु पाण्डे ।

उता भारतीय नेपाली साहित्यलाई प्रतिनिधित्व गर्ने दार्जेलिङ-आसाम बीचका १४ जना स्रष्टा साहित्यकार आइसकेका छन् । डा. कविता लामा, डा. कृष्णराज घतानी, श्री ज्ञानबहादुर छेत्री आदि । अब ठूलो रमझम शुरु हुनेछ । मेची महाकालीका प्राज्ञ सभासदस्य, विज्ञजन अनेकौं विशिष्टजन राजधानीमा आइपुगेका छन् । साँच्चै ठूलो तामझामका बीच अपार भीडको उपस्थितिमा राजिनामा गर्न तत्पर रहेका प्रधानमन्त्री प्रचण्डले सम्मेलनको उद्घाटन गरे । यस्तो ऐतिहासिक क्षणमा उपस्थित हुन पाउँदा आफूलाई पनि गौरव लाग्नु स्वभाविक हो ।

दोस्रो दिन मेरा दुईवटा सेशनमा सहभागिता थियो । सर्वप्रथम प्रा. उषा ठाकुर अन्तर्गत आयोजित नेपाली वाङ्मय विकाशको निमित्त अनुवादको महत्व शर्षक गोष्ठीमा विशेष अतिथिको आसनबाट प्रवचन दिएँ र त्यसपछि दोस्रो गोष्ठी थियो समालोचना विषयको कार्यपत्र माथि । यसमा प्रा. डा. ज्ञानु पाण्डेको अध्यक्ष्यता थियो भने मेरो प्रस्तुति । कार्यपत्रको शीर्षक सरल थियो– समालोचनामा 'म' को उपस्थिति : कति सान्दर्भिकता कति असान्दर्भिकता ।

शीर्षक पढ्दा सरल देखिए पनि यसले बोकेको अर्थभार गहिरो थियो । यस पत्रमा हामीले प्राज्ञिक जगत्मा चलेका समालोचना लेख्ने भाषाको शैलीमा परिवर्तन गर्ने दिन आएको छ; किनभने विश्वले नै वस्तुपरक शैली त्यागेर विषयपरक शैलीको प्रयोग गर्न थालेको छ तर हाम्रो शैली अझै परोक्ष छ, वस्तुपरक छ, यथार्थ जीवनसँग नजोडिएको छ भन्ने दृष्टान्त पेश गरिएका थिए ।

कार्यपत्र प्रस्तुत गर्दै गएँ । विस्तारै, व्याख्या नगरी । सबैका हातहातमा प्रतिलिपि छन् । सबै निहुरेका छन्, कोही शिर ठाडो पारेर सुन्दै छन्, कोही एक हातले मोवाइल सेट छेलेर विस्तारै संवादमा निहुरेका छन् । विशिष्ट

अतिथिहरू मञ्चासीन छन् । उनीहरू अलिक विशेष व्यक्तिमा गनिने मौका पायौँ भन्ने भावले विजयबोध गरेका छन् । मञ्चाभिमुखहरू पनि तिमीहरू हेर्दै गर, हाम्रो पनि त्यहाँ उक्लिने दिन आउने छ भन्ने भावले बसेका छन् । म सभाध्यक्ष्य प्रा पाण्डेसितै छु । बोलबेला मनमा हर्ष भरिन्छ– यत्रो महोत्सव छ, यति धेरै स्रोता सहभागी । अब अर्को उत्सव त शतवार्षिकी मात्र हुनेछ । अझै ४० वर्ष पछि । म त्यसबेला सम्ममा १०४ वर्षको हुनेछु; आज जसरी खुसी हुँदै एकेडेमी सम्म आइपुग्न नसक्ने हुने हुँ कि ? त्यो संभव छ अथवा स्वर्गद्वारी पुगिसकेको हुँला त्यो पनि सम्भव छ । यस्तो सोच्तै म बसिरहेँ ।

त्यस्तै सम्झँदै अलिक गम्किएर बसेको थिएँ । आजको विषय छ समालोचनाको भाषा । त्यसले गर्दा मेरो मन किञ्चित क्रोधको वादलले पनि ढाकिएको छ । किनकि मलाई समालोचनाको क्षेत्र मन पर्दैन । म आफ्नो अमूल्य समयलाई त्यसमा खर्च गर्न चाहन्नँ । मलाई समालोचक भनिएको पनि मन पर्दैन तर जगत्ले झन्झन् समालोचनातिर खाँदिरहेका छन् । म कवि, उपन्यासकार, निबन्धकार यस्तैको समग्रता 'साहित्यकार' नामले पुकारिन चाहन्छु । त्यस उसले मेरो इच्छा पूरा गर्न साथीहरूले 'साहित्यकार गोविन्दराज भट्टराई' (२०७३) नामक ठूलो ग्रन्थ पनि प्रकाशित गरिदिए । त्यसपछि मलाई झन् बढ्ता समालोचकका कर्मतिर ठेल्दैछन् । त्यसपछि म यस्ता कर्म गर्न बाध्य भएँ । आज नै बिहानको सत्रमा नेपाली अनुवादको नयाँ दिशा विषयक सेसनमा अध्यक्ष बनेको थिएँ ।

तर आज म अर्कै मूडको समालोचक थिएँ । समालोचनालाई परम्पराको कारागारबाट मुक्त गर्ने झोँकले उभिएको थिएँ । अठोटले उभिएको थिएँ । समालोचक पनि साहित्यकार नै हो उसलाई कारामुक्त गरियोस् भन्ने प्रमाणसँग नारा लिएर उभिएको थिएँ । प्राज्ञिक विश्वले भाषा बदल्यो– स्रष्टा र समालोचकले एउटै र उस्तै भाषा लेख्नु पर्‍यो । सिर्जनात्मक भाषाशैलीको प्रयोग गर्नु पर्‍यो भन्न उभिएको थिएँ ।

भन्दै गएँ– विस्तारै । यतिको आवाज सबैतिर राम्ररी सुनिएला भन्ने ठहर गर्छु । बोल्दै जाँदा पोडियम माथिबाट परसम्म हेर्छु– स्रोतादीर्घा शान्त छ, उत्सुक छ । शुरुमै मैले बिन्ती गरेको थिएँ– आजको विषय गम्भीर छ । यसले एक अपरम्परित विचलन पथ पक्रेको छ । भाषा-शैलीका बारेमा यथास्थितिवादी सोच भएका विज्ञजनलाई यो विझाउन सक्छ, क्षमा गर्नुहोला । पुरानाको ठेक्कापट्टा धेरै भो चल्यो; विश्वविद्यालय त्यसैले अडेको छ; उनीहरू अरुलाई छिर्न दिँदैनन् तर समय बदलिएर गयो । अर्को दिनको उज्यालो खस्नै लाग्यो ढोका ढकढक्याउने समय आएकैले आज म पहिलो पल्ट यो कर्म गर्दैछु । चिन्तित नहुनु होला, आश्चर्यमा नपर्नु होला । म अब समालोचनालाई मुक्त गर्न चाहन्छु; समालोचकलाई मुक्ति दिन चाहन्छु ।

यो विकल्पको समय छ, बहुलताको छ, विविधताको छ, कठोर संरचनाको अपरिहार्य घेरा भत्काएर खुला आँगनमा आउनु होला । अब समालोचनाले सिर्जनाभन्दा माथि उच्च आशनमा बस्न पाउनुपर्छ । यसरी

समालोचनालाई कठोर संरचनाले नबाँधौं, उसलाई मुक्त गरौं, समालोचना लेखकलाई पनि मुक्त गरौं भन्ने कुरा सुनाउँदै थिएँ ।

विस्तारै ठिक्कको पिच र टोन मिलाएर बोल्दा जम्मा २,७७६ शब्दले बनेको सात पृष्ठको कार्यपत्र पढिसक्ता सतचालिस मिनेट लाग्यो होला । मेरो कर्म सकें; स्रोतसँग विदा मागें र आसनमा फर्के, अनि पानी पिएर ठूलो रिलिफको भाव अनुभव गरें यद्यपि यस्ता कार्यपत्रहरू महीना दुई महीनमा एउटाका दरले प्रस्तुत गर्दै आएको छु । तापनि आफ्नो सामू अज्ञात मास छ । विभिन्न स्तरको छ । सबैसँग बौद्धिक प्राज्ञिक बोधक्षमता नभएको पनि हुन सक्छ । मेरो कार्यपत्रको आशय बुझेर तर्क राखिदिए हुने– प्रस्तोताका मनमा यस्ता प्रकारका हल्का द्वन्द्व उठ्न थाल्छन्– स्वच्छ कोशी किनारमा हिउँदका बिहानमा घाम छेलेर यदाकदा कुहिरो उठ्छ यस्तै गरी ।

सभाध्यक्ष्यले स्रोता दीर्घातिर संकेत गर्नभुयो– अब तपाईंहरूको पालो हो । कहीं सन्देह भएमा प्रश्न सोध्नुहोस्... । त्यसपछि स्रोता सचेत देखिए । कहींकहीं ती हल्लिए अनि तीनचारवटा हात उठे । एउटा हात समक्ष हाते मायक पनि पुग्यो । ऊ जुरुक्क उठेर बोल्यो– यो कार्यपत्रको ढाँचा भएन । यसमा प्रस्तुति मिलेन । यसमा केही पनि मिलेन ।

उत्तरमा केही पनि बोल्न नसक्ने जस्तो भएँ । हालै म्यादी प्रहरीमा फेल भएको युवक थियो कि बाबुरामको पार्टीमा पसेर ठाउँठाउँमा ढुङ्गा हान्ने स्वयम्सेवक थियो; अथवा अरब यात्राको छनोटमा मेडिकल फेल भएको वा कुनै प्राइवेट कलेजको ज्यालादारी– नचिनेको अनुहार, नदेखेको व्यक्ति तर ऊ साहस र अठोट भएको नेपालीभाषी नागरिक थियो । उसले बोलेको मात्र सम्झिन्छु : यो कार्यपत्रमा केही पनि मिलेन ।

मैले उठेर उत्तर दिएँ– ३५ वर्ष बितेछन् मैले कार्यपत्र लेख्न थालेको, लेखाउन थालेको, प्रस्तुत गर्न थालेको, अझै गर्दैछु । नेपालका विविध स्थानमा गरें; भारतमा गरें, संसारका १९ वटा देशमा कार्यपत्रै बोकेर पाइला टेकें, अझै टेक्नेछु, धन्य छ हे अमुक विद्वान् । तपाईले आज मेरा आँखा खोलिदिनुभयो । अझै एउटा बिन्ती गर्छु, कार्यपत्रको ढाँचा कस्तो हुन्छ त्यो लेखेरै देखाइदिनोस्, म त्यसको अनुशरण गर्नेछु ।

अरु पनि कमेन्ट आए । कसैले प्रस्तुत धारणाको विपक्षमा राखे । कसैले यो आइस ब्रेक हो भने, विश्वविद्यालयको जागिर खाँदै यथास्थितिवादका पुजारी कर्ममा रमाउनेहरू आफ्नो धारणा राखेर बाहिर निस्के– एउटा डरलाग्दो तरङ्ग उठ्यो । आफ्नो भाषण सकेर म पनि घर फर्किने भएँ । दार्जिलिङ असमका सबै होटल कमरातिर लागेपछि म सुकर्मटोलतिर लागें । एकघण्टा लाग्छ । तर आज गोजीमा प्रशस्त भत्ता थियो । ट्याक्सीले शीघ्रै पुऱ्यायो ।

घरको प्रवेशद्वारको नजिकै पुराना पत्रपत्रिका अखबारको बिसाउने ठाउँ छ । तिनमा झट्ट आँखा परे– आजको गोरखापत्रको एउटा हेडलाईनमा देखें– गोबरबाट बिजुली ।

त्यसले मेरो मनमा कताकता क्लिक गऱ्यो र गोबर सम्भिन्न पुगेँ । हिँड्दा हिँड्दै बाल्यकालमा कतिपल्ट गोबरका थासमा चिप्लेर लडियो । कतिपल्ट गोबरको भकारो सोहोर्दा वा तान्दा थाकेर शरीरै गोबरजस्तै बेहोस भइयो । गहुँत मिश्रित मल बोक्ता गलेको, मल छर्दा थाकेको, घर वरिपरि गोबरको गन्धले थामिनसक्नु भएको सबै मनमै छ । जीवनसँग गोबर जोडिएको नोष्टाल्जिया उर्लिएर आउँछ तर ती गोबरदेखि छुटकारा पाउन नसकी अझै पनि म कुधिरहेछु जस्तो लाग्छ ।

पहाडमा गोबर नित्य प्रिय तत्व थियो– सारा गाउँका लागि । आफूले भाग्न खोजेर कहाँ जानु ? भाग्न खोज्ने पनि कारण थियो– कहिले इस्कुल जाँदाजाँदै गोबरमा चिप्लेर लडिन्थ्यो, कहिले घरैमा गहुँत थाप्न जाँदा बाछीले लात्ती हानेर गोबरमै लडिन्थ्यो; गोबरको मल उल्टाएपछि दुईतीन दिनसम्म आफ्नो एकपत्र छाला पनि खुर्केर मलका रासमा थुपारौँजस्तो हुन्थ्यो ।

अनि हामी २०२३ सालमा मधेश भऱ्यौँ । अब गोबरबाट मुक्ति मिल्ला भन्ने थियो तर भएन । बर्म गए कर्मसँगै भयो । मधेशमा झरेपछि ता भैंसी, गोरु, गाईबाछा, भुँइतलामा मान्छे जति माथ्लोतलामा– त्यसो हुँदा चौ बीसै घण्टा गोबर कृयाकलापबाट मुक्त हुनुको सट्टा झन् अभिन्न भइयो । बिहानै उठेपछि गोरुले मुतेको तुरतुर, गाईले गहुँत्याएको, भैंसीले गोब्र्याएको भिन्न भिन्न आवाज माथ्लो तलामै सुनिन्थ्यो ।

मैले कतिपलट बालाई भनेँ यी प्राणीलाई पहाडमा जस्तै अलिक पर सारौं तर त्यसको लागि साधन स्रोत बजेट थिएन होला, सबै गाउँले त्यसै गर्थे र हामी पनि पछि पछिसम्म पशु र मानिस अभेद रूपले सँगै बस्यौँ । अहिले भए समताको सिद्धान्तको लागू भएको छ भन्नुहुन्थ्यो । उसबेला व्यर्थमा योगदान दिइयो ।

एक दशकजति टचुशन पाढाउने ठाउँ त्यही टाँडमुनि थियो । घरमुनि ढाकेर बस्तुभाउ सुत्थे उठ्थे, गोब्र्याउँथे, चबाउँथे, उघ्राउँथे । मचाहिँ एउटा कुनामा पन्साएर बेन्चीहरू राखी टचुशन पढाउँथें । अथवा छुट्टीको दिन हलगोरु नारेर बारीका गरामा पुग्थेँ । तर त्यहाँ पनि गोबरबाट मुक्ति थिएन । कारण मेरो एउटा गोरुको नाम छेरुवा थियो र अर्काको नाम दाप्से । छेरुवाले जुवा खुस्काउन चेष्टा गरेपछि म अनौ छोडेर भाग्थेँ । त्यसबेला छेरुवाले पचका हाने सरह गोबर हान्थ्यो, अन्दाजी पन्ध्रहात परसम्म पुग्नेगरी त्यसको पेट सधैँ बिसञ्च हुन्थ्यो ।

त्यसरी बाइस-पच्चीसको उमेरसम्म गोबरमा खेलेपछि म गोबरबाट उम्केको हुँ । हिजो अचानक "गोबरबाट बिजुली" देखेपछि म खुशीले नाचेँ । अहो यो जीवन गोबरबाट भाग्दाभाग्दा उत्तरार्द्धतिर ढल्केपछि गोबरको विषयमा त्यस्तो सुखद समाचार पढेर अत्यन्तै प्रशन्न भएको छु ।

'यो कार्यपत्र नै भएन' भन्ने व्यक्तिमा पनि अचानक बिजली बलेको थियो होला । उसले सुने-बुझेको जस्तो नभएपछि यो भएन-मिलेन भन्ने चेतनाले उत्तेजित भएकाले गर्दा उसले आँट गरेर बोलेको थियो होला– "यो तपाईंको

कार्यपत्रै मिलेन ।” ऊ सधैँ रुढीवादले सिकाइएको पाठबाट अविचलित रहने एक निष्ठावान् पात्र थियो । म चाहिँ सधैं नित्य नवीनताको सम्भावना खोज्दै हिँड्ने एउटा आभाङगार्द रहेछु । त्यसो त म अघि लाग्ने हुँदा धेरै ठाउँमा ठोकिँदै उठ्तै गर्नु परेको छ । अघि विराटनगरमा रोलाँ बार्टकृत लेखकको मृत्यु सिद्धान्त सुनाएँ, त्यहाँ केही कडा लेखकहरूले झम्टे । काठमाडौँमा त गोबर छैन होला भनेको तर मेरो जीवन एकपल्ट एक थास गोबरमै चिप्लेर लडेको थियो । आज १५ वर्षपछि स्वयम् एकेडेमीबाटै रोलाँ बार्टको जीवनी र सिद्धान्त छापिँदैछ । त्यसपछि पोखरामा मायिक सिद्धान्तबारे कार्यपत्र प्रस्तुत गरेँ । प्रबुद्धहरूले त्यहाँ पनि आक्रमण गरे आज विश्वविद्यालयबाट मायिक सिद्धान्तमा शोध हुँदैछन्; पछि बुटवलमा, नेपालगञ्जमा, सुर्खेतमा, चितवनमा र काठमाडौँमा अनेकपल्ट उत्तरआधुनिकतावादका प्रवचनमा छेकारो मारेर त्यसलाई निस्फल गराउन यो संरचनावाद विरुद्ध हो भन्ने; यो मार्क्सवाद विरुद्ध उठेको भ्रान्ति हो भन्नेहरू पुगे । डायास्पोराको सिद्धान्तको अपव्यख्या गर्दै अमेरिका र बेलायतमा गरिएका मेरा प्रवचन प्रयत्न पनि व्यर्थ हुन् भन्ने साहसीहरू उभिए । तर आज नेपाली डायास्पोरामा विद्यावारिधिहरू जन्मेका छन् । झाडीमा लुकेर ढुङ्गा हान्नेहरूको यहाँ कमी छैन । तर विगत अढाइ दशकदेखि म नित्य नवीनताको पक्षमा छु, विश्वचेतनाको पछि छु– डायास्पोरा, जनजातीय लेखन, नारीवादी लेखन, पर्यावरणीय... प्रत्येकपल्ट यस्ता अवधारणा ल्याउँदा एकपल्ट ठूलो प्रतिरोध हुन्छ । म खप्तै छु । यी सबै नवीनता उत्तरआधुनिकताका हुन् । फेरि बिस्तारै सामसुम हुन्छ । एकपल्ट विरोधमा उत्रिनेहरू फेरि तिनकै समर्थनमा काम गर्न थाल्छन् । यसपालि त्यस्तै केही भयो । त्यो कार्यपत्र प्रस्तुतिको दिन झिलिक्क गोबरबाट बलेको बिजुली देखिएको थियो । धन्य पिटापिटमै उत्रनु परेन ।

ɞɞ

## १५८ विराटनगर (०६८माघ)

रामबाबु दाहाल : परशुजी ! यसपालि तपाईको टोलीमा महिला साहित्यकार देखिएनन् नि– यस्तो त नहुनुपर्ने ।

परशु प्रधान : कुरै नगर्नुस् । एकपल्ट ग्रुपमा एउटी महिला अधिकार वादी कवयित्री पनि थिइन् । बेलुकी होटलमा हामीहरू दुई दुई जना एउटा कोठामा बस्यौं । उनलाई एउटा सिंगल बेडको कोठा दिएको त बुझ्नु भो के तमासा गरिन् !

रामबाबु : के गरिन् ?

परशु प्रधान : हामीले आधा आकाश ढाकेका छौं, हामीलाई हरेक कुरामा समानता चाहिन्छ... तपाईंहरू चाहिँ दुई दुई जना सुत्ने– म चाहिँ एक्लै सुत्नु ? सहन्न म यस्तो पक्षपात... मलाई पनि एउटा साथी चाहिन्छ भनेर हैरान हैरान पारिन्... त्यहाँदेखि दुरद्वाई भएको छु ।

ɞɞ

# मेरा पिताजी श्रेष्ठ आइमाईको छोरो : मेरी आमा

**घनश्याम राजकर्णिकार**
कृष्णापाउरोटी चोक, कमलपोखरी

आमाले भन्नुभएकोबाट थाहा पएको कुरा हो । यो कुरा हजुरबा अथवा हजुरआमाले बुबालाई भन्नुभएको हुँदोहो र बुबाले आमालाई भन्नुभएर थाहा पाएको आमाले मलाई भन्नुभएको होला । कुरा के हो भने आमाकी सासू अर्थात् मेरी हजुरआमा ज्यादै धार्मिक स्वभावको हुनुहुन्थ्यो । बिहान सबेरै झिसमिसेमा उठी दिनहुँ आफ्नो वासस्थान कमलपोखरीबाट पशुपतिनाथ जानुहुन्थ्यो । यो उहाँको अटूट दैनिक क्रिया रहेछ । जाडोयाममा पनि उहाँलाई बिहान सबेरै पशुपति जानै पर्ने रहेछ । पशुपतिबाट फर्केर आउनासाथ पूजाकोठामा गई न्हिकं (नेवारी शब्द- दैनिक गर्नुपर्ने तान्त्रिक विधिको पूजा र जप) गर्नुहुन्थ्यो । नेवारी परम्परामा घरको मूलीबाट यो ँन्हिकं विधि पुरा गर्ने गरिन्छ । म सानो छँदादेखि नै घरका मूली बुबा र आमाले अन्तिम समयसम्म ँन्हिकं गर्नु भएको देखेको थिएँ । हजुरआमा पनि पूजाकोठामा करिब एक घण्टा न्हिकं गर्नुहुन्थ्यो । अनि तल पसल अर्थात् हाम्रो त्यसबेलाको कुत्ताघरस्थित मिठाइ पसलमा आफ्नो दैनिकी काम गर्नुअघि दुईओटा स्वारी, एउटा खजुरी, तीनचार मुठीभर फुरनदानाको साथ एक खोल्चा रक्सी खानुहुन्थ्यो । कुत्ताघर भन्ने नामबारे अलिकति प्रष्टयाइ हालूँ । म हालबसेको ठाउँलाई त्यसबेला कुत्ताघर भनिन्थ्यो अर्थात् लालदरबारका मालिक तेजशमशेर कुकुर पाल्नमा खूब सौखिन हुँदा उनको लागि कुकुरै कुकुर पाल्ने टहरायुक्त एउटा चोक नै बनाइएको थियो जसलाई कुत्ताघर भनियो । मेरा बाजे हिरामानसिंह पहिले वीरशमशेर कहाँ मिठाइ बनाई पुऱ्याउने गर्नुहुन्थ्यो भने पछि वीरशमशेरको देहान्त पछि उहाँ वीरशमशरेकी नेवारनी रानी पट्टिका छोरा तेजशमशेर कहाँ कार्यरत हुनुभएको हुँदा तेजशमशेरको लालदरबार अगाडि कुत्ताघरतिर हाम्रो बसोबास भएको रहेछ । मेरी बज्यै लक्ष्मीकुमारीले माथि भनेझैँ रोटी र रक्सीको बिहानी नास्ता ९द्यचभबपाबकत० पछि दिउँसो एक बजेसम्म त्यसबेलाको हाम्रो मिठाइपसलमा रेखदेख गर्नुहुन्थ्यो र दुईबजेतिरमात्र खाना खानुहुन्थ्यो ।

आमाबाटै थाहा भएको कुरा हो, हामी राजकर्णिकारहरू बौद्धमार्गी भए पनि उहाँ हजुरआमा जन्मले श्रेष्ठ थरको हुनुभएकोले होला देवाधिपति पशुपतिनाथको खूब सेवा गर्नुहुन्थ्यो । उहाँ बुहारीहरू (मेरी आमा र ठूली आमा)लाई नचाहिने कुरामा दुःख नदिने स्वभावकी असल सासू हुनुहुन्थ्यो । अनि बिहानको पूजापाठ सकेपछिदेखि दिउँसोसम्म आफ्नो कारोबारमा रेखदेख गरेर खट्नुहुने कर्मशील हुनुहुन्थ्यो । यो उहाँको कर्मशील गुण पछि आमामा सर्दै अहिले मेरी अर्धाङ्गिनी शान्तासम्म छाएको छ । जीवन सङ्गिनी शान्ताले मेरो कृष्णपाउरोटीको कारोबारमा रेखदेखगरी मलाई औधी सघाइरहेकी छिन्

जसलाई मैले मेरी आमा र हजुरआमाको शुभाशिष ठानिरहेछु ।

त्यसबेला काठमाडौंमा पुस, माघतिर अहिलेभन्दा निकै जाडो हुन्थ्यो । म सानो छँदा बिहान तुसारोले ठाउँठाउँमा सेताम्य भएको र पानी बरफमा परिणत हुने गरेको देख्थें । आजकल काठमाडौं शहरमा यस्तो भएको देखिन्न । घनावस्ती वा जलवायुमा परिवर्तन भएर हो कि के हो थाहा भएन । त्यस्तो ठिहिऱ्याउने जाडोमा हजुरआमा 'दोलाइँगाः' (नेवारी शब्द– जाडोमा न्यानो सँग ओढ्न दुईसरो कपडाको बीचमा कपास राखी सिलाइएको एक किसिमको बाक्लो खास्टो) ओढी आफ्नो शरीरलाई अझ न्यानो पार्न त्यो खास्टोभित्र मधुरो सल्केको गोलको आगो भएको मकल च्यापी पशुपति जानुहुन्थ्यो रे । यो सुन्दा हामी फुच्चा फुच्ची दङ्ग त पर्थ्यौं तर पछि अलि बुझ्ने भएपछि हजुरआमाको पशुपतिनाथप्रतिको श्रद्धा र सेवा भाव थाहा पाउँदा म छक्क पर्ने गर्छु । दिनहुँ बिहान झिसमिसे सुनसान एकलास समयमा पशुपति जाने क्रममा एकचोटि उहाँलाई ज्ञानेश्वरको ओरालो सकिनासाथ मैतिदेवी मोडको ठीक अगाडितिर एकजना कसाईं जातको मान्छेले लुटपाट गर्न आक्रमण गर्न थालेछ । त्यसबेलाको समयमा त्यतातिर अक्सर लुटपाट हुने गर्थ्यो रे । र त्यसैले त्यतातिर मान्छे बिहान सबेरै वा बेलुका अबेर जान आउन डराउँथे रे । तैपनि हजुरआमा त्यतातिर हुँदै बिहान सबेरै पशुपति जाने उहाँको बानी नै भइसकेको थियो । उहाँलाई आक्रमण हुँदा कति नडराइकन आक्रमण गर्ने मान्छेलाई आफ्नो घरको सेवकलाई हपारे झैं हपार्दै भन्नुभएछ– "हेर बाबु, मलाई चिन्दैनस्, म लालदरबारकी हलुवाइनी साहुनी हूँ । भरे मकहाँ आउनू । बच्चाहरूलाई रोटीको पोको लिन आउनू ।"

त्यसबेलाको चोर पनि कस्तो आज्ञाकारी ! हजुरआमाको हप्काइ दप्काइ सुन्नासाथ लुत्रुक्क परी 'हुन्छ बज्यै, हुन्छ ।' भनेछ । नभन्दै दिउँसोतिर त्यस बेलाको हाम्रो मिठाइ पसलमा त्यो चोर मान्छे टुप्लुक्क आइपुगेछ । अनि हजुर आमाले पनि मुसुमुसु हाँस्नुभई एकपोका मिठाइरोटी उसलाई दिनुभएछ । त्यसबेलादेखि ज्ञानेश्वरको ओरालोदेखि गौशालाको उकालो बाटोसम्म त्यतातिरका चोरहरूनै हजुरआमाको अङ्गरक्षक जस्ता भएछन् । त्यतातिर चोरहरूले हजुरआमासँग भेट भएमा बढो आदरसाथ 'बज्यै भायाय्' (नेवारी शब्द– जसको अर्थ 'बज्यै ढोगुँ') भन्न थालेछन् । यसरी हजुरआमाको नीडरता र चोरहरूको इमान्दारीता अनुभूत गर्दा अचेल म जिल्लिन पुग्छु । हजुरआमाले जिउनुको अर्थ बुझ्नुभएको जस्तो लाग्छ मलाई ।

यसरी नै हजुरआमाबारे आमाले भन्नुभएका कुराहरू खोतल खातल गर्दै जाँदा एक अंश उहाँको वंशबारे र अर्को प्रसङ्ग हजुरबासँगको प्रेमलिलाबारे केही लेख्ने घृष्टता गर्दछु । आमाको भनाइअनुसार हजुरआमा लक्ष्मीकुमारी भक्तपुरनिवासी हुनुहुँदो रहेछ । यसरी हजुरआमा भक्तपुर निवासी, हजुरबा ललितपुरनिवासी र म चाहिँ काठमाडौंनिवासी । अर्थात् मेरो जीवन लिलामा ललितपुर, भक्तपुर र कान्तिपुरको अस्तित्व विद्यमान

रहेको रहेछ । हजुरआमाबारे मलाई अत्यन्त चाख लागेको कुरा के भने उहाँ भक्तपुरका मल्ल राजा खलकपट्टिका छोरी बेटी रहिछिन् । यसरी जातले उहाँ श्रेष्ठ हुनुहुन्थ्यो, त्यसमाथि राजघराना । हामी राजकर्णिकार चाहिँ तुलाधर (उदास) सरहरका हौँ अर्थात् श्रेष्ठ थरदेखि एकतह मुनिको हुन आउँछ । हामीभन्दा मुनिका अरू धेरै थर छन् जस्तै मानन्धर, चित्रकार, रञ्जितकार, मालाकार, सुवाल, महर्जन, नापी आदि । अहिले त हाम्रो नेपाली समाजमा जातभातलाई त्यति महत्व दिने गरेको छैन जति पहिले दिइन्थ्यो । नेपालमा प्रजातन्त्र र खुला वातावरणको आगमनले अन्तरजातीय वैवाहिक सम्बन्ध पनि राम्ररी फस्टाइरहेको छ जुन स्वागत योग्य कुरा हो । तर आजभन्दा ११५ वर्ष अघितिरको नेपाली समाजको रीतिथितिबारे हामी कल्पना नै गर्न सक्तै नौँ । त्यसबारे देख्ने मानिसले भनेका कुरा एकले अर्कोलाई भन्ने गरेको वा कोही कुनैले लेखेकोबाट मात्र थाहा हुने कुरा हो । यो कुरा सही हो त्यसबेला जातभातलाई बडो महत्वका साथ हेरिने गरिन्थ्या– सानो जात, ठूलो जात, छुनु हुने वा नहुने, पानी चल्ने वा नचल्ने आदि इत्यादि ।

हजुरआमा लक्ष्मीकुमारीलाई हजुरबा हिरामानसिंहले कसरी प्रेम गरी भगाएर ल्याए त्यसबारे आमाले बुबाबाट सुनेको कुरातिर लागौं । त्यसबेला हजुरबा पाटन टङ्गलटोलको पुर्ख्यौली घरमा सगोलमा बस्नुहुन्थ्यो । उहाँ विवाहित छोरा-छोरीका बाबु पनि भइसक्नु भएको थियो । एकदिन वीर शमशेरले श्री ३ महाराज भइसकेपछि आफूलाई जेरीस्वारी जस्ता मिठाइरोटी सित्तैंमा खान दिएर गुन गर्ने जिजुबाजे गजराजलाई सम्झेर उनका ठूला छोरा तथा खेल्ने साथी हजुरबा हिरामान सिंहलाई आफ्नो दरबारमा मिठाइ बनाउने निजी हलुवाइमा नियुक्त गर्नु भएको रहेछ । श्री ३ महाराजको दरबारमा काम पाउनु भनेको ठूलो धाक, धक्कु र रवाफको कुरा थियो । त्यसैले हजुरबा फुरुङ्ग हुनु स्वाभाविकै थियो । उहाँले दायाँ बायाँ केही नहेरी आफ्नो पुर्ख्यौली घर र जग्गा जमिन सबै दुईजना भाइहरू– वृषराज र रत्नप्रसादलाई सुम्पिई श्री ३ महाराजको दरबारमा कार्यरत हुन सपरिवार काठमाडौं झर्नुभयो । दर बारमा प्रवेश गर्नु भएपछि हजुरबाको चुरीफुरी र शान शौकतमा निकै बृद्धि भएछ । वीरशमशेरको दरबारमा ठेक्काको रूपमा मिठाइरोटी परिपूर्ति गर्न अरू कामदारहरू लगाई उहाँले शौकीन मालिकको जीवनशैली अपनाउनुभएछ । एक त श्री ३ महाराजको कृपापात्र अर्को खेल्ने साथी हुँदा हजुरबालाई वीर शमशेरको दरबारमा आवत-जावत गर्न कुनै रोकटोक थिएन । त्यसैले उहाँ दरबारमा बाबुसाहेवहरूका प्रियपात्र बन्नु स्वाभाविकै थियो । त्यसैले बाबु साहेवहरूका लुगाफाटाहरू र अत्तरहरू हजुरबाले बक्सिसमा पाउनु हुन्थ्यो । त्यस्ता लुगाफाटाहरू र अत्तरहरूको प्रयोगबाट हजुरबा आफै झट्ट हेर्दा बाबुसाहेव जस्तै देखिनु हुन्थ्यो रे ।

एकचोटि दरबारका बाबुसाहेवहरूसँग भक्तपुरमा जात्रा हेर्न हजुर्बा पनि सँगै जानुभएछ । त्यसबेला काठमाडौंबाट भक्तपुरसम्म बाबुसाहेवहरू मात्र

घोडा चढेर जान्थे अरू चाहिँ हिँडेर नै जानुपर्थ्यो । भक्तपुरमा जात्रा हेर्दा हेर्दै एउटा घरको झ्यालमा रहेकी एउटी सुन्दरीसँग हजुरबाले आँखा लडाउन पनि भ्याउनु भएछ । 'आँखाको भाखा आँखाले…' भन्ने गीतले झैँ दुवै युवा-युवतीको देखादेख हेराहेर हुँदा दुबैको मनमा कुतुहलता जागेछ । जात्रा हेर्न सकी भक्तपुरबाट फर्केपछि खेलखतम हुनुपर्ने, तर भएनछ । भोलिपल्ट देखि हजुरबा त एक दुई दिन विराएर भक्तपुर जान थाल्नुभएछ र ती सुन्दरी केटीसँग आँखाजुधेको घरको वरिपरि चक्कर लगाउन थाल्नुभएछ । जात्राको दिनमा आँखा जुधेका खाइलाग्दा जवान केटा आफ्नै घर वरिपरी फेरि फेरि देख्ता जवान केटीको मनमा उत्सुकता जागेछ होला । जवानीको रगत ताते पछि केटामा भन्दा केटीमा चुलबुलता र उत्पुल्लता बढी हुन्छ भन्छन् । बारम्बारको देखादेख र हेराहेरमा दुबै एक अर्कोलाई हेरेर मुस्कुराउन थालेछन् । दुवैले एक अर्कोसँग प्रेम गर्न थालेछन् र लुकीछिपी भेटघाट पनि गर्न थालेछन् । अन्ततोगत्वा एक दिन त्यतैतिर दरबारस्क्वायरको आँगनमा रहेको पशुपति मन्दिरमा पूजा गर्न आएकी पम्फाकी फूल जस्ती सुको मल युवतीलाई हजुरबाले भगाएर काठमाडौं ल्याइपुऱ्याउनुभएछ । त्यस बेला भक्तपुरबाट काठमाडौंसम्म केटी भगाए ल्याउनु भनेको लरतरो कुरा थिएन । जेहोस् खाइलाग्दो नायक हजुरबा र सुकोमल नायिका हजुरआमा नवजीवनका कोसेली बोक्दै भक्तपुरबाट हिँडेरै काठमाडौं आइपुग्नु भएछ । त्यस्तो बेला उहाँहरू कसरी, कुनबाटो भएर, कस्तो उत्साहले भक्तपुरबाट चोर भागेजस्तै भाग्दै काठमाडौं आइपुग्नुभयो होला भन्ने कुराले मलाई बराबर घोत्लिन बाध्य बनाएको छ । काठमाडौं पुगेको २।४ दिनपछि मात्र हजुरबा त विवाहित पुरुष भन्ने कुरा हजुरआमालाई थाहा भएछ । यसबाट उहाँ मर्माहत हुनु स्वाभाविकै थियो । हजुरआमाले आफ्नै घर भक्तपुर फर्केर जाने ढिपी गर्न थाल्नुभएछ । यसबाट नवयुवती हजुरआमाको मनस्थिति कस्तो भयो होला म सहज अनुमान गर्नथाल्छु ।

तर हजुरबा मान्छे पक्का हुनुहुन्थ्यो । उहाँले युवती हजुरआमासँग गाँसेको माया-प्रीतिलाई कत्ति पनि कम हुन दिनुभएनछ । कतिसम्म भने उहाँले हजुरआमाको सुख सुविधा र खुसीको लागि जेठी पत्नी र बालबच्चालाई अर्कै ठाउँमा घरजम गरी दिनुभएछ । यसरी हजुरआमाको लागि हजुरबाले गर्नु भएको त्यागलाई मुरीमुरी प्रशंसा गर्न सकिन्छ तर अर्को पाटो जेठी हजुर आमा प्रतिको निर्दयी चाललाई जति दुत्कारे पनि शायद कमै होला । अतः द्वैध चरित्रयुक्त हजुरबाको मूल्याङ्कन गर्न म असमर्थ छु । जे होस्, हजुरबाले बाँकी जीवन कान्छी प्यारी पत्नीसँग बिताउनु भएछ । हजुर आमाबाट एकछोरी दुई छोरा भएछन् र तिनमा कान्छो छोरा मेरा पिताजी हुनुहुन्थ्यो ।

हजुरआमाको जीवनगाथा यतिकैमा सीमित थिएन । हजुरआमाका घरपरिवारले आफ्नो भन्दा तल्लो जातसँग सुटुक्क पोइल गएकी भनी छोरी अर्थात् हजुरआमालाई उहाँका माइती परिवारले वास्तै गरेन, मुखै हेरेन र

घरमै हुलेन छ । उहाँले आफ्नो जीवन पर्यन्त मइतीबाट तिरष्कृत भएर बस्नु परेको थियो । कहाँसम्म भने हजुरआमाकी आमा (जिज्यूबज्यै)को स्वर्गारोहण भएको तेह्र दिने दुःखको दिनमा दुःख मनाउन पुगेकी उहाँलाई माइतीमा भित्र पस्नै दिएएनछ । लाचारवश हजुरआमाले आफ्नी जन्मदात्री आमाको निधनमा पनि दुःख मनाउन पाउनुभएनछ । हजूरआमाको यस्तो करूण कहानी आमाबाट सुन्दा म पनि हुनसम्म बिह्वल हुनपुगेको थिएँ ।

हजुरआमाबारेको रोमान्टिक र कारुणिक कहानी यहाँ यसरी उल्लेख गर्न पाउँदा मलाई निकै सन्तोष लागिरहेछ मानौं हजुरआमाप्रति श्रद्धाका दुई थुङ्गा फूल अर्पण गरिरहेछु । निश्चयनै एकजना नातिले गर्नुपनै स्वधर्म गरिरहे को जस्तो मलाई लागिरहेछ ।



## १८७/पूर्व प्रम. के पी ओलीको निवास, बालकोट (०७३.९.२१)

के पी शर्मा ओली : (भरखर आइपुग्नु भएको गायक/संगीतकार/कवि रामेशतिर संकेत गर्दै चिया लिएर आउनु भएकी श्रीमतीलाई) तिमीले उहाँलाई चिनेकी छयौ ? उहाँ ··· ।'

श्रीमती ओली : (ओलीजीको वाक्य पूरा नहुँदै) किन चिन्दिन रामेश दाइलाई ? उहाँलाई त मैले तपाईंलाई भन्दा पहिले चिनेको ।



## ४१/तुलसी दिवसको निवास्थान, चाकुपाट (०४१)

तुलसी दिवस : खै डा.राकेश अझसम्म पनि आएन ।

मोहनराज शर्मा : जाउलाखेलसम्म पुगेर आउछु भन्थ्यो ।

यायावर : जाउलाखेल ? चिडियाखानामा अचेल चिम्प्यान्जीको घर खाली नै छ, कतै समातेर थुनिदिए कि तिहीं ?

जगदीश घिमिरे : अनि बोर्डमा लेख्लान् डा. चिम्पन्जी, एम ए पिएचडी ।



## १४३/पीस लज, नारायणगढ (०६६. ७. २४. ७)

परशु प्रधान : (दलबदलुहरूको चर्चामा) कति पञ्चहरू कांग्रेस कम्युनिस्ट हुँदै माओवादीमा घुसेर सांसद पनि भैसके··· ··· ।

हरि अधिकारी : दल त होइन, मिल्ने भए आफ्नो थरचाहिँ त म पनि बदल्ने थिएँ । कांग्रेसमा भविश्य बनाउन चाहने हो भने पहिले कोइराला बन्नुपर्छ । त्यसकारण अधिकारी सधिकारी छाडेर म कोइराला बन्ने थिएँ– हरि कोइराला ।



# नसोध मलाई कहाँ दुख्छ घाउ

नगेन्द्रराज शर्मा

एउटा भव्य समारोह । श्रोताले खचाखच भरिएको एउटा विशाल कक्षको भव्य मञ्चमा एकजना मरनच्यासे कवि आफ्नै कवितामा झुलिरहेका थिए । लठ्ठिएका आँखा, लडखडाउँदा गोडा र नरकंकाल जस्तो दुब्लो शरीर भएका ती कविले सम्पूर्ण श्रोताहरुलाई मुग्ध बनाएका थिए र आफू स्वयं पनि आफ्नै कवितामा मुग्ध भएझैं देखिन्थे । तालीको गडगडाहट··· प्रशंसा । यौटा आर्को यौटा आर्कोको फर्मायसमा उनी एक पछि आर्को कविता पाठ गर्दै थिए··· आकाशका तारा के तारा··· । मुक्त त ढुंगा हुन्छ··· यो जिन्दगी खै के जिन्दगी आदि र अन्त्यमा चुस्ता चुस्तै आफ्नै रगत पो चुसेछु भनेर बुस्सर्टका सबै टाँक भटट्ट चुँडालेर आफ्नो रगत र मासु सुकिसकेको शरीर को एक दुई तीन चार भनेर गन्न सकिने करंगका पंक्ति देखाइदिए । ताली र वाह वाहले त्यो सेरो फेरो नै थर्कियो होला– त्यही क्षण कवि हरिभक्तप्रति मेरो मुटुमा पहिलो पटक अनायसनै यौटा प्रबल कौतुहल, श्रद्धा र ममताको सन्चार भएको हो ।

यो थियो झापाको चन्द्रगढीमा साहित्य संस्थानद्वारा सम्पन्न गराईहएको देशव्यापी साहित्य सेमिनार को कुरा । त्यसको केही समय पछि उनी काठमाडौं आए । र व्यथितजीको पाहुना भएर उनैको घरमा केही महिना बसे अनि राजकीय प्रज्ञा प्रतिष्ठानमा जागिरे भए । साहित्य संस्थानको धर्मपथको कार्यलयमा उनको निवासस्थान थियो । पछि, परिवार झिकाए पछि उनी डेरा सरे । यो काठमाडौ बसाइको अवधिमा उनको उत्कर्सका दिन थिए –सुखका दिन नभए पनि दुःखका दिन पनि थिएनन् । र यसैले होला यी दिनहरू अत्यन्त छिटो विते ।

अनि एक दिन हरिभक्तले प्रज्ञा प्रतिष्ठानको जागिरबाट राजिनामा दिए । राजीनामा दिएपछि पनि उनको जागिर गएन । त्यो राजिनामा धेरै समय त्यसै स्थगित रह्यो । त्यसै बिच स्थिति यस्तो विग्रदै गयो कि ‘व्यथितजी मेरा बाबु हुन्’ भनेर सबैको अगाडि छाती ठोक्ने हरिभक्त अब ‘व्यथित मेरो शत्रु हो’ भनेर हिंड्न थाले । अनि एक दिन हरिभक्त प्रज्ञा प्रतिष्ठानमा पुग्दा उनी भन्दा पहिले उनको टेबुलमा उनको राजिनामा स्वीकृत भएको सूचना पुगिसके को थियो । त्यसपछि स्वभावतः उनलाई आर्थिक संकट पऱ्यो । आखिर श्री ५ महाजाधिराजको हुकुम प्रमाङ्गी अनुसार राजकिय प्रज्ञा प्रतिष्ठानकै मार्फत बाटो खर्च प्राप्त गरी उनी सपरिवार आसामतर्फ लागे–‘अब काठमाडौं फर्कन्न’ भनेर ।

उनी फेरि काठमाडौं आए । यस पटक उनी एक्लै थिए– परिवार आसामतिरै छाडेर आएका थिए । कामको खोजीमा धेरै दिन धेरै तिर हल्लिए र ल्लिए तर बेकार । यस बेला काठमाडौमा जागिर पाउन त्यति सजिलो थिएन ।

चाकडी चापलुसी, नातागोता र पक्षपातको चलनले प्रसस्त विकास गरिसकेको थियो । हरिभक्तको नागरिकता र शैक्षिक योग्यताका प्रमाणपत्रहरू पनि उनले खोजेजस्तो जागिरका लागि बाधक नै थिए र यीसब कुरा भन्दा माथि उनको रक्सीखाने बानी टड्कारो रूपमा देखापरिसकेको थियो । उनी कवि थिए कारिन्दा थिएनन् । कवि मात्र थिए– काम पाउन सकेनन् । हाम्रो दौडधूप जारी नै थियो । बल्ल बल्ल साझा प्रकाशनमा काम पाए । काम पाए तर केही महिना पछि नै काम सिद्धियो– अस्थायी काम थियो– सिद्धियो । काम थपिन पनि सक्थ्यो होला– आर्को काम पनि पर्न सक्थ्यो होला तर त्यसो भएन किनभने उनी कवि थिए कारिन्दा होइन । कवि थिए र त्यो पनि विहानै देखि रक्सी खानु पर्ने कवि । जुन जुन संस्थामा उनले काम गरे त्यहाँका अधिकारीहरूसँग कुरैकुरामा कुरा गर्दा उनीहरूले यस्ता कुरा गरे,– हरिभक्तबाट काम हुने होइन ! कवि भनेर सहयोगसम्म गरेका हौं··· त्यो सँधै गर्न कहाँ सकिन्छ र ?

उनी पुनः बेकार भए । रक्सी प्रतिको मोह झन् झन् बढ्दै गयो ।

यस्तैमा उनले एकदिन मलाई भने,– 'तिमी अभिव्यक्ति निकाल्दै छौ– त्यसमा मलाई पनि काम देऊ ।'

'अभिव्यक्ति त म निकाल्दै छु, यो ठिक हो तर त्यसमा कसैलाई काम दिने अवस्थामा म छैन । त्यो त मेरो रहर मात्र हो– खल्तीबाट खर्च गरेर कुनै तरहले छाप्दैछु··· ।'

'मलाई थाह छ- यसबाट तिमीले कति नोक्सान गरिरहेछौ- तर मेरो कुरो के भने त्यसमा मलाई पनि संलग्न गराउदछौ भने त्यसबाट केही नाफा पनि हुनसक्तछ··· म नाफा गर्न सक्छु··· मेरो गुजारा चलाउन सक्छु··· ।'

अभिव्यक्ति मेरो लागि 'अभिव्यक्ति' मात्र थिएन, मेरो रहर, मेरो अंह र मेरो तपस्या पनि थियो । अनि हरिभक्त पनि मेरा लागि हरिभक्तमात्र थिएनन् एउटा हार्नै नसक्ने कमजोरी पनि थिए । मेरा लागि यो धर्म संकटको स्थिति थियो र भनें,– 'हरिभक्त ! साँच्चै यसबाट तिम्रो गुजारा नै चल्छ भने तिमीलाई संलग्न गर्नमा मलाई खुशी नै लाग्नेछ । आर्थिक कारोबार सबै तिमी गर प्रेसको बिल तिर अनि त्यसबाट बचेको नाफा सबै तिमीलाई । अन्त तिर काम नमिलेसम्मलागि वा बढीमा एक वर्षका लागि हाम्रो यो सम्झौता ठान··· ।'

कुरा मिल्यो । उनी खुशी भए । म पनि खुशी भएँ । अनि उनका लागि काम खोज्नेमा उनीभन्दा बढी म सक्रिय भएँ– मेरा लागि अभिव्यक्तिको सम्पादन गर्न म भन्दा बढी उनी सक्रिय भए ।

अभिव्यक्ति छाप्दा सँधै मलाई टुट्टा पर्थ्यो । अभिव्यक्तिको ग्राहक बनाउने चलन थिएन । किनभने यसको स्थायित्वको कुनै ठोस आधार थिएन । ग्राहक बनाएर मात्र के गर्नु ? दुई चार वटा पत्रिकाले गरे जस्तो जथाभावी ग्राहक वा आजीवन ग्राहक बनाएर पत्रिका बन्द गर्ने प्रवृत्ति मलाई साह्रै नराम्रो लाग्ने हुनाले मैले अभिव्यक्तिको ग्राहक बनाउने गरेको गरेको नै छै

न । विक्री पनि धेरै हुँदैनथ्यो । पीपलकोबोट मुनि ज्यादामा डेढ दुईसय प्रति मात्र विक्थ्यो । अभिराज्यका अन्य स्थानहरू र भारतमा कति विक्री हुन्थ्यो त्यसका अझै लेखाजोखा नै हुन सकेको थिएन– म पठाउँथे मात्र । उता भएको विक्रि वितरणाको केही हिसाब किताब थाह हुदैनथ्यो । तर हरिभक्तलाई यसबाट आशा गरे भन्दा बढी नाफा भयो– अप्रत्यासित ढंगले । हरिभक्तले विज्ञापन पनि धेरै बटुल्न सके । उनकै नामले उनीमाथि द्रवित भएर उनैलाईमात्र विज्ञापन दिने सहृदयी सज्जनहरू पनि दुईचार जना थिए । जस्तो– राष्ट्रिय बाणिज्य बैंकका प्रमुख (तत्कालिन) डा.नवराज चालिसे, गुठी संस्थानका अध्यक्ष श्री बद्री विक्रम थापा आदि आदि र उनकै लागि भनेर ज्यादै सहुलियत दरमा अभिव्यक्ति छापिदिने प्रेस पनि उनै ले खोजे– 'संगम प्रेस' । यस संगम प्रेसका मालिक मणिरत्न कंसाकार मच्छिन्द्र बहालका प्रतिष्ठित कंसाकार घरानाका अत्यन्त उदार चित्त भएका साहित्य प्रेमी सज्जन रहेछन्– यीनको जति गुण गाएपनि पुग्दैन । एक त सस्तोमा अभिव्यक्ति छापिदिने त्यो पनि उधारोमा । सस्तो र उधारोमा छाप्दा पनि हरिभक्तले कहिल्यै विलको पुरा भुक्तानी दिएनन्– उल्टो बेला बेलामा १०-२०/१०-२० सापटी लिनु र त्यो विर्सिदिनु अनि फेरि लिनु र फेरि विर्सिदिनु त कविको स्वाभावै थियो । र यो सब कुरा मणिरत्न कंसाकारले बडो उदारतापूर्वक र शालीनता पूर्वक सहन गर्दथे । उनले कहिल्यै विलको रकमसम्म मागेनन्– सापटीको त कुरै छैन । अझ प्रेसको काम हेरिदिएबापत् भनेर मासिक रु४५०।- को दरले पनि दिए । यसरी लगभग एक वर्ष वित्यो । अभिव्यक्तिका जम्मा चार अंक प्रकाशित भए २०३४ साल भरिमा । र संगम प्रेसमा उनले अधुरो छोडेको पाँचौ अंक पनि पछि २०३५ सालमा प्रभाभकारी प्रेसमा लगेर छपउनु पऱ्यो मैले । यसरी अभिव्यक्तिका जम्मा पाँच अंकमा हरिभक्त कटुवाल पनि छन् सम्पादकद्वय मध्येमा ।

त्यसपछि हरिभक्तले काम पाए एड नेपालमा । अभिव्यक्तिबाट अलग भए । तर केही महिनापछि त्यहाँ पनि रक्सीकै कारण खटपट पऱ्यो– उनी टिक्न सकेनन् ।

त्यसपछि केही महिना यताउति हल्लिएपछि र निकै दु:ख पाएपछि उनले काम पाए रुपायन प्रेसमा । मलाई थाह भएसम्म काठमाडौंमा हरिभक्तलाई सहयोग गर्नेहरूमा उत्तम कुँवर पनि एक हुन् । रुपायन प्रेसमा मासिक रु.३००।-मा उनले पाँच महिना जति काम गरेपछि एकदिन उत्तम कुँवरलाई उनले भने,– 'उत्तमजी, मलाई तीनसयले पुग्दैन तलब बढाइदिनु पऱ्यो ।' उत्तमले भने– 'दिन त म तपाईंलाई तीनसय पनि दिन सक्ने अवस्थामा छैन तापनि मैले यो तपाईकालागि सहयोग सम्म गरेका हुँ । प्रेसको अवस्था, आयव्यय सब तपाईंलाई थाहैछ । हो, प्रेसको आय बढ्यो भने तपाई तलब पनि बढाउँला । अहिलेको अवस्थामा चाहिँ यहाँभन्दा बढाउन म असमर्थछु ।' त्यस बखत हरिभक्तको नाममा करिब दुई महिनाको तलब जति पटक पटक

गरी पेश्की गएको थियो । तर हरिभक्त फेरि रुपायन प्रेसमा गएनन् । अनि विरामी भए । ढाक्रे भए । विरामी भए । यस विमारीमा अन्यान्य रोगहरूका साथै उनका गोडा पनि सुन्निएका थिए । यसलाई लिएर अनेक चर्चा भए । उत्तमको चिसो छिडींमा बस्नु परेकोले गोडा सुन्निएको भन्ने कुरा पनि आए । उही छिंडीमा वर्षौदेखि उत्तम स्वयम् तथा बालमुकुन्ददेव पाँण्डेका साथै अरू कतिपय कामदारहरू पनि काम गर्दछन्– तिनीहरु कसैको पनि गोडा सुन्निएका छैनन् । दुःखको कुरा हो हरिभक्त अस्वस्थ्य भए तर यसो भयो भन्दैमा उनको अस्वस्थताको जिम्मेवारी वा दोष अरु कसैमाथि थोपर्नु उचित होइन । उनको अस्वस्थतामा यदि कसैको जिम्मेदारी वा दोष छ भने सर्वप्रथम त्यो स्वयं हरिभक्त कटुवालकै छ । उनी स्वयं आफ्नो स्वास्थ्यप्रति प्रशस्त लापरवाह थिए ।

त्यसताका मेरो एक किसिमको यस्तो बानी जस्तो नै भइसकेको थियो कि जहिले सुकै पनि मौका मिल्यो कि म हरिभक्तलाई काम दिलाउने प्रयास गर्थे । चाहे कुनै पार्टीमा होस् वा कुनै समारोहमा– जब कुनै काम दिन वा दिलाउन सक्ने किसिमको मान्छेसित कुरा गर्ने मौका मिल्यो कि यस्सो एउटा कुनातिर लगेर उनैको बारे कुरा चलाई हाल्थे र यसै सन्दर्भमा म एक पटक राष्ट्रिय खेलकुद परिषद्का सदस्य सचिव श्री शरदचन्द्र शाहासँग पनि हरिभक्तको सिफारिस गर्न पुगें । शाहाजी स्वयं साहित्यिक एवं हरिभक्तको प्रशंशक हुनुहुन्थ्यो । विभिन्न सामाजिक कृयाकलापका साथै खास गरी खेलकुद तर्फ ठूलो अभिरुचि राख्ने शाहाजी ज्यादै उदार र सहयोगी स्वभावका पनि हुनु भएकोले मेरो कुरा सुने पछि उहाँले हरिभक्तलाई उपयुक्त काम दिने आश्वासन दिनु भयो र हरिभक्तलाई भेटघाट तथा कुराकानी गर्नकालागि मोलिस्यू रेष्ट्राँमा निमन्त्रणा गर्नु भयो । एकपल्ट, दुईपल्ट, तीनपल्ट हरिभक्तलाई मैले ढिलो चाँडो त्यहाँ पुर्‍याएँ पनि तर कहिल्यै उनी राम्रोसँग कुराकानीसम्म गर्न सक्ने स्थितिमा हुँदैनथे । सँधै पहिलेनै लडखडाउँन थालिसकेका हुन्थे । लडखडाउँदै हिड्थे लरबराउँदै बोल्थे– लतर पतर गर्दै खान्थे… । शाहाजीलाई म विश्वास दिलाउँदै थिएँ कि एकदिन उसलाई रक्सी नखाएको अवस्थामा यहाँसँग भेट गराउँनेछ… तर सकिन । किनकि यसै ताका उनी ओच्छ्यान परिहाले र परेकोपर्‍यै भए… ।

यी दुई चार कुराको चर्चा गरेर मैले यहाँनिर के प्रष्ट गर्न खोजेका हुँ भने– विगतकेही समय देखि उनी कामप्रति पनि उत्सुक वा लगनशील थिएनन् । कुनै उत्तरदायित्व पनि बोक्न चाहदैन थे– काम पाएपनि त्यसमा उनको अभिरुचि थिएन, उत्सुकता थिएन । त्यस्तै, साथीहरुसँग पनि बेला बेलामा चिडचिडा भइदिन थालेका थिए । कहिले एउटा साथीलाई गाली गर्थे त कहिले फलानो वा ढिस्कानोप्रति आक्रोश व्यक्त गर्थे वा कहिले फलानो सदस्य रहेसम्म प्रज्ञाप्रतिष्ठानमा खुट्टै हाल्दिन भन्थे त कहिले फलानो साहित्यकार, सम्पादकसँग बचेर रहनु– यिनीहरूले डस्न जानेका छन् र

यिनीहरू ज्याँदै विशालु पनि छन् भन्थे··· । त्यतिमात्र होइन त्यसताका उनी आफ्नै स्वास्थ्यसँग र आफ्नै शरीरसँग पति चिडचिडा भएका थिए । किनेर राखिदिएको औषधि पनि बेलामा खाँदैनथे । यसै ताका हो एक विहान म पुतली सडकको उनको कोठामा पुग्दा उनी रक्सीले टन्न भईसकेर पनि ठाडो घाँटी लाएर बोतलैबाट घटघट पिउन लागेको देखेर उनको हातबाट बोतल खोस्दै,– 'यो के गरेको हरिभक्त ?' भन्दा उनले जवाफ दिए,–'म आत्मदाह गर्दैछु– मलाई मर्न देऊ ।' अनि अलिवेर पछि अलिक शान्त भएर, अलिक संयत भएर र अलिक गम्भीर भएर गहभरि आँशु पार्दै भने,– 'म अब धेरै बाँच्ने होइन । यसकारण अब मलाई मनलागेको गर्न देऊ– जति बचाउँनु थियो बचायौ । अब शान्तिसँग मर्न देऊ ।' ···शायद यसैताका लेखे 'मलाई नशोध कहाँ दुख्छ घाउ··· म जो छु ठिकै छु विथोल्न नआऊ··· ।'

उनको भित्र कता कता एउटा घाउ थियो- त्यो सँधै दुखिरहन्थ्यो ।

घाउ त अरुको पनि हुन्छ तर उनी आफ्नो भावुकताको कारण बढी मर्माहत हुन्थे । उनको त्यो घाउ निरन्तर दुःखी नै रहन्थ्यो । बेला बेलामा अनन्त पीडाले छटपटाउँथे र बरबराउँथे । उनको पीडा कहिले आँशुबाट व्यक्त हुन्थ्यो भने कहिल्यै मौनताबाट कहिले कविताबाट व्यक्त हुन्थ्यो भने कहिले गीतबाट अनि कहिले उनको आक्रोशबाट, त कहिले बदनाम उनका आँखाहरूबाट । तर यस पीडा, यस घाउको विषयमा उनले कहिल्यै कसैलाई प्रष्ट केही बताएनन्, चुपचाप एक्लै सहिरहे । कहिलेकाहीं मैले कोट्याउन खोज्दा 'तिमीलाई त सब थाह छ नि' भनेर कुरामात्र छल्ने वा टार्ने प्रयास गरे । हुन पनि हो, आफ्नो छातीको घाउ नितान्त आफ्नाहरूले बनाइदिएको घाउ– अर्कोलाई बताएर, अर्कोलाई देखाएर के गर्नु ? मलाई त लाग्छ आफ्नो पीडा– अत्यन्त आफ्नाहरूले पाएको पीडा– आफू एक्लैले चुपचाप सहनुमा पनि एउटा अनौठो अनुभूति र सन्तुष्टिको अनुभव हुन्छ– जुन केवल आफैंलाई मात्र थाह हुन्छ । यसैले म उनलाई धेरै कोट्याउन्न थिएँ तापनि जिन्दगीका यस्तै यस्तै असजिला र कष्टमय सोपानहरूमा कुनै न कुनै क्षण एउटै किसिमको अनुभूति र वेदनाको अनुभव बाँडेर जियौं । अनि कुनै साँझ एक घुट्को रक्सी बाडेर खायौं र कुनै कुनै रात एउटै सपना बाँडेर निदायौ । यसरी उनका दुःखका दिनहरूमा हामी झन् नजिकियौ– झन् झन् नजिकियौं ।

संगम लजको एउटा कोठा । हरिभक्त एउटा खाटमा पल्टिएर रहेका । साहित्यकार, साहित्यप्रेमी– अन्य नाता कटुम्ब– धमाधम आउँदै जाँदै थिएँ । साथमा जाने भनेको भानिजले धोका दिनलागेको जस्तो छ । अस्तिदेखि भेट्न आएको छैन । उसले प्रस्ट कुरा गरिदिएको भए अरुनै कोही साथीको बन्दोवस्त गर्नुहुन्थ्यो । त्यसदिन साँझभरि हामीले (साथमा कुनै कुनै बेलामा गोविन्द गिरी प्रेरणा पनि) हरिभक्तले दिएका लिष्ट अनुसार सरसमानहरू– सुटकेश, घडी, लत्ताकपडा, केही किचेनका समान आदि आदि खरीद गरें । सिलाउन

दिइरहेका लुगा–प्यान्टहरू, कुर्तापाइजामा आदि दर्जीकहाबाट ल्यायौं । उसले रहर गरेको एउटा कुरा त्यसबखत पुरै काठमाडौ घुम्दा पनि किन्न पाएनौ– मोमो पकाउने भाँडो । यो भाँडो जाडोताका मात्र पाइँदो रहेछ ।

किनमेल सकियो । साँझ छिप्पियो- सबै आफन्तहरू लाखा पाखा लागे । त्यहाँ गगन विरही, म, नवराज कार्की र एकजना अर्का मानिस थिए– मैले नचिनेका । सरसमान मिलायौं– सामान त के थियो र जम्मा जम्मी एउटा सुटकेश- बरु दुई तीनवटा टोकरी बोट विरुवाहरूका थिए । मेटासे कुवा, सुनाखरी र अरु विभिन्न फूलका विरुवाहरू¨ । मेरा बँगैचामा भएका र अन्यत्रबाट पनि बटुलेका कतिपय । नेपालबाट उनले आसाम लगेका, उनले लैजान पाएका या भनौ नेपालले उनलाई दिएका सामानमा सबै भन्दा धेरै– टोकरीभरि थिए विभिन्न किसिमका विषालु सिउँडीहरू । विभिन्न किसिमका काँडा भएका र विभिन्न किसिमका विष भएका सिउँडीहरू । मालताल मिलाउँदा मिलाउँदै सिउँडीको एउटा काँडा हरिभक्तको हातमा विझिहाल्यो ।

कारिब आठ बज्यो । त्यहाँबाट हिड्ने बेला हुन लाग्यो । त्यसरात पुतली सडकमा बसको अफिसमै बास बस्ने कार्यक्रम थियो । हिड्ने बेलामा साह्रै गम्भीर भएर मुटुमा गाठो र आँखामा आँसु लिएर हामी (म, गगन, र नवराज कार्की) तिर हेरे । हामी सबै मौन थियौं । एक छिन पछि विस्तार हरिभक्तले भने, 'नगेन्द्र ! सबै थोक त भयो–अब एउटै इच्छा छ¨तिमीसँग धेरै दुःखका दिन विताएँ- धेरै पल्ट रक्सी पनि खाएँ¨ तर यता धेरै दिन- धेरै महिना भइसक्यो तिमीसँग बसेर रक्सी नखाएको¨त्यसैले अब एक पल्ट¨ अन्तिम पल्ट अलिकति रक्सी खाने धोको छ¨ नगेन्द्र नाइँ नभन¨ ।'

पोहोर साल, अर्थात् हरिभक्तलाई ब्लडप्रेसर बडेदेखि म उनलाई रक्सी देखि परै राख्ने प्रयासमा थिएँ ।

'धत् ! के कुरा गरेको तिमीले¨अरु चाँहे जे भन मान्छु¨ तर रक्सी खाने कुरा चाहिँ नगर यस्तो अवस्थामा¨ ।' म भन्दै थिएँ, उनले बीचैमा कुरा कुरा काटे,- 'तिमीले यसो भन्छौ भन्ने मलाई थाह थियो¨ त्यसैले मैले पहिले नै अलिकति लुकाइराखेको छु¨¨अन्तिम पटक मेरो तरफबाट अलि अलि खाऊँ भनेर¨ ।' अनि उनले खाट मुनिबाट 'वाश'को एउटा अद्धा निकाले ।

उनको जिद्धीका अगाडि हाम्रो केही लागेन– गगन विरही र मैले एक एक घुट्को खायौं, नवराज कार्कीले खाएनन् हरिभक्तले पनि एकै घुट्को मात्र खाए । तीन घुट्को मै यो अद्धा झण्डै आधा भइहाल्यो । बाँकीलाई राम्रोसँग विर्को कसेर उनले क्याक्टसको टोकरीमा घुसारे¨ ट्याक्सीमा हरिभक्त र गगन बसे, नवराज घरतिर लागे । ट्याक्सी पछि पछि म पनि पुतली सडक तिर लागे ।

अबेर सम्म पनि भनिज आएन¨आउँदैन आएन¨ । 'यी आफ्नाहरूले मलाई सँधै धोका दिन्छन्¨¨ म एक्लै पनि जान ता सक्छु ।' उनले भने ।

'तैपनि भोलि विहानसम्म पनि बाटो हेर अनि भानिज आएनन् भने

मात्र टिकट क्यान्सल गराउनु ।'

तर भोलि पल्ट विहानसम्म पनि भानिज आएनन् । भानिज त आएनन् तापनि हरिभक्त एक्लो थिएनन् । रातभरिमा बसको त्यस कार्यालयमै सुत्न आएका धेरै परदेशीहरू पेसिन्जरहरू उनका आफन्त भन्दा पनि आफन्त भइसकेका थिए... ।

मुरी मुरी सुन्दर सपनाहरूलाई मीठा मीठा कल्पनाले सजाउँदै आफ्नो मातृभूमिमा– आफ्ना पुर्खाहरूको देशमा–आएका थिए हरिभक्त कटुवाल– के के न गरौंला भनेर तर यस नेपाल भूमिमा उनले आफ्नो स्थान कहीं कतै पाएनन् । एक मुट्ठी मुस्कान छर्ने ठाउँ पनि पाएनन् एक थोपो आँसु झार्ने ठाउँ पनि पाएनन्- मीठोसँग निदाउँन सकिने एउटा न्यानो रात पनि पाएनन् । अलिकति दु:ख विसाउन- अलिकति पीडाको पोको फुकाउन- कसै को साथ पाएनन् । उनी यस सुन्दर शान्त विशाल नेपालमा कतै कसैगरी पनि अटाएनन् अनि एक दिन आफ्नो जीर्णशीर्ण शरीरमा मुरी मुरी रोग, कवित्वले भरिएको मष्तिस्कमा निराशा र शोक साथमा एक दुई टोकरी सिँउडीका काँडा बोकेर भारततिर भासिन गए– जताबाट आएका थिए उतै फर्किए– फेरि कहिल्यै आउँदिन यस काठमाडौंमा भनेर । आफ्नो घरमा हाँस्ने आधार नपाएर नेपाल आएका हरिभक्तले नेपालमा बाँच्नेसम्म पनि कुनै आधार पाउन सकेनन् तेस्रो विकल्प थिएन– परमधाम गए ।

काठमाडौंमा यस अन्तिम पल्टको बसाइमा उनले के कति दु:ख पाए–कसरी दिन विताए कसरी रात विताए– त्यसको कथा उनीसँगै बिलायो । तर उनी दिवंगत भएपछि विभिन्न शोकसभाहरूमा अन्यत्र जतातत‌ै पनि चल्ने चर्चाहरूमा पनि हरिभक्तको लागि अनेक किसिमले सहयोग गरेको थिएँ भन्ने कथाहरू लिएर धेरै साथीहरू उदाए । उनलाई शोषण गर्ने र उनलाई सहयोग नगर्नेहरुका विरुद्ध ठूला ठूला स्वरले उनको तर्फबाट वकालत गर्ने साथीहरू पनि थुप्रै देखापरे । यो सब देख्दा र यो सब सुन्दा मलाई लाग्यो कि हरिभक्तका लागि खास केही गर्न नसक्ने बरु मै पो रहेछु । किनभने, साँच्चिमा, म कसैलाई केही सहयोग–खासगरी आर्थिक सहयोग गर्न सक्ने स्थितिको मान्छे पनि होइन । ठूलो मेहनतको सानो कमाइले एनकेन प्रकारेण आफ्नो व्यवहारसम्म धानेर बसेको साधारण ने पाली जनता– आफैं त महादेव उत्तानो पर... भने जस्तो- मैले कसलाई के गर्न सक्नु र हरिभक्तलाई थेग्न सक्नु ?

मैले उनलाई गरेको केही आर्थिक सहयोग अन्य कुनै पनि सहयोग (यदि गरेको थिएँ भने) त्यो समान्य थियो । किन भने मैले (वा कुनै पनि व्यक्तिले) इमान्दारीका साथ एउटा साथीले आर्कोसाथीका लागि गर्नुपर्ने न्यूनतम सहयोगसम्म पनि गरिदिएको भए आजको युगमा जाबो टि बी जस्तो मामुली रोगले हरिभक्त कटुवाललाई कदापि खान सक्ने थिएन ।

ൽൽ

# अर्को पत्रः यो पनि अपरिचित मित्रबाटै

दिनांक १४।१०।८०

सेवामा,

श्रद्धेय नगेन्द्रराज शर्माज्यू !

सादर नमस्कार !

हिजोसम्म आँखाको डिलमा रमाइलो सपना बोकेर हिड्ने कवि कटुवाल आज अतीत भइसकेको कुरा यहाँलाई विदित भइसकेको छ। यहाँ (तपाईं) र जगदीश घिमिरे स्व.कटुवालको कति निकटका बन्धु हुनुहुँदो रहेछ ! यो कुरा यहाँ बित्न एक महिना जति अगाडि जबरजस्ती कलम समाएर आफ्नै हातले खाताको पानामा तपाईंलाई दुईवटा अंग्रेजी वाक्यमा चिठी लेखि सहि गरेर त्यसैको बिब्ल्याँटो पट्टी लगत्तै श्री जगदीशज्यूलाई एउटा अंग्रेजी वाक्यमा आफ्नो अन्तिम सम्झना पोख्नु भएको कुराले विदित हुन्छ। उक्त चिठीको ओरिजिनल चिठी उहाँ नै (कटुवालको घरमा) छन्। तिनको ब्लक बनाएर पछि यहाँहरूको हातमा पारिदिने छौं।

गत २१ सेप्टेम्बर ८० (आइतवार)को दिन गौहाटीमा शोक मनाउँन बसेको सभामा सर्वसम्मतिले एउटा समिति गठन भयो जसको नाम 'कवि हरिभक्त कटुवाल स्मृति समिति' रह्यो। स्व. कविको आउँदो जन्मदिन (१८ असार) भित्र बृहदाकारमा एउटा स्मृति ग्रन्थ निकाल्ने, उनको अप्रकाशित नेपाली र असमीया रचनाहरूको प्रकाशन गरिदिने, गीतहरूको संकलन र रेकर्ड गराउन चाँजो मिलाउँने, उनको चित्रकलाहरूको खोजी गरी संरक्षण गर्ने औं उनका (कविका) परिवारलाई सक्दो मदत दिने र दिलाउने, कविको आउँदो ४७औं जन्म जयन्ती उनकै गृहनगर (Hometown) डिगबोइमा सबै नेपाली (र असमीया भाइहरूको सम्भव भएदेखि) मिलेर मनाउँनेछौं। त्यसै अवसरमा कविको स्मृति ग्रन्थ र नेपाली/असमीया कृतिहरु उद्घाटन गर्ने इत्यादि उदेश्यले यो समिति गठन भएको छ।

अतः हामीले काँध हाल्न तम्सेको यस महान् दायित्वमा यहाँहरूको पूर्ण सहयोगका हातले सफलतातिर घच्याडि दिनु हुनेछ भन्ने आशा छ। यहाँहरुलाई भनिरहने आवश्यकता छैन– कवि कटुवालको चरम विकास जीवन नेपालमा (त्यही काठमाडौं) वित्यो। त्यसैले उनका धेरै चिज (रचनाहरू र रसिला स्मृतिहरुरू) त्यही रमेका, जमेका र कतै लुकेका छन्। अन्तिम पाली काठमाडौं देखि आउँदा पनि उनले आफ्ना कुनै कृति साथमा लिएर आएनन्। ती सबै त्यही कही हुनन्। हामी यति टाढाबाट त्यहाँ नै गएर ती सब खोज्न र बटुल्न समय, शक्ति खर्चन आवश्यक ठान्दैनौ जब उनका अति निकटका बन्धुहरू त्यहीं उपस्थित हुनुहुन्छ।

यस समितिले लिएको निर्णय अनुसार म यहाँलाई यस समितिको

तर्फबाट यो चिठी लेख्दैछु। त्यहाँ उनका (कविका) रचनाहरू खोजेर पठाइदिने, नेपाल सरकारबाट उनको परिवारलाई एक कालिन आर्थिक सहयोग दिलाउने र उनका असल गीतहरू रत्न रेकर्डिगमा रेकर्ड (डिस) बनाउन लगाउने, त्यहाँ छापिएका कृतिहरूको कविको परिवारलाई रोयल्टी दिलाउने र उनीसित सम्बन्धित साहित्यिक व्यक्तिहरुबाट स्मृति ग्रन्थका निम्ति संस्मरण र अरु मन्तव्य लेखाउने र हामीलाई पठाइदिने आदि दायित्व हामी यहाँहरूलाई सौपन्छौं ।

यस विषयमा हामीलाई विशेष सुझाव पनि दिनु हुन हाम्रो अनुरोध छ। छिटै उत्तर पाउने आशा राख्दछौं । अस्तु ।

कटुवाल परिवारको ठेगाना

भवदीय

**नव सापकोटा**
संयुक्त सचिव
हरिभक्त कटुवाल स्मृति समिति
गौहाटी, असम

ᏇᏇ

## १५२/सत्यमोहन जाशीको निबसस्थान, पाटन (०६७.१०.१९)

पद्मावती सिंह : दाइ ! हामीलाई किन मन्थली किन नलगेको ? ज्ञानुवाकरको चाहिँ श्रीमती पनि लान हुने, हामी चाहिँ जान नपाउने ?

जगदीश घिमिरे : मैले ज्ञानुवाकरको श्रीमती भनेर लगेको हो र ? कवयित्री त्रिपुरा पौडेल भनेर पो लगेको, नपत्याए ल सुन्नुहोस् मन्थलीमा उहाँले सुनाएको मुक्तक–

पशुपति जाँदा सधैँ बाँदरहरूले झम्टेलान् भन्ने डर लाग्छ
बजार जाँदा पसलेहरूले नक्कली सामान भिडाइदेलान् भन्ने डर लाग्छ,
आफ्नो समस्या खै कहाँ पोखुँ म अब ए हजुर !
घरमा आउने कवियित्रीले कुनैदिन लोग्ने नै उडाइदेलिन् भन्ने डर लाग्छ ।

पद्मावती सिंह : छ्याः त्रिपुराजी बेकारमा दराएको… कल्ले लैजान्छ टेस्टो सेटै कपाल फुलेको बुरो ज्ञानुवाकरलाई !

ᏇᏇ

# उपचर्चामा महाकवि देवकोटा

पद्‌म देवकोटा

एक दिनको कुरा हो, नगेन्द्रराज शर्माजीको फोन आयो । उहाँको मसँगको प्रश्न करिब यस्तो थियो,– "सबैजना महाकवि देवकोटालाई गरिब भन्छन् । मैले देखेका बुझेका र चिनेका महाकवि देवकोटा त गरिब थिएनन् । तपाईंलाई के लाग्छ ?"

मैले जवाफ दिएँ,– "तपाईंसँग म सहमत छु । मैले भन्दै आएको कुरा पनि यही हो । उहाँलाई बारम्बार आर्थिक सङ्कट पर्नु यौटा कुरा हो, तर जीवनमा आर्थिक सङ्कट पर्दैमा मान्छे गरिब हुँदैन । महाकवि देवकोटा गरिब होइन ।"

२०६७ साल माघको पहिलो हप्तामा अभिव्यक्ति पूर्णाङ्क १५० को सम्पादकीय पढ्ने अवसर पाएँ। त्यसमा नगेन्द्रराज शर्माजीले महाकवि देवकोटा गरिब थिएनन् भन्ने कुरा प्रमाणित गर्न जीवनीबाट केही उदाहरणसमेत् प्रस्तुत गरेर लेख्नुभएको रहेछ । पढ्दै गएँ– उदाहरणहरू सबै ठीक थिए । पटना र कलकत्तामा पढ्न गएको कुरा भने सायद छात्रवृत्ति पाएरै हो जस्तो लाग्छ, तर त्यो जमाना गरिब वा गरिबको छोरोले छात्रवृत्ति पाउने जमाना थिएन । अनि,– "जब म बि.ए. भएँ, तब दिनको तेऱ्ह घण्टा टच्यूसन गर्न लागें । 'कमाउनु पर्छ, अंग्रेजीमा पढाउनु पर्छ, मास्टर बन्नुपर्छ'को मधुरो गाँजा साइकल चढाएर शहर र पुछार घुमाउँथ्यो ।" ("हाइ हाइ अंग्रेजी" ६३) भन्ने स्वीकारोक्ति पढिसकेपछि उहाँको यस मिहिनेत र गरिबी एक साथमा देख्न गाऱ्हो पर्छ । नगेन्द्रराज शर्माजीले दिनुभएका उदाहरणहरूमा अझ अरू कुराहरू पनि थप्न सकिन्छ– महाकवि देवकोटा क्याप्स्टेन चुरोट मात्र होइन, मगमग वास चल्ने तमाखु खानुहुन्थ्यो । उहाँको पाइपमा यस्तै वासनादार टोब्याको भरिन्थ्यो । उहाँले लगाएर हिंड्ने गरेको अँध्यारोमा झल्किने रोलेक्स घडी मसँग अझै छ । हातमा झुण्डाएर हिंड्ने छालाको व्याग छ । कुनै बेला घरमा रसियन दमदिने ग्रामाफोन र क्यामरा थिए । फिलिप्स रेडियोमा समाचार सुन्नुहुन्थ्यो । जर्सीगाईहरू गोठमा पालिन्थे । दुइचारवटा आँप रुमालमा पोकोपारेर मात्र होइन कि सिङ्गो डोकोभरिको आँप डोकैसमेत आँप बेच्न बसेकै मानिसलाई बोकाएर घर ल्याउने चलन पनि थियो । खर्पनभरि काउली किनेर गाईलाई खुवाउन पनि पैसा पुगेकै थियो ।

तर हामीले यस्ता सम्पन्नताका उदाहरण कति छन् भन्ने होइन कि उहाँलाई आर्थिक सङ्कट कहिले र किन पऱ्यो भनेर बुझिदिनु बढी आवश्यक छ । मेरो विचारमा महाकवि देवकोटालाई आर्थिक सङ्कट पर्नुका केही कारण यस प्रकारका छन् । एक, उहाँको उदारता जसले गर्दा पैसा मात्र होइन कि समय, बुद्धि, सम्पत्ति, माया वा आफूले दिन सक्ने जे जति कुरा छन् ती सबै जसलाई पनि सहज रूपले बाँडिदिने स्वभाव । दुई, उहाँको यस

उदार चरित्रको फाइदा उठाएर हिंड्ने आसेपासेको भीड जसले उहाँको परिश्रमको कदर गर्न नजानेर विभिन्न रूपमा उहाँको शोषण गरिराख्यो । तीन, ती व्यक्तिहरू जसले नेपाली भाषा प्रकाशिनी समितिबाट जागिर खोसेर होस् वा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानबाट पाउनुपर्ने तलब रोकेर होस् उहाँलाई दुःख दिने षडयन्त्र गरे । चार, ती राजनेताहरू जसले उहाँको परिवारलाईसमेत् आर्थिक सुरक्षा दिने फोस्रो सपना उहाँलाई देखाएर आफ्नो मुखपत्र सम्पादन गराउन बनारस पुऱ्याए अनि न वरत्र न परत्र पारेर छाडे । आफ्ना कार्यकर्ताहरूबाटझैं उहाँबाट सलाम नपाउने देखेपछि दुर्गाघाटमा मलेरियाले सिकिस्त महाकवि देवकोटालाई फर्केर हेर्नसमेत् गएनन् । र पाँच, अन्य भैपरी आएका परिस्थितिहरू तथा विवशता जुन हामी सबैलाई पर्नसक्दछ । उदाहरणार्थ काँग्रेसको मुखपत्र सम्पादन गरेर बसेका देवकोटा राणा सरकारकै स्वीकृति लिएर काठमाडौं फर्किएपछिको बेहाल महाकवि देवकोटाकै शब्दमा तल प्रस्तुत गर्दछु :–

I feel personally proud of my intuitive discovery in a moment of blessed poetic inspiration. How the magic formula came into my mind has an interesting history behind it. It was during the regime of Mr. Mohan Shum Shere J.B.R., the then Prime Minister of Nepal, and the last of Rana Prime Ministers, when, after playing my revolutionary mischiefs at Benares through the Yug-Bani organ (The Voice of the Age), I was brought perforce into my Kathmandu home by my anxious wife to save me from imminent death from malaria combined with starvation at Benares. The then foreign secretary, Mr. Nad, my Principal in my student days, issued a strangely worded permit, with abundant verbal jugglery, subtly insinuating that the applicant, having symptoms parallel to those of insanity, and being very seriously ill, would be permitted to enter his native valley on condition that he no longer continued the public expression of his political vagaries and mutterings. That was how he intended to save his delicate skin. And I came into Kathmandu, a spectre and a skeleton, scarcely recognised by my children after a three year's absence. I stayed with my brothers for a month to recoup my health and vigour and mutton served everyday gave the final blow to the lingering germs. I came into my Maiti Devi home after that and found that there was a thoroughly torn, tattered, battered kind of a borrowed mat that made the room blush for its large mouse holes and dislocations. No cooking utensils graced the kitchen. My Nepali suit, the coat, the toga and the trousers were my brother's gifts and fitted me tightly enough to carry myself on, in a sort of strait-waist-coated cotton covered dignity on the public road. And money was a thing like a dream. And we sighed and slept starved, while the children were given either something at home or sent to their maternal uncle. And it so happened that after three days of starvation, someone felt kind enough on a cold morning to present me a woollen blanket as he found me rather chattering during conversation for a quarter of an hour. And I conceived the brilliant idea

on the fourth day of selling it for Rs. 18 so that I came home, like an adventurer of Elizabethan days, with silver in my hands. And my children beamed up at the sight of the brilliant silver coins. And my wife's wan lips smiled and she applied herself briskly to the task of preparing Dal, Bhat, Dukoo (Pulses, Rice and Mustard Stems) in the best of spirits. The dishes that day were more delicious than a special dinner provided at the Nawab's table. There is a proverb in Nepali to the effect that it is not the food but the degree of your appetite that is the more delicious. And the mustard stems that winter were richer than in other years and the rice more sweetly flavoured and the pulses softer and tastier that day. Poetry was born of the eating, and, such were the fine emotions of pleasure generated, that my mind, in their operation, intuited the grand formula that quickly caught the beating pulse of Nepalese everyday life. I came down from the kitchen inspired to compose one of the most taking lyrics in Nepali literature. (MSS)

यसरी "दाल, भात, डुकू" रचियो । यसरी "Pulses, Rice and Mustard Stems" जन्मियो । महाकवि देवकोटालाई सबैभन्दा ठूलो आर्थिक सङ्कट परेको वनारसमा र त्यहाँबाट नेपाल फर्किए लगत्तैका दिनहरूमा हो भन्ने मेरो बुझाइ छ । यिनै वा यस्तै अवस्थामा उहाँको दु:ख देख्नेले उहाँलाई गरिबीको टिको टाँसिदिएका होलान् भन्ने यौटा अनुमान गर्न सकिन्छ ।

गरिबी यौटा मिथक थियो भने महाकवि देवकोटाबारे अन्य मिथक बन्न भने छाडेका छैनन् । कतिपय मिथकहरू मिठा कथा पनि हुने भएकाले यी कुरा सत्य होइनन् है भनिदिँदा दुनियाँको दिल दुख्नसक्छ. तर यथार्थ नबताउँदा वास्तविक देवकोटा कुनै "विशालकाय दैत्य" ("आफ्नै चर्चा" ७९) बन्ने सम्भावना अझ ठूलो रहिरहन्छ । त्यसैले पनि यसरी महाकवि देवकोटासँग परिचित व्यक्तिले विश्वसनीय यथार्थ बताउने इमान्दार हिक्मत गरेको देख्दा खुसी लाग्नु स्वाभाविक हो । परिवारको सदस्यको हैसियतले मैले विभिन्न कार्यक्रममा र विभिन्न व्यक्तिसँगको कुराकानीमा देवकोटा गरिब होइनन् भन्ने कुरा भन्दै आएको थिएँ । यस कुरालाई पूर्ण रूपमा स्वीकार्ने व्यक्तिहरूमध्ये मेरो जानकारीमा सर्वप्रथम कृष्णचन्द्रसिंह प्रधान हुनुहुन्थ्यो । यसैगरी महाकवि देवकोटाको शतवार्षिकीको अवशरमा पाल्पाको तानसेनमा आयोजित यौटा कार्यक्रममा मेरा गुरु तथा महाकवि देवकोटाका आत्मीय मित्र फणिन्द्रप्रसाद लोहनीका सुपुत्र प्राध्यापक श्रीधर लोहनीले त्यस सभालाई सम्बोधन गर्दै महाकवि देवकोटा कुनै खानै नपाउने गरिब होइनन्, लहडी र बादशाही ठाँटका कवि हुन् भन्दै उहाँ र उहाँकी श्रीमतीबीच असाध्यै राम्रो सम्बन्ध र समन्वय रहेको सत्यसमेत आफ्नो अनुभवको आधारमा प्रभावशाली ढङ्गले बताउनु भएको थियो । यसरी यिनै सत्य प्रकाशित हुँदै जाने क्रममा नगेन्द्र शर्माजीको सम्पादकीयले अर्को राम्रो भूमिका खेलेको छ ।

देवकोटालाई किन गरिब भनियो भन्ने प्रश्नको जवाफ आफूलाई प्रष्ट नहुँदानहुँदै पनि शर्माजीले प्रश्न गर्नुहुन्छ, "यो षडयन्त्रकारीहरूले बुनेको सुनियोजित षडयन्त्रको तानाबाना हो अथवा अज्ञानतावश लहै लहैमा लागेर

नजानेरै भनिएको कुरा हो - मैले बुझ्न सकेको छैन ।" (अभिव्यक्ति पूर्णाङ्क– १५० पृ.१११) । यदि षडयन्त्र जिवित व्यक्तिउपर मात्र गरिन्छ भने, यो षडयन्त्र महाकवि देवकोटाको जीवनकालमा नै र उहाँकै समकालीनहरूबाट सुरु भएको हुनुपर्छ । आजका कतिपय उहाँलाई नदेखेका मानिसहरूको "अज्ञानता" यौटा कारण हुन सक्छ, तर "लहै लहै" चेतनाको त्यो स्तर हो जसमा बहुसंख्यक सर्वसाधारण पर्दछन् । यौटा छनौटप्रक्रियाविहिन कानबाट आर्को छनौटप्रक्रिविहिन कान हुँदै रमिते चेतनाको मैदानमा पुगेपछि प्रत्येक कपोलकल्पित भ्रमात्मक अभिव्यक्ति "सत्य"मा परिणत हुनु स्वाभाविक लाग्दछ । यस्तै "सत्य"मा आधारित विश्वास शिक्षा र शिक्षकको समेत लौरो नबनोस् भन्ने हेतुले शोधार्थी र अनुसन्धानकर्ता शतर्क रहनु पर्ने हो । तर हल्लालाई केलाउन असक्षम पाठ्यपुस्तक लेखकहरूले सोही भ्रमात्मक कुरालाई स्कूलका पाठ्यपुस्तकमा समेत राखेर कलिला विद्यार्थीलाई साँहिला बाजेका गरिबीका बारेमा शिक्षित तुल्याइदिइसकेपछि महाकवि देवकोटा गरिब "बन्नु" बाहेक अरू उपाय रहेन । यस्ता पाठ्यपुस्तकका लेखकहरूले 'लक्ष्मी निबन्ध संग्रह' किन नपढेका होलान् भन्ने कुरा मेरो मनमा बराबर उब्जिन्थ्यो । "पहाडी जीवन"मा गरिबीको चित्रणसाथै आफ्नो सम्पन्नताको पनि वर्णन् महाकवि देवकोटाले यसरी गर्नुभएको छ :-

मैला चिथराहरूले विजोग देखाइरहेछन् र तिनमा सांग्राको लक्षण र न्यूनता छ । मेरो आँगमा ४० रु. को नीलो कश्मीराको कोट थियो, ती आँगहरू झ्याँगप्वाल थिए । म ३० रुपियाँको सिलिस्किनको टोपी लगाउँथें, तर ती खप्परहरू टुप्पी देखाउने चिथरे घेरालाई शिरपोश मनाउँथे । (१०)

यिनै तीनवटा वाक्यमा देवकोटाको गरिबीको मिथ्या फार्ने प्रकाश छ । तर ती पाठ्यपुस्तक लेखकहरूले देवकोटाको कृति पढेनन् । रमिते चेतनाको मैदानमा घन्किएका हल्लाको आधारमा राष्ट्रिय शिक्षाको चमत्कारिलो फड्को मारे । नतिजा– महाकवि देवकोटा गरिब कहलिए ।

यसरी मिथकहरू बन्ने क्रममा विद्वान् अनुसन्धानकर्ताहरूसमेत यस रमिते मैदानमा झुक्किएरै भए पनि हराएको प्रमाण पाइन्छ। महाकवि देवकोटाका बारेमा धेरै लामो समयदेखि अध्ययन र अनुसन्धानमा लागिपर्दै उहाँको जीवनी र कृतित्व उपर पुस्तकसमेत तयार पारिसक्नुभएका ख्यातिप्राप्त समालोचक तथा लक्ष्मी कविता संग्रहका संकलनकर्ता तथा सम्पादकले आफ्नो यस पुस्तकको भूमिकामा लेख्नु भएको वाक्य यस प्रकारको छ, "लक्ष्मीपूजाको दिन जन्मेका देवकोटालाई महालक्ष्मीको श्राप थियो" (ख) । जसका बाबुआमाले नवजातलाई लक्ष्मीको प्रसाद भनी ग्रहण गरेर नाम "लक्ष्मीप्रसाद" राखियो, सो नवजात शिशुलाई महालक्ष्मी आएर शरापिहोलिन् त ? शराप्नु पर्ने कारण के थियो रे ? तर विद्वान्को कलमबाट यही "सत्य" बनेर आएको छ भने जनसाधारण र विद्यार्थीले अरू के बुझुन् ? यो वाक्य र यसको वैचारिक जरासमेत लक्ष्मी कविता संग्रहका नयाँ संस्करणहरूबाट किन उन्मूलन

गरिँदैन ? गर्नुपर्ने कुरा त यही थियो ।

अंग्रेजीबाट नेपालीमा अनुदित "आफ्नै चर्चा आफैले सुन्दा" शीर्षकको निबन्धमा महाकवि देवकोटा "मलाई लिएर गढिएका कथाहरू" (७९) उपर आफ्नो मर्का पोख्दै ती चर्चा उपचर्चालाई यसरी केलाउनु हुन्छ, "मानौं मानिसहरू केही कालदेखि मलाई एक विशालकाय दैत्यको रूपमा पो श्रद्धा गर्न प्ररम्भ गरेको रहेछ, र त्यस श्रद्धामा आवश्यक गुणका रूपमा वर्वर एवं विचित्र सँग सम्बधित सबै अत्युक्तिहरू समावेश छन्" (७९) । अत्युक्ति जहिले पनि असत्य हुन्छ किनभने यसले सत्य हुनुको आवश्यकतालाई आलङ्कारिकताको आवरणभित्र छिपाएको हुन्छ । अनि यहाँ "वर्वर" र "विचित्र" एक आपसमा विरोधि तत्व नभई "एवं"को संयोजनमा पूरक बल लिएर असाधारण गुणहरूका रूपमा उपस्थित छन् । यस्ता गुणयुक्त श्रद्धाले श्रद्धेयलाई साधारण देख्नु असम्भव छ । त्यसैले श्रद्धेय "विशालकाय दैत्य" बन्छ. मानौं श्रद्धालुको क्षमता वा त्यसको अभावको कारणले गणेशको मूर्ति बाँदरको बन्नपुगे झैं यो यौटा अचूक व्यङ्ग्य हो ती रमिते मैदानका चेतनाहरू उपर जसले महाकवि देवकोटाका कृतिभित्रका स्वीकारोक्ति नबुझेर महालक्ष्मीले शरापेकै देख्छन् र उहाँको कठोर दैनिक परिश्रमउपर फिल्मी यथार्थको विश्वसनीयता पोत्दै सरस्वतीले आएर "तथास्तु" भन्दै वरदान दिएको चित्र सत्य हो भन्ने दावी गर्छन् । यसैले त महाकवि देवकोटा स्वयं यसरी विरोधमा उत्रिनु आवश्यक भएको छ, "मानौं पचास वर्ष सम्मन मैले जिउँदो रगतको प्रत्येक तन्तु निचोर्दै निचोरिनँ, मानो साहित्यको गोरेटोमा म घिस्रिदै घिस्रिनँ" (७९) ।

हुन त महाकवि देवकोटाले माथिको निबन्धमा आफूलाई "आशुकवि" (७९), "विद्युत कवि" (८०), "संस्कृत एवं अंग्रेजीमा मैले पाण्डित्य हासिल गरेको" (८०) र "रोमाण्टिक अंग्रेजी काव्यबाट उत्प्रेरित" (८१) भन्दै चर्चा गरिएका कुरालाई लिएर आफ्नो स्पष्टीकरण दिनुभएको हो । उहाँले आफ्नो गरिबी र आफ्नी श्रीमतिसँगको सम्बन्धबारेको चर्चा पनि सुन्नु भएको भए नेपाली साहित्यले अन्य कति व्यङ्ग्यात्मक कृति पाउने थियो म भन्न सक्दिन । यो नेपाली साहित्यको दुर्भाग्य हो कि उहाँले यी थप उपचर्चा आफ्नो जीवनकालमा सुन्न पाउनु भएन ।

तर महाकवि देवकोटाबारे मिथक जन्मिन छाड्ला जस्तो छैन । कतै त मिथक बनाइदिँदा आफ्नो कुनै उद्देश्य पुरा पनि हुने भएकाले गर्दा र देवकोटालाई जीवनकालमै चिनेबुझेका मानिसहरूको संख्या घट्दै गएकोले अज्ञानतावश नै भए पनि षडयन्त्रकारी मिथकहरू थपिँदै गएका छन् । महाकवि देवकोटाले राणा शासकहरूको चाकरी गरेर तराईमा २०० विगा जमिन पाउनु भएको थियो भन्ने रमिते चेतनाले प्रोत्साहन गरेको अर्को मिथक छ जसको पछाडि राजनीतिक स्वार्थसमेत लुकेको छ भन्ने तर्क मैले "मोदनाथ, मार्क्स र देवकोटा"मा प्रस्तुत गरेको छु । अरू मिथकहरू पनि जन्मिएका छन्, जन्मिदै गर्लान् । हाम्रो कर्तव्य आफूले बुझेको र भोगेको कुरा

मिथकीय इतिहासको विरुद्ध कुनै व्यक्तिलाई आक्षेप नगरिकन प्रस्तुत गर्ने हो। यो काम सबैतिरबाट गरियोस् भन्ने मेरो चाहना छ।

**सन्दर्भ सूचि**


बन्धु, चूढामणि (संकलनकर्ता तथा सम्पादक)। लक्ष्मीप्रसाद देवकोटा। लक्ष्मी कविता संग्रह। (तेस्रो संस्करण)। काठमाडौं : साझा प्रकाशन, २०४७।

देवकोटा, पद्म। "मोदनाथ, मार्क्स र देवकोटा।" देवकोटा अध्ययन ९ (कार्त्तिक २०६७) : ३-२०।

देवकोटा, लक्ष्मीप्रसाद। "आफ्नै चर्चा आफैले सुन्दा।" (अनु.) श.ला.। भानु (महाकवि देवकोटा विशेषाङ्क) ५.१२ (फागुन २०२५) : ७९-८१।

शर्मा, नगेन्द्रराज। "सम्पादकीय।" अभिव्यक्ति पूर्णाङ्क १५० (कार्तिक/मङ्सिर २०६७) : ११०-११२।

Devkota, Laxmi Prasad. "Pulses, Rice and Mustard Stem." MSS.


ꕥꕥ

## १५४/बाजेको सेकुवा बत्तीसपुतली

शरदचन्द्र शाहा : (मेन्यु हेर्दै) हेर्नुस् त नगेन्द्रजी, मैले चश्मा बिर्सेछु··· यहाँ त एउटा गज्जबको डिश रहेछ– 'मदन दाश श्रेष्ठ !'

ज्ञानुवाकर पौडेल : (जिल पर्दै) अचेल कलाकारको नाउँबाट पनि खाने कुराको नाउँ राख्न थालेछन् क्यारे !

पद्मा श्रेष्ठ 'सन्ध्या' : ( मेन्यु हेर्दै) कहाँ 'मदन दाश श्रेष्ठ' हुनु ? 'मटन तास सेट' लेख्या छ।

शरदचन्द्र शाहा : ओहो ! निक्कै लागेछ क्यारे··· ।

ꕥꕥ

## १६०/कार्की किचेन (०६९ ३ १७)

जीवनपानी– (गिलास पर सार्दै) मैले त ड्रिङ्क छाडिदिएँ– म यो लिन्न।

ज्ञानुवाकर– लः यो कहाँ ड्रिङ्क हो र ? यो त रम पो हो त।

मनोज न्यौपाने– (गिलास समाउँदै) मुखमा हाल्ने बित्तिकै रमरम गर्ने हुनाले यसलाई रम भन्या होला हगि ज्ञानु दाइ !

डा. नीरज भट्टराई– होइन, होइन। रम भन्या लेखक कविहरूको Regular Used Medicine हो। यसले रुघा-खोकी र अरू पनि धेरै रोग निको पार्छ।

जीवनपानी– एः त्यसो भए त खानै पर्‍यो। (गिलास समाउँदै) मलाई पनि बेला बेलामा रुघा-खोकी लागिरहन्छ।

ꕥꕥ

# अभिव्यक्ति : एक सामान्य अवलोकन

बालमुकुन्द कार्की
चन्द्रनिगाहपुर, रौतहट

'जसरी लेखनलाई एक किसिमको रहर वा सनक वा तुष्टी भन्न सकिन्छ अभिव्यक्तिलाई पनि त्यसैमात्र भन्दा वेश होला । ...जीवनसँग नगाँसिएको साहित्य हुँदैन । जीवन चाहिँ अर्थ राजनीति अहं, यौन आदिको संश्लेषणबाट मुक्त हुँदैन । अतः जीवनको अभिव्यक्तिलाई साहित्य भनिने कलामा बाँधिएको छाप्न चाहान्छौं–आग्रह मुक्त भएर ।' भन्ने आग्रहकासाथ २०२७साल फागुन ७ गते देखि प्रकाशित भएको 'अभिव्यक्ति'ले आज पूर्णाङ्क १०० प्रकाशित गर्ने जमर्को गर्दैछ ।

नीजिक्षेत्रबाट संचालित नेपाली साहित्यिक पत्रिकाको इतिहासमा अभिव्यक्तिभन्दा अगाडि सय भन्दा बढी अंकहरु प्रकाशित गरेर गौरवमय इतिहास बनाईसकेको उल्लेखनीय साहित्यिक पत्रिकाहरू हुन् शारदा, रूपरेखा र रत्नश्री । यी तीनवटा पत्रिका नेपाली साहित्यको इतिहासमा प्रशंसनीय योगदान रहेको छ । 'शारदा' (मासिक) सरकारी आर्थिक अनुदानमा सुब्बा ऋद्धि बहादुर मल्लको सम्पादनमा सम्बत् १९९१ देखि प्रकाशित भएको थियो । यो पत्रिका पूर्णाङ्क १८० प्रकाशित गरेर २020सालदेखि बन्द भयो । रूपरेखा (द्वैमासिक) पनि राष्ट्रिय पुस्तकालयको खर्च र वासुदेव रिसालको सम्पादनमा २०१७ साल देखि सुरु भएको हो । रुपरेखा पूर्णाङ्क ३२८ सम्म प्रकाशित भएर २०४६ सालदेखि बन्द भयो । त्यस्तै, रत्नश्री (द्वैमासिक) तत्कालिन श्री ५ बडामहारानी रत्नराज्य लक्ष्मीदेवी शाह सरकारको आर्थिक सहयोग र मदनदेव भट्टराइको सम्पादनमा २०२० सालदेखि प्रकाशित हुन थालेको हो र हाल सम्ममा पूर्णाङ्क १७० प्रकाशित भइसकेको छ । नियमित नभए पनि रत्नश्री हालसम्म बन्द भएको छैन ।

अभिव्यक्तिको सबै ९९ अंक पढ्न नपाएको भएपनि मैले खोजी खोजी यसका धेरै जसो अंकहरू पढेको छु । किनभने यसमा छापिने समग्र लेख र रचनाहरूका साथै सम्पादकीय तथा स्तम्भहरू मेरा लागि विशेष आकर्षणका सामग्री थिए । त्यसमाथि आदरणीय समीक्षक/साहित्यकार प्रा.डा.बासुदेव त्रिपाठीको– 'अभिव्यक्ति एक अधोपान्त पठनीय पत्रिका हो ।' भन्ने उक्ति पढ्न पाउँदा अभिव्यक्ति प्रति मेरो मनमा झनै सकारात्मक प्रभाव परेको थियो र छ पनि ।

अभिव्यक्तिले आफूलाई दुई महिने 'सामान्य साहित्यिक पत्रिका' लेख्ने गरेको छ । यो सम्पादक, प्रकाशकको विनम्रता वा शिष्टता मात्र हो । सर्सर्ती हेर्दा सामान्य जस्तो देखिएता पनि अभिव्यक्तिका स्तम्भहरूको रोचकता, सम्पादकीयहरूको ओजस्विता एवं निर्भीकताका साथै उत्कृष्ट सामग्री चयनको निरन्तरता जस्ता विशिष्टताहरूले युक्त भएको हुँदा यो पत्रिका सामान्य होइन– असामान्य हो भन्ने प्रमाणित हुन्छ ।

यस उत्कृष्ट पत्रिकाका अरुपनि धेरै विशेषताहरु छन्। नेपाली साहित्यिक पत्रिकामा व्यग्य चित्रको थालनी गर्नु पनि अभिव्यक्तिको एउटा विशेषता हो। यसका सुरुका अंङ्कहरुमा रमाइला, सामयिक र सार्थक व्यग्यचित्रहरु प्रकाशित छन्। त्यसका अतिरिक्त, वरिष्ट कनिष्ट साहित्यकारहरुका विषयमा गरिएका सार्थक हास-परिहासयुक्त बल्ल पो थाह भो र त्यस्तै साहित्यकाहरूको आपसी घोचपेच र छेडछाडका सत्य प्रस्तुति, पीपलको बोटमुनि तथा जमघटहरूबाट आदि स्तम्भहरू यस पत्रिकाको उल्लेखनीय विशेषता हुन्।

धेरै पत्रिकामा विश्वका महान व्यक्तिका प्रचलित उक्ति-सुक्तिहरु यत्रतत्र खाली ठाउँमा छाप्ने चलन नै छ। त्यसै अनुसार अभिव्यक्तिले पनि पहिले पहिले यसै गर्थ्यौ तर सुरुका केही अंक पछि मैले अनुभव गरेका छु– अभिव्यक्तिमा विदेशको होइन नेपालभित्रकै जीवित वरिष्ठदेखि कनिष्ठसम्मका वाङ्मयसेवीहरू अर्थात् कविवर माधव घिमिरे तथा विद्वतवर मदनमणि दीक्षित आदिदेखि गजलकार ज्ञानुवाकर पौडेल र साहित्यकार/साहित्यिक पत्रकार नकुल सिलवालसम्मका घतलाग्दा सूक्तिहरू प्रकाशित गर्ने गरेको छ– यो पक्षलाई पनि एउटा विशेषतामा नै लिन सकिन्छ। नयाँ प्रतिभाहरूलाई अत्यधिक मान्यता/स्थान दिँदै प्रोत्साहित गर्नमा अभिव्यक्ति अग्रस्थानमा छ। यस्तै, उपत्यकाका भन्दा मोफसलका साहित्यकारलाई बढी स्थान दिने काम पनि अभिव्यक्तिले गर्दै आएको छ। अलिक गहिरिएर अनुभव गर्ने हो भने अभिव्यक्तिमा यस्ता अनेक विशेषताहरु यत्रतत्र भेटिन्छन्।

नितान्त निजी खर्च र एक्लो प्रयासमा निरन्तर तीन दशकसम्म मरिमेटी रहनु र सय अङ्क प्रकाशित गर्नु पनि साधारण कुरो होइन। यसका अतिरिक्त सम्पादक/प्रकाशक नगेन्द्रराज शर्माले पत्रिका छपाएर नयाँ सडकको पीपलको बोटमुनी तथा विभिन्न साहित्यिक समारोह गोष्ठीहरूमा वर्षौ वर्ष निशुल्क वितरण गर्ने गरेको कुरा पनि नेपाली साहित्यिक समाजका लागि अविस्मरणीय कुरो हो।

अभिव्यक्तिका विशेशताहरूका करा गर्दा यस छोटो लेखमा सबै को चर्चा/विश्लेषण सम्भव छैन तापनि यायावरका हास–परिहासका यी स्तम्भहरू– बल्ल पो थाह भो, जमघटहरुबाट, पीपलको बोटमुनि आदिका बारेमा केही चर्चा गर्न चाहन्छु।

यी स्तम्भहरू सर्सती पढ्दा साधारण हास-परिहास जस्ता मात्र देखिन्छन्। तर तिनको निहित अर्थ, गूढ अर्थ त्यतिमात्र होइन। यिनका बेला बेलाको साहित्यिक गतिविधि र वातावरणका साथै विभिन्न साहित्यकारहरूको बानी बेहोराको पनि राम्रो परिचय पाइन्छ। सवाल जवाफ एवं छेडछाड र घोचपेचमा एकातिर को को कति बुद्धिमान् एवं प्रत्युत्पन्नमतिका रहेछन् र को कति चंख/धूर्त रहेछन् वा को कति हास- परिहासपृय रहेछन् वा को कति प्रष्टवक्ता वा ठाडो मिजाजका रहेछन् भन्ने कुरा प्रष्ट हुन्छ भने अर्कातिर खानामा को कति बहादुर थिए... पिउनमा को कति बहादुर थिए भन्ने कुराको पोल पनि राम्रैसँग खुल्छ। त्यस्तै, आफ्नो पैसाले खाने पिउने

वा सँधै अर्कालाई ठगेरै मात्र खाने– अर्काकै खाएर मोटाउनेहरूको पोल पनि रामैसँग खुल्दछ । प्रौढावस्था पार गरिसक्दा पनि अविवाहित नै बसेर रंगीन जीवन विताउनेहरू वा विवाहित भएर पनि घर बाहिरको रसरंगमा रमाइरहने नारीटिग्रेहरूको परिचय पनि रमाइलोसँग पाइन्छ ।

अतः ज्यादा गन्थन नगरेर अब म नमुनाका लागि केही उद्धृतांशहरू प्रस्तुत गर्न चाहान्छु । सर्वप्रथम एउटा प्रतीकात्मक व्यग्यले भरिएको बल्ल पो थाह भो । यो अभिव्यक्तिको पहिलो अङ्कमै प्रकाशित छ :

'दुइजना कविहरू ट्वाँटले टिल्ल परेर आधारातमा डिल्लीबजारको सडकबाट लठारिदै कालिकास्थानतिर लाग्दछन् ।

'उ देवकोटाको सालिक...... ।'

'अँ, : त्यसैले त टाउकाभरि कागले विष्ट्याएको छ ।'

'यस्तो दुर्गति हुनु भन्दा त सालिकै नहुनु जाति ।'

'त्यसैले हाम्रो सालिक नभएको ।'

'आज हामी यो सालिकलाई पनि नराखौ, ढालौं, भाँचिदिऊँ । यो त साहित्यकारहरूको बेइज्जती हो ।'

'हो ठिक हो, लु जौ, अहिल्यै तोडिदिऊँ... ।'

अनि दुवै मिलि सालिकसँग कुस्ती खेल्नु थाल्छन् । धेरैबेर सालिकसँग लठारिन्छन् । पसिनाले भिज्छन् । थाक्छन्, थुचुक्क भुइमा बस्छन् ।

'अँहँ जिउँदा कटुवाल र शशीले मरेका देवकोटाको रौंसम्म हल्लाउँन पनि सक्ने रहेनछन्...... ।'

'हो...... जिउँदा हामी भन्दा मरेका देवकोटा धेरै धेरै तगडा रहेछन् ।'

बल्ल पो थाह भयो ।'

यस्तै कविवर सिद्धिचरण श्रेष्ठको विर्सने बानीको नमुना हेरौ–पूर्णाङ्क २४ बाट ।

''मलाई पर्सि शनिवार काजीदाइले खान निम्ता गरेको छ ।' देउपाटन भरि घुमेर बासुशसीले यही प्रचार गरिरहेका थिए । खुशीले भूइँमा खुट्टा थिएन उनको । विहानभरी यताउति घुमेर, घर अड्डा र टेलिफोनमा जतातते घुमाइ फिराई त्यही कुरा भिकिहाल्थे ।

शनिवार आयो । विहानदेखि निक्कै मेहनतसाथ श्रृगार पटार गरेर नौ बजे उनी काजिदाइको घरमा पुगे । कुशल मंगलका कुराकानी भएपछि चिया, चुरोट र कविताको कुरा । एघार बज्यो, बाह्रबज्यो र एक पनि बज्यो तर खाली कुरा, कुरा र कुरै मात्र भइरह्यो । आखिर दुई बज्दापनि शशीले उठ्ने सुरसारै नगरेको देखेपछि दिक्क अनुहार लगाउँदै,–'तपाई चुरोट खाँदै गर्नुहोस् म गाँस टिपेर आइहाल्छु ।' भनेर काजिदाई उनको उत्तरको वास्तै नगरी जुरुक्क उठेर खुरुक्क बुइगल तर्फ लागे ।

भोकले आकुल व्याकुल भएका बाशुशशीलाई बल्ल पो थाह भो कि उनलाई खाना खान निम्त्याएको कुरा नै कवि सिद्धिचरण श्रेष्ठले भुसुक्कै विर्सिसकेका रहेछन् ।

अब वरिष्ट साहित्यिक पत्रकार एवं साहित्यकार भवानी घिमिरेको भोजनप्रियताको चर्चा पढौं–पूर्णाङ्क ३८ बाट ।

'राती करीब आठ बजेतिर यादव खरेल, हेम हमाल र चन्द्रकुमार भट्टराई बासुशशीको निम्ता मान्न उनको निवासस्थान ह्यौपाटनमा पुगे । त्यहाँ भवानी घिमिरे पहिले देखि नै पलेटी कसेर आफ्नो साँस्कृतिक कार्यक्रम (रक्सी खाने) सञ्चालन गरिरहेका रहेछन् ।

अब चारैजनाले साथीहरूले बसेर कार्यक्रमलाई अझ मनोरञ्जक बनाउँदै अघि बढाउन थाले । खाँदा खाँदा पिउँदा पिउँदा रातको एक बजे पछि एकजना साथीले भने–'ओहो, उठौं अब त पाँच घण्टा भइसक्यो एकै थलोमा बसेको ।'

यो भनाई सुनेर भवानी मुसुक्क हाँसे । अलिकति चरपटाए । अनि आफ्नो गुरु गम्भीर स्वरमा लेग्रो तानेर भने,–बन्धु हो ! मेरो सिटिंग त अठार घण्टाको भइसक्यो ।

के रे ? अट्ठार घण्टा ? साथीहरू चकित ।

वास्तवमा भएको के थियो भने त्यस दिन भवानी विहानै सातै बजे त्यहाँ पुगेका थिए र उनी पुग्नु भन्दा पहिले नै शशी टुइक्क परिसकेका थिए । अनि भवानीको अगाडि पनि वासःको फुल गिलास आइहाल्यो । एकै छिन नखरा गरेपछि भवानीले गिलास समाइहाले । यसरी विहानदेखि दुई साहित्यकारहरुको साँस्कृतिक कार्यक्रम आरम्भ भयो । अनि विस्तारै विस्तारै एक दुई जना पाहुँनाहरु पनि आइपुगे–पाहुँनाहरुको साथ दिनै पर्‍यो । ज्वाई चेली आए– तिनीहरुको पनि साथ दिनै पर्‍यो । शशी यदाकदा घरको कामकाज वा पूजा आजामा यताउती अल्झिए पनि भवानी शशीका सबै पहुनाहरुको साथ दिइनै रहे । पैलेटी कसेर बसेको बस्यै, खाएको खाएै, पिएको पियै । र सबभन्दा पछाडि आउने पाहुनाहरुमा उक्त साथीहरु आइपुगेकाले भवानी यिनीहरुलाई पनि साथ दिइरहेका थिएँ । कति खाए कति पिए त्यो त भवानीलाईनै थाह होला कि शशीलाई नै कि त जुलुम भाउजुलाई नै ।

यसरी हेम, यादव, भवानी र चन्द्रका साथै शशी परिवार समेतलाई बल्ल पो थाह भयो भने एकै आसनाम बसेर लगातार अट्ठार घण्टासम्म खाएको खाए पिएको पिए गरेर समस्त नेपालीहरु मध्ये खाना र पिनामा कीर्तिमान स्थापना गरेका हुन भवानीले २०३१ सालको पाँचरेको दिनमा ।'

र यसबारेको एउटा कुरा भनि हाल्यौं–अभिव्यक्ति अड्डामा जमेर पत्याइनसक्नु गरी खाएका अझ पनि थुप्रै प्रकरणहरु अभिव्यक्तिमा छापिए पछि भवानी घिमिरेले यतिका अर्थात् त्यसबेलाका चर्चा अनुसार अड्चालिस घोगा हरिया मकै र एक थाल हरिया खुर्सानी, दुई दर्जन अण्डा एक एक किलो प्याज र गोलभेडा आदि बुत्याएको कुरा धेरैले पत्याएनछन् । बासुशशी, जगदीश घिमिरे र यायावर (नगेन्द्रराज शर्मा)ले अलिकति कुरा बढाए कि भन्ने शंका साथीहरुमा परेछ । यसकारण भवानी घिमिरे एकदिन रोचक घिमिरेको घरमा गएको बेलामा रोचकजीले उसैगरी थालभरि हरिया मकै

पोलेको र थालैभरी हरिया खुर्सानी अगाडि राखिदिएर विस्तारै सोध्नु भएछ– भवनीजी ! अभिव्यक्तिमा नगेन्द्रजीले अलि बढाइ चढाई गरेर लेख्नु भएको जस्तो लाग्यो, तपाईले यत्रो विधि त कसरी खानु भयो होला र?

'खाइयो बन्धु खाइयो । बन्धुहरूले मेरो बदनाम हुने काम त गरे, तर नभएको कुरा चाहिँ होइन । विस्तारै विस्तारै तरल पदार्थसँग खाँदा खाइयो... । चालिस पैतालिस घोगा मकैका पनि खाइयो, एकथाल खुर्सानी पनि खाइयो ।' भनेर मिति ०३९।५।११का दिन भवानी घिमिरेले स्वीकार गर्नु भएको टेप 'रचना' का सम्पादक रोचक घिमिरेसँग अद्यपि सुरक्षित छ ।

अब माथि भनिएझैं साहित्यकारहरूका बानी बेहोरा, मति कुमति, नियत तथा प्रवृत्ति समेत झल्कने विभिन्न अङ्कमा छापिएका केही प्रसंगका उद्धृतांशहरू हेरौं–

केदारमान ब्यथित : चश्मा ल्याउनु भएन कि क्या हो ?

देवेन्द्रराज उपाध्याय : ल्याउन विर्सेछु । घरमै छुटेछ ।

धर्मराज थापा : (आफ्नो चश्मा दिदै) ल यो चश्मा लगाएर पड्नुहोस् ।

देवेन्द्रराज उपाध्याय : (चश्मा लिदै) यो लगाएर देखिएला र ?

धर्मराज थापा : किन नदेखिनु ? म यही लगाएर देख्छु ।

ळ

साहुनी : (मध्यान्न १२ बजे नै बाशुशशीले हिन्दी बोल्न थालिसकेको देखेर बौद्धको भट्टीको साहुनीले बगलमा बसेर साथ दिइरहेका साथीहरुलाई हेरेर) उहाँको घर हिन्दुस्तान तिरै पो हो कि ?

विनोद अश्रुमाली : उहाँको घर ? जहाँ रात पर्‍यो उही घर ।

साहुनी : अनि फ्यामिली नि ?

बिनोद अश्रुमाली : जहाँ मिली त्यही फ्यामिली ।

ळ

यायावर : (एउट गिलास ढलेको देखेर) कसको हातबाट गिलास ढल्यो जगदीशको कि हमालजीको ?

जगदीश घिमिरे : म वेवकुफ कहाँ छु र आफ्नो गिलास ढाल्नु ?

हेम हमाल : आफ्नो गिलास त मैले पनि ढालेको छैन– बरु गिलासले नै पो मलाइ धेरै पटक ढालेको छ ।ळ

ळ

अशेष मल्ल : फलानो कविले कसको कविता चोरेको हो मलाई थाह छ, मसँग प्रमाण छ... ।

नगेन्दराज शर्मा : प्रमाण छ भने देखाउनुहोस्–हामी प्रकाशित गरि दिन्छौ ?

ध्रुवचन्द्र गौतम : (विस्तारै)नगेन्द्रजी मैले चोरी गरेकोबारे पनि त्यस्तो कुरा आयो भने मसँग कुरा नगरी नछाप्नु होला है ।

विनोद दीक्षित : तिमीले चोरी गरेको कुरा त किन छापिरहनु पर्‍यो र त्यो कस्लाई थाह छैन र ?

ঙ

ध्रुवचन्द्र गौतम : (कुरै कुरामा) सबै भन्दा ठूलो के ?

नगेन्द्रराज शर्मा : सबै भन्दा ठूलो हात्ती । हात्ती भन्दा ठूलो आज ध्रुवको छाति ।

डा.राकेश : यस्तै हुन्छ– बोतल ढलेको राती ।

डा.तारानाथ शर्मा : अब उठ्न पाए हुन्थ्यो जाती ।

तुलसी दिवस : कसरी उठ्नु तात्दै नताति ।

डा.गौतम : उठौंउठौं, विल चड्दै छ माथि माथि ।

ঙ

यायावर : अभिव्यक्तिका लागि दुई चारजना आधुनिक साहित्यकारहरुको लेखन शैलीको बारेमा एउटा तुलनात्मक लेख तयार परिदिनुहास् न ?

किशोर नेपाल : हुन त हुन्छ तर यिनीहरूको साहित्यचाहिँ त मैले उस्तो पढ्न सकेको छैन तापनि मलाई यिनीहरुको जीवनको एउटा शैली अर्थात् रक्सी खाने शैली चाहिँ कंठै छ– त्यसैमा केही लेखिदिउँला हुँदैन ?

यायावर : कंठै छ रे ?

किशोर नेपाल : हो । नपत्याए अलिकति नमुना सुन्नुहोस् जस्तै–

ध्रुवचन्द्र गौतमलाई–रक्सी जे जस्तोसुकै भएपनि बोतलमा लेविल चाहिँ राम्रो चाहिन्छ ।

भवानी घिमिरेलाई–सबै भाँडा बोतल नसिध्याएसम्म सन्तोष हुँदैन ।

विनोद दीक्षितलाई–नाच्ने एउटी साथी पाएसम्म पिइरहनु पर्छ ।

वासु शशीलाई–अर्काले (श्रीमतीले ?) बोतल खोसेर नमिल्क्याएसम्म थपेकोथप्यै गरिरहनु पर्छ ।

प्यासीलाई–आफ्ना लेख कविता सुनाउन पाएसम्म जण्डीसै भएको बेलामा भए पनि पिएको पियै गरिरहनु पर्छ ।

शैलेन्द्र साकार, मनु ब्राजाकी, मोहन घिमिरे, विनोद रिसालहरुलाई बे होस नभएसम्म पिइरहनु पर्छ ।

अनि एउटा कवि छ जसको नाम लिनु आवश्यक पर्दैन– ऊ चाहिँ प्राणै नगएसम्म धोकी रहन चाहन्छ ।

ঙ

शैलेन्द्र साकार : आज पनि एक पैसा खर्च नगरी टन्न ट्वाँट खाइयो ।

ध्रुव सापकोटा : मैले पनि त नि··· ।

कुमुद देवकोटा : भरखरमात्र रामदाइ कहाँ तिरेको तीस रुपैया के त ?

शैलेन्द्र : त्यो त तिम्रै खल्तीबाट खसेको रुपैया हामीले टिपेका थियौं ।

ঙ

नगेन्द्रराज शर्मा : (दश बाह्र जना लाठेले खाने जति खाने पिउने कुरा भवानी घिमिरे एक्लैले बुत्याएको देखेर) तपाईंले एकै सिटिंगमा दुईवटा बोका एक्लैले खाइसक्नु भएको कुरा सुनेको थिएँ– आज प्रमाणित भयो अब पत्याएँ······ ।

भवानी घिमिरे : त्यो त केटाकेटी छदाको कुरा हो अहिले त··· ।

जगदीश घिमिरे : हामीले बुझ्यौ अहिले तपाई दुइवटा विकासे राँगो नै बुत्याउन सक्नुहुन्छ हैन ?

भवानी घिमिरे : त्यसो त हैन–एउटा खसी चाहिँ सजिलै सिध्याउँछु तर मासुको दुई तीन थरी परिकार हुनुपर्छ र तरल पदार्थ चाहिँ प्रसस्त हुनु पर्छ ।

नगेन्द्रराज शर्मा : खशी चाहिँ कत्रो नि ?

भवानी घिमिरे : हेर्नोहोस नगेन्द्रबाबु ! राँगाबाट खसीमा झरीसके– अब खसी पनि कत्रो भनेर सोध्नुहुन्छ ?

ꙮ

यज्ञनिधि दाहाल : जगदीश भाइ ! तपाईं अन्तराष्ट्रिय स्तरको जागिरमा जानुभयो भन्ने सुनियो– बढो खुशी लाग्यो । अब हामीलाई पनि सम्झिनु पर्‍यो··· ।

जगदीश घिमिरे : अहँ ! पटक्कै सम्झन्न । तपाईंले वर्षौदेखि रेडियो नेपालको साहित्यिक कार्यक्रम सञ्चालन गर्दा मेरो एउटा पनि कथा वा कविता सम्झनु भएन– मैले अब तपाईलाई किन सम्झने हँ ?

ꙮ

मोहनराज शर्मा : मोहन कोइरालाले मदन पुरस्कार त पाए तर यिनले आफ्नो कविताका कुनै दुई पक्तिका अर्थ लगाउन सक्छन् ? अथवा तपाईं ध्रुव सापकोटा सक्नु हुन्छ ? सक्नु हुन्छ भने लगाएर देखाउनुहोस ।

राजेन्द्र सुवेदी : तर मैले त 'नदी किनारका माझी' को समीक्षा लेखेको छु ।

मोरास : त्यसो भए तपाईंले किताब नपढीकनै समीक्षा लेखिदिनुभयो होला ।

राजेन्द्र सुवेदी : हैन त्यसो किन भन्नु भयो ?

मोरास : किनभने मोहन कोइरालाको कविता पढेर त कसैले पनि केही लेख्न सक्दैन ।

ꙮ

डा.ध्रुवचन्द्र गौतम : अहँ मलाई लोकल चाहिँ पटक्कै मन पर्दैन । म लोकल खाँदा पनि खान्न ख्वाउँदा पनि ख्वाउदिन··· ।

तुलसीदिवस : हो, तिमी लेख्नमा मा पनि त लोकल मनपराउँदैनौ, त्यसैले इम्पोर्टेड साहित्य नै प्रस्तुत गर्छौ ।

ꙮ

डा.ध्रुवचन्द्र गौतम : ब्रेकफास्ट नभए जस्तो आज लन्च पनि नहोला जस्तो छ । त्यसकारण लन्चका कप्तानी (ख्याउने काम) अव रोचकजीले नै लिनु पर्‍यो ।

रोचक घिमिरे : (ध्रुवतिर औल्याउँदै) जो मोटोघाटो तगडा छ उही हुन्छ आजको कप्तान ।

डा.ध्रुवचन्द्र गौतम : म यस्तो मोटोघाटो भएको आफ्नो पैसाले खाएर

कहाँ हो र ? अर्काकै पैसाले खाएर पो त ।

ௐ

विनोद दीक्षित : आज मेरो पेट ठिक छैन ।

शैलेन्द्र साकार : तिम्रो पेट जस्तोसुकै होस्, तिम्रो पाकेट ठिक भए हामीलाई पुग्छ ।

ௐ

यायावर : दिवसजीको एक्लोपनाको कस्तो कस्तो चर्चा भएको थियो तर मैले छापिन ।

विनोद : तपाई सिसासको का.स.को कर्तव्यनिष्ठ सदस्य हुनुहुँदो रहेछ ।

तुलसी दिवस : यायावरजी, मेरो विवाहको बारेमा धेरै जना चिन्तित छन् ।

यायावर : हो, तर के गर्नु ? सब जुँगामुठेहरुमात्र चिन्तित छन् । चिन्ताको कुरा नै यही हो ।

मोहनराज शर्मा : खैनीखानेहरुले जति सुकै लुकाए पनि हात सुघे पछि थाह भइहाल्छ ।

ध्रुवचन्द्र गौतम : म जस्तो सँधै मागेर खानेको त हात सुँघे पनि कसरी थाह हुन्छ र ?

ௐ

रामकृष्ण निराला : आज खाना पुग्दैन जस्तो छ ।

यायावर : हलमा सय सवासय जति मान्छे छन् ती प्याकेटहरू दुईसय भन्दा बढी छन्– किन पुग्दैन ?

निराला : तपाईंलाई थाहै छैन··· आज भवानी घिमिरेजी पनि आउनु भएको छ··· यति त राम्रोसँग खुवाउने हो भने उहाँ एक्लैलाई ठिक हुन्छ ।

विष्णुविभु घिमिरे : पुग्दैन, पुग्दैन । भवानी दाई मात्र हैन, आज त ध्रुवचन्द्र दाई पनि हुनुहुन्छ नि !

ௐ

अशेष मल्ल : अचेल धेरै साथीहरू रक्सी पिउँदैनन् ।

कविता भट्टराई : हामीलाई थाहै नभएजस्तो नगर्नुस् न । को को साहित्यकारहरू कति रक्सी पिउछन् । हामीलाई एक एक थाह छ ।

अशेष मल्ल : के थाह छ तपाईंलाई ?

कविता : विराटनगरको अतिथिसदनमा– जहाँ रक्सी लैजान पाइदैन– यस्तो ठाउँमा पनि विराट कवि सम्मेलनमा भाग लिन गएका साहित्यकारहरु राती टिल्ल मातेर बस्थे– हो कि होइन ?

अशेष : कसरी थाह पाउनु भयो ?

कविता : कसरी रे ? हामी 'अभिव्यक्ति' पढ्दैनौ भन्ने ठान्नु भएको छ कि क्या हो ?

ௐ

यायावर : यता प्रज्ञा प्रतिष्ठान पुगेर आउनु भएको ?

डा.तारानाथ शर्मा : अहँ, किन जानु त्यहाँ ? कोसँग कुरा गर्न जानु ? लैनसिंहजी बल्ल-बल्ल प्रवेशिका पास, माधवजी ए बी सी डि सम्मका ज्ञाता, विजय मल्ल आइ एस्सी फेल । बाकी बालकृष्णे त्यो नाथे आफ्नै लगौटिया यार– त्योसँग कुरा गर्नु के एकेडेमी गइरहनु ? म त ऊ त्यो हात हेर्ने अन्धो लाई पैसा दिएर पो आएको ।

ꙮ

कमलराज रेग्मी : (युवाअवस्थामा लेखेको कविता सुनाउँदै) यो कविता त्यतिबेला मेचीदेखि कालीसम्मका युवाहरु जोशका साथ पढ्ने गर्थे ।

व्यथित : त्यसो भए तपाई त्यही युगमा फर्कनु पर्ने बेला आयो ।

ꙮ

अशेष मल्ल : एक पटक फेरि थप्ने हैन ? प्लेट त रित्तियो नि ।

ध्रुवचन्द गौतम : थप्न त मन छ नि- तर के गर्नु उः त्यहाँ देख्नु भएन यायावरले टुलुटुलु हेरिराख्या ! ऊ यताउति लागोस् अनि थप्छु मज्जाले ।

ꙮ

केदारमान व्यथित : (रक्सी सर्व गर्दै केटालाई) भो भो मलाई नराख, म खान्न ।

तुलसी दिवस : किन कविजी खाँदै नखाने ?

व्यथित : (त्यो केटा बाहिर गइसकेपछि) खै खै बोतल दिनुस् त, (आफ्नो गिलास भर्दै) उसले माथि गएर भन्ला भनेर पो··· अगि नलिएको ।

ꙮ

विनोद दीक्षित : तपाईंहरू जेसुकै भन्नुहोस्– गोविन्द गिरीलाई म कवि मान्दै मान्दिन ।

किशोर नेपाल : त्यसलाई पनि कवि मान्नु भयो भने त म तपाईलाई सम्पादक नै मान्दिन जानुस् ।

ꙮ

किशोर नेपाल : समीक्षाको सम्पादकले त मेरो बारेमा सम्पादकीय नै लेखे पनि हुन्छ । एकताका माड्साबको भुटुनको लागि तेल किन्न म जनसेवामा लाममा बस्थें- त्यही एक पटक भीडले गर्दा अलिकति तेल पोखियो भनेर गणेशप्रसाद कण्ठ भन्ने माड्साबको असिसटेन्टले मलाई निकालिदियो । तपाईंलाई थाहै छ नि हैन विनोद दाइ ?

विनोद दीक्षित : मलाई त्यो त थाह छैन– मलाई त तिमीले समीक्षा बेच्ने गरेको चाहिँ अस्ति जस्तो लाग्छ ।

ꙮ

ध्रव सापकोटा : थाहा पाउनु भो नगेन्द्रजी ! डा. राकेश पनि पत्रिका निकाल्दै हुनुहुन्छ नि ।

नगेन्द्रराज शर्मा : खोइ मलाई त राकेशजीले भन्दै भन्नु भएको छैन ।

डा.रामदयाल राकेश : हो, मैले शैलेन्द्र साकारलाई भनिदिएको छु–

उहाँलाई भनेपछि कुनै कुरा अरूलाई भनिरहनु आवश्यक पर्दैन भनेर कसैलाई पनि नभनेको ।

७३

हरीहर श्यामल : (कविता सुनाएर आएपछि टाउँको समाउँदै) कस्तो टाउको दुखेको होला ।

विश्वविमोहन श्रेष्ठ : तिम्रो कविताले तिम्रै टाउको त त्यस्तो विधि दुख्यो भने हामीहरूको टाउको कति दुख्यो होला नि !

७३

बिनोद दीक्षित : सँधै जस्तो हामी पाँच पाण्डवमात्र हुन्थ्यौ–(पाँच पाण्डव भनिने–नगेन्द्र, विनोद, ध्रुव, रोचक र ध्रुवमा आज शेखर गिरी र तुलसी दिवस पनि थपिएका शेखर र दिवसलाई बताउँदै) नगेन्द्रजी धर्मराज युधिष्ठीर, गौतम भीम, म अर्जुन, रोचक र सापकोटा नकुल र सहदेव… ।

डा.ध्रुवचन्द्र गौतम : हैन, अलि मिलेन । भीम यस्तो बुद्धिमान थिएन- जस्तो म छु- त्यसकारण ।

यायावर : एउटा कुरो त मिल्छ नि- खानमा त तिमी भीम जस्तै छौ नि … ।

७३

डा.ईश्वर बराल : (‘अलिखित’ले पुरस्कार पाएको चर्चामा) यहाँ मदन पुरस्कार चाहिँ साहित्यिक समाजमा प्रतिष्ठित पुरस्कार मानिन्छ र प्रज्ञा प्रतिष्ठानको पुरस्कार चाहिँ ‘दरवारी’ पुरस्कार ठानिन्छ ।

डा.नामवर सिंह : त्यसो भए त्यो अलिखितले पाएको पुरस्कारको नाम ‘रागदरवारी पुरस्कार’ हुनपर्ने– कसो हो ।

७३

भवानी घिमिरे : ध्रुवजी मैले तपाईंको बारेमा एउटा रमाइलो कुरा सुने ।

डा.ध्रुवचन्द्र गौतम : मलाई था‘छ । अचेल खानमा ध्रुवचन्द्र दोस्रो भवानी भा‘छ भन्ने सुन्नु भा‘ होला, हैन ?

रोचक घिमिरे : के को दोस्रो भवानी नि, अब भवानीजीको नाम चाहिँ दोस्रो नम्बरमा पर्छ ।

७३

नगेन्द्रराज शर्मा : (ध्रुव सापकोटासँग) अब म हिडे, तिमीलाई लिफ्ट चाहिने हो भने हिंड- म पुर्‍याई दिन्छु ।

ध्रुव सापकोटा : अब एक पेग खान दिनुहोस् नगेन्द्रजी… पाँच मिनेट…

नगेन्द्रराज शर्मा : (सात मिनेट पछि) सात मिनेट पर्खे, एक पेग भनेर तिमीले तीन पेग खाइसक्यौ… अब म पर्खन्न ।

ध्रुव सापकोटा : अब एकै पेग खान्छु नगेन्द्रजी– बढी खाएँ भने गालै चडकाई दिनुस्-एक पेग स्वाट्ट पारेर हिडिहाल्छु ।

नगेन्द्रराज शर्मा : (सापकोटाले फेरि तीन चार पेग खाएपछि) लौ हिड्छौ कि अब त ?

ध्रुव सापकोटा : (मुन्टो नजिक ल्याएर गाला थाप्दै) नगेन्द्रजी ! लौ चड्काउनुहोस् गालामा… बरु दुई चड्कन लगाउँनुहोस्… अब दुई पेग नलगाई त उठ्दै उठ्दिन… ।

☙

तुलसी दिवस : (सिसासको बैठक सिद्धिएपछि) अब कार्यसमितिका दुई रिक्त पद पनि पूर्ति गर्नु पर्‍यो– यसमा यसो विचार गर्दैगर ।

बासु रिमाल यात्री : (एक छिनको विचार विमर्श र विवाद पछि) म एउटा नाम सिफरीस गर्छु–सिर्जनशील साहित्यिक पनि, एकदम चल्तापुर्जा पनि– सीता पाण्डे ।

परशु प्रधान : हुन त हो तर मलाई अलि मुश्किल पर्छ… ।

रामकुमार पाण्डे : तपाईंलाई के को मुश्किल ! मुश्किल त मलाई पो पर्छ… उनी सीता पाण्डे रे, आफु परियो राम पाण्डे ।

परशु प्रधान : (चर्को स्वरमा) राम त म पनि हुँ नि– परशुराम ।

डा.दयाराम श्रेष्ठ : (सुस्तरी) हुन त म पनि रामनै हुँ– दयाराम ।

डा.रामदयाल राकेश : (एकदम चिच्याएर) के को हाल्ला गरिराख्नु हुन्छ तपाईंहरू– राम त म पो हुँ–रामदयाल ।

तुलसी दिवस : असली राम बोलेकै छैन… नक्कली रामहरू–हेर जमजमाएका… फट्टाहरू ।

नगेन्द्रराज शर्मा : एउटी सीताको नाम सुन्न पाएपछि सब राम बन्न खोज्दा रहेछन्– ठन्डारामहरू ।

अशेष मल्ल : (विस्तारै) राम हैनन् । यी सब हराम हुन्–हराम ।

☙

शैलेन्द्र साकार : (बाटोमा भेट भएपछि) अहो अचेल तिमी पनि मर्निंग वाक गर्न थाले छौ ? (ध्रुवचन्द्रको गौतम भुँडी सुम्सुमाउँदै) तर खै जति सुकै मर्निंग वाक गरे पनि तिम्रो भुडी चाहिँ घट्या होइन ।

डा.ध्रुवचन्द्र गौतम : अँः हेर न, म चाहिँ भुडी घटाउँ भनेर विहान सँधै घुम्न निस्कन्छु, तर नगेन्द्रजी सँधै बेस्सरी जेरी स्वारी ख्वाएर यो भुडी झन् झन् बढाइदिन्छन् ।

☙

द्वारिका श्रेष्ठ : कुन्दनजी ! पिंडालीजी साहित्यकार हुनुहुन्छ भन्ने कुरा तपाईंका श्रीमान्लाई थाह थिएन कि क्या हो ?

कुन्दन शर्मा : बाबाको कुरा ? म कविता लेख्छु भन्ने पनि उहाँलाई थाह छैन ।

☙

व्यथित : दिवसलाई सबैले माया गर्छ, तपाईंको– उसको विहे न भएकोमा उसका सबै साथीहरु चिन्तित छन् तपाईंको…… ।

यायावर : के गर्नु ? ती माया गर्ने साथीहरु सबै केटा परे ।

☙

एक उत्तम कलाकार : (अलि सन्किएर) म अझै कहाँ बूढो भा'छु ? म होइन बुढो ।

एक दीक्षित पत्रकार/साहित्यकार : कसले भन्छ उहाँ बुढो ? उहाँ त प्रसिद्ध फुँडो पो त ।

ØΩ

ध्रुव सापकोटा : ओ हो कति राम्रो व्याग ! (हिन्दु धर्म सम्मेलनको) मलाइ देऊ न… ।

खेम कोइराला बन्धु : मलाई के दिन्छौ त बदलामा ।

ध्रुव सापकोटा : दिन त दिउँला नि– तिम्रो बेस्सरी प्रशंसा लेखेर छपाइदिउला नि कुनै साप्ताहिकमा ।

खेम कोइराला बन्धु : प्रशंसा त तिमी दुई पेगमै गरिहाल्छौ नि । यस्तो दामी व्याग किन दिनु ? मलाई तिम्रो प्रशंसा चाहिएन । हो बरु अभिव्यक्तिमा यायावरको स्तम्भ जमघटमा मेरो नाम छपाईदिन्छौ भने चाहिँ दिन्छु ल… ।

ØΩ

नीर शाह : (खेलकुदको चर्चामा) तपाईंलाई थाहा छ ? म पनि राष्ट्रिय स्तरको खेलाडी हुँ नि– राष्ट्रिय स्तरको प्रतियोगितामा भाग लिएको छु र… भाग लिएको मात्र हैन– दोस्रा भएको छु ।

यायावर : के मा… कहिले… ?

नीर शाह : हो, भागलिने जम्मा दुईजना थियौं पहिला ऊ भयो दोस्रो म ।

ØΩ

केदार मान व्यथित : प्यासीजी ! तपाईं त जंगी कविता लेख्नुहुन्छ ।

प्यासी : (स्वा स्वा र फ्वा फ्वा गर्दै) हो म जंगी कविता लेख्छु तपाई निजामती कविता लेख्नु हुन्छ ।

ØΩ

कमला सरुप : मलाई ढिलो भयो अब म जान्छु ।

ज्ञानुवाकर : बस न दस विस मिनेट । के को हतार ? बरु आर्को एक राउण्ड चिया खाऊँ ।

कमला सरुप : नाइ नाइ भैगो । दश मिनेट भन्दा बढी बस्दिन भनेर दुई घण्टा देखि बसिराख्या छु ।

ØΩ

भवानी घिमिरे : मान्छेको आयु कति भन्नु ?

मदनमणि दीक्षित : बाचुन्जेल ।

ØΩ

हरि अधिकारी : डाक्टर साब ! तपाईंले मलाई किन त्यस्तो गाली गर्नु भएको… त्यस्तो विधि गालि गर्न सुहाउँछ त ?

डा.तारानाथ शर्मा : हरि जी, यो नाउँले पनि कस्तो बोर गर्दो रहेछ– मैले त यतिन्जेल तपाईलाई हरिहर श्यामल ठानेर पो दनक दिइरहेको… ।

ØΩ

परशु प्रधान : चाकरी गर्न र मान्छेलाई फसाउँन/ठग्न आर.डी.लाई कसैले भेट्दैन``। मऱ्या`` ले ठग्छन् भन्या यही हो। ``ठगिने पनि उस्तै उस्तै हुन्``। हाम्रा जंगमजी नै कति ठगिनु भा'होला``।

भरत जंगम : भो भो त्यो त कुरै नगर्नुहोस्``।

यायावर : त्यसो नभन्नुहोस्, यहाँ आर.डी.नामका आर्का पनि छन्।

परशु प्रधान : मैले भन्या त उही आर.डी. युयुत्सु नै हो, ``तर अर्का आर.डी. छन् भने ती पनि कम चालु छैनन्।

ॐ

डा.राम दयाल राकेश : तपाईं त निक्कै मोट्टाउन भएछ नि ?

ध्रुव सापकोटा : अँ, मोटाएँ, म पनि आफ्नो हैन अर्काकै खाएर मोटाएको हुँ, हरेक साँझ एउटा न एउटालाई मिलाएकै छु, खाएकै छु, पिएकै छु, किन नमोटाउनु त।

ॐ

दौलत विक्रम विष्ट : (प्राज्ञ बन्ने प्रयास/दौडधुपका चर्चामा)म त कही कतै कसै कहाँ जाँदा पनि नजाने ``चाकडी भन्या गर्दै नगर्ने मान्छे``।

यायावर : हरि अधिकारीसँग कता हो जम्का भेट हुन्थ्यो रे नि त ?

दौलत विक्रम विष्ट : अँ त्यो हरि अधिकारीचाहिं गणेशमानजी कहाँ खुब धाउँदो रहेछ`` महाराजगञ्जमा पनि उत्तिकै।

ॐ

यायावर : भरेको बजेट भाषण पछि रक्सी र चुरोटको भाउ बढ्दैछ– दुवै कुरा तिमीहरूलाई नभै नहुने– किनेर 'स्टक' गर अलि अलि``।

ध्रुव सापकोटा : अहिलेसम्म आफ्नो पैसाले किनेर कहिल्यै खाइएन– भाउ बढे पनि के नबढे पनि के र हामीहरुलाई त`` बरु तिनै सँधै ठगिनेहरुले चाहिँ किनीराखे हुने हो– हो हो हो हो``।

ॐ

श्रीमती रीता दीक्षित : ज्ञानुवाबु श्रीमतीलाई असाध्यै मान्नु हुँदो रहेछ``। त्यो राम्रो बानी हो।

नराश : हो, ज्ञानुजी अलि बढी नै जोइटिंग्रे हुनुहुन्छ भन्छन् साथीहरू।

मदनमणि दीक्षित : जोइटिंग्रे रे ? उहाँ जोइटिंग्रे मात्रै होइन उहाँ त समस्त नारीटिंग्रे``।

नराश : सम्पूर्ण नारीटिंग्रे नभए पनि`` कवयित्रीटिंग्रे चाहिँ पक्कै हुनुहन्छ`` कसो ज्ञानुजी !

ज्ञानुवाकर पौडेल : हे हे हे``।

ॐ

साधना प्रतीक्षा : तपाईं त कविका साथै डाक्टर पनि हुनुहुँदो रहेछ। मेरो एउटा समस्या पनि बताई हालुँ कि ?

डा.युवराज भट्टराई : बताउनुहोस् न यसमा के को संकोच।

साधना प्रतीक्षा : हेर्नुस्, म सँधै विहान चार बजे निद्राबाट ब्यूझन्छु र

पनि छ बजेसम्म ओछ्यानबाट उठ्नै सक्तिन । दुई घण्टासम्म के के कल्पना /तर्कना मनमा आइरहन्छन् ।

डा.युवराज भट्टराई : त्यसो भए एउटा काम गर्नुहोस्– अब देखि छ बजेपछि मात्र ब्यूझने गर्नुहोस् ।

ᨖ

नकुल सिलवाल : यो चियापसलमा उधारो चिया खाएर पैसा नतिर्नेहरूको नाम छापिएको रहेछ नि 'प्रतिपक्ष'मा ।

रमेश खनाल : साहित्यकारहरूमा चाहिँ ककस्ले नतिरेका रहेछन नि ?

नकुल सिलवाल : अरु कसले हुन्थ्यो– शैलन्द्र साकार, आर.डी.युयुत्सुहरू त हुन् नि ।

रमेश खनाल : यो रिपोरटिंग चाहिँ कस्ले गरेको रहेछ नि ?

विमल निभा : अरु कसले हुन्थ्यो– गोविन्द गिरी प्रेरणाले ।

किशोर पहाडी : ए ! गोविन्दले रिपोटिंग गरेको भए उसले आफ्नो नाम चाहिँ काट्यो होला– पैसा नतिर्नेको लिस्टबाट ।

सबै तथा अन्यहरू समेत् हा हाहाहा

ᨖ

दुर्गा बराल : (सुस्मिता नेपालले टेबुलमा खाजाको प्लेट राखेपछि) बैनी म चिउरा कहिल्यै खान्न··· चिउरा चाहिँ झिकौं ।

यायावर : (अगाडि प्लेट राखेपछि) बैनी म पनि आलु खान्न··· ।

सुस्मिता नेपाल : दाइ आलु खानु हुन्न··· ?

तीर्थ श्रेष्ठ : उहाँ आलु खानु हुन्न··· उहाँ त अरूलाई पो आलु खुवाइ दिनु हुन्छ ।

ᨖ

ज्ञानुवाकर पौडेल : (ज्ञानु, मनु पौडेल ब्राजाकीको नाममा गजल छापिएको सन्दर्भमा) मैले आधा लेखेर छाडेको गजललाई मनुले पुरा गरि दिएइका हुन् । त्यसैले त्यो हाम्रो सयुक्त लेखन हो–तपाईंहरूको कथा कोण जस्तै ।

किशोर : यस्तोमा साँच्चि पारिश्रमिक चाहिँ कसले लिन्छ नि ? आधा आधा ?

अशेष मल्ल : मनु ब्राजाकीले छापिनु भन्दा पहिले नै पारिश्रमिक लिएर हिंडिसक्छ– के को आधा आधा नि !

ᨖ

तीर्थ श्रेष्ठ : (फणिन्द्र नेपाललाई औंल्याउँदै) तैले पनि वियर पिएको ?

विनय रावल : सित्तैमा पायो भने यस्ले वियरमात्र हैन, विष पनि पिउँछ ।

फणिन्द्र नेपाल : जे जे भन्न मन लाग्छ भन··· । भाको कुरामा भन्नमा के छ ।

ᨖ

भरतराज मन्थलीय : म त माथि गएँ, तलै बस

रमेश खकुरेल : तल बस्नाकन के छ खसखस
भरतराज मन्थलीय : मदिरासँगको छ लसपस
भुसतिघ्रे काँग्रेस : मदिराले मुटु घोच्छ चसचस ।

ঙ

विजय बजिमय : (यौटी विदेशी केटीले हकारेपछि) गेष्ट हाउस चलाए पछि यस्ता बचन त कति सहनु पर्छ कति ?

लब गाउँले : विदेशमा भएको भए त तिमीलाई यस्तो कुरामा मुद्दा नै हाल्ने थिई– यहाँ भएर तिमीलाई डाइलग मात्र दिई ।

विजय : यस्ता छेडछाडमै मुद्दा लाग्ने भए लब गाउँलेको नाममा त हजारौ मुद्दा परिसक्या हुन्थे ।

प्रकाश घायल : यो मेल कि फिमेल दाई ?

ঙ

ज्ञानुवाकर पौडेल : (नराशको कुनै त्यस्तै उस्तै आरोपउर असहमति जनाउँदै) म जस्तो गौ प्राणीलाई यस्तो बात लगाउन सुहाउँछ र दाइ ?

मदनमणि दीक्षित : धत् के भन्या ज्ञानुजी त्यस्तो ? तपाईं जस्तो साहित्यिक मान्छेले पनि त्यस्तो अशुद्ध भाषा बोल्ने हो ? तपाईंले त आफुलाई गौ-प्राणी हैन– बरु गोरु प्राणी पो भन्नु पर्छ–गोरु प्राणी ।

ঙ

विजय बजिमय : (यायावरलाई) दाई भोलि एक पटक मकहाँ पसौ न ।

यायावर : किन केही विशेष छ ।

तीर्थ श्रेष्ठ : सधैँ विशेषै विशेष त छ नि । विहानै विशेष, बेलुकै विशेष··· एउटी मिसेस नभेटेसम्म विजयको सँधै विशेषै विशेष ।

ঙঙ

# धर्मनिरपेक्षता

## महेश्वर शर्मा

धर्मनिरपेक्षताका सम्बन्धमा मान्छेमा भ्रम छ । धर्मनिरपेक्षता पूर्वीय विचार होइन । यो औपनिवेशिक भारतमा यूरोपतिरबाट ल्याइएको विचार हो । पहिले धर्म के हो भनेर बुझ्नु आवश्यक छ । धर्म शब्दले मानवधर्म संझाउँछ, कर्त्तव्यबोध गराउँछ । धर्मको क्षेत्र विशाल छ । धर्म भनेको सदाचार हो, सद्व्यबहार पनि हो । धर्मलाई अंग्रेजीमा रिलिजन शब्दले बुझाउन सक्दैन । धर्म शब्दले धर्म मात्र होइन, अर्थ-काम-मोक्षलाई समेत् समेट्दछ । धर्म भनेर सामान्य कर्मकाण्ड-पूजापाठ इत्यादिमात्रै सम्झनेहरू धर्मको मर्म बुझ्न सक्दैनन । यो संसारमा सबैका आआफ्ना मान्यता छन् र उनीहरू आफ्ना परम्परागत संस्कार, संस्कृति र मान्यतामा अविचल छन् । धर्म त निरपेक्ष हुनै सक्तैन । 'निरपेक्ष' शब्दले बेवास्ता जनाउँदछ । धर्मलाई कर्त्तव्यकर्म मान्छौं भने कर्तव्यप्रति बेवस्ता कसरी गर्न सक्छौं । धर्म भनेको– 'आत्मनःप्रतिकूलानी परेषां न समाचरेत्' हो । अर्थात् आफूलाई नराम्रो लाग्ने काम अरूप्रति पनि नगर्नु धर्म हो भन्ने मान्छौं हामी । यो हाम्रो सनातन परम्परा हो, तर हिजो आज वाह्य प्रभाव अथवा धर्मको मर्म नबुझेर धर्मछाडा प्रवृत्ति बढ्दै गएको छ ।

बेलायतकै कुरा गरौं– त्यहाँ क्रिश्चियनधर्म नमान्नेलाई राजगद्दीमा राखिंदैन । प्रधानमन्त्री समेत गैरक्रिश्चियन हुन पाउँदैन । अस्ति भर्खरैको कुरा त हो– अमेरिकन राष्ट्रपति बाराक ओबामा इशाई नभएको कारण उनले शपथ ग्रहण गर्दा बाइबल छोएनन् । त्यसैले त्यो शपथ अधुरो भनियो र पछि अब्राहम लिंकने शपथ खाएको पुरानो बाइबलको प्रति छोएर पुनः शपथ ग्रहण गर्नुपर्‍यो । रुसमा मुसलमान र बुद्धिष्टहरू पनि छन्, तर त्यहाँ राज्यको तर्फबाट इसाई धर्मले मात्र मान्यता पाएको थियो । रुस विघटन भएपछि मात्र यहुदी, इश्लाम र बुद्ध धर्मलाई पनि मान्यता दिइएको छ । बिग्रेका मुलुक त भारत र नेपाल मात्रै देखिएका छन् । अन्यत्र कतै धर्म निरपेक्षता छैन । कुनै पनि मुलुक बरु सर्ब-धर्म हुनसक्छ– धर्म निरपेक्ष हुन सक्दैन । बेलायत र अमेरिकाले आफ्ना विशेषता र पहिचान कायम राखेजस्तै अरु मुलुकले पनि आ-आफनो मौलिक विशेषता जोगाएरै राखेकाछन् । धर्मप्रति ज्यादै उदार हाम्रो संस्कृतिलाई खुम्च्याउन खोज्नेहरूले धर्म निरपेक्ष भनेर बुझ्नु न सुझ्नु अनर्थ मात्रै निम्त्याउन र साम्प्रदायिक दुर्गन्ध फैलाउन खोज्दैछन् ।

निष्कर्ष के भने-प्रत्येक देशमा आफ्ना विशेष परम्परा, चलन र संस्कृति हुन्छन् र तिनको उल्लंघन गर्न पाइँदैन । हामीकहाँ भने बयलपाते नेता र देशै गाइजात्रे भएर हो कि कुन्नि, मन्त्रीहरूले शपथग्रहण गर्दा पनि मनपरी छ । उरन्ठेउलाहरूले भाँडभैलो मच्चाएर आफ्नोपन नै मेटाउन खोज्दैछन् । त्यसैले आफ्नो उत्कृष्ट धर्म संस्कृति जोगाउने अभिभारा जनतामाझ छ । हामी साह्रै होसियार हुनुपर्ने अवस्था छ ।

ॐॐ

# कार्की किचेनको त्यो रमाइलो साँझ

राप्रउ पोखरेल
जनउदय गल्ली, सिफल

वि. सं २०५८ को असोज ४ गते । निकै दिनपछि वर्षाले अल्पविराम लिएजस्तो छ । आज पानी परेको छैन, हिजो पनि परेन कि ! हेक्का भएन ।

एकदुई गरी आउँदै हुनुहुन्छ । माड्साप् (मदनमणि दीक्षित), कुमार लामिछाने र म गौशाला पिंगलस्थानको बाटो झरेर अघि बढ्दा नगेन्द्रराज शर्मा क्षेत्रप्रताप अधिकारीको गाडी छेउ उभिएर क्षेत्रप्रताप, शिव रेग्मी र अरू एक दुईजना साहित्यकारहरूसित गफ-गाफमा देखिनुहुन्छ । हामी उहाँहरूलाई बिथो लिएला कि भनेर अघाडि बढ्छौं गन्थव्यतिर । त्यसो त 'कार्की किचेन'मा पहिले पनि दुई तीन पटक गइएको थियो, त्यतिबेला अलि टाढा नै लाग्थ्यो, हिलो भएर पनि हो कि ! अहिले त नजिकै लाग्यो । 'कार्की किचेन'का मालिक मदन कार्कीले प्रत्येक महिनाको पहिलो बिहीबार साहित्यकारहरूलाई 'कार्की किचेन'मा विशेष सहुलियतका साथ स्वागत गर्ने व्यवस्था भएकले उक्त समयमा उपस्थित हुन नगेन्द्रजीले आग्रह गर्नुभएको थियो । त्यही आग्रहबमोजिम यो ४ गतेको सन्ध्यामा हामी त्यहाँ जम्मा हुँदै थियौं । हामी हाम्रोलागि रिजर्ब गरिएको कक्षमा पुग्दा कृष्ण गोपाल लम्साल टोनी हेगनको नेपालको चिनारी भन्ने पुस्तकको पन्ना पल्टाउँदै हुनुहुन्थ्यो । हामी बस्ने कोठाको भित्तामा 'अभिव्यक्ति-साहित्यिक भेटघाट कार्यक्रम-२०५८/६/४ विहिवार' लेखिएको रातो तुल टाँगिएको रहेछ । यस बाट यो खानपिन कार्यक्रमलाई नजानिंदो गरी औपचारिकता दिने छनक पाइथ्यो । सहभागीहरू विस्तारै विस्तारै थपिँदै हुनुहुन्छ, निर्धारित ठाउँहरू भरिंदै गएका छन् । होचा होचा दुईवटा टेबलमा चार चारका दरले आठजना बस्यौं । खाना खाने अर्को टेबलमा चार जना गरी हामी बाह्र जनाको स्थानमा खाँदिएर पन्ध्रजना बसिसकेका छौं ।

सन्ध्या खानपिनमा रुचि राख्ने चाबेल गौशाला बानेश्वर भेगका साहित्यकर्मीहरूको यो सानो औपचारिक भेटघाट कार्यक्रममा केही विलम्ब गरी देवीप्रसाद सुवेदी, विश्वम्भर चञ्चल र रामबहादुर पहाडी पनि देखा पर्नु भयो । चञ्चलजीको हातमा अखवारले बेरेको यौटा पोको देखियो । के होला भन्ने अड्कल हुँदै थियो, सीटमा वस्ता नबस्तै उहाँले पोको फुकाउँनु भयो– 'क्षितिजदेखि क्षितिजसम्म'का केही प्रति थिए ती । उहाँकै नयाँ कृति । यसै 'अभिव्यक्ति भेटघाट कार्यक्रम'मा विमोचन गराउने मन्सुवाले ल्याउनु भएको रहेछ ।

कार्की किचनेका सञ्चालक मदनकुमार कार्की साहित्यिक प्रतिभासमेत साँच्नु भएका न्यायिक क्षेत्रका अवकाश प्राप्त कर्मचारी हुनुहुन्छ । लामो नोकरी कालमा विभिन्न अपराध अभियुक्त बनेका, न्याय निसाफका लागि धाउने माझ कानुनको दहमा डुबेर पनि त्यसबाट असम्पृक्त हुँदै साहित्य रस-सागरमा जोरिनु भएको रहेछ । जागिरबाट अवकाश पाएपछिको

बसिबियाँलो रहेछ यो किचेन । खानपिनमा आफूलाई चाहिने कुरा माग गर्न एक एक वटा सादा कागतका टुक्रा हामीसबैलाई कार्कीजीले दिनु भयो । त्यसपछि नगेन्द्रजी संस्कृत नाटकको सूत्रधारको शैलीमा प्रस्तुत हुनुभयो–

'एक साँझ कुरैकुरामा कार्कीजीले मसँग भन्नुभयो– 'यहाँ कवि लेखकहरू आउन् साहित्यिक कुराकानी होस्, सुन्ने सुनाउने क्रम चलोस् भन्ने मेरो इच्छा छ । यसका लागि तपाईंले सहयोग गर्नु पर्‍यो ।'

पहिले पहिले पनि रश्मि, आम्रपालि, इन्दिरा, बंगलोर कफी हाउस आदिमा लेखक सम्पादकहरू जम्मा हुन्थे । सुन्ने सुनाउने र रचना आदन प्रदानको क्रम पनि चल्थ्यो, तिनको सुखद् स्मृति मेरो मन मस्तिष्कमा ताजै  थियो । मैले उहाँको प्रस्ताव सहर्ष स्वीकार गरें र त्यसदिन यहाँ आउने साहित्यकारहरूलाई केही छुट दिन पनि आग्रह गरें । उहाँहरूको बिलमा सबै खाद्य पदार्थमा (पेय पदार्थ बाहेक) पचास प्रतिशत छुट दिन राजी हुनुभयो ।  यसका लागि हामीले प्रत्येक महिनाको पहिलो बिहिवारको दिन तोक्यौं । त्यस आधारमा मैले तपाईहरूलाई आज यहाँ पाल्नु हुन अनुरोध गरेको हुँ । अर्को कुरा, यहाँ उपस्थित साहित्यकार मित्रहरू मध्ये कतिपयले सबैको बिलको भुक्तानी गर्ने मनसुवा र क्षमता राख्नु भएको आभाष पनि मैले पाएको छु तर यस 'अभिव्यक्ति भेटघाट कार्यक्रम'मा प्रत्येक सहभागी महोदयले आ-आफ्नो विलको भुक्तानी स्वयमले नै गर्ने परिपाटीको थालनी गरौ भन्ने पनि मेरो आग्रह छ ।' भनेर एक प्रकारले मौखिक परिपत्र जारी गर्दै कार्यक्रम शुरु भएको घोषणा गर्नु भयो ।

अर्डर बमोजिम आफ्नो अफ्नो रुचि अनुसार खान-पीनको सामग्री आउन थालेपछि विश्वम्भर चञ्चलजीले मदनमणि दीक्षित ज्यूलाई 'क्षितिजदेखि क्षितिजसम्म' पुस्तक विमोचन गरिदिन अनुरोध गर्नु भयो । अनुरोधकको प्रस्तावलाई उपस्थित सबैको करतल ध्वनिमतबाट स्वीकृति पाएपछि माड्साप्ले पुस्तकको पाना पल्टाएर देखाउँदै विमोचन भएको घोषना गर्नु भयो । उपस्थित सबैको कर्तलध्वानिले विमोचनको स्वागत गरियो ।

नेपालमा पुस्तक विमोचनको चलन कहिले देखि र कसरी  चलेको हो भन्ने कुराको चर्चा चल्दा नगेन्द्रराज शर्मा भन्नु हुन्छ– 'नेपाली साहित्यको विभिन्न प्रयोग वाद र फेशन भित्रिने मुहान विशाल भारत नै हो । २०३४ सालमा भारतीय साहित्यकार यशपालको 'तेरी मेरी और उसकी बात'को विमोजनको समाचार नेपाल भित्रिने विभिन्न भारतीय पत्र-पत्रिकामा छापिएको थियो । त्यसैको प्रभावस्वरूप त्यसबेलाका चर्चित एवं सकृय कथाकार परशु प्रधान र निजको मित्र मण्डलीको आयोजनामा बागबजारस्थित रामदाइको भट्टीमा उपन्यासकार दौलतविक्रम विष्टको हातबाट ऋषिराज बरालको उपन्यास 'भावना'को विधिवत् विमोचन भएको थियो । त्यस विमोचन कार्यक्रमका वक्ताहरूमा नयाँ चेतनाका सम्पादक, हाल युग सम्वादका सम्पादक सोमनाथ घिमिरे, कथाकार हरि अधिकारी आदि हुनुहुन्थ्यो ।'

यसरी शुरु भएको पुस्तक विमोचनको प्रचलन प्रजातन्त्रको पुनर्स्थापना पश्चात् कसरी सामान्यीकरण हुँदै गयो भने अब त गम्भीर महत्व राख्ने पुस्तक

पनि विमोचन गरिएन भने पाठक समूहबाट स्वीकार नगरिने हो कि भन्ने मानसिकता बन्न थालेको बुझिन्छ । झन् समीक्षकले त विमोचन नगरिएको पुस्तक समीक्षा योग्य नै हुदैन भन्ने किसिमको व्यवहार गरेको अनुभव हुन्छ ।'

चञ्चलजीले बिमोचनको रश्मलाई  निर्वाह गर्नु भयो । तर लेखक प्रकाशकहरूले गच्छेअनुसार ठूलो तारे होटलदेखि महँगा सभास्थलमा सरकारी पदले सम्मान पाएका राजनेताहरूको बाहुलीबाट गराउने चलनलाई छाडेर साहित्यकारहरूका बीचमा एक सम्मानीते साहित्यकार एवं चिन्तकको बाहुलीबाट भएको थियो । त्यसमाथि थप विशेषता के रह्यो भने विमोच्य पुस्तकका लेखक/प्रकाशकको तर्फबाट गरिने खर्चको बाध्यात्मक प्रचलन भन्दा फरक यहाँ आ-आफ्नो खानपिनको खर्च आफै बेहोरेका साहित्यव्यसनी/नुरागीहरू बीच बिमोचन भएको थियो । यसमा कुनै वनावटीपन थिएन । यौटा आदर्शयुक्त पद्धतिको प्रारम्भ थलो बनेको थियो कार्की किचेन । विमोचित पुस्तकको भित्री पानामा सबै सहभागीहरूको हस्ताक्षरले विमो चनलाई प्रमाणित गरेको थियो, जुन पछि अभिलेखको रूपमा निश्चय हरला ।

आ-आफ्नो अर्डरको परिकारमा खानपिन शुरु भइसकेको हुन्छ । कथाकार मधुवन पौडेलको सौजन्यबाट प्राप्त भएको एक बोतल स्कच ह्विस्कीलाई पनि बिमोचन गरी चियर्स गरिरएको छ । खानपिन शुरु भएदेखि बीच बीचमा कार्कीजी अर्डरको परिकार एक एक गरी ल्याउँदै क्रमैसित राख्दै हुनुहुन्छ उहाँहरूको टेबुलमा ।

कोठाको क्षमता भन्दा बढी सहभागीहरू हुनुभएकोले होला कार्कीजी धुम्रपान निषेधको उर्दी लाउनु हुन्छ । तर बाह्र वर्ष अघि नै हटिसकेको उर्दी प्रथा प्रजातन्त्रको स्वच्छन्दतामा किन स्वीकार्य हुन्थ्यो र ? त्वरित विद्रोहको छटा देखियो– चुरोट खान पनि नपाइने ? चञ्चलजी कराउनु  हुन्छ, चुरोट जिन्दावाद । तीन दशक अघि समीक्षा साप्ताहिक मार्फत् धूमपानलाई  मृत्यु घण्टा घोषित गर्ने मदनमणि माष्टरसाबबाट नै चुरोट सल्काई धूवाँ तानेर चुरोट विमोचनको घोषणा र त्यसको अनुमोदन अम्मलीहरूबाट धूवाँको मुस्लो फ्याँकेर भएको थियो ।

घडीमा छ बज्ने तरखर छ । कविता वाचन गर्ने सार्वजनिक प्रस्ताव आउँछ । क्षेत्रप्रताप अधिकारीलाई प्रथम अनुरोध हुन्छ । उहाँ अघि सर्नु हुन्छ– घाइते मन बिसाउन । घाइते भएझैँ भावमा उहाँले कविता वाचन गर्नु भयो । कविताको विषय विश्वको सर्वोच्च सामरिक शक्तिको केन्द्र पेन्टागन र मुक्तबजार अर्थतन्त्र अर्थात् विश्वपुँजीवादको नाभीस्थान रहेका भवनहरूमा अचिन्त्य आतंककारी आक्रमणसित शान्ति विषयलाई जोरेर रचिएको रहेछ ।

वासुपासा असंगत शब्द संयोजन गर्दै कविताको शैलीमा जनचेतना भनाउनेहरूप्रति ठूलो रोष पोख्दै हुनुहुन्थ्यो । ज्ञानुवाकर मुक्तक वाचन गर्न थाल्नु भयो आफ्नो नियमित शैलीमा । काव्य वातावरणमा नगेन्द्रजीले क्यै न क्यै बोलिरहेको  देखेर क्षेत्रप्रताजीले छेड् हान्नु भयो– नगेन्द्रजी असाध्यै बोल्छन्– उनलाई अभिव्यक्तिमा धेरै कविता आउने भएर होला ।

चञ्चलजी मधुपानले तातिँदै श्रृंगारी भावमा– नाइ नाई भन्दा भन्दै··· सुन्दरी अब त कुखुरा करायो, इत्यादि हाउ भाउ दर्शाउदै भट्याउन लाग्नु भयो। यस्तो बेलामा वातावरण जस्तो हुने गर्छ– त्यो आफ्नो उचाइमा थियो। क्षेत्रप्रतापजी ज्ञानुवाकरको गजल जाओस् भन्नेमा जोड दिदै हुनुहुन्थ्यो। उता रामबहादुर पहाडीजीले आफ्नो मीठो स्वर लहरीमा गीतको लय दिंदै हुनुहुन्छ। यस्तै उस्तैमा घडीमा ७ नाघ्छ। खानपिन पनि मोटामोटी आखिरी चरणमा पुग्दैछ। वातावरण नियन्त्रणबाट विस्तारै खुकुलिदै छ। ज्ञानुवाकरको गजल दुई तीनवटा गएपछि क्षेत्रप्रतापजी 'आउँछु भन्यौ, पर्खिरहें क्या बोर भयो···' गीत अलाप्नु हुन्छ। यस्तैमा किचेनका सञ्चालक मदन कार्की आफ्नो (समकालिन साप्ताहिकमा पूर्व प्रकाशित) यौटा कविता साह्रै रोचक पारालो सुनाउनु थाल्नु भयो– घत लाग्दो थियो राजनैतिक व्यंग्य।

एकछिन चञ्चलजी र मदन कार्कीजीको चाखलाग्दो नोकझोक चल्यो। कार्यक्रम अब उत्तरार्द्धमा पुगिसकेको थियो। मनोज न्यौपानेले दुईवटा कविता सुनाउनु भयो। यौटा थियो– 'कपाल फुल्दैमा कोही बूढो हुँदैन··· ।' अर्को चाहिं बाघले पनि एक दिन बुढो हुनु पर्छ··· ।' अर्का सहभागी कृष्ण गोपाल लम्साल– 'तेल लगाउँदा लगाउँदा अब त मट्टितेल खनाउन बाँकी छ।' भन्दै हुनुहुन्थ्यो। कविता गोष्ठीको अन्त्यमा नगेन्द्रराज शर्माले एउटा रोमान्टिक मुक्तक सुनाउनु भयो। कार्यक्रम भरिनै शिव रेग्मी, देवी सुवेदी, मधुवन पौडेल र प्रधुम्नजी भने अत्यन्त अनुशासित र शान्त श्रोतामा देखिनु भएको थियो। राप्रउ पोखरेल कार्यक्रम भरि नै के के टिपोट गरेर बसेको देखिनुहुन्थ्यो। मदनमणि माङ्साप बीच बीचमा प्वाक्क प्वाक्क एक दुई शब्दको टिप्पणीबाट वातावरणमा रोचकता थप्नु हुन्थ्यो।

साढेसात बजेसम्म खानपिन पुरा भैसकेको बुझिन्थ्यो। बिस्तारै एक एक गरी सहभागीहरू आआफ्नो हिसाब बुझाएर त्यहाँबाट बाहिरिंदै गएको देखियो। तर रामबहादुर पहाडीको गीत र नृत्य भने झन् झन् उफानमा जाँदै थियो।

यसरी यस जमघटले एउटा सुन्दर साहित्यिक गोष्ठीको रूप लिन पुगेको थियो र यौटा सार्थक साहित्यिक कार्यक्रमको महत्वपूर्ण संध्या बनेको थियो। अर्को महिनाको पहिलो वृहस्पतिबार पुनः यस्तै उत्साहमय भेटघाटको आपेक्षामा कार्यक्रम टुंगिएको थियो। कार्की किचेनका सञ्चालक साहित्य अनुरागी मदनकुमार कार्कीको सौविध्ययुक्त सौजन्य र अभिव्यक्ति अर्थात् नगेन्द्रराज शर्माको सकृयताले एउटा अमिट प्रभाव छाडेको अनुभव गर्दै यस 'अभिव्यक्ति भेटघाट कार्यक्रम' ले एउटा महत्वपूर्ण साहित्यिक इतिहास निर्माण गरोस् भन्ने शुभकामनाका साथ हामी सबै छुट्टियौं।



(यो 'अभिव्यक्ति-भेटघाट कार्यक्रम' अचेल पनि निरन्तर चलिरहेको छ तर 'कार्की किचेन', गौशालाबाट 'ग्रीनपार्क रेष्ट्राँ', नारायणगोपाल चोकमा सरेको छ।)

# चतुर्दिवशीय यात्राका डायरी

रामप्रसाद पन्त

चाबेल

## १. पहिलो दिनको डायरी

यात्रा अकस्मात् भएकै राम्रो ।

यात्रारम्भ तोकेर धेरै समय पर्खनु पर्‍यो भने छटपटी र खुलदुली मच्चिरहन्छ मनमा ।

ठीक एक हप्ताअघि तय भएको थियो हाम्रो यात्रा । तर यात्रामा सहभागी हुनेहरूको नाम निश्चित् भइसकेको थिएन । तिनलाई अभागी भन्छु म, जसले यात्रा गर्छु भन्छन् र अन्ततः यात्रा गर्न सक्तैनन् । परिस्थितिले साथ नदिएको पनि हुनसक्छ, अर्थमोहमा बाँधिएको पनि हुनसक्छ ।

यात्रामा निस्केपछि दुःख सहनु परे पनि, भोक तिर्खा खप्नु परे पनि, असुविधा भोग्नुपरे पनि त्यसलाई सुखमा परिणत गर्न सक्नुपर्छ, अनि मात्र लिन सकिन्छ यात्राको मजा । तर यात्रा नयाँ स्थानको हुनुपर्छ, नयाँ अनुभूति हुनुपर्छ र यात्रा उल्लासमय हुनुपर्छ । यसको भने म पक्षपाती छु । यसो भएन भने यात्रा, यात्रा जस्तो हुँदैन । जति मीठो खाए पनि, मखमलमै सुते पनि यात्रा खल्लो हुन्छ । पैसाको खति, जीवनको क्षति, आपसी मनोमालिन्य, आगामी यात्रामा प्रश्नचिह्न ।

हामीले जे गर्‍यौं राम्रो गर्‍यौं । एकासी वर्षीय जोशिला युवा नगेन्द्रराज शर्मालाई अगाडि लगायौं । उहाँकै सोच र परिकल्पनालाई शिरोधार्य गर्‍यौं । अर्का हँसिला, रसिला र फरासिला मित्र पवन आलोकलाई सर्वसम्मत अर्थमन्त्री मनोनित गर्‍यौं र जिन्दावाद गर्‍यौं यात्राको ।

पवन आलोकले आठसिटे स्कर्पिओ लिएर डिल्लीबजारबाट सिधै अभिव्यक्ति परिसर पुगेर नगेन्द्रराज शर्मा तथा त्यहाँ भेला भएका शङ्कर भारती, देविका तिमिल्सिना र गौरीघाट चोकबाट रामप्रसाद पन्तलाई लिएर आउँदासम्म सिटले पूर्णता पाएको थिएन र उल्लासमय एवम् उमङ्गबाहेक हास्यविनोदले पनि प्रवेश पाउन सकेको थिएन । जब गाडीले बालुवाटारबाट विजयध्वज थापालाई टिप्यो, त्यसपछि भने सिटको पूर्णतासँगै हास्यविनोदले पनि प्रवेश पायो ।

एउटी मात्र भएपनि महिलाको सहभागिता छ भनेर कल्पनालोकमा महिलाको आलोक बुनी बसेका विजयध्वज थापाले महिलाकोजस्तो नाममा पुरुषको उपस्थिति देख्दा जिल्लिए । देविका तिमिल्सिनाको पुरुषरूप छरपस्ट भएपछि मिथ्यालोकबाट एकाएक यथार्थ लोकमा पछारिन पुगेका थापाको भ्रम र खिसिक्क परेको अनुहारमाथि हामी कति हास्यौं होला ? अन्ततः देविकालाई विजयको रुम पार्टनर बनाइदिने सर्वसम्मत निर्णय भएपछि यात्राले औपचारिक गति लियो । बालुवाटार छाड्यौं हामीले बिहानको साढे सातबजे ।

राजनीतिक वृत्तमा बालुवाटार छाड्नु सुखद पक्ष होइन तर हाम्रा लागि

त्यो छोडाइ यति सुखद थियो, जसको कल्पना हामी गर्नै सक्तैनौं । हामीलाई हेटौंडाले तानेको थियो, सौराहाले तानेको थियो, पोखराले तानेको थियो र फेवामाथि गरिने रङ्गीन नौका बिहारको परिकल्पनाले कुत्कुत्याइरहेको थियो ।

दिन थियो– २०७५ साल भदौ २० गते र हामीलाई स्कर्पियो गाडीभित्र हुलेर कुदाउने चालक थिए– सेरप वाइवा ।

वाइवा प्रायः बाहिरफेर घुमिरहने चालक रहेछन् । उनलाई हेटौंडा जानु भनेको चुड्कीको खेल रहेछ । उनले गाडी बल्खुतिर नमोडेर भैंसेपाटीतिर सोझ्याए र मेडिसिटी हस्पिटलको बाटो हुँदै जलविनायक पुऱ्याए ।

जोडाजोडी पार्कपुगेपछि कुरा चल्यो जोडाजोडी पार्कको ।

बाटैमाथि छ रहेछ जोडाजोडी पार्क, जहाँ जोडाजोडी बाहेक एक्लो पुरुष वा एक्ली नारी जाँदा त्यसलाई उपहासको रूपमा लिइँदो रहेछ ।

मैले विगत सम्झँदै गएँ– तीसौं वर्ष भएछ जलविनायक नगएको । कुनै वेला विशुद्ध धार्मिक हिसाबले पनि गइयो । कुनै वेला पिकनिक खान पनि पुगियो तर लामो फड्को मारेछ समयले । एकपल्ट गएको ठाउँमा प्रायः दोहोऱ्याएर नजाने मेरो स्वभावमा परिवर्तन आयो । दश वर्षअघि पूर्वस्थानको पुनरावृत्ति गर्नुपर्दो रहेछ । हो, त्यहाँ पनि मैले जलविनायकको अर्को रूप देखें, जोडाजोडी पार्क निर्माण भएको थाहा पाएँ ।

यात्रा त अहिले गरिन थालेको पनि नयाँ कहाँ हो र ? गरिएकै यात्रा न हो– हेटौंडा, सौराहा र पोखरा । तर समयान्तरपछिको यात्रा र मनमिल्ने साथीहरूको मिलन हुने भएर मात्र पो !

चोभारबाट दक्षिणकालीतर्फ मोडिएपछि बायाँतर्फ देखियो– एउटा कुरूप दृश्य । नेपालमा दूरदृष्टि भएका नेताहरू नभएको परिचायक थियो त्यो दृश्य । हाम्रा नेताहरू सुतेको वेला सपना देख्छन् र उठेपछि हातखुट्टा बाँधेर चानुमानु बस्छन्, त्यसैको उदाहरण थियो त्यो पनि । मानौं उनीहरूलाई त्यस दृश्यले केही फरक परेको छैन, मन दुखेको छैन र नयाँ रूप दिने सोच पलाएको पनि छैन ।

ठाउँको पहिचान नगरी सिमेन्ट कारखाना राख्दा न त्यसले दीर्घकाल यात्रा गर्न सक्यो न त त्यसलाई विस्थापित गरेर नयाँ संरचना तयार गर्न सकियो । जस्तापाताको चरचरबाट देखिँदै थियो खण्डहर बनेको हिमाल सिमेन्ट कारखाना ।

बाटो पनि कति खराब ? दक्षिणकालीसम्मको १९ किलोमिटर यात्रा पूरा गर्न एक घण्टाले मानेन । हो, यसबेला सरकार चिनाउने सजिलो माध्यम बनेको छ खाल्डै खाल्डा भएको बाटो । त्यो शहरबजारमा मात्र हो कि भनेको त बाहिरफेर पनि उस्तै रहेछ ।

चालक भन्दै थिए– 'गाडी चलेका रहेछन् भने माथिल्लो फाखेलको बाटो जानु राम्रो ।' उनले भनेजस्तै दक्षिणकाली माताको मन्दिर माथिबाट बनेको बाटो हुँदै कुद्न थाल्यो गाडी ।

बाटो साँघुरो थियो तर दृश्य सुन्दर थियो । नास्पातीको त खानी नै

हो दक्षिणकाली क्षेत्र । गाडी तेर्सो-ओरालो हुँदै कुदिरहेको थियो खोंचतिर । खोंच परेको भए पनि दक्षिण ढल्केको भूभाग सुन्दर, उर्वर र हरियालीपूर्ण देखिन्थ्यो– जिरी सम्झाउने खालको । तर थियो होचो भूभाग ।

के भनिन्छ होला त्यस ठाउँलाई ?

मेरो जिज्ञासा मेटाए चालकले– 'टल्कु डुँडेचौर ।'

हामी खोंच नाघेर पल्लो डाँडोबाट फर्कँदै थियौँ । हामीले छोडेर आएको बाटो र हामी गुडिरहेको बाटो वारिपारि देखिँदै थियो । कल्पना गर्दै थिएँ– चाइनीज भए यस्तो घुम्ती घुम्ती हुँदै घुम्ने थिएनन् । पुल बाँध्थे र आकाश मार्ग हुँदै पल्लो डाँडोमा पुग्थे ।

बाटाको स्वरूप, गुराँसे वन र पारिपट्टिको दक्षिणकाली बस्ती देखेर कताकता स्मृतिपटलमा विगत रन्थनिँदै थियो मेरो मस्तिष्कमा– मैले पहिले नै देखेका दृश्य त होइनन् यी ? मेरो यो शङ्का हुमाने भञ्ज्याङ पुगेर मेटियो– यो बाटो त म पहिले नै गुडिसकेको रहेछु ।

बाह्र वर्षअघि कुलेखानी जाँदा कुन बाटो गइयो ? मेरो सम्झनाबाट विलुप्त भइसकेको रहेछ । हुमाने भञ्ज्याङले सम्झायो– म यात्राको पुनरावृत्ति गर्दै रहेछु । त्यसै भएर म भन्दै छु– दश वर्षको अन्तरालपछि परिवर्तन हेर्न जानुपर्दो रहेछ । तर मैले केही देखिनँ त्यसबेला र यसबेलाको हुमाने भञ्ज्याङमा आएको परिवर्तन । हामीले पछाडि फर्केर काठमाडौं उपत्यका हेर्‍यौं, चियापान गर्‍यौं र लाग्यौं पल्लो पाखो कुलेखानीतिर । हुमाने भञ्ज्याङ छोड्नेबित्तिकै हामीले काठमाडौँलाई पनि छाड्यौं र मकवानपुर टेक्यौं । अब हामीले चौध किलोमिटर यात्रा गर्नु थियो कुलेखानीका लागि ।

राकस खोला नाघ्नेबित्तिकै फाखेल आयो । त्यस मार्गको चर्चित र घनाबस्ती रहेछ फाखेल । फाखेलको सडककिनारमा बौद्ध चैत्य र स्तुपहरू पनि देखिँदै थिए । प्रायः तामाङ बस्तीमा बौद्ध स्तुप हुने नै गर्छन् तर दामन टिस्टुङतिर गयौं भने त्यहाँका तामाङ र बलामी बस्तीहरूमा स्तुप होइन चर्चहरू बग्रेल्ती भेटिन्छन् अचेल ।

सम्झन्छु, कुनै वेलाको घटना । मैले पहिले कतै लेखेको थिएँ– 'गरीब, सोझासाझा र समाजबाट अपहेलित जाति जहाँ जहाँ बस्छन्, त्यस्तो ठाउँमा क्रिश्चियनहरू सियो बनेर प्रवेश गर्छन्, मुसल बनेर निस्कन्छन् ।'

मलाई क्रिश्चियनबाट प्रश्न आएको थियो यस विषयमा । तर मैले उनीहरूलाई चित्त बुझ्नेगरी जवाफ दिएको थिएँ । त्यस्तै सम्झना आयो मलाई फाखेलको बाटो छेऊमा लाइन लागेर उभिएका बौद्धचैत्यहरू देखेर ।

चालक गीत सुन्नमा मस्त थिए, हामी गफिनमा व्यस्त थियौं । कुरा चल्दै थियो यात्राका सम्भाव्य साथीहरूको – श्रीओम श्रेष्ठ 'रोदन', चन्द्रप्रसाद भट्टराई, विधान आचार्य, चेतनाथ कँडेल, आनन्दराम पौडेल र वियोगी बुढाथोकीहरू । विविध कारणले यात्रामा सम्मिलत हुन नसकेका ती साथीहरू पनि सम्मिलित भएका भए हामी अझ रमाउँथ्यौं र आठको सट्टा पन्ध्र/सोह्र सिटे माइक्रो लिने थियौं ।

कुरै कुरामा हामी कुलेखानी ड्याम मुनि पुगेछौं । दक्षिणकालीबाट सिस्नेरी हुँदै आउने तल्लोबाटोसँग हामी त्यहीँ जोडिँदा रहेछौं । चार किलो मिटर छोटो पर्दो रहेछ हामीले यात्रा गरेको बाटो ।

हामी उकालियौं देउरालीसम्म– त्यस मार्गको सबैभन्दा अग्लो ठाउँ । अलिकति अगाडि बढ्नेबित्तिकै भेटिए बटुक भैरब । बटुक भैरब अर्थात् राजधानी प्रवेश गर्नका लागि भिसा लाग्ने राणाकालीन चिसापानी गढी । रोक्न भन्दाभन्दै चालकले गाडी हुत्याएर पुर्‍याएछन् तलको खोल्सोसम्म । हामीले त्यो अवसर चुकाउन चहेनौं । फर्कायौं गाडी र पस्यौं बटुक भैरब परिसरमा ।

एकातिर बटुक भैरब, अर्कोतिर बडाहाकिम भवन, अर्कोतिर पुरानो जीर्ण जेल र अर्कोतर्फ सुरक्षाटोली बस्ने छाप्रो । हामीले मानिस खोज्यौं, तर शून्य देखियो चौतर्फ । मूल गेट खुल्ला छ, गाडी मन्दिर परिसरमा प्रवेश गरिसकेको छ तर परिसर मानवविहीन छ, शून्य छ उजाड छ र परित्यक्त छ । पुरातात्विक क्षेत्रको यो कस्तो उपेक्षा ? छिमेकी राष्ट्रले भए संरक्षित र ऐतिहासिक तथ्यहरूमा अरू मिथकहरू थपेर आकर्षक केन्द्र बनाउँथ्यो र टिकटको व्यवस्था गरेर पैसा आर्जन गर्थ्यो ।

बटुक भैरब मन्दिर बन्द छ । मन्दिर वरिपरि ट्रेन्ज छ, अर्थात् खाल्डो खनिएको छ । जहाँ लुकेर सैन्यहरू दुष्मनमाथि गोली वर्षाउँथे । यस्ता ट्रेन्जहरू अर्थात् दुर्गहरू नेपालका विभिन्न ठाउँमा भेटिन्छन्, यी ट्रेन्जहरूलाई शायद बङ्कर भनिन्छ क्यारे !

राजदरबार वरिपरि यस्तै प्रकारको खाल्डो खनेर पानी जमाउने चलन हुन्थ्यो ऐतिहासिक कालखण्डमा । जहाँबाट दुश्मनहरू सजिलै दरबार प्रवेश गर्न सक्तैनथे । त्यस जलाशयलाई खाई भनिन्थ्यो ।

श्रावण बाहेक अन्य महिनामा मङ्गलबार मात्र बलि चढाउन पाइने नियम रहेछ बटुक भैरबमा । बटुक भैरबको महत्वपूर्ण विशेषता के रहेछ भने महिलाले दर्शन गर्न पाउँदा रहेनछन् । कुनै जमानामा त्यहाँ एउटा घटना घटेछ र त्यसलाई संस्कृति बनाइएछ । एउटी महिला बटुक भैरबको दर्शन गरेर फर्कँदै गर्दा तत्काल रगत वमन गरेर मरिछन् । यसरी श्रद्धासाथ आफ्नो दर्शनार्थ आएका भक्तहरूलाई भगवान्ले मृत्युदण्डको सजाय देलान् र ?

हामी आधा घण्टा जति टहलियौं, फोटो खिच्यौं र बाहिरियौं । तबसम्म कुनै मानिसको प्रवेश भएन ।

त्यसपछि हाम्रो यात्रा अकण्टक अगाडि बढ्यो र हेटौंडा पुगेपछि मात्र रोकियो ।

फोन सम्पर्क भइरहेका देवराज खरेल भेटिए बीच बजारमा । उनले हाम्रा लागि अनमोल होटलमा रात्री विश्रामको व्यवस्था मिलाएका रहेछन् ।

खाजा खाइसकेपछि नगेन्द्र दाइले आधा घण्टाको समय दिनुभयो आरामका लागि । हो, यात्रामा कसैको लिडरसिप भएन भने ‘अनायका विनश्यन्ति…।’ हुन्छ ।

म भने आराम गर्नेतिर नलागेर प्रदेश सरकारको आर्थिक योजना मन्त्रालयमा कार्यरत मेरा जिल्लावासी  मित्र उपसचिव घनश्याम पन्थीलाई भेट्न गएँ र समयको पूर्ण पालन गरेर फर्किएँ ।

अब हामी शहीद स्मारक पार्क जादै छौं ।

धेरैपटक टेलिभिजनमा देखिएका तर दोहोरो परिचय बनाउन नपाएका वर्तमान मुख्यमन्त्री डोरमणि पौडेलको सक्रियतामा निर्माण भएको रहेछ त्यो शहीद स्मारक पार्क ।

सात किलोमिटर हेटौंडा-भण्डारा महापथमा कुदेर पुनः एक किलोमिटर जति भित्र प्रवेश गरेपछि पुगिँदो रहेछ शहीद स्मारक पार्क । बाहिरै बोर्डमा लेखेको देखियो– राजनीतिक, धार्मिक, सांस्कृतिक र इतिहासको धरोहर ।

टिकट काटेर पार्क प्रवेश गरेपछि हामी सरासर पुग्यौं  त्यस विशाल शिलामा, जुन शिलामा थुप्रै शहीदहरूका अनुहार कुँदिएका थिए– शुक्रराज शास्त्री, धर्मभक्त माथेमा, दशरथ चन्द, गंगालाल, भक्ति थापा, यज्ञबहादुर थापा, भीमदत्त पन्त, प्रभाकर पौडेल, रत्नकुमार वान्तवा, वीरेन्द्र राजवंशी, दुर्गानन्द झा र श्रीमती भुवनेश्वरी यादवहरू ।

एउटै शिलामा कुनै पनि अनुहार नबिग्रने गरी यति सावधानीपूर्वक शहीदहरूको अनुहार छर्लङ्ग छुट्याउन सक्ने हिम्मत कुन बहादुर कलाकारले गऱ्यो होला ? जिज्ञासा हुनु स्वाभाविकै हो । ती रहेछन्– ललितकला क्यम्पसका विद्यर्थी ।

तपाईं सीधै पारिपट्टि मदन भण्डारीको शालिक भएको ठाउँ जान चाहनुहुन्छ भने थप पच्चीस रुपैयाँ तिर्नुस् र खोल्सामाथि वारिपारि भएर झुन्डिएको झोलुङ्गे पुलमा हल्लिई हल्लिई पारि पुग्नुस्, अन्यथा दृश्यावलोकन गर्दै पुनः गेटतर्फ फर्कनुस् र पल्लोतर्फबाट जानुस् ।

हामीलाई त घुम्नु थियो, सुन्दरतामा रमाउनु थियो र अधिकभन्दा अधिक दृश्यहरूलाई हृदयभरि सँगालेर साथीहरूलाई बाँड्नु थियो । यसअर्थ हामी फर्कियौं चिडियाघर हुँदै ।

अलग अलग आश्रयस्थल बनाएर पालिएका रहेछन् केही वनचर, नभचर, जलचर र उभयचरहरू– गोही, लङ्गुर, चित्तल, रतुवा, गिद्ध, कौवा, मुसा, खरायो, हुचिल, बाँनर, चितुवा, कालीज र मयूरहरू । जालीले घेरेर तलपट्टि खुल्ला छाडिएका देखिए रतुवा मृगहरू पनि ।

हामी एक फन्को मारेर मदन भण्डारी स्मारकमा पुग्यौं । अलिकति डल्लिएछन् मदन भण्डारी । त्यहाँबाट सीधै उत्तर लागेर शहिद स्मारक स्तम्भमा पुग्यौं । विभिन्न सेज (स्टल)हरूमा पिकनिक मनाइरहेका र तीज गीत गाएर नाचिरहेका दिदीबहिनी र आमा-हजुरामाहरूको नाच पनि हेऱ्यौं ।

गर्मी निक्कै थियो । पसिनाले हामी भिजिसकेका थियौं । हामीले चाहेको भए स्विमिङ पुल प्रवेश गर्न पनि सक्थ्यौं तर त्यस्तो स्विमिङप्रेमी युवा हाम्रो समूहमा कोही थिएन । पार्कको मध्यभागमा निर्माणधीन अवस्थामा देखिएका पूर्णकदका चार मूर्तिहरू कोकसका थिए कुन्नि ! देवराजजीले पनि बताउन

सक्नुभएन। हाम्रो निष्कर्ष रह्यो– डोरमणि पौडेल सभासद बन्नु र मुख्यमन्त्रीको पदमा आसीन हुनुका पछाडि उनले सम्पन्न गरेका यस्तै कर्महरू थिए ।

फर्कँदै गर्दा देवराजजीले भन्नुभयो– निस्केको बेलामा शहिद अध्ययन तथा अनुसन्धान केन्द्रमा पनि पुग्नु राम्रो । हेटौँडा बजार नाघेर एक किलो मिटर जति पूर्वतर्फ पर्दोरहेछ त्यो केन्द्र । हो, साँच्चिकै नहेरिनहुने पार्क रहेछ– ॐ शान्तिद्वारा सञ्चालित पुष्पलाल स्मृति वाटिका ।

रानीपोखरीको झल्को दिने सुन्दर पोखरी त्यसैभित्र थियो । पुष्पलाल र भैरव अर्यालका शालिकहरू त्यही पार्कमा ठडिएका थिए । पुष्पलाल स्मृति पुस्तकालय त्यहीं थियो । पुस्तकालयकी कर्मचारी अनिता न्यौपानेले हामीलाई पार्क घुम्न सहयोग गरिन् र पुस्तकालयमा बसालेर चिया खुवाइन् ।

'यहाँ आइसकेपछि अलिकति उत्तरतर्फ जङ्गलको तल्लो भागमा बसेकी वनस्खण्डी देवीको दर्शन र गोपालप्रसाद रिमालको शालिकको अवलोकन किन नगर्ने ?'– हामीलाई पछ्याउँदै आइपुगेका आरसी रिजालको प्रस्ताव रह्यो ।

वास्तवमा आफूले गरेका उल्लेखनीय कामहरू अवलोकन गराउने सबैको चाहना हुन्छ र हेर्ने र त्यसबाट प्रेरणा लिने काम दर्शकको पनि हुन्छ। हेटौंडामा स्थायी बसोबास गरेर प्रायः साहित्यकारका मूर्ति निर्माण गर्ने कार्यको संयोजन आरसी रिजालबाटै हुँदोरहेछ। उनकै सक्रियतामा भानुभक्त, पारिजात, देवकोटा, भैरव र रिमालका शालिकहरू बने । अझ पनि उनलाई सन्तुष्टि मिलेको छैन । हेटौंडामा थुप्रै साहित्यकारहरूका शालिकहरू निर्माण गर्ने योजनामा लागिरहेका रहेछन् उनी ।

हो, हामीले उनकै अगुवाइमा वनस्खण्डी देवीको मन्दिर परिसरमा एकान्त बास गरिरहेका रिमाललाई भेट्यौं । उनीसँगै बसेको ठूलो शिलाले सङ्केत गर्दै थियो– 'शहिद स्मृति पार्कको शिला कुँदेर शहिदहरूका आकृति बनाएजस्तै मलाई पनि कुँदिदेऊ न ! म रिमालका लागि अन्यान्य साहित्यिक साथीहरू तयार गरिदिन्छु ।' कल्पनालाई साकार पार्ने हो भने त त्यसको जिम्मा पनि आरसी रिजालमै जाला नि !

घुमेर हामी रमाइसक्यौं, अब होटल फर्केर मस्ती गर्न बाँकी छ ।

फर्कँदै गर्दा मैले प्रश्न गरेँ रिजालजीलाई– 'चिसापानी गढी त देखियो बाटैमा, मकवानपुर गढी कहाँ पर्छ ?'

उहाँले भन्नुभयो– '१७ किलोमिटर टाढा ।'

'के छ त्यहाँ ?'

'सेनकालीन राजाका दरबारको भग्नावशेष । मुकुन्द सेनले बनाएको त्यस गढीलाई उनका छोरा लोहाङ सेनले राजधानी बनाएर शासनसत्ता त्यहींबाट चलाउन थाले। यो क्रम सात पुस्तासम्म अर्थात् दिग्वन्धन सेनसम्म चल्यो। नेपाल एकीकरणको क्रममा पृथ्वीनारायण शाहले त्यहाँ पनि आक्रमण गरे । दिग्वन्धन सेन भागेर हरिहरपुर गढी पुगे । पृथ्वीनारायणले त्यहाँबाट पनि दिग्वन्धन सेनलाई लखेटे। अहिले मकवानपुर गढीलाई पर्खालले घेरिएको छ। उत्खनन् हुन सकेको छैन ।'

खाने कहाँ ? बसेकै होटलमा कि बाहिर ? हामी बसेको होटल त भेजिटेरियन पो रहेछ । विजयजीलाई मात्र काम लाग्ने । एकातर्फ मिठाइको भण्डारै थियो । त्यस्तो जाबो होटेल के होटेल ? अबको जमानामा कसरी चल्छ यस्तो होटल ? न मांश छ न मदिरा, कामै नलाग्ने !

हामी भोजनार्थ अन्यत्र जान लागेको थाह पाएपछि शाकाहारी होटेलको मेनेजरले खुसुक्क भन्यो– 'किन अन्त जान्हुन्छ ? तपाईंहरूले भनेजस्तो भोजन यहीं उपलब्ध हुन्छ तर हलमा होइन, कोठामा ।'

हामीले मांशाहारी भोजनका लागि अर्डर गऱ्यौं र बाहिरियौं । कहाँ पाइन्छ त स्तरीय सोमरस र सेकुवाका भेराइटीहरू ? पवनजीले अगुवाई गर्नुभयो । धेरै टाढा पुगेनौं हामी ।

दुई घण्टा लगाएर ज्यानले थामेसम्म झोलचोक्टा उदरस्थ गरेर आएपछि होटलमा अर्डर गरेको भोजन के काम ? तपाईं खानुस्-नखानुस् अर्डर गरेपछि अर्डर गरेअनुसारको पैसा त तिर्नै पर्छ ।

टेबुलमा थालीभरि चौरासी व्यञ्जन सम्झाउने मांहाहारी भोजन आयो र मिठाइका परिकारहरू पनि आए । तर ती सबै जुठो हालिए मात्र र फालिए ।

अपमान गऱ्यौं हामीले भोजनको । अन्न भगवान् हो भन्ने कुरा भुल्यौं हामीले त्यसवेला ।

तर महसुस गऱ्यौं र सङ्कल्प पनि गऱ्यौँ– भोलिका दिनहरूमा यस्तो गल्ती हुने छैन ।

त्यसपछि बाँडियौं– तीन तारा तीनतिर– दुई दुई जनाका दरले तीनवटा कोठामा । नगेन्द्र दाइ र म, पवन आलोक र विजयध्वज थापा, शङ्कर भारती र देविका तिमिल्सिना । विजय र देविकालाई रुमपार्टनर बनाउने पूर्वयोजना भए पनि त्यहाँ त्यो तालमेल कसरी विचलित भयो, थाहा भएन । यही जोडीले यात्राअवधिभर निरन्तरता पायो ।

## २. दोस्रो दिनको डायरी

चार दिने उल्लासमय यात्रामा छौं हामी । अहिले हामीलाई नयाँ ज्ञान र नयाँ अनुभूति प्राप्त गर्नुभन्दा पनि स्वच्छन्द यात्रा गरेर जीवनको बोझ र चिन्ताबाट मुक्त हुनु छ । अर्को कुरा राजधानीको धुवाँ, धुलो, हिलो, फोहर र कोलाहलका साथै घरकी गृहमन्त्रीबाट मुक्त भएर खुल्ला वातावरणमा रमाउनु छ र यात्रामा भेटिएका साथीहरूसँग बसी खुसियाली बाँड्नुछ ।

यसै भएर हामीले न कसैलाई फोन गरेर कार्यक्रमहरू बनाउनू भनेका छौं, न त सहयोग नै मागेका छौं । यसकारण कि हामीलाई कुनै पनि कार्यक्रमले नबाँधोस्, कुनै पनि चिन्ता र पीडाले नगाँजोस् । पूर्ण स्वतन्त्र, आकाश झैँ खुल्ला । गाडी यता घुमाऊ, उता घुमाऊ, रोक, जे चाह्यो त्यही गर ।

यति हुँदाहुँदै पनि असोज २१ गतेको बिहानी अनमोल होटलको माथिल्लो तलामा हेटौंडाका केही साहित्यकारहरूले तुलै टाँगेर भेटघाट कार्यक्रमको आयोजना गरेछन् । तुलमा लेखिएको थियो– 'मातृभूमि साहित्य समाजद्वारा

काठमाडौँ र हेटौंडाका स्रष्टाहरूबीच भेटघाट कार्यक्रम' । र, सहभागिता थियो– अध्यक्ष माधव पोखरेल लगायत हयग्रीव आचार्य, विष्णुप्रसाद दाहाल, मुक्तिगोविन्द वैद्य, निमेष निखिल, शान्ति प्रियवन्दना, आर.सी. रिजाल, देवराज खरेल, सानुकाजी महर्जन र श्यामकृष्ण ज्ञवालीहरूको ।

आर.सी. रिजाल, माधव पोखरेल र सानुकाजी महर्जनले थालेका योजना र धारणा उल्लेख्य लागे । मलाई सम्झना छ, रिजालले बाबुआमाको नाममा पचास हजार अक्षय कोष राखेर श्राद्ध गर्न छाडेका छन् । त्यसै वेला थाहा पाइयो, मातृभूमिद्वारा चौधवटा पुरस्कार वितरण गरिँदोरहेछ । सानुकाजीले हेटौंडाका चौध जना साहित्यकारको जीवनी सङ्कलन गर्दै रहेछन् । यो पनि प्रशंसायोग्य थियो ।

व्यक्तिगत परिचय र सृजनागत परिचय गराउने कार्य बाहेक अरू कार्यक्रम नराखिएकोले एक घण्टामै छुट्टियौँ हामी ।

आजको हाम्रो गन्तव्य हुनेछ सौराहा ।

घनघोर पानी दर्केको छ बाहिर । थामिने लक्षण देखिँदैन । हिजो काठमाडौंबाट हिँडेदेखि पानी नपरेर तातिएको जमिनमा शीतलता थप्न यस वर्षाले पूर्ण सहयोग गरेको थियो ।

हामीलाई बस चढ्नका लागि झोला बोकेर कतै जानुपर्ने आवश्यकता थिएन । गाडीले प्रतीक्षा गरिरहेको थियो होटलको द्वारैमा । तर पानी यति दर्केको थियो, छाता नभई बलेनी नाघ्न सकिने अवस्था थिएन । होटलले व्यवस्था गऱ्यो छाताको ।

हामीले बाईबाई गऱ्यौं, हेटौंडाका साथीहरूलाई ।

बजार छाड्नेबित्तिकै पो देखियो पानीको उल्कापात । पूरा महापथ जलाम्य भएको छ । साना गाडीहरू अडिएका छन् वर र अलि पर । राप्तीको पानी पसेछ खेततिर । एक जना पैदल यात्रीलाई पिरै परेछ, भनिहाले– ओलीजलले हेटौंडालाई पनि छाडेन ।

हाम्रो गाडी फोर ह्वील ड्राइभ । चालकले पानीका फोहरा उराल्दै र वर्षाउँदै उडाए । हामी तराईको समतल भूभागमा छौं आज । हामीले चाहेमा तुफान गुड्न सक्छ गाडी । रमाइलो लाग्छ भने उडाए पनि हुन्छ । तर रिस्क किन मोल्ने ? हुर्केको ज्यानलाई खतराको रेखामा किन पार्ने ?

सौराहाको सेरोफेरोमा बस्ने धनराज गिरीसँग सम्पर्क भएको छ नगेन्द्र दाइको । नगेन्द्र दाइले भनेपछि धनराजको ज्यान हाजिर । त्यति प्रभावित रहेछन् नगेन्द्र दाइसँग धनराज ।

भैंसेदेखि नै पछ्याइरहेको छ हामीलाई राप्तीले । छोडेको छैन सौराहा पुग्दासम्म पनि । दक्षिण-पश्चिम हुँदै बगेको छ राप्ती र त्यसैलाई बायाँ पारेर कुदिरहेका छौं हामी । समय त बिताउनुपऱ्यो नि । कुन विषय उठान गर्ने त ? चर्चा चल्यो प्रविधिको । हामी कुन युगबाट कुन युगमा प्रवेश गऱ्यौं ? साठी नकाटेका कोही पनि छैनौं हामी, चालक बाहेक । त्यसै भएर त मन मिल्यो, हृदय खुल्यो र सहयात्रा भयो ।

मेरो गाउँको पिसिओमा परिवारको मानिस बोलाउन लगाएर त्रिपुरेश्वरको टेलिग्राम अफिसबाट फोन गर्ने मानिस म नै हुँ । दायित्वका नाममा आएको फोन बेच्न नमिलेर पो ! नत्र असी हजारमा काठमाडौंको मुटुमा चार आना जग्गा किन्न सकिन्थ्यो ।

मेराजस्तै कथा थिए अरूका पनि । कसैले तेस्रो मुलुक गएर टेलिभिजन देखे, कसैले इण्डियामा, कसैले २०४१ सालमा नेपालमा टेलिभिजन प्रवेश गरे पछि कसैको घरमा गएर टेलिभिजन हेरे । मलाई पनि जङ चल्यो र किनेँ टिभी । मेरा गाउँलेहरूको जमघट हुन थाल्यो डिल्लीबजारको डेरामा । हुँदाहुँदा अब एउटा सिन्के पेनड्राइभमा विश्वका बुकहरू बोकेर हिँड्न सकिने भयो । गोजीफोनको के कुरा ? कतिवटा दर्ता गर्नु छ र फेर्नु छ ? कस्तो फोन लिनुहुन्छ ? एउटा आइफोन लिनुस्, इन्टरनेट जोड्नुस् र भूगोलको उत्तरी ध्रुव र दक्षिणी ध्रुवमा बस्ने प्रत्येक मानिससँग अनुहारै हेरेर कुरा गर्नुस् । एउटा फोन भएपछि तपाईंलाई– घडी, क्यामेरा, अखबार, म्याप, चलचित्र, सिडी, क्याल्कुलेटर किन चाहियो ? सूचना र विज्ञापन हेर्नका लागि अखबार किन पल्टाउनुपर्‍यो ?

मूल प्रश्न एउटै थियो– सञ्चारले यति तीव्र फड्को मार्दा अन्य क्षेत्र किन सुतेर बस्यो ? सपना र उखान टुक्काले देशको विकास हुने भए भइसक्थ्यो । दूरगामी योजना त बनाउनुपर्‍यो नि ! योजना अनुसार काम पनि त हुनुपर्‍यो नि !

यसपछिको यात्रा गुल्मीको हुनुपर्ने कुरा उठाउनुभयो नगेन्द्रदाइले । साहित्यिक पत्रकार टोली गुल्मी जाने कुरा उठेको पनि धेरै भइसक्यो । तम्घासमा बसेर 'हाम्रो पुरुषार्थ' साहित्यिक पत्रिका सम्पादन गर्ने शशी पन्थीसँग मैलेकुरा गर्न थालेको पनि धेरै भइसक्यो तर ठोस जवाफ आउन सकेन । अब भने नगेन्द्र दाइ भन्नुहुन्छ– 'उहाँहरूको सहभागिता भयो भने भयो, भएन भने पनि गुल्मीभ्रमणको व्यवस्थापनको जिम्मा तपाईंको ।

कुरैकुरामा हामी भण्डारा पुगेछौं । बोधराज ओलीको सम्झना भयो झल्झली । मेची-महाकाली साहित्यिक दौडका अवसरमा लक्ष्मण सापकोटालाई अघि अघि दौडाएर आठौं दिनमा भण्डारा पुगेका थियौं हामी । स्वागत गरेका थिए ओली लगायत भण्डारावासीले । मैले ओलीजीलाई एउटा किताब पढ्न दिएको थिएँ– अविरल यात्रा । त्यसले उत्तमशान्ति पुरस्कार पनि पाएको थियो । त्यो किताब पढेर उहाँले मलाई महाकाली नपुग्दासम्म फोन गरिरहनुभयो । अनुगृहित भइरहनुभयो– तपाईंको म फ्यान भएँ, यस्ता अरू कृतिहरू पनि पढ्ने अवसर कहिले मिल्ला ? तर झन्डै दुई वर्ष हुनलाग्दा पनि न उहाँको काठमाडौं आउने अवसर मिलेको छ, न मेरो चितवन जाने ।

हो, फोन गरेर भन्न सकिन्थ्यो– '… नम्बरको गाडी आउँदै छ । हात उठाउनुहोला । हामी एक मिनेट भए पनि भलाकुसारी गर्नेछौं । किताब वा पत्रिका अर्पण गर्न पाउने छौं । हात खाली हुने छैन ।' तर गफिनुको मस्तीमा सबै भुलिएछ । बजारैमा प्रवेश गरिसकेपछि खालि मेरा निम्ति गाडी रोक्न लगाउनु उचित ठानिनँ ।

भण्डाराबाट त करिब करिब जोडिइसकेछ टाँडीबजार । सिमलटाँडी हुँदै

टाँडी पुग्न हामीलाई धेरै बेर लागेन । सौराहा चोकमा पुगेर हामीले मनकामना होटल खोज्यौँ । अलिकति भित्र सौराहा मार्गमै पर्दोरहेछ त्यो होटल । भात खान झन्डै पौने घण्टा कुर्नुपर्‍यो । लामो प्रतीक्षापछि आएको भात पचाउन पेटकै घट्ट सक्षम बनाउनुपर्ने ठहर भयो हाम्रो । कागतीको टुक्राबाट रसै झरेन । प्याजले पनि लामै यात्रा गरेर आइपुग्यो । सर्बिसै खत्तम । चितवनको मात्र होइन, नेपालकै स्वादिस्ट खाना पाइने होटल भनेर प्रशंसा गर्ने हेटौंडाका ती साथीले व्यङ्ग्य गरेका त होइनन् ? शङ्का लाग्यो हामीलाई । होटेलमा बनेको कुनैपनि परिकार स्वादिस्ट थिएन, बरु डेरीको दही तै तै ।

सौराहा प्रवेश गर्नुभन्दा एक किलोमिटर अगाडि घर बाहिरै उभिएका देखिए– धनराज गिरी । हालै पुनर्निर्माण गरिएको घर । चिया नखुवाई किन जान दिन्थे ? हामीलाई गाडीबाट ओरालेर घर आँगनमा उभिएकी श्रीमतीलाई हाम्रो परिचय गराए– 'यिनै हुन् मेरी अन्नदाता । यिनी नभए मेरो ज्यान बाँच्दैन । लोग्नेको आँखा अन्त नलागोस् भनेर कपालमा कालो लगाएर सुकाउँदै छिन् ।'

शुरु भइहाल्यो हास्यविनोदी वार्ता । उनको मुखबाट हास्यमिश्रित वाक्य बाहेक अरू निस्कँदै निस्कन्न शायद ! वैठक कक्षमा बसेर चिया नआउँदासम्म धनराजजीको मुखबाट वाक्पटुतारूपी व्यङ्ग्यवाणी वर्षिरहे– 'मेरो घर चिन्न गाह्रो छैन । तपाईंहरूलाई पनि त्यस्तो लागेन होला ! वारि तुलसी गिरी, पारि नगेन्द्रप्रसाद रिजाल भएपछि त्यस्ता ठूला मान्छेलाई कसले नचिन्ने ?'

हामीले कुरो बुझेनौँ ।

उनले खुलस्त गरे– 'बाटोपारि रिजाल थर भएका व्यक्तिको घर, बाटो वारि गिरीको यो झुपडी ।'

'कर्णसहित छ भाइ भएर आउनुभएको रहेछ, म थपिएपछि सप्तऋषि हुनुपर्ने हो तर हामी ऋषिमुनि हुन सक्तैनौं, सिसीमुनि चाहिं पक्कै हुन्छौं ।'

कति हाँस्नु हामी ?

चिया नआउँदासम्म धनराजले धेरै कुरा भन्न भ्याए– 'मैले प्राप्त गरेको शिक्षा– इकोनोमिक्स, पढाउने विधा– म्याथ र लेख्ने विधा– साहित्य । यस्तै तालमेल नमिलेकै कारण गोलमालमा परिरहेको हुन्छु म सधैँ । यसैले मैले के पढाउँछुभन्दा पनि के पढाउँदिनँ र के लेख्छुभन्दा पनि के लेख्दिनँ भन्ने अवस्था छ । मकहाँ टच्युशन पढ्न आउनेमा नब्बे प्रतिशत केटी हुन्छन् । ती केटीहरू किन झुम्मिन्छन् मसँग ? थाहा छैन । म नाम लिन चाहन्नँ, कति केटीहरूले मेरो घरमा रात बिताए, हप्ता बिताए । श्रीमतीको चित्त बुझाउन मलाई कति गाह्रो पर्‍यो होला ! ती केटीहरू पनि किन अबुझ भएका ?'

'गुरुकी छोरीले त प्रस्तावै राखी– 'दुइटी भएर के फरक पर्छ र ?' यो कत्रो घातक सत्य ! यसैगरी चल्यो मेरो बयालीस बर्से मास्टरी यात्रा । यस्तै खतरै खतराबीच चलिरहेको छ मेरो गृहस्थी । परिवारमा झगडा हुने प्रमुख कारण भनेको यौन हो । यो दिइनस्, ऊ भएन भन्नु तपसिलका कुरा ।

'यौनको प्रभाव सबैतिर छ । अहिलेका अधिकांश सन्तमहन्त भनिने

स्वामीजीहरू प्रेमकै प्रवचन दिन्छन् । उनीहरूमा कथानन्द कम, प्रेमानन्द बढी छ । यसैको प्रभाव हो– भारतीय भूमिमा भइरहेका बडे बडे स्वामी महाराजहरूको दुर्दशा । उनीहरूले त रसराग छोड्न सकेनन् भने हामी पाजीको के कुरा ! कहिले त मलाई पनि त्यस्तै लाग्छ– बाँचुन्जेल नमरेरै बाँच्ने, किन मरेर बाँच्ने ?'

धनराजका अनुभूतिहरू एक दिन, एक छिन वर्णन गरेर सकिनेवाला थिएनन् । चियापान गरेर हामी बाहिर निस्कियौं । धनराजले घरवरिपरिको जग्गा देखाउँदै भने– 'यो दुई कट्ठा जग्गा मैले तास खेलेर किनेको, बुझ्नुभो ?'

गजबको कुरा गरे धनराजले । त्यो कसरी ?

'तास खेलेर असी हजार जितेको थिएँ, झ्याप्पै लगाइहालेँ जग्गामा, अहिले कठ्ठाको करोड पर्छ । म दुई करोडको मालिक भइनँ त ?'

वाह ! कस्तो बुद्धिमानी ! अनि फेरि खेल्नुभएन त ?

'दिनैजसो तीस वर्ष खेलियो । खालैबाट नउठेर बहत्तर घण्टा लगातार पनि खेलियो । त्यसपछि छाडिदिएँ च्वाट्टै । यदाकदा थोरथोरै प्वाइन्टको खेल्छु, साथीहरू नटाढियून् भनेर मात्र । मैले अनुभव गरेको कुरा केहो भने सँगै बसेर रक्सी खाने बा तास खेल्नेको जस्तो गाढा सम्बन्ध अरूको नहुँदो रहेछ ।'

घतलाग्दो कुरा गरे धनराजले ।

धनराजकै अगुवाइमा हामी सौराहा भित्रियौं । गिरीले नचिनेको कुनै होटल वा रिसोर्ट होला र ! उनले भनेपछि कोठामा पचास प्रतिशत छुट । अनि त उनीलाई अगाडि नलगाएर भयो त ? राप्ती किनारमा बसेर स्कचको सुप्कीसँगै गजलको आनन्द पनि त लिनुपर्‍यो, अनि गिरीलाई कसरी छोड्नु ? सबैभन्दा ठूलो कुरा, उनी हाम्रा परम मित्र । त्यसबाहेक सौराहाको गेटमा बसेका धनराजलाई सौराहाको जमघटबाट अलग गर्न भयो र ? हुँदै भएन ।

सरासर लगेर 'रिभर भ्यु जङ्गल क्याम्प' लेखिएको गेटबाट छिराए धनराजले। रामचन्द्र अधिकारी– क्याम्पका मालिक। कृष्णप्रसाद नेपाल– मेनेजर, दुवैसँग परिचय गराए र भने– मैले साथीहरूका लागि केही बोल्नै पर्दैन ।

हामी एकछिन बस्यौँ– काउन्टर अगाडि घेरा हालेर ।

हामीलाई साथ दिनेमा त्यस बेला चितवने साहित्यकारहरू विश्वनाथ खनाल र रामबाबु घिमिरे पनि थिए ।

चिया अर्डर भयो, बार्ता रोकिएन । राजनीतिक अध्याय शुरु भएको थियो यसवेला । धनराजजीलाई माओवादी द्वन्द्वको बेलामा प्रस्ताव आयो रे माओवादीमा प्रवेश गर्नका लागि । उनले माओवादीका ठूलै नेतासँग सर्त राखे रे दुईवटा– एक, भौतिक संरचना नष्ट नगर्ने । दुई, मान्छे नमार्ने ।

माओवादी नेताले जवाफ दिए रे– 'यी दुई त हाम्रा मुख्य एजेन्डा वा अकाट्य सिद्धान्त हुन् । हामी कसरी छोड्न सक्छौं ?'

गिरीले अरू पार्टीका नेताहरूको हैसियत पनि बताए– 'कृष्णप्रसाद आफूबाहेक अरू कसैलाई देख्न नसक्ने नेता, गिरिजा जिल्ला सभापतिभन्दा माथि जाने हैसियत नराख्ने नेता, देउवा वडाअध्यक्ष बन्न पनि लायक

नभएका नेता । यस्ताले देश हाँके र देउवाको पालामा आएर त काँग्रेसको कन्तविजोगै भयो ।'

धनराज बोलिरहे– 'सरकारले विमान किन्दा प्राप्त गरेको छ अर्ब साठी करोड कमिसनमध्ये साठी करोड पत्रकार र केही बामपन्थी साहित्यिक संस्थाहरूलाई बाँडे । लेख्ने कलम बन्द भइहाल्यो, बोल्ने थुतुनुको जिब्रो पनि थुतिइहाल्यो । यस्तै कर्म गरेर जनतालाई सपना बाँड्दै चलिरहेको छ बहुमतको वाम सरकार । यस्तो भएपछि हामी कहाँ पुग्छौं ? कहीं पुग्दैनौं– म राप्ती किनारमै हुन्छु, तपाईंहरू वाग्मती किनारमै हुनुहुन्छ ।'

गिरीले कानुन निर्माताहरूको शैलीमाथि पनि प्रहार गरे– 'पाथी हुने भए मानो बन्ने कानुन निर्माण गर्नेहरू दिनभर कानुन बनाउँछन् र राति कसरी भत्काउने भनेर सोच्छन् । अधिवक्ताहरू पनि अधिवक्ता जस्ता लाग्दैनन्, अधिकवक्ता जस्ता लाग्छन् । 'सौ चुहे खा के बिल्ली हजको चली ।' यहाँ केही हुनेवाला छैन ।'

वाचाल वक्ता छन् गिरी । हामी उनको आकर्षक अभिव्यक्ति सुनेर अलमस्त छौँ ।

अब उनको विषय छुट्टिएको छ र साहित्यतिर प्रवेश गरेको छ– 'म पनि पहिले यस्तै यस्तै थिएँ, राजनीतिजस्तो । पहिले लेख्थेँ पछि सोच्थेँ । यसो गर्दा धेरै लेखिँदोरहेछ । अब विचार बदलिएको छ– पहिले सोच्छु अनि लेख्छु । यो तरिका अपनाउँदा धेरै लेख्न नसकिँदो रहेछ ।'

'अहिलेका साहित्यिक संस्थाहरू पनि के गर्छन्, गर्छन्, मैजस्ता । के आधारमा कसलाई पुरस्कार दिने हो ? त्यसको रूपरेखा केही हुँदैन । चिन्दै नचिनेकोलाई पनि पुरस्कार दिइँदोरहेछ भन्ने उदाहरण म आफैं बन्नपुगेको छु– साहित्यिक इतिहासमै नसुनेको कुरा । मेरो जिन्दगीमा प्रथमपटक भद्रकुमारी घलेले पुरस्कारको लाइनमा मेरो नाम कसरी राखिन् ? मलाई आठौं आश्चर्य भएको छ ।'– गिरीको अभिव्यक्ति थियो ।

'घाम डुब्न लागिसके, यहीं बसिरहने कि राप्ती किनारतिर जाने ?' गिरीले झस्काए ।

हो त, राप्तीको पानीमै डुब्न लागेछन् घाम ।

हामी जर्‍याकजुरुक उठ्यौं र क्याम्पबाट बाहिरियौं ।

बाहिरिए सँगसँगै विश्वनाथ खनाल र रामबाबु घिमिरे पनि छुट्टिए ।

राप्ती किनारको रात रङ्गीन बनाउनका लागि शक्तिशाली अस्त्र त चाहियो नै । केही प्रतिशत कम गर्न त्यहाँ पनि गिरीलाई नै अगाडि लगायौंहामीले । बाँकी कुरा रिभरसाईड रिसोर्टमा । एउटा खरछाने गोलाकार स्टलमुनि राउन्ड लाग्यौं हामी । यसपछिको वर्णन गरिरहनु पर्ला र मैले ?

धनराजका गजल सुन्न त बाँकी नै रहेछ हामीले । उनले उच्च स्वर र मधुर कण्ठमा गजल गाए । उनका गजलले मग्नमस्त भयौं । गला, कला र शब्दको संयोजनले अलमस्त भयौं हामी । सोमरसको नशा के नशा ! धनराजको गजलको नशाले पो लठ्ठियौं हामी । कति गाइए गजल, कति

पिटिए ताली, कति हाँसियो हाँसो, के सम्झन सकिला र ? त्यो उल्लासमय वातावरणमा 'शेर' टिपेर बस्नु के सम्भव थियो र ? सम्झेर अड्याउन तरङ्गित मस्तिष्कले के सामर्थ्य राख्थ्यो र ? असम्भव ! पूरापुर असम्भव !!

लेखन र गायन दुवै कलाले पारङ्गत धनराजलाई चौतर्फी बुझ्यौं भन्दा पनि मूल अवशेष बुझ्न त बाँकी नै रहेछ। उनको मर्मस्पर्शी आत्मकथा सुन्न त बाँकी नै रहेछ।

मानिसले आत्मकथा लेख्छु भन्छन्, ढाँटको पुलिन्दाबाहेक सत्य कुरा लेख्नै सक्तैनन् । तर हिम्मतिला रहेछन् धनराज, जसले महात्मा गान्धीको सत्यवचनलाई स्मरण गराइदिए ।

'मेरा मावली लामिछाने, मेरी आमाका श्रीमान् रिजाल, मचाहिं गिरीपुत्र। पिताको मृत्युपश्चात् मेरी आमाले रिजालसँग विवाह गरेर रिजालपुत्रलाई घर भित्र्याउनु भयो । कति महान् वीराङ्गाना ती आमा !'

सफर गर्ने क्रममा रिजालपिताले सत्य ओकल्नुहुन्थ्यो रे !– 'छोरा ! ऊ··· त्यो पनि तेरी आमा हो, त्यो तेरो भाइ हो ।'

ओहो ! पाश्चात्य सभ्यतालाई मात गरिदिनुभएछ रिजालपिताले ।

त्यसै वेला फोन आयो बिदेशबाट गिरीपुत्रीको ।

गिरीजी पनि पिता रिजालभन्दा के कम उदारतामा ? फोनबाटै भनिदिए– 'छोरी ! चिन्ता नमान, तिम्रो बाबुले रक्सी खाए पनि तिमीले नचाहेको अरू काम गर्दैन ।'

फोन राख्न नपाउँदै घरबाट फोन आयो गिरीपत्नीको । उनलाई पनि त्यस्तै उत्तर दिए गिरीले– 'बसिराख, मैले तिमीलाई बिर्सने गरी पिएको पनि छैन र शङ्कास्पद अरू काम पनि केही गरेको छैन । आफूभन्दा बूढा पाँच/छजना दाइहरूले घेरिएर बसेको छु ।'

हामी समाप्तिको चरणमा थियौँ, उदरमा अट्ने ठाउँ बाँकी थिएन ।

'आयो, आयो, गैंडो आयो'– राप्ती किनारमा अचानक खलबली मच्चियो । मस्तसँग खानपिनमा रमाइरहेका देशी/बिदेशी पर्यटकहरू जऱ्याकजुरुक उठे । त्रसित भए, आश्चर्यचकित भए । दौडादौड भयो ।

हो त, धमिलो विद्युत् प्रकाशमा विशालकाय गैंडो हात्ती लस्किएझैं लस्कँदै आएको देखिँदै छ– राप्ती किनारै किनार । प्रसिद्ध छ, गजगामी हिंडाइ । मानिसहरू किनारबाट माथिल्तिर दौडिंदै छन्, गैंडालाई कुनै मतलब छैन । ऊ एकनास लम्किरहेको छ । लाग्दै छ, कुनै ज्योतिर्मय दिव्यआत्मा उत्तरतिरबाट दक्षिणतिर लाग्दै छ । उसलाई कुनै डर छैन, कुनै त्रास छैन । कसैलाई भयभीत पार्ने पनि उसको ध्येय छैन । तर मौन चेतावनी दिँदै छ गैंडाले– खबरदार ! यो मेरो कालान्तरदेखि हिँड्ने बाटो । मेरो बाटोमा मनुवाहरूले अतिक्रमण गर्न थाले भने मैले कसैलाई बाँकी राख्ने छैन··· ··· ।

यही चेतावनी दिनका लागि आएको होला शायद !

म रोमाञ्चित भएँ, रमाइलो लाग्यो मलाई उसको पदचाल । मैले अलि परसम्म पछ्याएँ । ऊ अँध्यारोमा विलीन भयो ।

गैंडो नदेखिने भएपछि हामी फर्कियौं । बिल भुक्तान गरेर हामी पुनः रिभर भ्यु जङ्गल क्याम्प पुग्दा रातको दश बजिसकेको थियो ।

गिरी आफ्नो निवासतिर लागे ।

हामी तीन तारा तीनतिर– तीन खोपीतिर ।

## ३. तेस्रो दिनको डायरी

चरीको चिर्बिरसँगै ब्युँझियो सौराहाको बिहानी ।

हिजोजस्तै आज पनि नगेन्द्र दाइको निर्देशन त नभनूँ सुझाव थियो– 'सातै बजे उठ्ने र आठ बजेसम्म तयार भइसकने ।'

हामी सबैले समयलाई पालना गर्‍यौं, किनकि हामी समयका परिपालक नै थियौं । समयको लगाममा कसिँन सकिएन भने र समयसँगै हिंड्न सकिएन भने हामी पछिको पछि नै परिरहन्छौं भन्ने कुरामा सबै सहमत थियौं ।

पवनजीलाई अर्थमन्त्री बनाएर हामीले बुद्धिमानीपूर्ण काम गरेका थियौं । उहाँ पवनगतिमा अफ्ना सबै काम गर्नुहुन्थ्यो, क्याल्कुलेटरको आवश्यक परे मोबाइल थिच्नुहुन्थ्यो र बिलको रकम भिडाउनुहुन्थ्यो । हामीलाई खाइदिए पुग्यो, पिइदिए पुग्यो, सुतिदिए पुग्यो र भनेको बेलामा खुरुक्क हिँडिदिए पुग्यो । सौराहास्थित रिभर भ्यु जङ्गल क्याम्पमा पनि त्यही कुरा दोहोरियो । अनि हाम्रा झोलाहरू गेटसम्म पुर्‍याउने काम क्याम्पकै सहयोगीहरूले गरे ।

द्वारबाहिर गेटकै साइडमा हामीलाई प्रतीक्षा गरिरहेको थियो गाडीले । हामी चढ्नेबित्तिकै गाडीले टप्पा कस्यो र धनराज गिरीको घरअगाडि रोकियो । धनराज पनि समयका पक्का । जसरी हिजो हामीलाई ओरालेका थिए, त्यसरी आज उनले हामीलाई ओरालेनन्, बरु उल्टै चढे ।

एकैछिन भए पनि टाँडी बजार जानुपर्ने रे !– प्रा.रामबाबु घिमिरेको घरमा । उहाँले हामीलाई केही किताब/पत्रिका उपहार दिएर चियापान गराउने रे ! आदरपूर्वक गरिएको त्यति अनुरोध अस्वीकार गर्न पनि त भएन ।

रामबाबु साधारण जीवन जिउने एउटा सज्जन, इमानदार, निर्लोभी र लगनशील व्यक्ति हुनुहुन्छ भन्ने कुरा त हिजोको क्षणिक बसाइले पनि सङ्केत गरेको थियो, आजको गृहवातावरणले त्यसलाई प्रमाणित गरेर देखाइदियो ।

हामी धेरै बेर बसेनौँ, हामीसँगै आएका धनराजलाई त्यहीँ छाडेर हाम्रो यात्रा निर्दिष्ट दिशातिर उन्मुख भयो ।

यात्रालाई रोचक बनाउने बहाना त चाहियो केही न केही । मानिसले जे अनुभव गरेको छ, त्यही त व्यक्त गर्ने हो । जो जस्तो छ, त्यसले त्यस्तैसँग त सङ्गत गर्ने हो । सङ्गत भनेको आफ्नै प्रकारको सर्कलसँग त हुने हो । त्यसको बयान गर्नु भनेको आफ्नै समूहको गुणदोष केलाउनु त हो ।

त्रिशूली किनारमा गुड्दै गर्दा हामीबीच आफ्नै लेखकीय वंश विषयका चर्चा हुन थालेका छन् । चर्चा गरिएको व्यक्तिको अनुपस्थितिमा गुणभन्दा बढी दोष केलाउन थालिन्छ र उसको खिसिटिउरी गरेर हाँसिन्छ, अर्थात् अर्कालाई उडाएर आनन्द लिने मानवीय स्वभाव नै रहछ ।

अर्को कुरा, हामीले मानिस जति चिनिएको छ भन्छौं, भित्रैदेखि चिन्न सकिएको हुँदैन । वर्णन गर्दा सत्य बढी, असत्य कम वा असत्य बढी सत्य कम हुनेगरी व्याख्या गरिएको हुन्छ । परिणाम त्यस्तै निस्किन्छ, अन्यायीले न्याय र न्याय पाउनुपर्नेले अन्याय भोग्न पुग्दछ । हामीले बुझेर वा नबुझेर अन्तर्गहिराइ केलाउन सक्तैनौं ।

केही दिनअघि बैंककबाट फर्केका विजयध्वज थापाले भने– 'भट्टीबाट निस्कँदै गरेको मानिसले दूध खाएर निस्केको भए पनि जँड्याहा नै ठहरिन्छ । त्यस्तै पटाया घुम्न जाने मानिसले जतिसुकै सत्यता ओकले पनि र सत्यको पुष्टि गर्न खोजे पनि स्रोताले पत्याउँदैन ।'

हो, यसको भुक्तभोगी म पनि छु । एक पटक म ठमेलबाट फर्कँदै गर्दा वसन्तकुमार शर्म्मा नेपालको फोन आयो । मैले आफू हिँड्दै गरेको बाटोको नाम लिएँ । वसन्तबाले ममाथि शङ्का गर्नुभयो,– 'तपाईं पनि ठमेल घुम्न थाल्नुभयो ? के हो निको चाला छैन नि !' म खङ्ग्रङ्ग भएँ ।

अहिले हामीले 'साहित्यकार' उपाधिधारी जो जसको कुरा गर्दैछौं, कुनै पत्यारिला पनि छन्, कुनै अपत्यारिला पनि छन् । कुनै विश्लेषणयोग्य पनि छन्, कुनै विश्लेषणयोग्य छैनन् । यसकारण सैद्धान्तिक रूपमा म अविचलित छु– यात्रामा पूर्ण सत्यता हुनुपर्छ भन्ने कुरामा । यो त ठिकै छ तर वर्णन नगरेर मनमा राख्दा भने दोषको भागिदार भइँदैन । भनिन्छ नि– 'सत्यम् ब्रुयात्, प्रियम् ब्रुयात्, न ब्रुयात्, सत्यमप्रियम् ।' अर्थात् अप्रिय सत्य छ भने चुप लाग । हो, मलाई पनि त्यस्तै लाग्यो, आफ्नै साहित्यिक वंशको बदख्वाइँ गर्नुभन्दा डायरीका पानाबाट हटाएकै राम्रो ।

हामीबीच अनेक जोकहरू पनि भए । जोकका लागि नपत्याउँदो गरी थापाजी निकै अगाडि रहेछन् । महिलाको उपस्थितिमा बोलिएका संयमित जोकहरू भए पो अक्षरमा कोर्न सक्नु, महिलाविहीन यात्रामा बोलिएका उन्मुक्त जोकहरूलाई कसरी यात्राको अनुच्छेद बनाउन सकियो र !

रातो र हरियो खुर्सानीको कुरा उठाएर अनि खुकुरीधारी वीर नेपाली र बन्दुकधारी वीर दुश्मनको चर्चा गरेर विजयले हँसाए भने 'एकादशीमा फलफूल खान्छु महाराज !' भन्दै फौदसिंहले गरेको बिन्तिमाथि महाराजले प्रश्न गर्दा फौदसिंहले दिएको जवाफ सुनाएर नगेन्द्र दाइले पनि हँसाउनुभयो । यस्तै अरूबाट पनि जोकमा जोक थप्ने काम भइरह्यो । ती सबै जोकहरू मस्तिष्कमा अटाउन कहाँ सकियो र !

नारायणघाट-मुग्लिङ सडकले कतै अवरोध हाल्छ कि भन्ने कुरामा हामी सशङ्कित थियौं तर यस्तै व्यङ्ग्यविनोद र हँसीमजाक गर्दागर्दै मुग्लिङ पुगिएछ । शङ्कामुक्त भयौं । पैंतालीस मिनेट घटाउन नहुने ट्राफिक नियमलाई पालना गर्दै चालकले हामीलाई पैंतालीस मिनेटमै मुग्लिङ उतारे ।

चिया खाने कुरा उठिरहेको थियो तर गाडी भने पुलतर्फ घुमिसकेछ । हामीले नाम लियौं– आबुखैरेनीको । तर त्यहाँ पनि पसलतर्फ नजर लगाउँदा लगाउँदै गाडीले बजार नाघिसक्यो । अब नाम आयो डुम्रेको ।

गाडी डुम्रेको लमजुङ चोकमा साइड लाग्यो । हामी ओर्लियौं र 'प्रेम' होटलभित्र छिऱ्यौं ।

राम्रै रहेछ होटल, राम्रै रहेछ नास्तापानी र प्रेमिल स्वभावकी रहिछन् 'प्रेम' होटलवाली बहिनी पनि ।

चियानास्ता गर्दागर्दै मिठो-नमिठो र राम्रो-नराम्रोको कुरा चल्यो । त्यसबारे नगेन्द्र दाइले अफ्नो धारणा व्यक्त गर्नुभयो– 'सामान्यतया खाना खासै मीठो-नमीठो हुँदैन, मान्छे पनि खासै राम्रो-नराम्रो हुँदैन,वा लोभी-निर्लोभी पनि हुँदैन । मानिसले प्राप्त गर्ने अनुभव, मानिसले लगाउने दृष्टि र मानिसले बचत गर्ने तरिकामा भर पर्छ । त्यही मान्छे एउटालाई राम्रो र अर्कालाई नराम्रो लाग्छ लाग्छ ? त्यही चीज एउटालाई मीठो लाग्छ र अर्कालाई नमीठो ? ओठ पल्टेका काला हब्सीलाई गोरी मेमहरूले किन मन पराउँछन् ? अर्काको धनसम्पत्तिमा आँखा लगाउने पो लोभी, आफ्नो धनमा मितव्ययिता अपनाउने केको लोभी ?'

ठीक कुरा गर्नुभयो नगेन्द्र दाइले । चित्त बुझ्यो हामी सबैलाई । हामीले इच्छाबमोजिम सङ्क्षिप्त भोजन गऱ्यौं । पूर्ण भोजन पोखरा पुगेपछि मात्र हुने निश्चित गरेर अघि बढ्यौं ।

त्यसपछिको वार्ताले अर्कै मोड थियो ।

शङ्कर भारतीको घरबाट फोन आएपछि उनले छोराको कुरा उठाए– चारपाँच वर्ष विदेश बसेर नेपाल फर्केको छोरालाई भारतीले सुझाव दिए– 'अब नेपालमै बस् र कमाएको पैसा उद्योग व्यवसायमा लगा ।'

मन नलागी नलागी छोराले पितृआज्ञा पालन गऱ्यो र रिसोर्ट खोल्ने निधो गरेर ठिमीमा दुईसय रोपनी सरकारी जग्गा लीजमा लियो तीस वर्षका लागि । तर रिसोर्ट सञ्चालन गर्नुअघि नै पाइला-पाइलामा राष्ट्रसेवकहरूलाई घुस चढाउँदा चढाउँदै लखतरान भैसक्यो । काम एक इन्च अगाडि बढेन । अब छोरो भन्दै छ– 'बाबा ! म त फेरि जाऊँ क्यारे विदेशतिरै !'

भ्रष्टाचारको चरम जालो सुनेर जिब्रो टोक्यौं हामीले । केपी कुर्लेर मात्रै कसरी समृद्ध बन्छ देश ? कसरी सुखी हुन्छन् नेपाली ?

कुरै कुरामा शरदचन्द्र शाहाको कुरा उठ्यो । प्रसङ्ग जोड्दै नगेन्द्र दाइले भन्नुभयो– 'शरद शाहा राजसंस्थाप्रति वफादार थिए । राजाका अगाडि घुँडा टेकेर, शिर नुहाएर हनुमान शैलीमा तबसम्म बस्थे, जबसम्म राजाले 'उठ' भन्ने संकेत गर्दैनथे । अत्यन्त देशभक्त थिए, राजभक्त थिए । तर उनले भ्रष्टाचार गरेको कहिल्यै सुनिएन । उनी राम्रा साहित्यकार थिए । उनमा कवित्व शक्ति थियो, कवि-साहित्यकारप्रति श्रद्धा थियो । उनी 'अभिव्यक्ति जमघट'मा पनि प्रत्येक महिनाको पहिलो बिहीबार कार्की किचेनमा पुग्थे र साहित्यकारहरूप्रति आदरभाव प्रकट गर्थे ।'

हो, नगेन्द्र दाइको भनाइप्रति म पूर्ण सहमत थिएँ । शरद शाहासँग मेरो पनि सम्बाद भएको थियो कार्की किचेनमा । मैले दायित्व पत्रिका दिएपछि उनले भनेका थिए– 'कसरी चलाउनुभएको छ दायित्व ?' मैले दायित्वको

कथा सुनाएपछि उनले आजीवन सदस्य बन्ने चाहना राखेका थिए– 'म बन्न सक्छु कि सक्तिनँ ?' अकस्मात् तेर्सिएको प्रश्नले म स्तब्ध भएको थिएँ एकछिन– के भन्ने, के नभन्ने ? शरदचन्द्र शाहालाई सदस्य बनाएपछि बदलिँदो राजनीतिक परिस्थितिमा दायित्वप्रति साहित्यिक प्रतिक्रिया कस्तो रहन्छ ? दायित्वको लोकप्रियताले कस्तो मोड लिन्छ ? त्यस बेला मैले 'सकिन्छ' मात्र भनेको थिएँ । उनले 'कति दिनुपर्छ ?' भन्दै गोजीमा हात हालिसकेका थिए। मैले भनेको थिएँ– 'मसँग अहिले बिल छैन, भएको वेलामा लिउँला नि ! हाम्रो भेट अर्को महिना भइहाल्छ नि !'

त्यसपछि म झन्डै एक वर्ष कार्की किचनमा प्रवेश गरिनँ। शरदचन्द्रको नाम दायित्वमा चढाउँदैमा बित्यासै पर्थ्यो कि पर्दैनथ्यो ? म त्यति डरपोक हुनु उचित थियो कि थिएन ? नगेन्द्र दाइले त कथा, कविता र अन्तरवार्ता नै छापिसक्नुभएको थियो । तर अभिव्यक्ति र दायित्वको मामिलामा सम्यक् अन्तर थियो । उहाँ स्वतन्त्र साहित्यिक पत्रकार हुनुहुन्थ्यो, म तत्कालीन श्री ५ को सरकारको दानापानी खाएको जिम्मेवार अधिकृत थिएँ ।

यस्तैखाले विविध अनुभूतिजन्य प्रसङ्गहरू अरू साथीहरूबाट पनि उठाइएका थिए। त्यसै भएर त पत्तै नपाइकन पुगियो पोखराको पृथ्वीचोकमा।

क्षमा पाऊँ ! अहिले त भन्न पाइन्न क्यारे पृथ्वीचोक ! जहाँबाट राष्ट्रनिर्माता पृथ्वीनारायण शाहको शालिक उडाइयो र लखन थापाको ठड्याइयो। अनि भन्न थालियो– लखनचोक। लखनले अन्त बस्न मानेनन् कि के भयो कुन्नि ! अब पनि पृथ्वीको प्रसङ्ग उठाउन थालियो भने पुरातनवादी वा पश्चगामी भइएन र ? विशाल नेपाल राष्ट्र कसले बनायो ? जोसुकैले बनाओस् । बस्न पाइएको छ, खान पाइएको छ र सकेसम्म लुट्न पाइएको छ। देश भाँडमा जाओस् के मतलब ?

म ताजा खबर सुन्दै थिएँ– इण्डियामा छापेर नेपाल भित्र्याइएको नक्साको रेखाङ्कन मापन गर्दा १ लाख ३८ हजार वकिमि मात्र हुन्छ रे ! जब कि यसअघिको पुरानो नक्सामा १ लाख ४७ हजार वकिमि थियो । हामीले पढ्दै आएको र राष्ट्रिय मान्यता पाएको नक्साङ्कन पनि यही हो। तर अहिले जुन जुन नक्सा बजारमा छ्यापछ्याप्ति देखिन्छन्, ती नक्साहरूमा लिम्पियाधुरा लगायत् थुप्रै भूभाग गायब छन् । गुमेको यो नेपालको भूमि मापन गर्ने हो भने १४ वटा सिङ्गापुर हुन्छ रे ! केपी ओली राष्ट्रवादी भनेर कहलिएका छन् । ती नतमस्तक बन्छन् कि प्रश्न उठाउँछन् ? प्रतीक्षा गर्नुछ ।

अँ… मेरो नियात्रामा कतैतिर 'राजमार्ग उल्लेख भएको छ भने क्षमा पाऊँ । पाठकले सच्याएर लोकमार्ग पढिदिनुहोला ।

भोजन कहाँ गर्ने ? सकेसम्म थकाली होटेल हेरौं है ! पोखरामा थकाली होटेलको के कमी ! जसको होटेल भए पनि 'थकाली होटेल' लेखिदिए भैहाल्यो। बीच बजारको बाटो जाँदै गर्दा भेटिइहाल्यो एउटा थकाली भान्सा।

हामीले होटेलै अगाडि गाडी रोक्यौं र थकाली भान्सामा पाकेको भोजनको स्वाद लियौं । त्यसपछि मात्र पुग्यौं रोजमेरी किचेन, जहाँ हाम्रा

लागि रात्री विश्रामको व्यवस्था गरिएको थियो ।

त्यहाँ हामीले झोलामात्र थन्क्याउनु थियो । घडीको सुई तीनको नजिक नजिक थियो । दुईवटा कार्यक्रम सम्पन्न गर्नु थियो । सर्वप्रथम हामी फेवा किनार जानु छ । फेवामाथि आज हामीले यस्तो नौका बिहार गर्नुछ, जुन नेपालको साहित्यिक इतिहासमा त्यस्तो विहार भएकै छैन ।

परिकल्पनाकार हुनुहुन्थ्यो– नगेन्द्र दाइ । यो साहित्यिक यात्रा नै उहाँको इच्छामा बनेको छ, त्यसलाई हामीले शिरोधार्य गरेका छौं भने प्रस्तावित नौका विहारका लागि अनिच्छा कसले व्यक्त गर्ने ?

सौराहामा धनराजले सहयोगी भूमिका खेलेजस्तै पोखरामा तीर्थ श्रेष्ठबाट सहयोगी भूमिका निर्वाह हुने अपेक्षा गरिएको थियो तर उनले उल्टै हाम्रो टोलीलाई सामूहिक निम्ता गरे– 'कार्यक्रममा मेरो विशेष भूमिका भएकोले अहिले म आउन सकिनँ । बरु तपाईंहरू ललितकला पुरस्कार वितरण समारोहमा सम्मिलित हुन आइदिनुहोला ।'

तीर्थको अनुपस्थिति हुने भएपछि नगेन्द्र दाइले प्रकट पगेनी 'शिव'लाई फोन गरेर बोलाउनु भयो र उनीबारे बताउनु भयो– ''शिवप्रसाद पगेनी' नामका दुईजना विद्यार्थी एउटै कक्षामा पढ्थे । नाम बोलाउँदा सधैँ कन्फ्युजन । पढाउने गुरुहरूमा एउटी अत्यन्त सुन्दरी यवनकन्या पनि थिइन् जुलिया, पीसकोर भोलन्टियर । कविहृदय भएका भावुक किशोर यी शिवप्रसाद पगेनी जुलियाको रूप-लावण्यप्रति मोहित थिए । एकदिन क्लासमा प्रवेश गर्दै गर्दा पढाइरहेकी जुलियाले– 'ऊ प्रकट भए अर्का शिव' भनिछन् । जुलियाको सुमधुर स्वरमा निस्केको 'प्रकट' शब्दले यिनको कायाकल्प गरेछ । त्यो शब्द यिनको मनमा यस्तरी गढेछ कि 'शिवप्रसाद पगेनी' तत्काल 'प्रकट पगेनी शिव'मा परिणत भए अनि उनमा प्रेमरसका बेजोड कविता फुर्न थाले । जुलिया अमेरिका फर्केपछि यिनले विप्रलम्भ श्रृङ्गारका बहुतै मीठा गजल लेखेका छन् ।'

कुरा गर्दागर्दै प्रकट पगेनी प्रकट भैहाल्नु भयो । त्यसपछि हामी हल्लनचोकमा हल्लिंदै चामत्कारिक पेयपदार्थका बोतल र सितनको जोहो गरेर जलविहारका लागि फेवा किनार पुग्यौं ।

हामीले कुन किसिमको जलयात्रा/जलविहार गर्न खोजिरहेका छौं, त्यो स्तरको नौका पनि त चाहियो ।

'सबैभन्दा सुरक्षित र सुविधायुक्त नौकाको भाडा कति ?'

'एघार सय पचास प्रति घण्टा । सबैलाई सुरक्षा ज्याकेट र घामपानीबाट जोगिन ओत अनि डुँगा चलाउने एक जना नाविकको व्यवस्था । एक घण्टा नाघ्यो भने प्रतिपन्ध्र मिनेट तीन सय थप ।'

नौका हाजिर भयो हाम्रा सामु । नौकामा बस्यौं हामी, नौकाको बीचमा बसेर हैन्डिल समातेर पैडल घुमाउन थाले अजय अधिकारीले ।

'कति पाउँछौ बाबु ?'

'प्रतिट्रिपको एक सय पचास ।' सँगसँगै उनले सोधे– 'कुन साइड जाने ?'

हाम्रो क्विक डिसिजन– 'तालबाराही परिक्रमा ।'

अब पनि कहाँ ढिलो गर्नु भयो र ? एक घण्टाभित्र हामी जति रमाउनु छ रमाइसक्ने हो ।

चार दिने यात्राको अभूतपूर्व, अविस्मरणीय र आकर्षणको केन्द्रविन्दुमा छौं हामी यसबेला । फेवाको पानीमा तैरिरहेको नौकामाथि स्कटल्यान्डीय पानी वर्षिन थाल्यो अकस्मात् । हामीले खाने गरेको पञ्चामृतमा पाँच तत्व मिलेको हुन्छ । त्यसले जिब्रोमा क्षणिक स्वाद दिन्छ तर स्कटल्यान्डीय पानीमा कुन्नि के के तत्व मिसिएको हुन्छ ! त्यसमा जिब्रोको स्वादमात्र हुँदैन, एकप्रकारको चमत्कार सृजना गरिदिने शक्ति निहित हुन्छ । सके पनि नसके पनि पर्वत लङ्घन गर्ने आँट पैदा गरिदिन्छ, विश्व हाँक्ने बोली उद्बोधन गरिदिन्छ, ठूलाठूला मानिसलाई भुसुनो देख्ने र भुसुनालाई हात्ती देख्ने चमत्कार सृजना गरिदिन्छ ।

हामी त्यही चामत्कारी पानीको झर्नामा नुहाउन थालेका छौं यसवेला । पानी भरिएर डुंगा नै डुब्ने हो कि भन्ने डर पनि छ ! मलाई सम्झना हुँदै छ, कविवर केदारमान व्यथितको संयोजनमा भएको नौका विहार । चितवनको नारायणी नदीमाथि कवि राजा महेन्द्र समेत्को समुपस्थितिमा विभिन्न कविहरूबाट कविता वाचन गराएका थिए व्यथितले २०२२ सालतिर । त्यो जलविहार र यस जलविहारले धेरै कुरामा समानता राख्थ्यो– त्यस बेलाको नौका विहार चाँदीजस्तै कपाल फुलेका केदारमानको परिकल्पना थियो, अहिलेको नौका बिहार त्यस्तै समानता राख्ने नगेन्द्र दाइको परिकल्पना थियो । त्यसवेला दुई डुँगा जोडेर काव्य वाचनको थलो बनाइएको थियो, अहिले चार डुँगा बराबरको ठूलो आकारको नौका व्यवस्था गरिएको थियो । त्यसवेला धेरै कविहरूले कविता वाचन गरेका थिए, अहिले हाम्रो सानु समूह मात्र थियो र त्यसमा पनि प्रकट पगेनी 'शिव'को गजल वाचनले प्रमुख स्थान पाएको थियो ।

तालबाराही पुग्नै लाग्दा फेवाको ड्यामसाइडमा निर्माण हुँदै गरेको अग्लो न अग्लो भवन देखियो । भवन बन्नु नराम्रो होइन, तर भवन बनाउने उपयुक्त ठाउँ छानिएन भन्ने मात्र हो । कुनै पनि ताल किनारमा अग्ला भवनहरू बनाएर तालको शोभा मेट्ने काम गरिँदैन ।

कति चाँडो बितेछ एक घण्टा ! अजयले डुँगालाई किनारोन्मुख गर्दै गर्दा झस्कियौं हामी ।

हामीले भोलिपल्ट मात्र सुनेका थियौं– फेवातालमा हाम्रो नौका विहार हुँदै गर्दा बेगनास तालमा नौका डुबेको रहेछ । नौका विहार गर्ने दुई जनाको मृत्यु र चार जना बेपत्ता भएका रहेछन् ।

चाहेर पनि नौकालाई पुनरावृत्ति गराउन सक्ने अवस्थामा थिएनौं हामी । हामीलाई  ललितकला पुरस्कार समारोहमा पुग्न हतार भइसकेको छ ।

हामी हतपत फेवा किनारबाट बाहिरियौं,  हल्लनचोकमा मोटर चढ्यौं, रीता पहारीको निवासबाट रीतालाई पिकअप गऱ्यौं र पुग्यौं– पोखरा उद्योग वाणिज्य संघको हलमा आयोजित पुरस्कार समर्पण समारोहमा ।

व्यङ्ग्य चित्रकार दुर्गा बराल (वात्स्यायन) संस्थापक भएर २०३४ सालमा स्थापना भएको पोखरेली युवा सांस्कृतिक परिवारले हरेक दुईदुई वर्षमा प्रदान गर्ने गरेको ललितकला पुरस्कार यसपाला कलाकार मुकेश मल्ल लाई प्रदान गरिँदै रहेछ ।

कार्यक्रमपश्चात् हामी रोजमेरी किचेन फर्कियौं । रातको भोजनपछि केहीबेर रमाइलो गफगोष्ठी भ्याएर आ-आफ्ना शयनकक्षतिर लाग्यौं ।

## ४. चौथो दिनको डायरी

आजको मेरो डायरीमा टिपोट गरिएका कुरा धेरै छैनन् ।

हिजो सौराहामा चरीहरूको चिर्विरले निद्रा खुलेजस्तै आज तालबाराही मन्दिरको घण्टध्वनिले निद्रा खुलेको हुनुपर्छ मेरो ।

हिजोअस्ति जस्तो आज नगेन्द्र दाइले उठ्ने समय तोक्नुभएको छैन । हिजै भन्नुभएको थियो– दशबजे रीताजीकहाँ पुन र एघार बजे पोखरा छोड्नका लागि हतार गरेर किन उठ्नुपर्‍यो र ?

यति भन्दाभन्दै पनि नगेन्द्र दाइ र म पूर्ण तयारीका साथ आठ बजेतिर बरन्डामा टहलिन थाल्यौं । ढोका बाहिर हल्ला हुँदा पनि साथीहरूले ढोका खोलेनन् । 'चिया खाने वेला भयो उठौं साथी' भनेपछि मात्र ढोका खोलेर नौ बजेसम्म तयार भए ।

रहस्य त पछि पो खुल्यो, साथीहरूले त हिजो बाह्र बजाएछन् । हाम्रो समाजमा बाह्र बजाउनुको अर्थ सामान्य अवस्था मानिँदैन । दश त नगेन्द्र दाइ र मैले पनि बजाएकै हौं । साथीहरूले अरू दुई घण्टा बजाएछन् ।

जलविहारमा सात जनाको बीचमा कतिवटा बोतल रित्तिएका थिए कुन्नि, चार भाइले अर्को बोतल पनि आधा बजाएछन् ! कुरा यत्ति हो ।

आइपर्ने इमर्जेन्सी फुकुवा गर्न शङ्कर भारतीले एउटा फोसा बोतल झोलामा हालेका रहेछन् । त्यसलाई उपभोग गर्ने समय हिजोको मध्यरात जुरेछ । भोलि त्यही बोतल बोकेर काठमाडौं फर्कनुपर्‍यो भने त लाजमर्नु नै भयो नि ! हिम्मत हारा नै ठहरिने भइयो नि ! त्यसैले ।

यात्रारम्भदेखि नै नगेन्द्र दाइ हामी सबैका अघोषित नायक हुनुहुन्थ्यो । अग्रज हुनुहुन्थ्यो, अभिभावक हुनुहुन्थ्यो, संरक्षक हुनुहुन्थ्यो, निर्देशक हुनुहुन्थ्यो, सल्लाहकार हुनुहुन्थ्यो । हामी सबैले स्वतः मानेका पथप्रदर्शक हुनुहुन्थ्यो ।

मैले पढेको थिएँ 'अनायका विनश्यन्ति नश्यन्ति बहुनायका' । त्यसै भएर पनि हामीले एउटै नायक बनाएका थियौं र उहाँको निर्देशनको परिपालक भएका थियौं । साथीहरूले पनि निर्देशन विपरीत कुनै काम गरेका थिएनन्, स्वेच्छाले आफ्नो निद्रा खर्च गरेका थिए ।

हामी हेटौंडा, सौराहा र पोखरा बासपछि आज अर्थात् २०७५ साल भाद्र २३ का दिन काठमाडौं फर्कने क्रममा छौं ।

हामीलाई प्रातःकालीन भोजनको निम्ता छ– रीता पहारीको निवासमा । रीताजीलाई जानकारी छ– एघार बजे पोखरा छाड्ने हाम्रो कार्यक्रम छ ।

बाटो बेठेगान छ, जुनसुकै बेला जहाँसुकै बाटो बन्द हुन सक्छ, गाडीहरू लाइन लाग्न सक्छन् । त्यसै भएर हामी समयमै काठमाडौं पुग्नुछ भने छ घण्टाका लागि थप दुई घण्टा किन नछुट्याउने ?

हामी साढे नौ बजे पुग्यौं रीता पहारीकहाँ ।

रीता, अर्थात् साहित्यकार, व्यवसायी हेमराज पहारीकी जीवनसँगिनी । तर रीताले जीवनसँगिनी भएर पतिको साथमा लामो जीवन जीउन सकिनन् । श्रीमान्को बाइक दुर्घटनामा अचानक मृत्यु भएपछि उनका पीडा र सङ्घर्षका दिनहरू शुरु भए । रीताले आफ्नै वासस्थान आफ्नो बनाउन पनि देवरसँग लड्नु पर्‍यो ।

अहिले हामी जुन होटलबाट आउँदै छौं, त्यो तीन तले घर रीताको । अहिले रीताका भदा (दाइका छोरा) सुरेश न्यौपाने होटल सञ्चालक छन् । उनले भाडा भनुँ कि जीवनयापन खर्च भनूँ ! रीतालाई मासिक दुई लाख बुझाउँछन्– यही सुन्दै छु म रीताबाट ।

कता कता परिचित जस्तो लाग्दै छ मलाई हेमराजको नाम । रीताले पूजा गर्ने ठाउँमा माला लगाइदिएको तस्वीर देख्दा पो झस्किएँ– स्याङ्जामा भएको एउटा साहित्यिक कार्यक्रममा मसँगै हेमराज पनि मञ्चमा थिए ।

रीताको नगेन्द्र दाइसँग त पुरानो परिचय रहेछ– हेमराजजी हुँदैदेखि । काठमाडौं आएको बेला नेपाल स्रष्टा समाजको कार्यक्रममा परिचय भएको रहेछ आलोकसँग । त्यसैको परिणाम थियो– रोजमेरी किचनमा हाम्रो बास र आज रीता पहारीको भात । उनले हिजो नै कबुल गराएकी थिइन्– 'मैले खाएजस्तै विशुद्ध भोजन गराउने छु, बढी दुःख गर्ने छैन, अवश्य आउनुहोला ।'

यसरी प्रकट भएको श्रद्धा र मायामाथि तुषारापात गर्नु भयो र ? अरु अवस्थामा बेग्लै कुरा, रीताको मामिलामा त हुँदै भएन ।

'मैले थाली तयार गरें, आउनुस्', भनेपछि हामीले टेबुल घेरा हालेर कुर्सीमा बस्यौं ।

थालीमा देख्दैछु– आधा कालो भात, आधा सेतो भात । मेथीका टुसाको तरकारी, कर्कलोको अचार, दही एकातिर, फ्रुटसलाद अर्कातिर । खुर्सानी खानुहुन्छ भने अलग्गै, लसुन प्याज खानुहुन्छ भने पनि अलग्गै । अर्थात् तरकारी र अचारमा लसुन प्याज पनि परेको छैन । अचारमा खुर्सानी छैन ।

रीता भन्दैछिन्– 'मेरो भान्सा त यस्तै हुन्छ, म जस्तो खान्छु अरूलाई पनि त्यस्तै खुवाउँछु । मेरो निवासमा मदिरा मांश छिर्दैन । थालीको भात सकिएपछि सेतो वा कालो जे मनपर्छ त्यही भन्नुहोला ! यो 'आँगा' धानको कालो चामल । मैले माइती गाउँ काभ्रेको चौँरीदेउरालीबाट ल्याएकी । यो 'जेठो बूढो' धानको सेतो (मार्सी) चामल, यो त यहीँ पनि किन्न पाइन्छ, दुवै स्वास्थ्यका लागि हितकर ।'

सेतो कालो भात थप्दै रीता म नजिकै आइन् र भनिन्– 'कुन भात राखिदिऊँ ?' धेरै साथीहरूबाट कालो खाने इच्छा भएपछि कसौंडी नै रित्तिएला भन्ने सोचेर 'जुन भए पनि हुन्छ' भनिदिएँ । उनले कालो भात थपिदिइन् ।

मैले भनेँ– 'मनको आवाज सुन्नुभयो ।'

मेरो मन बोल्दै छ– कति सिम्पल यी रीता ! सामान्य पहिरन, जस्तो बोली त्यस्तै व्यवहार, जस्तो व्यवहार, त्यस्तै अनुहार, जस्तो अनुहार त्यस्तै सौन्दर्य । कृत्रिमता छैन बोलीमा, तडकभडक छैन पोशाकमा । खानपान, विधिव्यवहार, सात्विक भोजन, तात्विक कर्म, रीताका आभूषण रहेछन् ।

सोच्दै थिएँ, भन्न सकेको थिइनँ । काभ्रेकी रीता न्यौपाने र पोखराका हेमराज पहारीको भेट कसरी भयो होला ? केही समय मात्र सहयात्रा गरिन् श्रीमान्सँग, एकाएक पानीको फोकासरी फुट्यो एउटा जीवन, तथापि सहजीवनको लागि रीता अर्को जीवनसँग जोडिन चाहिनन् । अहिले उनी रोजमेरी किचनको आयबाट प्राप्त रकम उपभोग गरेर चालीस बर्से एकल जीवनयात्रा गर्दै छिन् ।

रीताले आफ्नै अध्यक्षतामा 'हेमराज पहारी स्मृति प्रतिष्ठान' पनि गठन गरेकी रहिछन् । हेमराज पहारीको नाममा पुरस्कार पनि वितरण गरिँदो रहेछ । हेमराजकै नाममा एउटा मोटै स्मृतिग्रन्थ पनि प्रकाशित भएको रहेछ । हिँड्ने वेलामा उनले एक एकवटा ग्रन्थ थमाइन् । हिँड्दा हिँड्दै अरू साथीहरूले के के भनेर धन्यवाद दिए कुन्नि ! नगेन्द्र दाइको भनाइ सुनेँ– 'साह्रै आत्मीय भाव देखियो तपाईंमा, कृतज्ञ छौं हामी ।'

मैले भनेँ– 'तपाईंको मन, वचन र कर्ममा कत्ति पनि वनावटीपन देखिएन ।'

बिदाइको वेला सुरेश न्यौपाने पनि आइपुगेका थिए । उनले भने– 'संयोगले हुन्छ भेट, मायाले हुन्छ विरलै भेट ।' हामी गेटबाट बाहिरिँदा सम्म रीता हात जोडिनै रहेकी थिइन्– 'तपाईंहरूलाई भेट्न पाउनु मेरो सौभाग्य हो ।'

पोखरादेखि गाडी चढेर सीधै काठमाडौँ आउँदाको नयाँ टिपोट के नै हुन सक्छ र ?

नयाँ यात्रीका लागि धेरै विषय हुन सक्छन् तर म परेँ पुरानो । म शुरुका दिनमा गुल्मीबाट काठमाडौँ आउँदा यही बाटो भएर आवतजावत गर्थें । मुग्लिङ-नारायणघाट बाटो बन्नुअघि मेरो रुट थियो– तानसेन-पोखरा, पोखरा-काठमाडौँ, दुईवटा बसको यात्रा ।

पाँच-छ वर्षको अवधिमा कम्तिमा वर्षको तीनपटक आवतजावत गर्दा मैले कति अनुभव सँगालेँ हुँला र लेखेँहुँला ? त्यसलाई दोहोऱ्याउन त उचित भएन नि !

काठमाडौँ-पोखरा यात्रासँग जोडिएर मैले भिन्न अनुभूतिका यात्राहरू गरेँ र लेखेँ– त्यस यात्राकी नायिका अब छैनन्, श्री दुर्गा रिसाल, बादलको घुम्टो भित्र लुकिरह्यो माछापुछ्रे, गल्याङमा कल्याङमल्याङ, कुश्माकी करिस्मासँग जोडिएका कुरा । यी सबै मेरा यात्राका विषयहरू हुन् । यसैले म सकेसम्म जोगिन चाहन्छु– दोहोरो यात्रा र दोहोरो वर्णनबाट ।

हामीले पोखरा छाड्यौँ, ठीक एघार बजे । कस्तो हाम्रो समय संयोजन !

हामी पूर्व राजमार्गमा कुदिरहेका थियौँ । शायद त्यसै प्रसङ्गमा

जोडिएको हुनुपर्छ महेन्द्रको नाम । राजा महेन्द्रको लामो शासन भोगेका नगेन्द्र दाइले भन्नुभयो– 'यद्यपि महेन्द्रले केही साहसी र दूरगामी प्रभाव पार्ने राम्रा कामहरू गरे– पूर्व-पश्चिम राजमार्ग, कोदारी राजमार्ग लगायत पहाडीलाई तराईमा बसोबास गराउने, पूर्वसैनिकलाई सीमाक्षेत्रमा बसोबास गराउने काम, इन्डियन चेकपोष्ट उत्तरी सीमाबाट हटाउने काम आदि । तर उनले गलत काम पनि गरेका छन्– त्रिभुवनको मृत्युपश्चात् राजगद्दीमा बस्दा महेन्द्र आर्थिक दृष्टिले जिरोमा थिए । अर्थात् उनी विश्वकै गरीब राजामा गनिन्थे । तर शासनावधिमा भाइहरूलाई व्यापार व्यवसायमा लगाएर, मूर्ति तस्करी हुँदा पनि चुप लागेर त्यसको केही अंश आफ्नो कोषमा राख्न सफल भए र मर्दा विश्वका धनी राजाहरूमद्धेका एक भएर मरे ।

राजाले गर्न नहुने कृत्य देखिरहेका वीरेन्द्रले आफू राजा भएपछि भाइ भारदारहरूलाई बोलाएर भने– 'अहिले जनता सचेत भइसकेका छन् । जनआवाज उर्लियो भने राजसंस्था बदनाम मात्र होइन शङ्कटापन्न पनि हुन सक्छ । त्यसकारण राजपरिवारले व्यापार नगरौँ, भत्ता खाएर सम्मानजनक जीवन बाँचौँ ।'

विदेशमा पढेका र विश्वराजनीति अध्ययन गरेका, आफ्नो देशको माया गर्ने राजाको यस अभिव्यक्ति विरुद्ध उनका आफन्तहरूबाटनै चेतावनीपूर्ण आवाज निस्कियो– 'तपाईं राजा भएर राजगद्दीमा बस्नुस्, हमीले गरिआएको कामकर्वाहीमा अवरोध नहाल्नुस् अन्यथा गद्दीमा समेत सङ्कट आउन सक्छ ।' आफ्नै निकटस्थ नातेदारबाट व्यक्त भएका यस्ता चुनौतीपूर्ण अभिव्यक्तिहरूका विरुद्ध वीरेन्द्रले कदम चाल्न सकेनन् । चुपचाप लागेर बसे । चाहेर पनि देश विकासमा अग्रसर हुन सकेनन् । स्वाभाविक रूपमा देश जसरी चलेको थियो, त्यसरी नै चल्न दिए ।'

दमौली काटिसकेका थियौँ कि जस्तो लाग्छ ! शङ्कर भारतीले भने– 'आधा त बाँकी नै छ नि ! घर फर्काउँन त कहाँ भयो र ?'

'अनि सितन ?'

सोचैँ, मेरो झोलाको आधाकिलो दालमोठले पनि जलाभिषेक गर्ने मौका पाउने भयो । मैले यो सोचेर राखेको थिएँ– कतै जाममा परिएला, लामै समय मुक्ति नपाइएला, त्यसबेला एकछिन भए पनि प्राण बचाउने काम त गर्छ नि !

निस्कियो शङ्करको झोलाबाट आधा र मेरो झोलाबाट आधा, अनि भएन त पूर्ण ?

मलाई भोकबाट जोगिने पीर, भारतीलाई व्रत भङ्ग हुने पीर ! उनले यात्रामा भनेका कुरा सम्झँदै थिएँ । भनेका थिए– 'मैले वर्षमा आठ दिन मात्रै छोड्छु– दुईवटा ठूला एकादशी, तीनवटा श्राद्ध र एकछाकी । अर्को पनि नियम छ मेरो– पाँच बजेअघि एक लाख दिए पनि छुन्न, पाँच बजेपछि एक लाख जरिवाना तिर्न परे पनि छोड्दिनँ ।'

वाह ! कस्तो व्रत ? यस्तो पो व्रत !

उनले अर्को रोचक प्रसङ्ग सुनाउँदै थिए– 'मेरो रेकर्ड तोड्ने साथीहरू पनि छन्, वियोगी बुढाथोकी र विष्णुबहादुर सिंह । वियोगीले वर्षभरिमा छ दिन र विष्णुले चार दिनमात्र छोड्छन् ।'

हामी हाँस्यौं तर हँसाइ सँगसँगै मैले सुखद आश्चर्यको अनुभूति पनि गरें– यति हुँदाहुँदै पनि स्वस्थ रहनु के सुखद कुरा होइन र ? नगेन्द्र दाइले त्यसै नामकरण गर्नुभएको रहेनछ– भोड्का भारती, बियरबहार बुढाथोकी र ह्विस्कीबहादुर सिंह ।

मैले त्यस बेला सम्झें एउटा किंवदन्ती वा पौराणिक कथा । एउटा थियो मूर्ख, अर्को थियो पूजारी । मन्दिर थियो खोला पारि, पूजारी र मूर्खको बसाइ थियो वारि । पूजारी बिहान बेलुका दुई प्रहर पूजा गर्न जान्थ्यो र शिवजीको पूजा गरेर फर्कन्थ्यो । त्यसपछि मूर्ख जान्थ्यो र शिवलिङ्गलाई मुत्रस्नान गराएर फर्कन्थ्यो ।

एक दिन खोलामा यति ठूलो बाढी आयो, पुजारी पारि जानै सकेन । उता मूर्खलाई पनि समस्या पर्‍यो, जान त जानैपर्छ, दैनिकी पालना गर्नैपर्छ, तर जाने पो कसरी ? उसले रातारात खोला किनारको ठूलै रूख ढाल्यो र नदीमाथि तेर्स्याएर व्रत पूरा गर्‍यो ।

कालान्तरमा पुजारी पनि मर्‍यो र मूर्ख पनि मर्‍यो । पूजा भङ्ग गरे बापत् पुजारीलाई नर्कवास भयो, व्रत पूरा गरेबापत् मूर्खलाई स्वर्गवास भयो । यस कथाले सङ्केत गर्छ– भारतीले नर्कवास गर्नुपर्ने छैन ।

पूजा र व्रतको चर्चासँगसँगै ईश्वरीय सत्ता र आस्थाका कुरा जोडिएर आए । नगेन्द्र दाइले ईश्वरबारे आफ्नो धारणा सुनाउँनुभयो– 'पशुपति र गुह्येश्वरीजस्ता मान्छेले स्थापना गरेका मूर्तिमा म भगवान्‌को अस्तित्व देख्दिन । हो, म भगवान्‌को अस्तित्व त्यहाँ देख्छु, जहाँ अदृश्य अलौकिक रहस्यमय अनौठो अपारशक्ति हुन्छ । जस्तो कि गोहीले समुद्रकिनारको मरुभूमिमा खाल्डो खनेर फुल पार्छ र पुरेर समुद्रमा फर्कन्छ। जहाँ समुद्रीआँधीले बगरको रूपरङ्ग नै बदलिएको त्यो ठाउँ चिन्न नसकिने भएको हुन्छ । तर गोहीले दिन गनेर निश्चित् समयपछि सजिलै त्यो ठाउँ पत्ता लगाउँछ र बालुवा खोस्रेर फुलबाट निस्कँदैगरेका बच्चाहरूलाई मुखमा हालेर ओसार्दै समुद्रमा पुर्‍याउँछ । गोहीलाई त्यो चेतना कहाँबाट आयो ? हिउँद लागेपछि साइबेरियादेखि हजारौं माइल उडेर कर्‍याङकुरुङ कोशिटप्पु वा जगदीशपुर तालमा आउँछन् । जब वर्षा शुरु हुन्छ, ती सबै जसरी आएका थिए, त्यसैगरी फर्कन्छन् । तिनीहरूलाई यति दूरी उडिसकेपछि न्यानो ठाउँमा पुग्न सकिन्छ भन्ने चेतना कहाँबाट आयो ? सम्पूर्ण पशु पन्छीलाई बच्चा जन्माउन/हुर्काउन कसले सिकायो ? तिनका नवजात बच्चालाई आमाका थुन पहिल्याएर दुध चुस्न कसले सिकायो ? यस्ता अनेक दृष्टान्त छन्– यस्तै यस्ता रहस्यमय कुरामा म भगवान्‌को अस्तित्व देख्छु ।'

'रोक, रोक, गाडी रोक। बिर्के बालाई नभेटी जानु कहाँ भयो र ?' यसैबीच देविका तिमिल्सिना चिच्याए– उनको चिच्याहटसँगै हाम्रो ध्यान भङ्ग भयो ।

कुरा बुझियो, घाँसीकुवा आइपुगेछ ।

अझ पनि भ्रममा छ घाँसीकुवा । भानुभक्तका खनाति प्रा. व्रतराज आचार्यले स्पष्ट लेखेका छन्– 'भानुभक्तले घाँसीलाई भेटेको कुवा यो हुँदै होइन । ससुरालीमा पुराण भन्न तनहुँको चुँदीरम्घाबाट पाँच कोस टाढा लमजुङको मानुङ जाँदै गरेका भानुभक्त तीन कोस हिँडेपछि थाके र कुर्लुङ बेसीको कुवाको पानी खाएर नजिकैको चौतारोमा आड लगाएर ढल्किए । थाकेका भानुभक्त भुसुक्कै निदाएछन् । उठ्दा त एउटा घाँसी घाँस बोकेर उभिएको । परिचय भएपछि पो थाहा भयो– भानुभक्तले पानी खाएको कुवा त तिनै घाँसी चामुनारायण पन्तले खनेका रहेछन् ! मनुष्यको जीवन लिएर आएपछि कीर्तिमानी काम गर्नुपर्छ भन्ने प्रेरणा तिनै पन्तबाट पाएपछि भानुभक्तले पनि रामायण लेखेर कीर्ति राख्ने सोच बनाए ।'

भानुभक्तलाई आदिकवि बनाउनका लागि पन्तहरूले ठूलै भूमिका खेलेका छन्– बागलुङको पं. बद्रीदत्त पन्तको पिँढी पाठशालामा पढेर शिक्षार्जन गरेका थिए भानुभक्तले । बद्रीदत्तकै काकाभाइ महाकवि वीरशाली पन्तबाट पनि कविता लेख्ने अभ्यास गरेका थिए भानुभक्तले । तर अचम्म लाग्छ, भानुभक्तले कतै पनि आफ्ना गुरुको नाम लिन किन कन्जुस्याइँ गरेका होलान् ! यो कुवा, त्यो कुवा होइन भन्ने स्पष्ट प्रमाण– रम्घाबाट मानुङ जाँदा यो बाटो ठीक उल्टो पर्छ भन्ने पनि हो ।

हामीले प्रतिनिधि पात्रको रूपमा सँगसँगै ठडिएका दुईवटा स्तम्भमाथि बसेर कुरा गरिरहेका भानुभक्त र घाँसीलाई भेट्यौँ । प्रतिनिधि कुवा हेर्‍यौँ, चिया खायौँ, तुर्तुरे रोगको औषधी गर्‍यौँ र अघि बढ्यौँ ।

हो, हामीले साहित्यकारहरूका बारेमा पनि लहैलहैमा लागेर भ्रम दोहोर्‍याइरहने काम गरिरहेका छौँ । एउटाले जे लेखिदियो, त्यसैको पछि दौड्ने चलन छ हाम्रो । अध्ययन गर्ने चलन छैन । उदाहरणका लागि नित्यराज पाण्डेले महाकविको 'पूर्णिमाको जलधि' (१९९१) लाई प्रथम कविता भनेर लेखिदिएपछि करिब आधा शताब्दी त्यही कुरा कायम रह्यो । कमल दीक्षितको सहयोगमा १९८५मा गोपमा प्रकाशित 'वसन्त शोडषी' कविता 'रचना' पत्रिकामा छापिएपछि इतिहास उल्टियो ।

कुन्नि कहाँ पुग्दा योगका कुरा पनि उठेका थिए । योगबारे पनि नगेन्द्र दाइको सहमति थिएन । धर्मबारे पनि उहाँको मत मिल्दैनथ्यो । वैदेशिक रोजगार बारे पनि उहाँ फरक मत राख्नुहुन्थ्यो ।

'धर्म के हो ? नबुझ्नेले पनि यहाँ धर्मको व्याख्या गरिरहेका छन् । धर्म र अध्यात्ममा के फरक छ ? यसबारे पनि स्पष्ट हुन सक्तैनन् धर्म धान्ने ठेकेदारहरू । योग कस्तो अवस्थामा गरिन्छ ? बुझाउनेले कर्मकाण्डीय पद्धतिबाट बुझाइरहेका छन् । वास्तवमा अल्छीका लागि हो योग, कर्म गरिरहनेलाई, हातखुट्टा बजारिरहनेलाई योग किन चाहियो ? कामका लागि विदेश जानहुन्न भन्नेहरू त झनै मूर्ख हुन् । युवा बाहिर नगएर बसे भने बर्षेनी उत्पादन हुने चार लाख बेरोजगार युवालाई कसले कहाँ रोजगारी

दिन्छ ? पहिले रोजगारीको व्यवस्था मिलाइदिनुपर्छ र मात्र भन्नुपर्छ– विदेश जानहुन्न । अन्यथा विदेशबाट रेमिट्यान्स आएन भने देश कसरी चल्छ ?

काठमाडौं निकट हुँदै जाँदा साथीहरूका अनुहार फुङ्ग रङ उडेजस्ता निन्याउरा देखिन थाले। अर्को शब्दमा कागती निचोरिएजस्ता अथबा लज्जावती झारजस्ता देखिन्थे । आजसम्म पो स्वच्छन्द जीवन जिउन पाइएको थियो । घर पुगेपछि फेरि गृहमन्त्रीको शासनसत्तामा नपरी हुन्न । उही चारदिन अघिको निरन्तरता– यसो गर्नू, 'हुन्छ' । उसो गर्नू, 'हुन्छ' । ठीक टाइममा घर आउनू, 'हुन्छ' । श्रीमतीको आज्ञापालन– पुनर्मुषिको भवः ।

समाप्तितिरको यात्रा वार्ताभन्दा पनि सङ्गीत प्रिय बनेको थियो हामीलाई ।

- म के छु र राम्रो, मायाको हेराइ हो राम्रो... ।
- आयो गयो फेरियो व्यवस्था, आफ्नो भने उस्तै छ अवस्था... ।
- जति जवानी चढ्दै गयो, उति भाउ बढ्दै गयो... ।

मैले मस्तिष्कमा टिपोट गरेका गीतका बोलहरू यस्तै यस्तै थिए । हामी गीतका शब्दमा भन्दा सङ्गीतको मिठासमा मस्त थियौँ । तर चालक सेरप वाइवासँग न हाम्रो उमेर मिल्थ्यो, न चाहना । उनी भने केटी पटाउने सपनामा अलमस्त थिए । उनले दोहोऱ्याई तेहऱ्याई गीत बजाइरहेका थिए–

- 'केटी पटाउनलाई अनेक गफ गर्ने हो
  मिसन पूरा भएपछि मोबाइल अफ गर्ने हो ।'

नपत्याउँदो गरी हामी छ घण्टामै काठमाडौं भित्रियौं ।

गौरीघाटबाट घरतर्फ उकालो लाग्दै गर्दा मैले मनमनै चाहना गरें– मेरा लागि 'न भूतो' भएको यो चतुर्दिवशीय यात्रा 'न भविष्यति' नहोस् । तर यात्रा गर्ने भूगोल फरक होस्, प्रकृति फरक होस् र अपूर्व अनुभूति प्राप्त होस् ।

ଓଓ

# मलाई अभिव्यक्ति अद्योपान्त पठनीय लाग्छ

वासुदेव त्रिपाठी

२०२७साल फागुन ७ गतेदेखि प्रकाशित हुन थालेको 'अभिव्यक्ति' (दुई महिने साहित्यिक) पत्रिकाको सयौं अङ्क प्रकाशित हुन लागेकोमा म हृदयदेखि नै प्रसन्नता अनुभव गर्दैछु । यो शतकप्रवेश एक गौरवपूर्ण क्षण हुँदै हो । म यस पत्रिकामा यसका सुयोग्य सम्पादक श्री नगेन्द्रराज शर्माको सौम्य र शिष्ट अनि सुरुचिपूर्ण व्यक्तित्वको प्रतिबिम्ब पाउँछु र म यो पत्रिका भेट्टाउनकासाथ छिटो भन्दा छिटो पढ्न (पढिसक्न) लालायित हुने गर्छु । म यस पत्रिकाको प्रत्येक अङ्कका सामग्रीचयन, सामाग्रीविन्यास र छपाइमा पनि सम्पादकीय मिहिनेत र संचेतता सुस्पष्ट छाप परिरहेको पाउँछु र यो पत्रिका पढ्दा मलाई पाठकिय सन्तुष्टिको अनुभव हुन्छ । हालसम्म प्रकाशित भइरहेको अनेक नेपाली साहित्यिक पत्रिकाहरूमध्ये यो पत्रिका मेरो एक प्रिय पत्रिका हो । सबैजसमो उमेर समूहका, धाराका र प्रवृत्तिका नेपाली लेखकका स्तरीय विविध रचनाको सक्दो समावेश गर्ने उत्तरदायी र उदार सम्पादकीय दृष्टिकोणलाई यस पत्रिकाले पालन गर्दै आएको म पाउँछु र त्यसैले गर्दा यो पत्रिका मलाई विशेष मनपर्छ । मोफसलका लेखकलाई सक्दो प्राथमिकता दिने जुन अघोषित (र घोषित पनि) प्रयास यस पत्रिकाले गर्दै आएको छ त्यो पनि मलाई धेरै राम्रो लाग्छ । लेखकका प्रसिद्धि, नामभन्दा पनि कृतिको पठनीयता र स्तरियतालाई ज्यादा महत्वदिने सम्पादकीय झुकाव यस पत्रिकाले देखाउँदै आएको छ । त्यसले गर्दा यस पत्रिकाका विभिन्न अंकमा नयाँ पुरानाँ अनि स्थापित र उदीयमान सबै प्रकारका लेखकले स्थान पाइरहेको अनुभव म पाठकको रूपमा गर्दछु । त्यसैले गर्दा मैले बारम्बार भन्दै आइरहेको छु– ''अभिव्यक्ति' एउटा अद्योपान्त पठनीय पत्रिका हो।'

विगत तीस वर्षका ९९ अङ्कका माध्यमबाट 'अभिव्यक्ति' पत्रिकाले नेपाली पाठकहरूका माझ र नेपाली साहित्यका समकालिन इतिहासमा पनि आफ्नो विशिष्ठ स्थान बनाइसकेको छ । यसले मोटा मोटा विशेषांक निकाल्ने तर्फ उति रुचि नदेखाएपनि यसका कतिपय अङ्कहरू विशेषङ्कसमकक्ष रहेका छन्, जस्तै हरिभक्त कटुवाल स्मृति अङ्क (पूणाङ्क २८), कवितारामको 'अस्वीकृत मान्यता' सम्बन्धी अङ्क (पूणाङ्क ५९), 'अभिव्यक्ति'कै सोधपत्रको अङ्क (पूणाङ्क ७७), कविता अङ्क (पूर्णाङ्क ७८), कथा अङ्क (पूर्णाङ्क ७९) आदि आदि। यस पत्रिकामा प्रायः कथा, कवित, गीत, गजल, लेख-निबन्ध, समालोचना अनि हास्य व्यंग्य आदि स्तम्भको संयोजनबाट बन्न पुगेको प्रत्येक अङ्कको समष्टि पाठ्यरूप रोचक र स्तरीय समेत हुने गर्दछ। छपाइमा भाषाशुद्धिका निम्तिको सचेतता पनि सराहनीय देखिन्छ । यस क्रममा यस पत्रिकाका विभिन्न अङ्कमा प्रकाशित रचनामध्ये कतिपय त साहित्यिक विधागत दृष्टिले पनि चिरस्थायी महत्वका समेत हुने गरेको मैले पाएको छु । यस पत्रिकाका स्तम्भहरू मध्ये यायावरका–'यताउतिबाट', 'जमघटहरूबाट' र 'बल्ल पो

थाह भो' मलाई विशेष मनपर्छन्– 'पर्यावलोकन' र 'पाठक पत्रांश' पनि मनपर्छन् । यस पत्रिकाका कतिपय सम्पादकीयहरू हाम्रा समयुगीन साहित्यिक पर्यावरणका सर्न्दभमा निकै गहकिला, चित्तबुझ्दा र घतलाग्दा हुने गरेको मैले अनुभव गरेको छु । यस्ता सम्पादकीयमा परिपक्व, शालीन र विचारपूर्ण सम्पादकीय कलमको छाप प्रायः मैले पाएको छु र त्यो मलाई मनपर्छ ।

'अभिव्यक्ति' पत्रिका पढ्ने क्रममा मैले कुनैपनि रचना 'बाकी...... यति पृष्ठमा' भनी टुक्राएर प्रस्तुत गर्ने प्रवृत्ति पाइन । साथै लेख-रचना जति नै लामो भए पनि त्यसलाई धारावाहिक रूपमा नदिई सिङ्गोरूपमा एउटै अङ्कमा प्रस्तुत गर्ने तर्फ यस पत्रिकाले देखाएको झुकाव पनि राम्रै कुरा हो । कुनै लेख रचना टुंगिई कुनै पृष्ठमा खाली हुन आउने ठाउँमा विभिन्न पुस्ताका नेपाली साहित्यकार र विद्वानहरूका नै उक्ति सुक्ति खोजी खोजी प्रस्तुत गर्ने जुन परिपाटी यस पत्रिकाले बसालेको छ त्यो पनि उल्लेखनीय एवं प्रशंसनीय छ । यसका विभिन्न अङ्कका अग्र आवरण पृष्ठमा– इन्द्रप्रधान, उत्तम नेपाली, विजय थापा, शशी शाह, मनुजबाबु मिश्र, टेकवीर मुखिया, हेम पौडेल, नरेन्द्रबहादुर श्रेष्ठ, मदन चित्रकार, मुकेश मल्ल, वत्स गोपाल, जीवन आचार्य, रमेश पौडेल आदि विभिन्न ख्यातिप्राप्त नेपाली कलाकारहरूका कलात्मक चित्रहरूको सूरुचिपूर्ण समावेश तर्फको यस पत्रिकाले देखाएको चासो पनि उल्लेखनीय छ र ती आवरण चित्र पनि मलाई मन पर्छन् । यस 'दुई महिने' वा 'आर्तव' भनिने पत्रिकाले लगभग तीन दशकको बीचमा 'सयौं अङ्क'को प्रकाशन तर्फ उन्मुख भइ ऋतुगत रूपमा नियमित हुन नभ्याएपनि जुन अद्यावधिक स्थायित्व प्राप्त गर्न सक्यो त्यसको प्रसंसा गर्नै पर्छ । न्यूनतम विज्ञापन आम्दानी र सीमित वास्तविक विक्री आम्दानीका बीच पनि यहाँसम्म यो पत्रिका आइपुग्नु अवश्य नै अतिशय कष्टसाध्य कुरा हो र सम्पादक नगेन्द्रराज शर्माको प्रचुर भौतिक लगानी र अथक श्रमको, अनि प्रशस्त अध्यवसायशीलताको परिणामस्वरूप नै यो पत्रिका यसरी यहाँसम्म आउँन सकेको हो । म यस पत्रिकाको स्थायित्वको हार्दिक कामना गर्दछु र उहाँको कर्मठ जीवन रहेसम्म यस पत्रिकाको स्थायित्वको प्रत्याभूति पक्कै छ भन्ने पनि मान्दछु ।

विगत तीन दसकबीच उदाएका अनेक (स्वदेश-विदेशका) नेपाली साहित्यिक पत्रिकामध्ये थोरैमात्र आजसम्म टिकेका छन् ती तीमध्येको एक अगुवा पत्रिका 'अभिव्यक्ति' हुँदै हो । यो 'अभिव्यक्ति' पत्रिका यसका प्रकाशक/सम्पादक वरिष्ठ साहित्यकार/साहित्यसेवी नगेन्द्रराज शर्माको शान्त शालीन र रचनात्मक व्यक्तित्वका अभिव्यक्ति प्रतिबिम्बका रूपमा स्थापित हुन पुगेको छ र धेरै धेरै नेपाली पाठकहरूका सुरुचिपूर्ण पाठकीय स्मृतिमा यसले आफ्नो विशिष्ट स्थान बनाइसकेको छ । म फेरि पनि भन्छु– मलाई यो 'अभिव्यक्ति' पत्रिका आद्योपान्त पठनीय लाग्दछ र म यसको प्रत्येक नयाँ अङ्कको प्रकाशनको उत्सुकतापूर्ण प्रतीक्षा गर्ने गर्दछु ।

ƆƆ

# म र मेरो नेपालगन्ज

सृजन लम्साल
नेपालगन्ज

अन्ठाउन्न वर्ष भएछ मैले नेपालगन्जको भूमिमा पाइला टेकेको । एक व्यक्तिको लागि यो अवधि थोरै हैन । एउटा सिङ्गो सक्रिय जीवन अटाउन सक्छ यसमा । लगभग ६ दशकसम्मको यो अवधिमा नेपालगन्जले मलाई पालन पोषण मात्र गरेन, जीवन मार्गमा डोऱ्यायो, शिक्षादीक्षा दिएर चेतनाको यो स्तरसम्म पुऱ्यायो । अहिले म जे हुँ र जे छु त्यो नेपालगन्जकै देन हो । म नेपालन्जको अभिन्न अङ्ग हुँ भने नेपालगन्ज मेरो अभिन्न शखा वा मित्र हो । नेपालगन्जका गल्लीगल्ली, टोलटोल वा चोक चोकमा मेरो विम्ब विद्यमान भएको महशुस गर्दछु म । यहाँको हवा पानी वा प्रकृति समेत मेरा अभिन्न मित्र हुन् । त्यसैले यहाँ म सर्वत्र छु । नेपालगन्जले मलाई माया गर्छ । मैले नेपालगन्जलाई माया गर्छु । दोहोरो छ हाम्रो माया पिरति !

विन्दास भएर बालबय व्यतीत गरेको क्रीडाभूमि हो यो मेरो नेपालगन्ज ! भोक न भकारी, शोक न सुर्तासंग हाट बजार वा मेला पर्वहरूमा हराउँदाका ती दिनहरू, तालतलैया र पोखरीहरूमा पौडी खेलेर रमाउँदाका ती दिनहरू, आँपका घना बगैंचामा टपका आँप बटुल्न हिंड्दाका ती दिनहरू, रामलीलाका झाँकीहरूमा पछिपछि दौडँदाका ती दिनहरू सम्झँदा अहिले पनि म विन्दास हुन्छु । ती सम्झनाहरू अटाई नअटाई छन् मभित्र । मैले तिनलाई हृदयमा सजाएर राखेको छु । ती दृश्य वा ती चित्रहरू क्यामरामा झैं मेरो स्मरणमा सुरक्षित छन् । चाहेको बेला म क्लिक गरेर हेर्न सक्छु । मेरो स्मरणको क्यामरामा प्रजातन्त्र अपहरण हुँदाका चित्रहरू पनि छन् । ०१७ पुस १ गते प्रजातन्त्रलाई अपहरण गरेर पंचायती व्यवस्था लागु गर्ने समाचार लेखिएका पर्चाहरू हवाई जहाजले छरेपछि तिनलाई बटुल्न शहरका गल्लीगल्ली र शहर बाहिरका चउरहरूमा दौड्ने, ती पर्चा बटुलेर केकेन उपलब्धी गरें भन्ठान्ने एक अज्ञानी केटो, खसियारीको समयमा नेपालगन्जको हटारू बजारको रामरमिता हेर्दै मस्तसँग रल्लिने एक अल्लारे ठिठोलाई आज म सम्झन्छु । आज तिनै ठाउँहरूमा हिँड्दा डुल्दा वा घुम्दा बृद्धावस्थाको शिखरमा पुग्नैं आँटेको एउटा धवल केशयुक्त पुरुष नभएर उही अज्ञानी अल्लारे ठिटो बिन्दास भएर सडकमा रल्लिंदै हल्लिंदै हिँडिरहेको अनुभूति गर्दछु म ।

नेपालगन्ज मेरो ज्ञानभूमि हो । म ती श्रद्धेय मानीषिहरूलाई सदासर्वदा नतमस्तक भएर नमन गर्दछु जसले मभित्रको अचेतन र अज्ञानताको अन्धकाररूपि जालोलाई च्यातेर मभित्र ज्ञान र चेतनाको ज्योति बाल्ने काम गर्नुभयो । ती श्रद्धेय गुरुहरू हुनुहुन्छ– रुद्रपतिलाल कर्ण, मोहनलाल श्रेष्ठ, भगवतीप्रसाद दुवेदी, रामबहादुर बाँणा, महावीरप्रसाद श्रीवास्तव, फत्तेबहादुर सिंह, रामेश्वर शर्मा (मजगैयाँ) केशवसिंह सिजापति आदि । मेरा लागि उहाँहरू सबै ज्ञानज्योति बाल्ने प्रकाश हुनुहुन्छ ।

ज्ञान दान गर्ने ती गुरुहरूमध्ये मैले सर्वाधिक आदर गर्ने गुरु हुनुहुन्छ शिक्षाप्रेमी मनीषि श्री रुद्रपतिलाल कर्ण जो मंगलप्रसाद साहू पछि नेपालगन्जको ज्ञानदीप प्रज्वलन गर्ने दोस्रो व्यक्ति हुनुहुन्छ । नेपालगन्जमा शिक्षाको प्रथम शीला श्री मंगलप्रसाद साहूले खडागर्नु भएको हो भने दोस्रो महत्वपूर्ण शीला श्री रुद्रपतिलाल कर्ण कायस्थले खडा गर्नु भएको हो । उहाँले स्थापना गर्नु भएको पर्णकुटी 'महेन्द्रनाइट एकेडेमी' मा मजस्ता दिउँसो जागिर खाने वा अन्य पेशा गर्ने, दिवा विद्यालयमा पढ्न नसक्नेहरूले पढ्न पाउँथे । त्यो पर्णकुटीले शिक्षाको बलियो जग हाल्यो जो अहिले महेन्द्र माध्यमिक विद्यालयको नामले विख्यात छ र स्तरीयताको दृष्टिले शीर्षस्थानमा गनिन्छ । यसो हुनुको कारण श्री रुद्रपतिलाल कर्णले हाल्नु भएको बलियो जग नै हो । कर्ण सरमा शिक्षाप्रति गहिरो अनुराग थियो, त्याग थियो, शिक्षण शिल्प थियो र कडा अनुशासन थियो । उहाँ परिश्रमी र कडा प्रशासक पनि हुनुहुन्थ्यो । त्यसैले उहाँ त्यस संस्थाको जग बलियो बनाउन सफल हुनुभएको हो । त्यसैले उहाँलाई अत्यन्तै श्रद्धा गर्दछु र उहाप्रति म सदासर्वदा नतमस्तक छु ।

ज्ञान आर्जनको मेसोमा एउटा नाम लिन छुटाएँ भने म कृतघ्न हुनेछु जस्तो लाग्दछ । उहाँ हुनुहुन्थ्यो नेपालगन्जका ख्यातनामा व्यक्तित्व विद्याका धनी, विद्याकुटीर पुस्तक पसलका मालिक श्री गोपाल शर्मा रेग्मी जसको सहयोगले मैले राम्राराम्रा पुस्तकहरू अध्ययन गर्ने सुअवसर प्राप्त गरें । त्रिभुवन चोकमा पसल थियो उहाँको । म त्यहाँ दैनिक जस्तो पुग्दथें । कुनै राम्रो पुस्तक आएको छ भने उहाँ आफैले 'यो पढ्न लायक पुस्तक छ बाबु' भन्नु हुन्थ्यो । पुस्तक किन्ने पैसा नभएको अवस्थामा पनि कि त उधारो दिनुहुन्थ्यो कि पढेर फिर्ता गर्नु भन्नु हुन्थ्यो । उहाँकै अनुग्रहले ममा पुस्तक पढ्ने बानी बसेको हो । त्यस कारण उहाँले मलाई नपढाएता पनि पढ्ने काममा सहयोग पुऱ्याउनु भएको हुँदा उहाँ मेरो गुरुतुल्य हुनुहुन्थ्यो । संयोग यस्तो पर्न गयो कि पछि गएर उहाँले आफ्नी जेष्ठ पुत्री मलाई कन्यादान गर्नु भएकोले उहाँ पितातुल्य पनि हुन पुग्नु भयो ।

नेपालगन्ज मेरो कर्मभूमि हो । नेपालगन्जले नै मलाई काम गर्न सिकायो । सानो ठूलो जे जस्तो काम मैले यसै शहरमा बसेर गरें, मौका पाएँ भने पछि त्यो विस्तृत रूपमा लेखौंला । अहिले म यत्ति भन्छु कि मलाई कर्म पथमा डोऱ्याउने, कर्मको मर्म सिकाउने कर्मगुरु पनि नेपालगन्ज नै हो । मलाई कर्मपथमा हिँडाउने, कर्मगर्ने प्रेरणा दिने र काम समेत दिने मेरा कर्मप्रेरक व्यक्तित्व घरवारीटोल नेपालगन्जका डा. कृष्णजङ्ग राणा हुनुहुन्छ । उहाँले मलाई कर्म पथको प्रथम खुडकिलो चढाउनु भयो, अग्रगमनको प्रेरणा दिनु भयो, स्वावलम्वन सिकाउनु भयो । उहाँ नभएको भए मेरा ज्ञान आर्जन र आय आर्जनका दुईटा बाटाहरू सँसँगै हिँडन सक्ने थिएनन् । उहाँले गर्दा नै यी दुईटा बाटाहरू मेरो जीवनमा हलगोरुझैं सँगसँगै हिँडीरहे र त मेरो जीवन चक्र चलिरहेको छ अहिलेसम्म पनि ।

मेरो कर्मक्षेत्रका दुईटा पाटा छन् । एउटा पाटो पेटको तुष्टिको लागि

गर्ने कर्म र अर्को पाटो मानसिक सन्तुष्टिकोलागि गर्ने कर्म । यी दुई मध्ये प्रमुख चाहिं पेट पाल्ने काम अर्थात् आयआर्जन सम्बन्धी कर्म हो जसबाट मैले आफ्नै खुट्टाले टेकेको जीवन उभिएँ र त्यसलाई डोऱ्याएर यहाँसम्म ल्याइपुऱ्याएँ । त्यसको लागि मैले नेपालगन्जमा पाइला टेकेदेखिनै संघर्ष गरें । मैले माथिनै भनिसकेको छु, मलाई कर्मक्षेत्रको पहिलो खुडकिलोमा उभ्याउने श्रेय डा. कृष्णजङ्ग राणालाई छ । औलो उन्मूलन संघमा जागिरको अवसरको मात्र कुरा गरेको हैन, उहाँले मलाई जीवनमा अगाडि बढ्ने प्रेरणा र हौसला निरन्तर दिइरहनु भयो । तदनुरूप नै मैले नोकरीका साथै शिक्षा आर्जनलाई पनि समानान्तर रूपमा अगाडि बढाएँ र राष्ट्रिय वाणिज्य बैंकको स्थायी सेवामा प्रवेश गरेर करीब तीन दशकसम्म बैंकको विभिन्न प्रशासनिक तहहरूमा रहेर आफ्नो जीविकाको लागि नै सही मैले बैंकको मात्र हैन देश र जनताको सेवा इमानदारी पूर्वक खरो र दरो भएर गरें । त्यसो गर्दा मैले कतिपय झन्झट-झमेलाहरूको सामना पनि गर्नु पऱ्यो तर म हारिन । अहिले बैंकले प्रदान गरेको निवृत्तिभरणबाट मेरो गुजारा भैरहेको छ र मेरो जीवन गँड्यौलाको गतिमा अगाडि घस्रिरहेको छ ।

मानसिक संतुष्टिवाला जुन कर्मक्षेत्र छ त्यो पहिलो जस्तो अनिवार्य हैन, ऐक्षिक हो । पेटको भोक नमेटिएसम्म मस्तिष्कको भोक लाग्न पनि सक्दोरहेनछ । पेटको भोक मेटाएपछि मात्र फुर्सतको समयमा साहित्य तर्फ कनीकुथी गर्ने मेसो हो मेरो । त्यो मेसो पनि मैले आई.ए. र बी.ए.मा साहित्य विषय लिएर पढेको हुनाले जुरेको हो र त्यसतर्फको भोक जागेको हो । साहित्य अध्ययन गर्ने शिलशिलामा मलाई कालीदास, भानुभक्त आचार्य, लक्ष्मीप्रसाद देवकोटा, लेखनाथ पौड्याल, मेक्सिम गोर्की, शेक्सपीयर, विलियम वर्डस्वर्थ कीट्स, बर्नार्ड श, भर्जिनियाँ उल्फ, पर्ल एस बक, वर्टेण्ड रसेल, गुलाब राय, कुबेरनाथ राय, हजारीप्रसाद द्विवेदी, धर्मवीर भारती, नरेन्द्र कोहली, रांगेय राघव, शरद जोशी आदि जस्ता कवि तथा लेखकहरूका रचना र विचारले गहिरो प्रभाव पारेको हुनाले साहित्य अध्ययन गर्ने रुचि बढेको हो । त्यही रुचिको फलस्वरूप मैले कलम पनि समात्न थालेको हुँ । म आई.ए.मा पढने बेलासम्म अर्थात् २०२२/०२३ सालसम्म नेपालगन्जमा साहित्यिक वातावरण शून्य बराबर थियो भनेपनि हुन्छ तर प्रेम पुस्तकालय तथा नेपाल-भारत सांस्कृतिक केन्द्रले गर्दा पढ्ने वातावरण भने नेपालगन्जमा राम्रो थियो ।

२०२२ सालमा भीमनिधि तिवारी नेपालगन्ज आउनु भएको थियो । उहाँको आतिथ्यमा तत्कालीन बाँके बर्दिया गोश्वारामा साहित्यिक कार्यक्रम भएको थियो । म पनि त्यो कार्यक्रममा कविता सुन्न भनेर उपस्थित भएको थिएँ । भीमनिधि तिवारीले तीनचारवटा कविता पाठ गरेर नेपालगन्जका साहित्यप्रेमीहरुलाई चकित पार्नु भएको थियो । उहाँको कविता पाठ गर्ने नाटकीय शैलीले म निकै प्रभावित भएँ । उहाँले पाठ गरेका कविताहरू मध्ये 'यस्ती छन् मेरी श्रीमती' र 'लाहुरी भैंसी' मैले कन्ठस्थ पारेको थिएँ । धेरै पछिसम्म पनि मैले ती कविताहरू सम्झी रहें, पाठ गरिरहें ।

त्यसपछि भने नेपालगन्जमा साहित्यिक वातावरण बन्दै गयो । भीमनिधि तिवारीका कविता सुनेपछि मलाई छन्दविना पनि कविता हुँदोरहेछ भन्ने ज्ञान भयो र मैले पनि कलम चलाउन थालें । मेरो पहिलो रचना ‘पुतली’ शीर्षकको कविता हो जो २०२६ सालमा म पढ्ने कलेजको मुखपत्रमा छापिएको थियो । त्यसपछि कलेजमा महाकवि लक्ष्मीप्रसाद देवकोटाको विषयमा निबन्ध प्रतियोगिता हुँदा प्रथम भएर पुरस्कार समेत पाएकोले म त्यसैबाट हौसिएको हुँ । गुरुहरू– शिवराज सिंह र रामेशवर शर्मा मजगैयाँले ‘तिम्रो लेखन शैली राम्रो छ, लेख्दै जाऊ’ भनेर हौस्याएको हुनाले कनीकुथी गर्दै लेखन कार्यलाई कछुवा गतिमा अगाडि बढाएको हुँ । मेरा प्रारम्भिक कालका केही कविता तथा निबन्धहरू कलेजका मुखपत्रहरू साप्ताहिक किरण र सिर्जना, समय, दियालो, लाँकुरी, मनोभाव आदि सहित्यिक पत्रिकाहरूमा छपिएका छन् । कलेजभन्दा बाहिरको वातावरणबाट साहित्य सिर्जना गर्न मलाई प्रेरणा र हौसला दिने र ती सिर्जनाहरूलाई पत्रपत्रिकामा छपाउन सहयोग गर्ने साहित्यिक व्यक्तित्वहरू हुनुहुन्थ्यो सर्वश्री सनत रेग्मी, वि.विकास, इन्द्रमणि मानव र नन्दराम लम्साल ।

मैले माथि नै भनिसकें नि पहिलो प्राथमिकता पेटलाई भनेर ! पेटको पिरलोले सताएर मलाई टाढाटाढका दुर्गम ठाउँहरूमा समेत जान परेको र आफूले बोकेको प्रशासनिक कामको जिम्मेवारीको भारीले गर्दा २०३८ देखि २०५० सम्म मेरो कलमको विर्को नै उघ्रन सकेन । बाह्र वर्षसम्म खिया परेको त्यो ठुटे कलमले सिर्जनाको सि समेत कोर्न सकेन । त्यसपछि भने मलाई मेरा केही समकालीन साथीहरूको डाह लाग्यो । ती साथीहरू थिए सर्वश्री सनत रेग्मी, शैलेन्द्र साकार, काशीनाथ तमोट, विनय रावल आदि, ती साथीहरू अगाडि बढेको देखेर म पिरोलिएँ । लेख्ने विषयको खोजी शीर्षकको निबन्ध लेखें र डाहको तुस त्यहीँ पोखें र बाह्रवर्षसम्म बिर्को नखुलेर खिया लाग्न खोजेको कलमलाई पुनः घोट्न थालें ।

यसरी १२ वर्षसम्म कुम्भकर्णको निद्रा निदाएर २०५० साल देखि साहित्यिक पुनरलेखन कार्य प्रारम्भ भएदेखि अहिलेसम्म तीनवटा निबन्ध संग्रह (१) नैतिकता हराएको सूचना २०५५, प्रकाशक– मध्यपशिचमान्चल साहित्य, संस्कृति कला प्रतिष्ठान बाँके (२) प्रजातन्त्र गणित र डिप्रेसन २०६०, प्रकाशक– नेपाल प्रज्ञाप्रतिष्ठान काठमाडौं (३) विस्थापित मुड २०६८, प्रकाशक– साझा प्रकाशन पुल्चोक काठमाडौँ रहेका छन् भने दुईटा नियात्रा संग्रह (१) आँगनदेखि सागरसम्म २०६२, प्रकाशक– बगर फाउन्डेसन नेपाल (२) भित्र बाहिरका पाइला २०७३, प्रकाशक– मध्यपशिचम स्रष्टा समाज नेपालगन्ज रहेका छन् । कविता विधामा एक मात्र कविता संग्रह मलाई नक्साभित्रको देश चाहिन्छ २०६९, प्रकाशक– मध्यपीश्चम स्रष्टा समाज नेपालगन्ज रहेको छ । त्यसैगरी कथा विधामा हालसम्म एकमात्र कथा संग्रह विपतरामको मानचित्र २०७०, प्रकाशक– तन्नेरी प्रकाशन काठमाडौं रहेको छ । मेरा प्रकाशोन्मुख कृतिहरूमा निबन्ध संग्रह दुई, लघुकथा संग्रह एक र

लम्साल बंशावली एक रहेका छन् । त्यसबाहेक अन्य कृतिहरू भने भविष्यको गर्भ भित्रै छन् । साहित्यिक सिर्जनाको क्षेत्रमा मैले सम्पन्न गरेका उपरोक्त कर्महरू नेपालगन्जमै बसेर रेको हुँ । ती कर्महरू गर्ने प्रेरणा र अवसर पनि नेपालगन्जले नै प्रदान गरेको हो ।

अब प्रश्न उठ्दछ माथि उल्लेख गरिएको कर्मको पहिलो पाटोले कमसे कम पेट पाल्ने काम त गर्‍यो तर दोस्रो चाहिँ पाटोले के गर्‍यो त ! यस्को उत्तरमा मैले भन्ने गरेको छु– मानसिक सन्तुष्टि दिने काम गर्‍यो, त्यो बाहेक अरू केही गरेन ।

मैले साहित्य सिर्जना गर्दा सबै मान्छेलाई आफ्नै विचारमा ढाल्छु भनेर लेखेको पनि हैन । पाठकको रुचि बुझेर व्यवसायिक लेखन गरेको पनि हैन, आफ्नो क्षमताभन्दा बढी चर्चित हुन खोजेर विज्ञापन गर्दै हिँडेको पनि हैन । मैले गरेका साहित्य सिर्जनाहरूबाट आर्थिक लाभ प्राप्त गर्ने छु भन्ने सोचेर वा मैले साहित्य सिर्जना गरेबापत् कसैले आर्थिक लाभ हुने मान् सम्मान् वा पुरस्कार देला भनेर आश गरेको पनि हैन । राज्यले हेरेन वा केही दिएन भन्ने गुनासो पनि छैन । राज्यले हेरेको वा टेवा दिएको वा आर्थिक लाभ दिएर लेखेको साहित्य साहित्य नभएर लाभ दिने पक्षको गुणगान वा यशगान मात्र हुन सक्दछ । त्यस्तो साहित्यमा सर्वजन हिताय, सर्वजन सुखायको भावना परिलक्षित हुँदैन । त्यसैले म कसैको लागि भनेर साहित्य सिर्जना गर्दिन । म आफ्नै आत्मसुख, आत्मसन्तुष्टि वा आत्मशान्तिको लागि लेख्दछु । म राष्ट्र र राष्ट्रियताको पक्षमा उभिंदा, मैले सत्य र मानवताको पक्षमा बोल्दा, अन्यायको विरुद्धमा मुख खोल्दा, अन्यायी, अत्याचारी, भ्रष्टाचारीहरूलाई दण्ड र पीडित निमुखालाई न्याय दिएर व्यङ्ग्य बोल्दा वा लेख्दा मभित्रको आत्मा खुशी हुँदोरहेछ, शान्ति महसुस गर्दोरहेछ । हो त्यही आत्मसुख, आत्मसन्तुष्टि र आत्मशान्तिको लागि म कलम चलाउँदोरहेछु । मेरो कलममाथि बन्दुकले आक्रमण गर्दा मेरो कलमले हारेता पनि बन्दुकको गोली सकिएपछि भने मेरो कमलको नै जीत हुँदोरहेछ । त्यो बेला पनि मभित्रको आत्मा हाँस्दो रहेछ । त्यसैले मेरो विचारमा साहित्य लेखन भनेको आत्माको पुकार हुँदोरहेछ जो जीवन र जगतसँग सम्बन्धित हुँदोरहेछ ।

मेरो आस्था र विश्वासको देवभूमि पनि हो नेपालगन्ज जहाँ शिवशक्तिस्वरूपका जुङ्गे महादेव र आस्थाकी देवी दैवीशक्तिस्वरूपा बागेश्वरी माताको बासस्थान छ । सुखको समयमा मान्छेलाई भगवान् वा ईश्वर कोही पनि चाहिँदैन । सुख र सोखले मात्तिएर मै हुँ ईश्वर भन्नसम्म भ्याउँछ मान्छे । तर दुःखकष्ट परेको बेला वा असफलताको कारण कर्मफल प्राप्तगर्न नसक्दाको अवस्थामा मान्छेलाई ईश्वर नभई हुँदैन । त्यतिबेला ऊ जायज नाजायज जस्तोसुकै माग अधिसारेर ईश्वरको अगाडि घुँडा टेक्दछ वा लम्पसार पर्दछ, गिडगिडाएर रुन्छ । मान्छेको इच्छानुसारका जायज नाजायज माग पुरा गर्ने शक्ति वा सामर्थ्य भगवान् वा ईश्वरमा छ वा छैन त्यो उनै जानुन् । यथार्थ कुरा के हो भने यदि मान्छेले विश्वास गर्‍यो भने उनमा त्यो

शक्ति हुँदोरहेछ र विश्वास गरेन भने हुँदोरहेनछ । सबभन्दा ठूलो कुरा त मान्छेको विश्वास पो रहेछ । देवी देवता वा ईश्वरको शक्ति त मान्छे भित्र पो हुँदो रहेछ ।

कुरा २०१८ सालको हो । महिना र गते एकीन छैन । जाडो सकिए पछिको समय हो जस्तो लाग्दछ । मध्यरात्रीमा प्रलय भएर यो संसार ध्वस्त हुन्छ भन्ने हल्ला नेपालगन्जको लू अर्थात् तातो हवा झैं ह्वात्ह्वार्ति चल्यो । त्यो तातो हवाले धर्मभीरु मान्छेहरूलाई झत्झती पोल्यो । त्यो प्रलय रोक्ने शक्ति बागेश्वरी मातामा छ भन्ने कुरामा विश्वास गर्ने आस्थावान् देवीका भक्तहरुले बागेश्वरी माता समक्ष त्यो प्रलय रोक्ने माग राखेर मन्दिरमा धर्ना दिए । त्यतिबेला ईश्वरमा आस्था नराख्नेहरू पनि सम्भावित प्रलयको आशङ्काले त्रसित भएर त्यो धर्नामा सामेल भए । ज्यान गए मन्दिर मै जाओस् भनेर म पनि त्यसमा सामेल थिएँ । रातभरि मन्दिरको परिक्रमा गरें । अखण्ड रूपमा चलिरहेको भजन कीर्तन सुनें । त्यस दिन नेपालगन्जका साठी प्रतिशतभन्दा बढी मान्छे बागेश्वरी मै ओइरिएका देखिन्थे । रातभरिको भजनकीर्तन र परिक्रमा सकिँदा सूर्यनारायणले रात्रीको अन्धकारलाई भगाएर प्रभातको प्रथम प्रकाश नेपालगन्जमा पस्किए । उज्यालो भयो, दिन फेरियो, प्रलय टऱ्यो । नेपालगन्जवासीको रातभरिको धर्ना सफल भएको थियो । बागेश्वरी देवीले त्यो भयङ्कर प्रलय रोकिदिएकी थिइन् । नेपालगन्जवासी प्रलय टरेको खुसीमा देवीको जयजयकार गर्दै पुनः एक पटक मन्दिर परिक्रमा गरेर घरतिर लागे । ज्यान जोगिएकोमा ढुक्क भएर म पनि डेरातिर लागें ।

यो दैवी दुर्घटना रोकिएको करीव दुई दर्जन वर्षको अन्तरालपछि फेरि मुगुको रारा दह फुटेर त्यहाँको पानी कर्णाली नदीमा खस्छ र बाँकेबर्दिया डुबाउँछ भन्ने हल्लाले नेपालगन्जको पुसमाघको हुस्सु ले झैं ड्याम्मै ढाक्यो मान्छेका मनमस्तिष्कलाई । त्यतिबेला पनि त्यो दुर्घटना रोक्न बागेश्वरी मातासँग विन्ति विसाइयो । पूजाआजा, भजनकीर्तन गरियो । यसपटक पनि सम्भावित दुर्घटना बाट बागेश्वरीमाताले बचाइन् । रारादह फुटेन, हामी बाँच्यौं । यसबाट के प्रमाणित भयो भने मान्छेमा आस्था र विश्वास भएपछि देवी देवताहरूले व्यक्तिका इच्छा, आकांक्षा र चाहना मात्र होइन ठूलठूला विपत्तिहरूलाई पनि टार्दछन् वा पार लगाउँछन् ।

देवीदेवताहरूले दिने भएर नै त होला बागेश्वरी मन्दिर परिसरमा दिनहुँ माग्नेहरूको भीड लाग्दछ । त्यहाँ दुई किसिमका माग्नेहरू हुन्छन् । एक थरी– मन्दिरबाहिर बाटोको छेऊमा बसेर दाताको स्वेच्छामा एक रुपैयाँ सिक्का र एकमुठ्ठी चामल माग्नेहरू । अर्काथरी– मन्दिरभित्र पसेर गो प्यरूपमा आफ्ना जायज नाजायज मागहरू देवी देवतासमक्ष राखेर उनका सामु गिडगिडाउने, अलापविलाप गर्ने, उनका खुट्टा मिच्ने तर ओरिपरिका मान्छेलाई आफ्ना खुट्टाले किच्ने । गोप्य रूपमा मागिने यस्ता मान्छेका मागहरू प्रायः नाजायज भएर नै होला बागेश्वरीका जुँगे महादेव हातमा त्रिशूल समातेर देवीका मन्दिरतिर फर्केर जुँगा मुसारेर मन्द हाँसो हाँसिरहेका

हुन्छन्– माग्नेको स्वेच्छामा दिनुपर्ने त्यस्ता वरदानहरू कतिलाई दिन्छन्, कतिलाई दिन्नन् दैवको कानून उनै देवी देवता जानून् ।

नेपालगन्ज मेरो भोग भूमि पनि हो । यही शहरमा मैले जीवन भोगें । यहीं मेरो विहावारी भयो, बालबच्चा भए, बढे र फैलिए । मैले नेपालगन्जको घाम पानी, शीत वर्षा वा प्रकृति अति भोगेको छु । यहाँको प्रकृति अतिवादी छ । यहाँ जे पनि अति हुन्छ । अति सुख्खा, अति वर्षा अति गर्मी, अति जाडो ! जे कुरामा पनि अति, त्यो अति ले गर्ने खती कति हो कति ! यस्तै छ नेपालगन्ज र नेपालगन्जसँग गाँसिएको मेरो नियति !

गर्मी समयको लू र जाडो समयको हुस्सू अब नेपालगन्जको पर्याय वा पहिचान बन्दै गैरहेको छ । गृष्म ऋतुमा सूर्य नारायणले आगोको ज्वालाझैं लू ओकल्दै हिँड्दछन् । नौनी पगाले झैं मान्छेको छाला पगाल्दछन् । परिणामस्वरूप छालाको प्रत्येक रोमकूपबाट अजस्रधारा परिश्रमविनाको पसिना प्रवाहित हुन्छ । मान्छेको शरीर स्वतः पसिनाले नुहाइएको हुन्छ । स्नानको लागि साबुन वा पानीको आवश्यकता नै पर्दैन । यो वर्णन म जस्तो बसीखाने वर्गको हो, श्रम गरेर खाने वर्गको त अझ के कुरा गर्नु ! त्यस्तै जाडोयाममा सूर्य नारायणलाई कुहिरोले अपहरण गरेर आकाश मै थुनेको हुन्छ । कयौं दिनसम्म सूर्यलाई भुइँमा छिर्नै दिँदैन । कुहिरोले गर्नु कमाल गर्छ । सूर्यनारायण अपहरित भएर आकाशमैं थुनिएको मौका छोपेर हिमालयको चिसो तराइमा ल्याएर फिंजार्दछ र हामी तराईवासीको सातोपुत्लो लिन्छ । मान्छेको शरीरको रगतलाई बरफ बनाउन खोज्छ । सूर्यको ताप विना मान्छेको मुटु लगलगी काँप्दछ ।

नेपालगन्जको अति सहनको लागि दरिलो सहनशक्ति चाहिँदो रहेछ । मेरो छिमेकमा फकिरे अन्सारी नामका एक जना शिक्षक थिए । अहिले उनी अर्कै टोलामा सरेर बसेका छन् । उनले छ सात वर्षको आफ्नो छोरो लाई विहान विहान खालीखुट्टा दौडाउँथे, लड्न र कुस्ती खेल्न सिकाउँथे । उसलाई थरीथरीका कष्ट दिन्थे । किन त्यसो गरेको बाबुलाई ?" भनेर मैले जिज्ञासा राख्दा उनी भन्थे– 'अरे जीजा, सानै उमेरदेखि यसलाई परिश्रम गर्न वा संघर्ष गर्न सिकाएन भने जीवनमा यसले कसरी गरीखाला ? बच्चालाई मायाको साथसाथै परिश्रम गर्ने र कष्ट सहने तालिम पनि दिनुपर्छ ।' अहिलेसम्म पनि फकिरे मास्टरको सिद्धान्त अवलम्वन गर्न नजानेकोमा मलाई थकथकी लागि रहेको छ ।

ঙ্গ

## १४३थापाथली आर्ट ग्यालरी,मन्थली चित्र प्रदर्शनी (०६५ माघ)

तोया गरुङ : रमाइलो भो, तपाईंहरूसँग भेट भयो ।

रमेश खकुरेल : रमाइलो त हुने नै भयो । उहाँ नगेन्द्रदाइ पनि माइलो म पनि माइलो– माइलो र माइलो = रमाइलो !

ঙ্গ

# जीवनको गोरेटोमा मेरो साहित्यिक यात्रा

शिव रेग्मी

१६३, छत्तीस पुतली

मेरो पढाइज्यादै ढिला सुरु भएको थियो । हुनत, त्यतिखेर अचेलको जस्तो आमाको काख छाड्न नपाउँदै स्कुलमा भर्ना गरिदिने चलन थिएन । तर पनि मेरो पढाई पाँचवर्षमा पनि नभैकन पिताजीको मृत्युपछि अर्थात् ९ वर्षको उमेरमा मात्र शुरु भएको थियो- २००७ सालको दशैं पछि । शहरमै हुर्के बढेको म, एक वर्ष पिताजीको बर्खीमा गाउँको घरमा बस्दा 'क ख ग' देखि 'ए बी सी डि' सम्म पढेर केही महिना गाउँकै स्कुलमा पढ्न थाले । २००८सालमा आएर क्षेत्रपाटी, धोबीचौर स्थित त्यतिबेलाको बालसखा दल स्कुलमा तीन कक्षामा भर्ना भए निशुल्क ।

ठमेल टोलको डेराबाट हातमा किताब च्यापेर स्कुल जान पाउँदाको बखत मेरो त्यो बालसुलभ फुर्ति र सुखद् अनुभूतिले मलाई न्यानोपना अझै दिँदैछ । गर्मीयाममा बिहान स्कुल चल्ने त्यतिखेरको चलनमा दिउँसाभरी घरमा भएका साहित्यिक पुस्तकहरु पढ्थे म । बालकृष्ण समको 'भक्त भानुभक्त' र 'मुकुन्द इन्दिरा', डाइमन शमशेर 'बसन्ती', गोपालप्रसाद रिमालको 'मसान', युद्धप्रसाद मिश्रको 'चरा', लक्ष्मीप्रसाद देवकोटाको 'मुना मदन', पूर्णप्रसाद ब्राम्हणको 'झिल्का' र 'म लोग्ने हुँ', लीलध्वज थापाको 'अमर माया' आदि जस्ता आधुनिक पुस्तकहरु तथा 'अलिबाबा चालीस चोर', 'हतिमताई', 'गुलावकावली', 'नरेन्द्र मोहनी' आदि जस्ता माध्यामिककालिन पुस्ताहरुको स्वाद पनि त्यतिखेर नै पाएको हुँ । घरैमा भएका यी पुस्तकहरु तथा पत्रिकाहरुमा उदय, शारदा, गोरखापत्रका केही पुराना प्रतिहरु मेरा अध्ययनका सामाग्रीहरु थिए । थोरै शब्दमा भन्नु पर्दा, पाठ्यपुस्तक भन्दा बाहिरी पुस्तक पढ्ने लत त्यतिबेला देखि नै बस्यो । साहित्यमा यसरी लागे पछि एकान्तमा बस्न रुचाउँन थालें । निरन्तर अध्ययन गर्ने बानी बस्यो । एक प्रकारले अन्तरमुखी बन्दै गए, संकोची बन्दै गए, र हत्तपत्त कसैसँग घुलमिल हुन नसक्ने भएँ । तर पनि पढ्दै गएँ, पाए जति पढ्दै गए ।

२००९साल देखि २०१५साल सम्म मेरो स्कुलको पढाई जुद्धोदय पब्लिक हाईस्कुल, क्षेत्रपाटीमा भयो । त्यतिखेरको एक नम्बरमा गनिने यो स्कुलमा विभिन्न अतिरिक्त क्रियाकलापहरु हुन्थे– हुने गर्थे । शुक्रबार हाफटाइम पछिको समयमा– यसै क्रममा साहित्य सम्मेलन, वादविवाद, विशिष्ट कवि लेखकहरुसँगको चिनापर्ची तथा नयाँ कृतिको वाचन आदि जस्ता क्रियाकलापहरुले ममा रहेको साहित्यिक सुसुप्तवस्थाको तीर्खालाई झन खरो तुल्याइदियो । खासगरी बासुदेव माड्साब र हरिनाथ रेग्मी माड्साब्हरुबाट पुस्तक पढ्न सदस्यता लिनु पर्थ्यो, रुपैयाँ तीन मोहर तिरेर । तर आफुसँग त्यति पैसा कहाँ हुनु ? हुदैनथ्यो । साथीहरुका पुस्तकालय कार्डबाट लिएर पढ्थे । यसरी मेरो अध्ययन पाठ्यपुस्तक भन्दा बाहिरी पुस्तकहरुले उछिन्दै लग्यो । फलस्वरुप सेकेण्ड क्लासमा मेरो मार्कसिटमा 'क्लासटिचर' हरिहर नाथले 'एटेन्टीभ बट स्लो' भनेर मेरो चारित्रिक गुण लेखिदिनु भयो । आज

म पनि ती शब्दहरु पढेर, माड्साहबको कैफियत कति मिलेको रहेछ भनेर विचार गर्छु । आज उहाँ रहनु भएको भए, उहाँको सामु म आभार व्यक्त गर्ने थिएँ । हुन पनि म सबै कुरामा पछि परेको मान्छे । पढाइ-लेखाइ, जागीर सबै तिरबाट । तर पनि सन्तुष्ट छु– जीवन देखी !

झण्डै छ वर्षको स्कुल जीवनपछि किताब पढ्ने मोहले ठमेल टोलको डेरा अगाडि २०१३ सालमा खुलेको नवीनविकास मण्डल पुस्तकालयमा स्वयम् सेवकको रुपमा काम गर्न थाले । पुग नपुग एक वर्ष जतिको सेवा पछि त्यो पुस्तकालय प्युखा स्थित राष्ट्रिय पुस्तकालयमा गाभिए पछि म त्यहँ पनि किताब पाउने लोभले स्वयम् सेवकको रुपमा पुगें ।

मेरो अध्ययन पुस्तकहरुमा मात्र सीमित नभै त्यतिखेर प्रकाशित प्रगति, धरती, इन्द्रेणी, स्वास्नी मान्छे साहित्यस्रोत आदि पत्रपत्रिकाहरु पनि थिए । म नेपाल राष्ट्रिय पुस्तकालयमा छँदा छँदै त्यहाँबाट द्वैमासिक 'रुपरेखा'ले एक छत्र रुपमा झण्डै दुई दशकसम्म अग्रणी भुमिका पुरा गर्‍यो भने अन्य केही उल्लेखित पत्रिकाहरुमा–रचना, मुकुट, बिहान, रत्नश्री, अभिव्यक्ति, फुलपाती आदिको स्थान अमूल्य छन् । संस्थागत रुपमा प्रकाशित नेपाली, रमझम, कविता, प्रज्ञा, मधुपर्क आदिले खेलेको भुमिका पनि उत्तिकै उल्लेख्य छन् ।

मेरो लेखन यात्रा यिनै पृष्ठभुमि र परिवेशमा भएका थिए । सुरुमा केही कविता, कथा लेखें– प्रकाशित गरें, तर चित्त बुझेन । फेरि अध्ययनतिरै लागें । २०२७ सालमा विजयमल्लको 'कोही किन बर्बाद होस्' नाटकको समालोचना गरेर 'गोरखापत्र' शनिवासरिय परिशिष्टाङ्क छपाएँ । राम्रो लाग्यो, चित्त बुझ्यो । केही हौसला पाएँ । यसरी नै अन्य कृतिहरुको पनि समालोचना गरे । तर यो क्षेत्र पनि विटुलिइसकेछ, आफ्ना प्रशंसा चाहनेहरु बढी रहेछन् । प्रशंसा पाउनेहरु दंग पर्ने तर आलोचना खप्न नसक्नेहरु रिसाउने पनि गर्न थालेको अनुभव गरें । त्यसपछि स्वर्गीय कवि लेखकहरुका मुल्याङ्कनमा केन्द्रित भएर लेख्न थाले । कतैबाट प्रतिक्रिया आएन । यिनै प्रसङ्गमा लाग्दा लाग्दै माध्यमिक कालीन कवि लेखक तिर अग्रसर हुन थालें । माध्यमिक कालिन पत्र पत्रिका तथा साहित्य अध्ययनतिर उन्मुख भएँ । विगत साढे ती दशकदेखि आफुले अध्ययन गरेका नेपाली साहित्यिक पत्रपत्रिका, गोरखापत्रका शनिवासरीय अङ्कहरु अन्य फुटकर पत्रपत्रिकाहरुको संकलन पनि बढ्दै गयो । लेखपढ गर्न र अध्ययन अनुसन्धान गर्न यिनै साहित्यिक सङ्कलनहरुले सहयोग पुर्‍याइरहे का छन् ।

अनुसन्धनात्मक लेख, निबन्ध लेख्दा बेग्लै आनन्द र सन्तुष्टि हुँदो रहेछ । यही रमाइलो लिएर बसेको छु ।

जीवन साधारण तवरले विताउने उदेश्य भएको र कुनै ठूलो आकाङ्क्षा मनमा नपालेकोले म आफु आफ्नो उन्नतिप्रति अर्थात् वर्तमान अवस्था प्रति अत्यन्त सन्तुष्ट छु, यही क्रममा जीवन वितोस् भन्ने कामना पनि गर्दछु ।

१ माघ २०५६

ଓଓ

शिक्षालाई सीपसँग, सीपलाई उत्पादनसँग, उत्पादनलाई बजार तथा बजारलाई रोजगारीको अवसर र आर्थिक विकाससँग जोड्ने अभिप्रायले नेपाल सरकारद्वारा गठित कार्यदलले मानव संसाधनको आकलन तथा प्रक्षेपण कार्य गरिरहेको सन्दर्भमा नेपाल सरकार शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय र सङ्घीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयको वेबसाइट मार्फत् वा www.hrp.gov.np मा रहेको online विवरण तथा सुझाव संकलन फाराम यथाशीघ्र भरिदिई सहयोग गरिदिनुहुन अनुरोध गरिन्छ ।

**email : hrp@moest.gov.np**
**Toll Free No.: 16600100382**




नेपाल सरकार
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
सूचना तथा प्रसारण विभाग

# चर्चा : "सर्सर्ती संसार" हेर्दा

डा. देवीप्रसाद सुवेदी
बालाजु हाइट, काठमाडौं

विगत २/३ दशकयता नेपाली साहित्यमा नियात्रा अरू साहित्यिक विधाभन्दा बढी नै फस्टाएको छ। निबन्ध-प्रबन्धविधाअन्तर्गतको यो उपविधागत सिर्जनाले सङ्ख्यात्मक र गुणात्मक दुवै दृष्टिबाट फड्को मारेको छ र यतातर्फ नेपाली पाठक मानसलाई आकृष्ट गर्न नेपाली नियात्रासाहित्यकारहरू धेरै हदसम्म सफल पनि बनेका छन् । यिनै सन्दर्भमा जीवा लामिछानेद्वारा रचित नियात्रासङ्ग्रह 'सर्सर्ती संसार' यस लेखकको आँखामा परेको छ ।

मानवीय सभ्यताको विकास मानिसको नयाँ-नयाँसंसारको अवलोकनगर्ने जिज्ञासु प्रवृत्तिर आफ्नो जीवनको सुविधाको लागि एकबाट अर्को मुलुकमा स्थानान्तर हुने चाहना र कतिपय सन्दर्भमा बाध्यताबाट भएको हो । यसरी एक ठाउँबाट स्थानान्तर हुने प्राचीन यायावरहरूको रोमाञ्चकारी यात्रा निकै रोचक पाइन्छ ।

कोलम्बस र भास्को डिगामा जस्ता साहसी यात्रीहरूले गरेका महादेशीय यात्राहरूबारे पढ्दा अहिले पनि हाम्रो शरीरमा रोमाञ्च उत्पन्न हुन्छ । तर अहिले एक महादेशबाट अर्को महादेशमा गरिने यात्रालाई विज्ञान र प्रविधिले निकै सहज र सरल बनाइदिएको हुँदा अन्तरमहादेशीय पर्यटन सुविधाजनक हुन आइपुगेको छ । अबको पर्यटकीय रोमाञ्चकारिता अन्तर्ग्रहको पर्यटनतिर उन्मुखबनेको झैँ लाग्दैछ ।

सरदरमा अन्य नेपाली नियात्राकारभन्दा जीवा लामिछाने धेरै विशिष्ट रहेको कुरा उनको 'सर्सर्ती संसार' सङ्ग्रह पढिसकेपछि थाहा हुन्छ । उनको यस सङ्ग्रहको मुख्य शीर्षकको चयनले नै उनको यात्रालेखनको शैलीलाई चिनाएको छ। अर्थात् उनीविश्वको कुनै एक पर्यटकीय गन्तव्यलाई पुस्तकका धेरै पानामा विस्तार गर्ने नियात्राकार होइनन् । उनको शीर्षकको 'सर्सर्ती' शब्दले नै लेखकको नियात्रा शैलीको राम्रो परिचय दिएको छ। यसले बाँकी नेपाली नियात्राकारबाट उनलाई पृथक तुल्याएको पनि छ। यस पङ्क्तिकारले लेखेका 'मेरो दैनिकीका पानामा चीन' र 'हिउँफूलको मुस्कानमा बेलायत' दुई कृति पनि यस शैलीको नियात्रालेखन भन्दा भिन्नरहेका छन् र जीवाको जिब्रोमा ट्वाक्क बस्ने खालको स्वादयुक्त नियात्राभन्दा भोजनका केही गाँसपछि मात्र पाइने मिठासको प्रकारका यात्रा संस्मरणहरू छन् । नियात्राकार जीवा पाठकलाई जुन संसारमा पुऱ्याउँछन् त्यो संसार धेरै समयको रहँदैन तापनि पाठक त्यसको आनन्द तुरुन्तै लिइहाल्छ र फेरि बाँकी संसारमा रमाउन पुग्छ । यस्तो यात्रासाहित्यको मिठास ज्यादै कम नियात्राकारहरूमा पाइन्छ ।

'सर्सर्ती संसार' नियात्राकार जीवा लमिछानेको बाह्यजगतको पर्यटकीय अनुभूतिहरूको जीवन्त प्रस्तुति हो । बाह्यपर्यटनको तात्पर्य जन्मभूमि नेपालभन्दा अन्य बाँकी विश्वहो । नेपालभन्दा बाहेकमा कतिपय एसियाली

मुलुकहरू र युरोप, अमेरिका, अफ्रिका र अस्ट्रेलिया समेतका पाँच महादेशहरूलाई 'सर्सर्ती संसार'ले समेटेको छ । यसरी समेट्ने क्रममा उनको यात्रापथको दृष्टि विहङ्गम प्रकारको बन्न पुगेको छ ।

प्रस्तुत नियात्रासङ्ग्रह भित्र जीवा लामिछानेको बहुआयामिक पर्यटकीय व्यक्तित्व पनि झल्किन्छ। गैरआवासीय नेपाली सङ्घको सङ्गठनकर्ता सहजकर्ता आफ्ना सहधर्मी र सहकर्मी मित्रहरूका बीचका यात्राका सहजकर्ता आफ्ना परिवारजनहरुप्रति उत्तरदायी अभिभावक र कुनै खास समयका यात्राका एक्ला यायावर ।

नियात्राकार जीवा लामिछाने यसअघि गैरआवासीय नेपालीहरूको छाता सङ्गठनका प्रमुख पनि रहिसकेका सन्दर्भमा उनले संसारका कतिपय मुलुकमा रहेका गैरआवासीय नेपालीहरूका सुखःदुःखलाई निकटबाट नियाल्ने अवसर पनि पाएका हुन् । उनको 'वर्मा गएनि कर्मसँगै' निबन्ध त्यसको सटीक उदाहरण हो। यस अतिरिक्त गैरआवासीय नेपाली सङ्घका सभासम्मेलनहरूमा सम्बन्धित मुलुकमा पुग्दाका अवसरहरूमा लेखकका सम्पर्कमा आइपुगेका केही गैरआवासीय नेपालीहरू यस सङ्ग्रहका केही निबन्धहरूमा टिपिएका छन् र ती प्रायःजसो सम्बन्धित मुलुकमा केही व्यवस्थित जीवन बिताउन थालेका र केही सम्पन्नता प्राप्तगरेका व्यक्तिहरू पनि छन् । तर तिनै मुलुक र अन्य कतिपय मुलुकहरूमा आफ्नो परिचय गुमाएका र आर्थिक दृष्टिले विपन्न जीवन बिताइरहेका नेपालीहरू यसभित्र भेटिएका छैनन् । सम्भवतः यस नियात्रासङग्रहका निबन्धहरू तिनलाई परिलक्षियत गरी रचिएका पनि होइनन् । उनको नियात्रा निजात्मक अनुभूतिहरूले रङ्गिएका हुँदा र उनको यात्रासँग सम्बन्धित विषय बाह्यजगत्लाई स्वानुभवको चास्नीमा हालेर यसलाई सुस्वादु बनाउनेतिर लक्षियत हुँदा ती विषयहरू यसभित्र नभेटिनु स्वभाविक पनि हो ।

'सर्सर्ती संसार'ले लेखक जीवाको विश्वका विभिन्न मुलुकका पर्यटकीय गन्तव्यहरूलाई सङ्ग्रहभित्र सँगाले पनि उनको हृदय नेपालसँग अभिन्नरूपले जोडिएको अनुभूतिलाई यस सङ्ग्रहले व्यक्त गरिएको छ । यहाँ कैयन् प्रसङ्गहरूमा उनको जन्मभूमि चितवन झुल्किन्छ र नेपालका विकासका अपूर्ण सम्भावनाहरूले उनलाई बारम्बार आफ्नो राष्ट्रमा भित्र्याउँछ । उनलाई लगभग उस्तै भौगोलिक बनोट भएको स्विटजरल्याण्डको भ्रमणमा बारम्बार आफ्नो मुलुकको अव्यवस्था र पछौटेपनले झस्काउँछ र नेपालको प्राकृतिक सम्पदाले लोभ्याइरहन्छ । 'स्विजरल्याण्ड सपना'का पानाहरूमा उनले कैयन् पटक नेपाललाई संझाएका छन् । भूपरिवेष्टित भएर पनि नेपालझैँ स्विट्जरल्याण्डले छिमेकीको बन्धनमा उकुसमुकुस बनेर बाँधिनु परेको छैन र एक स्वतन्त्र र स्वाधीन राष्ट्रको अस्तित्वमा त्यो मुलुक रहेको छ ।

'सर्सर्ती संसार' एउटा अत्यन्त संवेदनशील र सचेत पर्यटकको अनुभूतिहरूको पेटारो हो । त्यो पर्यटक जसले कुनै पर्यटन क्षेत्रलाई एकोहोरो

दृष्टिले मात्र हेर्दैन र उसका दृष्टिमा कुनै ठाउँ विशेष विविध आयामहरू र अनेकौं परिवेशहरूमा देखापर्छ । यसमा गन्तव्य स्थलका सामाजिक, आर्थिक, सांस्कृतिक पाटाहरू रेखाङ्कित बन्छन् । त्यस देशका भाषा, साहित्य, कला र संस्कृति शब्दहरूमा जीवन्त बन्छन् ।

एउटै निबन्धमा सम्बन्धित गन्तव्यस्थलका विविध पाटाहरूको अनौठो समवेत प्रस्तुतिको दुईवटा उदाहरण हुन्– 'छुट्टी मनाउन बलौटे टापु' र 'क्लिओपेट्रा र पिरामिडको देशमा' निबन्धहरू । दुवै निबन्धहरू सम्बन्धित गन्तव्यको दृश्यचित्रमात्रै खिच्दैनन् । बरु यहाँको इतिहास पुरातत्त्व र संस्कृतिका जेलिएका पात्रहरूलाई एक-एक गरी छुट्याउँदै पाठकसामु प्रस्तुत गर्छन् । यस किसिमको हस्तलाधव चातुर्य कमैमात्र नियात्राकारमा पाइन्छ र त्यो शिल्प जीवा लामिछानेले प्राप्त गरेको अनुभूति हुन्छ 'सर्सर्ती संसार' पढ्दा ।

जीवाका नियात्राहरूको आयतन मझौला प्रकारको छ । घटीमा ५/६ पृष्ठदेखि बढीमा ११/१२ पृष्ठसम्मको आयतनमा यी निबन्धहरू आबद्ध बनेका छन् । सरदरमा छ देखि ८ पृष्ठसम्मका यी निबन्धहरूले नियात्राकारको विषयवस्तुको प्रस्तुतिगत कुशलताको परिचय पनि दिएका छन् ।

जीवा लामिछानेले नेपालबाट मस्कोको विश्वविद्यालयमा उच्चतहको प्राविधिक विषयको विद्यार्थी बनेर गएपछिका वर्षहरूमा गरेका सङ्घर्षहरू र प्राप्त उपलब्धिहरूको आकलन पनि हो यो कृति । सोभियत सङ्घ, जर्मनी, युगोस्लाभिया, चेकोस्लोभाकिया, नीदरल्याण्डस् आदि युरोपेली मुलुकहरूदेखि अस्ट्रेलिया, जापान, भारतको गोवा, उत्तर अफ्रिकी मुलुक इजिप्ट, पूर्व अफ्रिकाको केन्या आदि ठाउँहरूका अतिरिक्त अमेरिकाको पटक पटकको भ्रमणको अनुभव बटुलेर तयार गरेको यस कृतिले सम्बन्धित संसारका नयाँ-नयाँ परिदृश्यहरूका साथै विविधतापूर्ण संस्कृति र ज्ञानविज्ञानका नवीन उपलब्धिहरूलाई शब्दचित्रमा भित्र्याएको छ ।

वस्तुतः जीवाले आफ्नो विदेश बसाइका क्रममा विश्वको अनुभव मात्र बटुलेनन् सोभियत संघको विघटन ताकाको अस्तव्यस्त आर्थिक स्थितिलाई आफ्नो वैयक्तिक आर्थिक सञ्चयका निम्ति पनि सक्दो उपयोग गरे । उनको 'बार्लिनवारि बर्लिनपारि' निबन्ध त्यसकै स्वीकारोक्ति हो । तर उनले आफूले आर्जन गरेको त्यस आर्थिक सञ्चयको महत्वपूर्ण अंश नेपालको विकासमा लगानी गरेर देशप्रति देखाएको उदारता अर्को उल्लेखनीय पक्ष हो ।

'सर्सती संसार'मा समावेश गरिएका २९ वटै यात्रानिबन्धहरू आ-आफ्नै प्रकारले महत्त्वपूर्ण अर्थ राख्दछन् । तर उनको 'संस्कृत खोज्दै हाइडलवर्ग' अरू निबन्धहरू भन्दा विशिष्ट महत्व राख्ने निबन्ध हो । विश्वमा वेद, उपनिषद् र पुराणहरूले स्थापना गरेको प्राचीनतम आध्यात्मिक साँस्कृतिक सम्पदा भएको मुलुक नेपालले संस्कृत जस्तो उच्च गरिमामय भाषाको पठन-पाठनको थलो खोज्न वाह्यसंसारतिर चियाउनु पर्ने स्थितिप्रति यसका लेखक जीवा लामिछाने अत्यन्त संवेदनशील र भावुक बनेको प्रसङ्गलाई यस निबन्धले उठाएको छ ।

अहिले युरोप र अमेरिकाको भ्रमणमा जाने र त्यहीँ बसोबास गर्ने नेपालीहरूको सङ्ख्या दिनानुदिन बढ्दो छ । तर पूर्वीय (संस्कृत) वाङ्मय र आध्यात्मिक ज्ञान सम्पदाप्रति सचेत हुने र त्यसप्रति प्रेम राख्ने नेपालीहरू दुर्लभजस्तै रहेको अवस्थामा जीवाको यो संस्कृतिप्रेम यस निबन्धमार्फत प्रकट भएको छ । जर्मनी लेखकको आर्थिक व्यवसायको आधारभूमि छँदाको अवस्थामा पनि उनले आफ्नो भूमिबाट क्रमशः लुप्त हुनथालेको आध्यात्मिक ज्ञान र आर्य संस्कृतिप्रति देखाएको निष्ठाले नेपाली बौद्धिक जगत्लाई अवश्य नै सचेत गराउने छ । निबन्धकार 'संस्कृति खोज्दै हाइडलबर्ग' निबन्धमा आफ्नो संस्कृति र सम्पदाप्रति संवेदनशील बन्दै लेख्छन् :

'भाषामाथिको पूर्वाग्रहले हामीलाई ज्ञानकै मार्गबाट च्युत गर्नेछ । हाम्रा सन्तानले भोलि आफ्नै भाषा सिक्न युरोप र अमेरिकातिर जानुपर्ने दिन नआउला भन्न सकिन्न ।... 'हामीले संस्कृत भाषाको मर्मलाई बुझ्न नसकेर मृत भाषा भनिरहे पनि प्राध्यापक मिखाएल्सजस्ता हजारौँ विद्वान् र हाइडलबर्गजस्ता सयौँ विश्वविद्यालयले यसलाई मर्न दिने छैनन् ।'

निबन्धकार जीवा लामिछानेले पूर्वीय (संस्कृत) आध्यात्मिक ज्ञान र संस्कृतिप्रति देखाएको प्रेम 'प्रेमिल थाइल्याण्ड' निबन्धमा पनि देखापरेको छ :

'उनले भनिन् : हाम्रो भाषाको रूट पनि संस्कृत नै त होनि ।'

उनका कुराले हामीदुवै मख्ख पर्‍यौँ ।'

'सर्सर्ती संसार' नियात्रासङ्ग्रह स्वयम् नेपालीभाषा-साहित्यप्रति जीवा लामिछानेको निष्ठाको प्रतीक हुँदैहो । त्यसमा पनि उनले आफ्ना विभिन्न निबन्धहरूमा उल्लेख गरेका लेखनाथ पौड्याल, पहलमानसिंह स्वार, लैनसिंह बाङ्देल, माधव घिमिरे आदि अग्रज साहित्यकारका साहित्यिक-काव्यिक उद्धरणहरूले उनको साहित्यिक गुणग्राहितालाई प्रकट गरेका छन् । पढाइले प्राविधिक र व्यवसायले आर्थिक कारोबार र होटेल पर्यटन विषयका पारखी यी लेखकमा नेपाली भाषासँग खेल्ने मिठासयुक्त प्राञ्जल गद्य रचनाशैली जुट्न आउनु अनौठा र सुखद संयोग हो । उनको यो वैशिष्टच विशिष्टतर बन्दै जाओस्– हार्दिक शुभेच्छा ।

ശ3ശ

# धुवाँको धागो फुकाउन खोज्दा

वंशी श्रेष्ठ

भावना, विचार, सोच, विषय र संगतको मेल मिलेको दोभान र समन्वय भएको व्यक्तिसंगको भेटघाट र वार्तालापमा समय बितेकोमा एक प्रकारको मानसिक र आत्मिक शान्ति र आनन्दको अनुभव हुन्छ । यसैले कुनै पनि व्यक्ति आफ्ना साथी संगातीको खोजमा रहन्छन्, अनि भेटको बेला अनफ्ना विचार खोलेर एक-आपसमा विचार विमर्श गर्दै समय बिताउँछन् । यस्तै प्रकारको एउटा मधुर भेट भयो 'अभिव्यक्ति'का सम्पादक नगेन्द्रराज शर्मासँग । मधुर र संम्भनायोग्य यस अर्थमा कि– नेपाली कथा, कविता, संस्मरण, निवन्ध, आदि अनि वर्तमान राजनैतिक परि स्थिति, आर्थिक स्थिति तथा राष्ट्रमा घटिरहेका विविध राजनैतिक घटनाक्रम र शान्ति सुरक्षाका साथै न्याय क्षेत्रमा भइरहेका वा घटिरहेका घटना र स्थितिवारे चर्चा गर्दै एक प्रकारको समन्वयात्मक सहमतिमा हामी दुवैले आ-आफनै प्रकारको आनन्दको अनुभव गर्‍यौं ।

यस्तै वार्ताक्रममा नेपाली कविता र कविहरूवारे चर्चा भयो, यो स्वभाविक पनि थियो, किनभने शर्माजी साहित्यकार तथा सम्पादक, यसैले पत्रिकामा प्रकाशनार्थ आउने कविताका विषयमा कुरा चल्यो । साहित्य विशेष गरेर कविता तथा साहित्यकारहरू राजनैतिक सिद्धान्त र दलगत भावनाले मानसिक अनि वैचारिक रूपमा उपनिवेशवादी मनोवैज्ञानिक रोगग्रस्त
भएका छन्, यसरी ग्रस्त हुनुमा वैचारिक स्वतंत्रता स्वीकार गर्न नसक्नु अथवा पारि वारिक रूपमा आर्थिक स्थितिको कमजोर पक्षले गर्दा आर्थिक वा पद लोलुपताले पनि भएको भन्ने मतमा हामी दुवैले सहमति गर्‍यौं । यस्तै कारण र वैचारिक पक्षले गर्दा कविताक्षेत्रमा अनावश्यक रूपमा राजनैतिक नारावादी, सिद्धान्तका कविता लेखिए, अनि प्राज्ञ बन्नमा राजनैतिक दलको भागवण्डामा प्राज्ञ-सदस्य भए । प्राज्ञ भएका कतिपय व्यतिहरू प्राज्ञिक रूपमा सक्षम पनि छन् तर भागबण्डामै प्राज्ञ-सदस्य बन्नु एउटा घिनलाग्दो नमेटिने बिडम्वना बन्न गयो । राष्ट्रको इतिहास र प्रज्ञा-प्रतिष्ठानकै इतिहासमा नमेटिने वर्णन बने ।

यसै क्रममा शर्माजीले आफूलाई मनपरेका कविताहरूको संग्रह ल्याएर मेरो अगाडि राख्दै, यी कविताहरू भने फरक किसिमका छन् । राजनैतिक नारा र सिद्धान्त बाहिर लेखिएका, विशुद्ध सिर्जनात्मक धारणा र भावनाका छन् । मलाई मन परेका कविताहरू हुन् भनेर संग्रह मलाई दिए ।

त्यसोत साहित्य बिधाबाट भिन्न व्यवसाय लिएका– जस्तै डाक्टर, इन्जिनियर, अर्थशास्त्री, वैज्ञानिक (भौतिक शास्त्री, रसायनशास्त्री, जीव विज्ञान र वनस्पतिविज्ञानविदहरूले) रचना गरेका कविताहरू पनि मैले पढेको छु अनि त्यस्तै क्षेत्रमा कार्यरत व्यक्तिहरूले सिर्जना गरेका चित्रहरू (भूदृश्य, व्यक्तिचित्र आदि) पनि हरेको छु । यो सन्दर्भ उठाउनुको मेरो अभिप्रय हो भिन्न व्यवसाय, भिन्न पृष्ठभूमि, भिन्न सोच विचार तथा धारणा लिएर लामो समयसम्म आ-आफना व्यवसायमा

कार्यरत भएर पनि साहित्यका विभिन्न विधामा सिर्जना गर्न सक्छन् । यस सन्दर्भमा त्यस प्रकारका स्रष्टाहरूबाट सिर्जित रचनाहरूमा भिन्नै तर मधुरो स्वद र मिठास पाइन्छ, साथै अभिव्यतिको शैली र सोच प्रस्तुति तात्पर्य पनि फरक हुन्छ । यसैले त्यस प्रकारका रचनाहरूको पाठकमा मधुर प्रभाव पार्न सक्छ ।

यसै पृष्ठभूमि र सन्दर्भमा चर्चा गर्न सकिन्छ निरज भटराईका कविताहरूको । हुनत कवि निरज पनि व्यवसायले डाक्टर हुन् । यस अर्थमा उनको व्यवसायको पृष्ठभूमिले उनको सोच बिचार धारणा अनि कविता सिर्जनाको लक्ष्य, तात्पर्य, अभिप्राय पनि सामान्य रूपमा भिन्न छन् । उनी एक गजलकार पनि हुन्, यस अघि 'मेरो भन्नु केही छैन' २०६५मा र 'तलाश' २०६७ मा गजल संग्रहहरू प्रकाशित गरिसकेका छन् । डा. निरज भटराईका गजलका केही उद्धृतांशहरू हेरौं–

सदियौं देखि अपलक यी मूर्तिलाई के थाहा
बन्द आँखा पछाडि कस्तो उज्यालो लुकेको छ ।

हावाका हातहरू हरियो कपाल सुमसुम्याईदिन्छन्
मोडमा टक्क उभिएर पीपल निदाए जस्तो गर्छ
चाहेको भए सिङ्गै नदी पिउन सक्थ्यो बगरले
अरूको तिर्खा सम्झेर ओठ भिजाएजस्तो गर्छ ।

(शारदा, मासिक, वर्ष २ अंक २ पुर्णाङ्क १४ )

वर्तमान नेपाली पद्य विधामा गजलको वर्षा घनघोर रूपमा भइरहेको समयमा नयाँ स्रष्टाका गजल पाठ गर्न पाउनु राम्रो अवसर हो किन्तु गजलको रचनामा भाव र अभिव्यक्तिमा विचार-लक्ष-तात्पर्य-अभिप्रायमा समन्वय र एकत्व भएन भने गजलले दिने प्रभाव र छाप फितलो बन्छ, अनि गजल पाठमा मिठो स्वाद र मधुरता हराउँछ । यस अर्थमा शब्द चयन र वाक्य विन्यासमा गजलकार सचेत र संवेदनशील बन्नै पर्छ, नभए रचना गरिएको गजल फिक्का बन्न जान्छ । गजल रचनाको रदिफ (समानुप्रास) र काफिया (अन्त्यानुप्रास) मिलाएर भाव सम्प्रेसणमा पर्यायवाची शब्द प्रयोग गर्न सकिएन भने यसबाट पाठकलाई गजल पठनमा बेस्वाद बन्छ साथै शब्द प्रयोगको एक भण्डार मात्र बन्छ । मलाई लाग्छ– गजलमा भाव र अर्थ, संयोजन र तात्पर्य को एकत्व पनि महत्वपूर्ण पक्ष हो ।

किन्तु निरजको गजलमा पहिलो पंक्तिमा प्रयोग गरिएका शब्द र दोस्रो पंक्तिमा प्रयोग गरिएका शब्दले उत्सुकता र एक प्रकारको भाव अभिव्यक्तिको विपरीतात्मक तात्पर्यमा अर्थचातुर्यको संकेत गरेको पाइन्छ । उदाहरणको लागि उद्धृतांश १ मा "अपलक र उज्यालो" अनि दास्रो उद्धृतांश मा "हरियो कपाल र पीपल" तथा "पिउन र तिर्खा" शब्दहरूले भाव सम्प्रेशणमा मधुरता ल्याएर एक प्रकारको विपरीत भाव उत्सुकताले पाठकको मनमा चस्स प्रभाव पार्छ, भवनाको आरोह-अवराहको अभिव्यक्तिले पाठकलाई विचार गर्न र अर्थ खोज्न झकझकाउँछ । मलाई लाग्छ– गजलको मधुर र सौन्दर्य पक्ष भनेकै तिख्खर भाव-अभिव्यति हो जसले पाठकलाई मानसिक र हृदयगत सन्तोष-आनन्द दिन्छ ।

डा. निरज भटराईको “धुवाँको धागो” अध्ययन गरेर मैले संग्रहलाई टेवलमा राखि छोडेको बेला मेरी श्रीमतीले लिएर केही कविता पढेपछि मलाई प्रश्न गरिन्– ‘धुवाँको धागो पनि हुन्छ र ? प्रश्न सामान्य तर रोचक छ । मैले उनलाई डोरीमा सर्पको आभास गर्नु र सुतलीमा गँडचौला देख्नु– जुन तिनकै अनुभव भएको थियो– को घटना र सन्दर्भ उल्लेख गरेपछि शायद तिनलाई अर्थ स्पष्ट भयो क्यारे, अरु थप प्रश्न र तर्क निस्केन । मैले भनें– ‘यस्तो अभिव्यक्ति एक प्रकारको प्रतीकात्मक र विम्बात्मक अभिव्यक्ति हो । हामीले धूप बाल्दा धुवाँको पातलो लहर वा रेखा धागो जस्तै बन्छ, यो एकप्रकारको विचार तर क्षणिक दृश्य हो, जीवन्त सत्य हो तर अदृश्य भएर जान्छ किन्तु द्रष्टालाई केही विचार गर्न सकसकाउँछ ।

स्रष्टा वा यहाँको सन्दर्भमा कविको पष्ठभूमि र वैचारिक पक्षले गर्दा कुनै पनि रचनाको अर्थ र प्रस्तुतिमा फरक पर्न आउँछ– अर्थात् एक जना स्रष्टाले गुलावको फूलको वास्नामा सौन्दर्य देख्छ, चित्रकारले पात र पत्रदलको आकार तथा रङ्गमा सौन्दर्यको अनुभव गर्छ भने अत्तर व्यापारीले त्यसै गुलावमा तरलतत्वको अत्तर वास्नाको  काल्पना गर्छ । हो प्रकृति, समाज अनि हामी– मानिसहरूको वैयक्तिक पृष्ठभूमि र विचार वा स्वभावले एकै वस्तुमा विभिन्नता देखिनु वा अर्थ खोज्नु हाम्रै स्वभावका कारण हुन् । यसैले यस सन्दर्भमा कवि निरज भटराई एक प्रकारले भिन्नै वा आफ्नै कवि-व्यक्तित्वका रूपमा यहाँ पाइन्छन्  ।

सामान्य अध्ययन र पाठ पछि उनका कविताको प्रस्तुतिमा नाटकीयताको अनुभव मलाई भयो । अर्थात् कविताको प्रारभ्ममा व्यक्त गर्न खोजिएको अर्थ आरोहको गतिमा उच्चतम बिन्दुबाट स्वाट्ट झरेर अर्थमा र प्रस्तुतिमा नवीताको भाव पाइन्छ । अर्थात् प्रारभ्ममा एक प्रकारको उत्सुकता सिर्जना गर्छन् अनि अन्त्यमा त्यसै को सरल तर अर्थपूर्ण समाप्ति प्रस्तुत गर्छन् ।

यस पक्षबाट हेर्दा अर्थ-विपरीत पनि पाइन्छ, तर कविताको पठन पछि एक प्रकारको भिन्न अर्थमा पाठक आश्चर्य र नयाँ अर्थ अनुभव गर्न पुग्छन् । यस प्रकार को नाटकीय अन्त्यमा एक प्रकारको सरल सोच र दार्शनिक भावमा सचेत प्रवुद्ध पाठक आनन्दको अनुभव गर्न सक्छन् । कविताका केही अंश उद्धृत गर्न सकिन्छ :

जम्मै अप्ठयाराहरू जलाएर मैले
कोइला आफना गोजीमा भरेको थिएँ ।

ω

समयले अप्ठयाराका कोइलालाई
हिरा बनाई दिएछ ।

(जम्मै अप्ठयाराहरू जलाएर- पृ. २४)

अर्को शीर्षकको कविता “हजुर बा” यस्तै नाटकीय अन्तर अर्थमा दार्शनिक अर्थ दिन्छ । हजुरबाले नातिकै अनुहार छापिएको एउटा टि-शर्ट दिनुभयो तर हजुर बाको मृत्यु पछि टि-शर्टको धागो उधिंदै गयो । राम्रो कल्पना र तुलना हो । टि-शर्टमा व्यक्तिको जीवन प्रत्यारोपण गरिनु, अनि टि-शर्टको धागो निस्कँदै गएपछि, कवि पनि आफ्ना जीवनका दिनहरू वा बैचारिक-तत्व टि-शर्टको धागो जसरी उधिंदै गएको

तुलनात्मक विचार र प्रस्तुति रोचक र अर्थपूर्ण तरिकामा व्यक्त गर्छन्:

हेर्दा हेर्दै मेरो अनुहार / धागो बनेर हरायो टि-शर्टबाट

ઝ

म पनि उध्रिदै गैरहेछु भित्र भित्रै
हराउँनेछु धुवाँको धागो बनेर एक दिन
तपाईं भएको भए सोध्ने थिएँ / को हो जो तानिरहन्छ धागो
म उध्रेको ठाउबाट !?

(हजुरबा पृ. २६)

टि-शर्टको धागोकमा जीवनको कल्पना गर्नु एक प्रकारको असंगत वा स्वप्निल कल्पना हो । धुवाँ उडेर प्रकृतिमा हराए जसरी जीवन पनि वैचारिक वा दार्शनिक प्रश्न, हो जीवनको रहस्य, अदृश्य शक्ति, अहिलेसम्म समाधान नभएको प्रश्न जीवन र संसारको रहस्य, मृत्यु वा मृत्यु पछिको रहस्य तर सांसारिक प्रकृतिको दृश्यगत सत्यता अनि यसको विपरीत र सर्वोच्चतामा अदृश्य दार्शनिक सत्यता ।

यहाँ मलाई तर तुलनाको लागि होइन विलियम शेक्सपियरको नाटक ह्यामलेटका केही हरफ उद्धत गर्न मन लाग्छ :

To die, to sleep; / to sleep, perchance to dream.

ઝ

The undiscovered country, / from whole bourn
No traveler returns— puzzles the will

[Act 3, Scene 1]

अर्थानुवाद–

मृत्यु वा निद्रा, निदाउनु भन्नु स्वप्नजस्तै
त्यो अज्ञात प्रदेश,
जसको सीमाबाट कुनै यात्री फर्कन्नन्,
कस्तो आश्चर्यमय चिन्तन !

जीवन संसारको एउटा रहस्य, कटु सत्य, दार्शनिक सत्य, अपरिहार्य तर अनियन्त्रित सत्य, मलाई लाग्छ शायद हाम्रो सनातन धर्म र दर्शनअनुसार ब्रह्मवेत्ता र ईश्वर साक्षात्कार गर्ने महात्माहरूलाई जीवन र त्यो अदृश्य मृत्यु लोक थाहा होला त ?

कवि निरज आफ्ना मान्छेको भ्रमको चर्चा गर्छन्, चिनी र कमिलाको सम्बन्धमा “ठूला कमिलालाई डायबेटिज भएको हुनेछ” भनेर कटु सत्यपूर्ण व्यंग्य गर्छन्, अर्थात् मान्छेको लोभको असीमित तृष्णाको संकेत गर्दै लोभी व्यक्तिप्रति व्यंग्य गर्छन्, सर्पले काँचुली फेरेर बाँच्न सक्छन् तर मान्छे किन काँचुली फेरेर बाच्न सत्तैन भनेर व्यंग्य गर्छन् । तर विचार परिवर्तन गरेर, सिद्धान्तको प्रतिबद्धता छाडेर स्वार्थका लागि राजनैतिक दल फेर्ने धेरै व्यक्तिहरू छन् । उनको अर्को कविता तिर्खामा आइमाई जस्ता चारवटा पुत्लाहरू को उल्लेख गर्दै अर्थात् पसलमा सजाएर राखिने मानिसको प्रतिरूपको तुलना आजकलका फेशनप्रिय नारीहरूसंग गर्दै व्यक्तिको अवमूल्यन

भएको र संवेदनशीलता ह्रास हुँदै गएकोमा व्यंग्य गर्छन् । उद्धृत गर्न सकिन्छ "कि चारवटै पुत्लाहरू हेरिरहेछन् । ढोकामा उभिएकी आइमाईलाई... ... मैले कसैगरी अन्दाज गर्न सकिनँ । उनीहरू के हेरिरहेका छन् । चिसो पानीको बोतल या आइमाईको पेट" पसलमा सजाएर राखिएका ती पुलाहरू निर्जीव छन्, सोच्न सक्तैनन् यसैले कवि आफै आश्चर्यमा पर्छन् ती मानेक्वीनहरू के सोच्छन्, नारीको लघुताभास र फेसनप्रियताप्रति व्यंग्य । व्यंग्यका अरू उद्धरण–

(१ )यहाँ केटाकेटीहरू कलमले कोरेर लामो बनाइदिन्छन् हिटलरका जुँगा ।

(२)जव जव लोग्ने फर्किदैन कुनै दिन स्वास्नी लोग्नको खाटमा सुत्छे ।

कवि निरजका कविताहरूको अर्को उल्लेखनीय पक्ष हो अर्थ वा विचार-अभिव्यक्तिमा चातुर्य अनि अर्थ-गहनता र आश्चर्य । कविताहरू छोटा छन् यसैले पनि पठन क्रियामा सहज र सरलता छ तर कविताहरूको प्रारम्भ र अन्त्यमा अर्थको सम्प्रेशणमा एक प्रकारको मधुरता र आनन्द प्राप्त गर्न सकिन्छ । केही कविताका उद्धरणहरू

(१) सबथोक रहेछ मान्छे भित्र
छिचोल्नु पर्ने ब्रहमाण्ड त मान्छे स्वयम् रहेछ ।

(ब्रह्माण्ड, पृ. ८६)

(२) ईश्वरलाई पनि भुरुङ खेल्न औधी मन पर्छ
ऊ नालले बेरेर फुत्त फालिदिन्छ मान्छेलाई दुनियाँमा
र ताली बजाइरहन्छ मान्छेको नाचमा

(भुरुङ, पृ. ११६)

(३) यो कविता लेख्दै गर्दा
म हठात् आफ्नो खुट्टातिर हेर्छु
के म पनि कुनै प्वाँख माथि उभिएको त छैन ।

(आधार, पृ. ७२)

उद्धरण (१)को अर्थमा मान्छे स्वयम् ब्रह्माण्डको रूपमा प्रस्तुत गरिएको छ । हो पनि, मानिसको शारीरिक अवयवमा कुनै आश्चर्य छैन केवल दृश्यगत शारीरिक अङ्ग-प्रत्यङ्गको भिन्नता तर मानिसभित्रको बैचारिक पक्ष बुझ्नमा कठिनता र रहस्य छ । मलाई संम्झना हुन्छ एक जना ब्रिटिस भौतिकशास्त्री सर जेम्स जिनको वाक्यको । उनी आफ्नो "रहस्यमय ब्रहमाण्ड"मा लेख्छन्– हामीले देख्न सकिने, अध्ययन गर्न सकिने ब्रहमाण्ड त रहस्यमय छ भने नदेखिने मानिसभित्रको ब्रह्माण्ड कति रहस्यमय होला ? मानिस स्वयम् नै ब्रहमाण्ड भन्दा बढी रहस्यमय छ ।" एक प्रकारको आश्चर्य र रहस्य, यही रहस्यले गर्दा एक जनाले अर्कोलाई धोका दिन्छ, अपराध गर्छ । अर्को उद्धरणमा ईश्वरलाई पनि भुरुङ खेल्न औधी मन लाग्छ । मानिसको मन त बुझ्न सकिन्न, रहस्मय छ भने ईश्वरको मन कति रहस्यमय होला, बस एउटा कल्पना मात्र । यसरी कवि निरजका कवितामा आश्चर्य र अर्थ छ ।

अन्तिम उद्धरणमा कीरा र कवि स्वयम्को समानन्तर प्रस्तुति र अर्थमा एउटा आश्चर्य कवि स्वयम् अनुभव गर्छन्, अर्थात् जीवनका घटनाक्रमहरू हामी मानिस

कल्पना गर्न र देख्न सक्तैनौ, जब दुखद वा सुखद घटना हुन्छ त्यो नै एउटा आश्चर्य बन्छ, अनि हामी विचारमग्न बन्छौं– किन यस्तो भयो ।

उनको "विदाई" कविताको उद्धरण

(१) यौटा कविता लेखें पानीमा
र परसम्म बगेको हेरिरहें

ꝏ

यौटा कविता लेखें पानीमा
र छोरी जसरी बिदा गरें

( विदाइ, पृ. ११८)

(२) हेरन,
यौटा अर्को गल्ती पनि भएछ म बाट
तिमीलाई दिलमा राख्नु पर्ने, गजलमा उतारिदिएछु ।

(आफ्नै किताब बारम्बार पृ. ११२)

जो बस्न भ्याउँदैन
उसलाई खेलबाट हटाइन्छ ।

ꝏ

यसपलि हजुरआमा बस्न सकिनन् ।

(म्युजिकल चेयर, पृ. ९६)

कविको अनुभव र अनुभूतिको अभिव्यञ्जना, तर अर्थमा चातुर्य, अर्थमा सौन्दर्य, अर्थमा सौन्दर्य यस सन्दर्भमा– कविताको पठनपछि पाठकलाई एक प्रकारको मानसिक वा हृदयगत आनन्द प्राप्त हुन्छ । कविता पढदै जाँदा मलाई कतै हाँस्न मन लाग्यो, कतै अभिव्यक्तिको अर्थमा नवीन स्वाद आयो । कविताहरू छोटा छन् अर्थ दुरूहता छैन, तुलना र प्रस्तुतिमा मिठास छ । छोरीलाई कवितासँगको सम्बेदनशील र ममतापूर्ण प्रस्तुति, अर्थ र सम्प्रेसणमा पाठकलाई सोच्न बाध्य गर्छ सम्बेदनशील र ममतापूर्ण । अन्तिम उद्धरणमा हजुरआमा म्युजिकल चेयरमा बस्न नभ्याउनु वा नसक्नु, थोरैमा हजुरआमाको मृत्युको अभिव्यक्ति कस्तो मिठासपूर्ण रूपमा प्रस्तुत गर्छन्, भावना दुखपूर्ण छ तर अभिव्यजनामा आश्चर्य र उदेक, सरल ढंगमा हजुर आमा नहुनुको भाव ।

गणित विज्ञान होइन तर सबै विज्ञानको जननी र आधार हो भनेझैं कविता कल्पना मात्र होइन तर जीवन र प्रकृतिको तर्कपूर्ण लेखन हो ।

कुनै कुनै कवितामा विपरीतात्मक प्रस्तुति भए पनि तर्कपूर्ण अर्थ छ, जस्तो दोस्रो उद्धरणमा छ । वर्तमान सन्दर्भमा भन्ने हो भने देशमा राजनैतिक गतिरोध, अस्थिरता, राजनैतिक गन्जागोलको भुँमरीबाट कवि निरज एकदम अलग्गै, आफ्नै काव्यगत र सिर्जनात्मक मनोभावमा रसमय र सौन्दर्यपूर्ण अर्थमा कविता लेख्छन्, यो नै कविको विशेषता मान्न सकिन्छ ।

ꝏꝏ

# ध्रुव सापकोटा र अमर न्यौपाने : आ-आफ्ना कृतिमा

श्रीकृष्ण गौतम
छाउनी

खेमलाल हरिकला लामिछाने समाज कल्याण प्रतिष्ठानद्वारा प्रदान गरिने पद्मश्री साहित्य सम्मान २०६६ का लागि विभिन्न कृतिहरू मध्ये उत्कृष्टतामा चयन भएका दुई कृतिहरू हुन् : 'अकल्पनीय' र 'पानीको घाम'। संयुक्त रूपमा सम्मानित तथा पुरस्कृत हुनुहुने ती दुईका लेखक क्रमशः ध्रुव सापकोटा र अमर न्यौपानेलाई वधाइ ।

प्रतिष्ठानले विगत केही वर्षदेखि साहित्यको उन्नयनमा जुन योगदान दिँदै आएको छ त्यसका निम्ति संस्थाका प्रमुख जीवा लामिछाने, अन्य पदाधिकारी र सदस्यहरू धन्यवादका पात्र हुनुहुन्छ र यस किसिमको गौरवमय अभियानमा प्रतिष्ठानको उत्तरोत्तर जागरूकता बढ्दै जाने छ भन्ने आशा गरिन्छ ।

विषयको प्रस्तुतीकरण, विचारको स्थापना, अनुभूतिगत सूक्ष्मता एवं विवेचनाको सीपले ती कृतिहरू सशक्त छन्, तिनमा हामी आजको समस्या पाउँछौं, आजको जीवनको उद्घाटन पाउँछौं, रचनाशिल्प मसिनो छ, कसिलो छ, सामान्यजस्तो भईकन सघन छ । विम्ब र प्रतीकहरू जीवन्त छन्, सांस्कृतिक पाटाहरू खुलेका छन् । नेपाली साहित्यको इतिहासमा ती दुई कृतिको स्थान गौरवमय रहनेछ । पुरस्कारका निम्ति ती कृतिको औचित्य तलका पङ्तिमा प्रतिपादित विशिष्टता, लक्षण र आयामहरूबाट प्रकट हुन्छ ।

**अकल्पनीय**

उच्चारण, नेपथ्य, हामी हाँसिरहेका छौ, अन्धकार, बितेकोजस्ता कथासङ्गहका कर्ता, प्रतिचक्रव्यूहका सहकथाकार, आकाश विभाजित छ, अवतार विघटन, देहमुक्त, ज्यागाजस्ता कृतिका सहउपन्यासकार ध्रुव सापकोटा (२००९) विखण्डित पछि अकल्पनीय (२०६६) नामक उपन्यास लिएर देखापर्नुभयो । २०२० को पश्चार्धदेखि कथाकारितामा उदाउनु भएका सपकोटा लेखनलाई निरन्तरता दिँदै उपन्यसविधामा पनि फड्को मार्न सफल हुनुभयो । उहाँ आधुनिक प्रवृत्तिका प्रयोगशील कथाकार हुनु हुन्छ र समकालीन, समधर्मी अन्य लेखकहरूबाट आफ्नो मौलिकता पनि कायम राख्नु हुन्छ । राष्ट्रिय तहबाट हेर्दा उहाँको लेखन आभिजात्यवादका विपरीत निम्न तथा साधारण जनताको पक्षमा मुखर छ भने अन्तर्राष्ट्रिय तहबाट हेर्दा शस्त्रास्त्रको विकास, शीतयुद्ध र विश्वसमर आदिबाट उत्पन्न मानवीय निरीहता, भय र सङ्कटको सापेक्षता राख्दछ । उहाँ अस्तित्ववाद र विसङ्गतिवादबाट प्रेरित लेखक हुनुहुन्छ । समयसापेक्ष परिवर्तन उहाँका कृतिमा दृष्टिगत हुँदै आएको छ ।

अकल्पनीयमा पेमा नाम गरेकी नारीपात्रको जीवनयात्राको कथा छ। सिक्किमको मजदुरपरिवारमा जन्मेकी पेमा सानै छँदा ल्हासाली समृद्ध, सन्तानहीन व्यापारीदम्पतीद्वारा अपहृत भई र ल्हासामै लगिई। दम्पतीले उसलाई माया दिए, हुर्काए, बढाए र पढाए, ऊ तरुनी भई। तिनीहरूलाई नै उसले आफ्ना आमाबाबु ठानी। जब ल्हासामै यो अभिज्ञान (रिकग्निसन) भयो कि उसलाई जन्म दिने आमाबाबु अर्कै छन् तब उसको व्यक्तित्वमा, कर्तृत्वमा विभाजनको ठूलो धाँजा फाट्यो, जन्मगत पहिचान (आइडेन्टिटी) खण्डित भयो। तिब्बतमा चीनको आक्रमण भएपछि दलाई लामासहित लाखौँ तिब्बतियनहरू स्वदेश छाडेर निर्वासित हुन वाध्य भए। औपनिवेशिकताका विरुद्ध उत्तरऔपनिवेशिक विद्रोह सुरू भयो। आक्रमणको विपत्तिमा अभिभावकबाट विछोडिएकी पेमाले अन्य तीन युवतीका साथ पलायन लिई। ती तीन युवतीमध्ये दुई पलायनमार्गकै वासहरूमा सम्पर्क भएका युवाहरूसित बसे, अर्की अफन्तका साथ लागी। पितृसत्तामा हुर्के पनि हिम्मतदार चरित्रकी पेमा एक्लै सिक्किम आइपुगी। नारीवाद र लिङ्गसमीक्षाका विचारले पेमाको जीवन

अन्तरङ्ग पीडा, धैर्य, साहस र स्वतन्त्रताका लक्षणले अङ्कित भएको पाइन्छ।

पेमाको जीवन पारिवारिक, स्थानिक (राष्ट्रिय), भाषिक, सांस्कृतिक विखण्डनको, विनिर्माण (डिकन्स्ट्रक्सन)को जीवन हो जसको पुनर्निर्माण (रि कन्स्ट्रक्सन) मा ऊ अग्रसर त हुन्छे तर अपेक्षित सफलता मिल्दैन। उसको दाम्पत्यजीवन निर्भय र सङ्कटमुक्त हुन सकेन। भुटानियाहरूद्वारा खेदिने भएपछि दम्पती काठमाडौँ आए। काठमाडौँमा पनि तिब्बतियनका विरोधी जासुसहरूका कारण खुला जीवनमा धक्का पुगेकाले उनीहरू हराए, अनिश्चयको ध्वनि श्रुतिगत भयो।

उपन्यासले शरणार्थी समस्यालााई उजागर गरेको छ। दार्जिलिङ, सिक्किम, भुटानहरूमा डायस्पोराली समुदाय विकसित हुँदै आएको हो। डायस्पोराली सांस्कृतिक, सामाजिक बिम्बहरूले र शरणार्थी समस्याले उपन्यासलाई अद्यतनता प्राप्त छ। सिक्किम, तिब्बत, भुटान, नेपालहरूमा पेमाको देश कुन हो ? मूलोच्छेद भएकी नारीको गहन पीडा र आघातले ग्रस्त जीवन यहाँ हामी देख्दछौँ। पद्धतिशास्त्रलाई दृष्टिगत गर्दा कतैकतै लेखक सम्मिलित भए पनि ६५ भागमा लिखित कृति तटस्थ चित्रणमा विकसित भएको छ। उनी अतिसंयमशील छन्, वाचालता बहिष्कृत छ, भावुकता कतै छैन, त्रास र पीडाको प्रगाढता अनुमेय छ। साधारणजस्तो लाग्ने यस कृतिले मानवीय सङ्कटको जरा खोतल्न बाँकी राखेको छैन। कुनै तथ्यको खुलासा गर्नु पर्दा हामी हेतुवादको आश्रय लिने गर्छौं तर जब हेतु नसोचिएको शक्ति लिएर आउँछ र स्थितिविपर्यय (रिभर्सल) हुन्छ तब त्यो अकल्पनीय हुन्छ

र आकस्मिकताले परिभाषित हुन्छ । बुद्धिसम्मत, सुसङ्गत भएर इतिहास गतिमान हुन्छ भन्ने मान्यतालाई उत्तरआधुनिकताले चुनौती दिइसक्यो । त्रासदीमा, कलामा, साहित्यमा, साहित्यिक समालोचनामा आकस्मिकतालाई खुट्याउने प्रयत्न हुँदै आएको छ । आकस्मिकताको विडम्बनालाई ओगटेर यो रेखीय उपन्यास आधुनिकता र उत्तरआधुनिकताको दोसाँधमा अनिश्चयको नृत्यप्रदर्शनका साथ हामीलाई सम्बोधन गर्दछ । ध्रुव सापकोटा आधुनिक पद्धति र प्रयोजन अनुरूप लेख्दै आएका हुन् । अकल्पनीय क्रमबद्ध, सुश्रृङ्खलित आधुनिक उपन्यास हो । साहित्यिक भाषामा अकल्पनीयलाई हामी विडम्बनाको अभिप्रायमा बुभ्क्दछौं । अपहरण, पहिचान, विडम्बना, पितृसत्ता, लैङ्गिकता, स्थानगत विस्थापनजस्ता कुराहरूमा उत्तरआधुनिकताले जोड दिँदै आएको छ । यस रूपमा कृतिको दोसाँधे स्थिति बोधगम्य हुन आउँछ ।

**पानीको घाम**

आमर न्यौपाने (२०३२) पानीको घाम (२०६६) नामक आख्यान प्रकाशमा ल्याएर अकस्मात् चर्चामा आउनु भयो । यसै कृतिले मात्र उहाँलाई चिनाएको भने होइन । २०५३ मै उहाँको पहिलो गीत निस्केको थियो । रत्नपार्कमा व्यापार (२०५४) नामक कथा निकालेर बाह्र वर्ष अगि नै उहाँले कथाकारिताको नौलो सीप देखाउनुभयो । अहिलेसम्म उहाँका दुई दर्जनभन्दा धेरै कथा निस्किसकेका छन् । कथाको सीपले उहाँलाई आख्यानको लेखनमा प्रेरित गऱ्यो जसको उपज हो : 'पानीको घाम' । अद्यतन चाख (एक्सपेक्टेसन्स) लाई सम्बोधन गर्ने यो कृति नेपाली आख्यानसाहित्यको सुन्दर रत्न भएर जीवित रहनेछ ।

कृति न कथाजस्तो छ न उपन्यासजस्तो नै, विधाभञ्जनको यो एउटा सीप हो, केही कथाजस्तो, केही उपत्यासजस्तो भएकाले यसलाई विधामिश्रणको आख्यानविधामा राख्नु उचित हुन्छ । उत्तरआधुनिक अभिरुचिमा उपन्यासको भन्दा आख्यानको संज्ञाले ठाउँ बनाएको छ । कृतिमा कुनै एक नायक छैन । उपन्यासमा एउटा मुख्य पात्र वा नायक हुन्छ र त्यसैले कृतिलाई एकनिष्ठ राख्छ । त्यस्तो नायक नभएको यो कृति अपरम्परित छ र सिर्जनाको नयाँ सीपमा अङ्कित छ । यो परम्परित केन्द्रभञ्जनको कृति हो । केन्द्रका

विपरीत यहाँ नेपालगन्जको स्थानीय भूगोल बोल्छ । राष्ट्रिय / स्थानीयको युग्मकमा स्थानीयको भूमिका उठ्नाले त्यसमा हाम्रो जागरूकता बढ्छ । भूगोल आफैँ बोल्दैन, त्यो त्यहाँका नरनारीहरूको क्रियाकलापबाट बोल्छ । अङ्कित नरनारीहरू प्रायः निमुखावर्गका छन् । उच्च / निम्नको युग्मक तोडिएको छ, दोस्रोले प्राथमिकता पाएको छ । वर्ग (क्लास) भन्नाले सामान्यतः कलकारखानामा काम गर्ने जनसमुदायको बोध हुन्छ त्यसलाई पनि पन्छाउनाले सबल्टर्नलाई प्राथमिकता मिल्यो । यो त्यो वर्ग हो जो

क्रान्तिको अर्थोडक्स सूत्र घोक्तैन र जीवनका सहज गतिविधिहरूमै आफ्नो पहिचान राख्दछ । निमुखासामुदाय एकरूप (होमोजिनस) नभई बहुरूप (हेटरो जिनस) भएकाले त्यस समुदायको चरित्रमा बहुलवाद झाँगिन गएर परम्परित वर्गको विचार डिकन्स्ट्रक्सनमा छिन्नभिन्न भयो ।

१९५ पृष्ठमा चित्रित कृतिका उपेक्षित, पीडित, किनरीकृतहरूले स्थानीय, राजनीतिक, सांस्कृतिक, आर्थिक पाटाहरू खुलेका छन्, बहुभाषिक, बहुधार्मिक, बहुल जीवनशैली अङ्कित भएको छ । यसले स्थानीय भईकन हामीलाई राष्ट्रिय एकतातर्फ सचेत पार्दछ । नरनारीका आशा, आकाङ्क्षा, करुणा, आँसु, हाँसो, हर्ष, विस्मयहरूले ठाउँठाउँमा हामीलाई उत्तेजित पार्छन् । कतैकतै कुराकानीमा पसिनाका साथ जोडिएर आएको परिहासले हामी रमाउँछौँ । विवशता, गरिबी, भोक, यौन, तृष्णा, लैङ्गिकता एवं मृत्युका चित्रहरूले फेरि कतै हामी आहत हुन्छौँ, कतै प्रतीक्षाको व्यग्रता छ, कतै दाम्पत्यजीवनसित गाँसिएको

राष्ट्रियता । खेल, क्रीडा, प्रदर्शन, परिहास, व्यङ्ग्य र विडम्बनाका विम्बहरू यत्रतत्र छरिएका छन् । झलक आचार्यको झलक नामले दृष्टिबिन्दुको सङ्केत दिन्छ । समग्रता ओगटिँदैन, खासखास दृष्टिबिन्दुबाट अङ्कित विम्बहरू रोचक छन् । कृतिमा प्रतीकहरूको प्रशस्त क्रियाशीलता छ । पानीको घाम शीर्षकले घामपानीको परम्परित युग्मकलाई तोडेको छ र पानीलाई प्राथमिकता दिएको छ । प्राकृतिक सम्पदाले सम्पन्न देश नेपाल अब मरुभूमिमा परिणत हुने त होइन भन्ने त्रास बढ्दो छ । प्रदूषणले हामी आक्रान्त छौँ । पानीको प्राथमिकताले के सङ्केत गरेको छ भने सुक्खापनालाई, खडेरीलाई, मरुभूमिलाई पनीले जित्नु पर्छ र सरसताको, प्राकृतिक उर्वरताको वृद्धि हुनु पर्छ, प्रदूषणको निराकरण हुनुपर्छ, मानिसमानिसमा प्रेम बढ्नुपर्छ, सम्पूर्ण प्राणीजगत्मा परस्पर आत्मीय भाव जाग्नु पर्छ । रगत नबगोस्, आँसुको पोखरी नजमोस् , सौहार्द्रतामा बृद्धि होस्, हामी नेपालीमा रसिलो मित्रता स्थापित होस् । कृतिको सन्देश यही छ ।

ЖЖ

## १९९/ग्रीनपार्क रेष्टुराँ, नारायणगोपाल चोक (०७५.०.३. ५)

रापउ पखरेल : यहाँको परिचय ?
चेतनाथ धमला : म चेतनाथ धमला ।
रापउ पखरेल : ए: ऋषि धमलासित केही नाता पर्छै कि ?
चेतनाथ धमला : परिहाल्छ नि ! हामी सबै ऋषिकै सन्तान त हौं नि ।

Ж

## पहिलो अङ्कको सम्पादकीय

पत्र-पत्रिकाहरूको छेलोखेलोमा एउटा अर्को पत्रिका थपिएको छ । तर भोक भोकै बसेर सहित्यको सेवा वा ललनी गाएर वाङ्मयको श्रीवृद्धि गर्न यो अवश्य पनि तम्सिएको होइन । अतः जसरी लेखनलाई एक किसिमको रहर वा सनक वा तुष्टी भन्न सकिन्छ- 'अभिव्यक्ति'लाई पनि त्यसै मात्र भन्दा बेस होला ।

जीवनसँग नगाँसिएको साहित्य हुँदैन । जीवनचाहिं अर्थ, राजनीति, अहम्, यौन आदिको संश्लेषणबाट मुक्त हुँदैन । अतः विशुद्ध साहित्य केही हुँदैन । तर यसो भनेर नारालाई साहित्य भन्न खोजेको पनि होइन । जीवनको अभिव्यक्तिलाई हामी साहित्य भनिने कलामा बाँधिएको छाप्न चाहन्छौं– आग्रह मुक्त भएर । साहित्यिक बन्धुहरूसित यही अनुरोध छ ।

साहित्यिक प्रकाशन सम्बन्धी व्यावहारिक अनुभवको कमीले गर्दा यो पहिलो अङ्क सोचेको जति स्तरीय हुन सकेको छैन । दास्रो अङ्क अझ सपार्ने छौं ।

राष्ट्रिय प्रजातन्त्र दिवसको शुभ अवसरमा सबैलाई शुभ-कामना ।

ଓଓ

## २८. हरिभक्तकटुवाल स्मृतिअङ्कको सम्पादकीय

कहिले काहीं कस्तो भइदिन्छ भने जब धेरै धेरै कुराहरु भन्नु पर्ने हुन्छ अनि केही पनि भन्न मन लाग्दैन । तर यसो हुँदा हुँदै पनि केही न केही नभनी सुख नपाएजस्तो पनि हुन्छ– जस्तो कि अहिले मलाई नै भैरहेको छ ।

स्वरहरू सुन्छु 'हरिभक्तलाई रक्सीले खत्तम पार्‍यो ।' होला पनि । तर जहाँ सम्म रक्सीको कुरो छ– रक्सी नखाने साहित्यकार त यस काठमाडौंमा बत्ती बालेर खोज्नु पर्छ । अझ यस मामिलामा हरिभक्तलाई पनि माथ गर्नेहरूको पनि कमी छैन यहाँ । साधारणतया हरिभक्तले एक महिनामा खाने जति रक्सी शैलेन्द्र साकारका लागि दुई हप्ताको मात्र खुराक हो भने वासु शशीलाई त्यति रक्सीले एक हप्ता मात्र टर्छ । दौलत विक्रम विष्ट, पोषण पाण्डे, ईश्वर बल्लभ, भवानी घिमिरे, मोहन कोइराला, प्यासी, मनु ब्राजाकी, जगदीश घिमिरे, कुमुद देवकोटा, सन्तोष भट्टराइ, विनोद दिक्षित, विनोद अश्रुमाली, मोहन घिमिरे, ध्रुव सापकोटा, किशोर नेपाल, ध्रुवचन्द्र गौतम आदि आदि अनेक महारथीहरू छन् क-कस्को नाम नलिउँ ? कोही भन्दा कोही एक रत्ती कम छैनन् । (नामावली धेरै लामो हुने हुनाले 'यहाँ मेरो नाम पनि नछुटाइदिनु पर्ने' भनेर गुनासो गर्ने साथीहरूसँग क्षमा याचना गर्दछु) तर फरक के छ भने अरूहरू लुकेर खाने, ऊ देखाएरै खाने । अरूहरू साँझ वा रात परेपछि खाने ऊ दिउँसै वा विहानै खाने । मलाई त लाग्छ रक्सी, यदि खान नहुने कुरा हो भने साँझ पनि हुँदैन, राती पनि हुँदैन, कुनै पनि बेला

खानु हुँदैन र यदि खानु हुने कुरा हो भने, रुच्छ पच्छ विहानै पनि हुन्छ दिउँसै पनि हुन्छ– जुनसुकै बेला पनि खाए हुन्छ। जहाँ सम्म खाएर जथावाही गने प्रश्न छ जथावाही त रक्सी नखाएर पनि गर्नु हुन्न वा अमृतै खाएर पनि गर्नु हुन्न। त्यसैले रक्सी खाने धेरै भएपनि बदनाम हुने चाहिँ हरिभक्त एक्लै भए। यतिसम्म कि यदाकदा भोकले व्याकुल भएर लड्खडाउँदा पनि मातेर लडखाडाएको ठानिन थाल्यो। ब्लडप्रेशर वा जरोले निस्लोट भएर सुतेपनि 'डाउन' भएर ढलेको भनिन थाल्यो।

त्यसो त मैले सर्वप्रथम देखेका, चिनेको र रुचाएको हरिभक्त पनि अलि अलि मातेकै हरिभक्त हो। मैले मित्रताको निमित्त हात बढाएको, माया ममता र आदर गरेको हरिभक्त पनि एक दुई ट्वाक चढाएकै हरिभक्त हो। पटक्कै रक्सी नखाएको हरिभक्त त एउटा रोग, शोक र भोकले ग्रस्त मक्किएका हड्डीहरूको अस्थिपञ्जर मात्र जस्तो लाग्थ्यो मलाई।

तर दुखको कुरा के भने एउटै अवस्था पनि एक भाइलाई 'फाप' र आर्को भाइलाई 'अफाप' सिद्ध हुने हाम्रो अवस्थामा अरू सबै जसो साहित्यकार, कलाकार, राजनीतिकार र बेकार समेतलाई 'फलिफाप' सिद्ध भएको यो काठमाडौं 'वाश' हरिभक्त कटुवाललाई 'अफाप' सिद्ध भयो। 'वाश' मात्र हैन यस देशको बतास पनि उसलाई फापेन। गाँस बास वा प्रवास पनि उसलाई फापेन। अस्तु:।

प्रस्तुत स्मृति अंकमा हरिभक्तका व्यक्तिगत एवं कृतिगत जीवनका सम्पूर्ण मान्यता र तिनका मूल्याकंनलाई समग्ररूपमा समेटेर अट्टाउने आँट मैले गरेको होइन। यो त सानो स्मृतिमात्र हो - दिवंगत आत्माको शान्तिका लागि उनका केही स्नेही साथीहरूले अर्पण गरेको सानु श्रद्धाञ्जली। यसमा पनि मेरो समय र सामर्थ्य सिमित भएकोले कतिपय श्रद्धालु साथीहरूका स्मृति रचनाहरू छुट्न गएकोमा नमज्जा लागेको छ। खासगरी विनोद अश्रुमाली, बनमाली निराकार, ललित क्षेत्री, खिलबहादुर भावुक, अमरेन्द्र आजाद आदिका स्मृति लेखहरू ज्यादै ढिलो गरी हात पर्न आएकोले यसमा समावेश गर्न नभ्याएकोमा अझ बेमज्जा लागेको छ। अनि पृष्ठ ५९ र 'समीक्षा'मा 'कविले जीवनलाई हेर्दा' भन्ने स्तम्भ चलाउँने गरेको बेलामा कटुवालको दोस्रो पटक नेपालबाट आसाम निर्वासन हुँदा त्यसै स्तम्भकालागि उहाँले लेख्नु भएको यो कविता 'समीक्षा'को पुरानो फाइलबाट साभार र सधन्यवाद उपलब्ध भएको हो।

अन्त्यमा, शोक सन्तप्त परिवारका सदस्यहरू- श्रीमती जयकुमारी कटुवाल, कविता, काव्य, दानु र कल्पनाप्रति हार्दिक समवेदना प्रकट गर्दै दिवंगत आत्माको चिरशान्तिको कामना गर्दछु।

ƐƐ

## १४९को सम्पादकीय

विजया दशमी २०६७ को शुभ उपलक्षमा आफ्ना सम्पूर्ण लेखक, पाठक, विज्ञापनदाता तथा सहयोगी र शुभचिन्तकहरूमा हार्दिक मङ्गलमय शुभकामना । सबैको जय होस् ।

०

आज केही अन्तरंग कुरा गरौं–

केही आफ्ना कुरा, केही आफन्तका कुरा, केही अभिव्यक्तिका कुरा र केही अभिव्यक्तिका शुभचिन्तक/सहयोगीहरूका कुरा ।

अभिव्यक्तिको प्रकाशन प्रारम्भ भएको पनि चालीस वर्ष बितिसकेको छ । यदाकदा दिन, हप्ता र महिना बिताउन गाह्रो भए पनि वर्ष, युग र जीन्दगी पत्तै नपाई मिलिक्कै बित्दारहेछन् । तर मेरो जिन्दगीका ती चालीस वर्ष त्यति सजिलै बितेका चाहिँ होइनन् । प्रकाशनका सुरुसुरुका दिनहरू के ही कष्टकर थिए । घाम-पानी, जाडो-गर्मी, रात-बिहान नभनेर; परिश्रम, पसिना र पैसाको कुनै परवाह नगरेर; साइकल, मोटरसाइकलमा, बसमा बा पैदलै भएपनि लेख रचना र विज्ञापन बटुल्न कालागि निरन्तर दौडधूप गर्नुपर्ने, प्रेसमा धाउनु पर्ने त हुन्थ्यो नै तर कहिलेकाहीं अड्को पड्को मा स-सानु रकमका लागि पनि सरसापट बा उधारोकालगि मुख बाउनु पर्ने जस्ता कष्टकर क्षणहरू पनि आइदिन्थे । तर जे जस्ता समस्या आएपनि तिनको सामना/समाधान गरियो । ती समस्याहरू जसरी आए उसैगरी टरेर गए । अभिव्यक्ति चलिरह्यो । ढाडै बांगिने गरी झोलामा अभिव्यक्तिको भारी बोकेर साहित्यिक गोष्ठी/समारोहहरूमा तथा नयाँ सडकको पीपलको बोटमुनि लगेर बाँड्नु एउटा अम्मलजस्तै थियो ।

त्यसबेला व्यहोरेका दुख-कष्टका क्षणहरूको संझना गर्दा अहिले एक किसिमको सु:खानुभूति हुन्छ । बितेको सुखको संझना पीडादायी हुँदोरहेछ तर बितेको दु:खको संझना आनन्ददायी हुँदोरहेछ । ख्यालख्याल जस्तै गरी बिते यतिका वर्ष ।

तर अभिव्यक्तिको भविष्यको बारेमा भने मैले कहिल्यै गम्भीर भएर सोचिन बा खासै चिन्ता गरिन । म अलि अलमस्ती वा लापरवाह स्वभावको मान्छे– मैले आफ्नै जिन्दगीको भविष्यका बारेमा पनि कहिल्यै गम्भीर भएर सोचिन भने अभिव्यक्तिको भविष्यका बारेमा सोच्ने, चिन्ता गर्ने कुरै भएन । जिन्दगी जीउने क्रममा सबै संसारीलाई जस्तै मलाई पनि समय-समयमा अनेक साना-ठूला सुख दुख भोग्नु बेहोर्नु नपरेको होइन तापनि जे जे पर्दै गयो– एन केन प्रकारेण टर्दै गयो । मेरो जिन्दगीमा कहिल्यै कुनै ठूलो उथल पुथल आएन । कहिल्यै औला-दौला पनि भएन, कहिल्यै के खाऊँ के लाऊँको अवस्था पनि आएन । खासमा, मैले कुनै ठूलो महत्वाकाँक्षा पनि राखिन । यसकारण, कहिल्यै मात्तिनु, पात्तिनु वा आत्तिनु पर्ने स्थिति पनि आइपरेन ।

आफ्नो सामान्य स्थितिमा सन्तोष गरेर सामान्य जीन्दगी सामान्य तवरले बिताएँ । बिताएँ… अर्थात् नेपालीको औसत आयु बिताएँ । अर्थात् दिव्य बहत्तर वर्ष बिताएँ । त्रिहत्तरौं वर्षमा यात्रा गरिहेको छु । शरीर वार्द्धक्यग्रस्त अथवा रोगग्रस्त मात्र होइन– रोगले जीर्ण-शीर्ण पनि भइसकेको छ … !

अभिव्यक्ति सञ्चालनको यस लामो समयावधिमा, बेला बेलामा अभिव्यक्तिका कतिपय सक्कली नक्कली प्रेमी/शुभचिन्तकहरू भेटिए । लेख-रचना दिएर, सदस्य बनेर अथवा यदाकदा विज्ञापन दिएर दिलाएर सहयोग गर्नेहरू पनि भेटिए । यसको भविष्यका बारेमा जिज्ञासा राख्ने, चिन्ता व्यक्त गर्नेहरू पनि भेटिए । यसलाई दीर्घजीवी बनाउनु पर्छ, मर्न दिनु हुँदै न भन्नेहरू पनि भेटिए– उनीहरूप्रति म सधैं कृतज्ञ छु, तर मेरो भने सधैं उही एउटै रुखो जवाफ हुन्थ्यो– 'सकेसम्म चलाउँछु, नसके बन्द गरिदिन्छु ।'

हुन पनि हो, आफ्नो स्वास्थ्यको कारणले, आर्थिक कारणले अथबा कुनै पनि कारणले असजिलो परेको अवस्थामा अभिव्यक्तिको प्रकाशन स्थगित/बन्द गर्नु बाहेक मसँग अर्को विकल्प थिएन ।

अभिव्यक्तिलाई मर्न दिनु हुँदैन, यसलाई बचाउन तिमीले यसो गर्नू, उसो गर्नू भनेर सिकाउनेहरू, अर्ति उपदेश, आदेश, निर्देश दिनेहरू धेरै जना भेटिए तर यसलाई बचाउन कालागि म पनि केही सहयोग गर्छु भनेर सहयोगको हात बढाउने पत्यारलाग्दो अनुहारचाहिं अझसम्म एउटा पनि भेटे को थिइन मैले … ।

यस्तैमा, केही दिनअघि एउटा मिटिङमा जीवाजीसँग मेरो भेट भयो । अभिव्यक्तिका लेखक पाठकहरूलाई अथवा उद्योग व्यापार, समाजसेवा अथबा साहित्यसेवाको क्षेत्रमा अभिरुचि राख्ने कुनै पनि प्रबुद्ध व्यक्तिलाई उहाँको परिचय दिइराख्नु आवश्यक छैन, नामैमात्र पर्याप्त छ– जीवा लामिछाने ।

मिटिङको औपचारिकता सकिएपछि उहाँले मलाई– 'तपाईंसँग केही कुरा गर्नु छ ।' भनेर रोक्नुभयो र हामी दुईजना मात्र एकछिन त्यहाँ बस्यौं ।

जीवाजीले पनि उही कुरा उठाउँदै जिज्ञासा राख्नुभयो– 'धेरै दिन देखि तपाईंसँग एउटा कुरा गर्न मन लागेको थियो… तपाईंले यत्तिका वर्ष देखि अभिव्यक्ति चलाइरहनुभएको छ । यसलाई स्थायित्व दिनेतर्फ पनि केही सोच्नु भएको छ कि ?'

मेरालागि यो प्रश्न एकदमै अप्रत्याशित थियो– 'खासै केही सोचेको छैन, सकुन्जेल चलाउने, नसके बन्द गर्ने मनस्थितिमा छु ।' मैले सहज भावमा आफ्नो पुरानै राग अलापें ।

उहाँले भन्नुभयो– 'यत्रो दुःख गरेर यतिका वर्ष चलाउनु भो, यसलाई बचाउन केही उपाय सोचौं न । यसमा तपाईंलाई म सहयोग गर्छु ।'

म रोमाञ्चित भएँ । अभिव्यक्ति चलाएको यतिका वर्षपछि, त्यस दिन अचानक 'म तपाईंलाई सहयोग गर्छु ।' भनेर सहयोगको हात बढाउने एउटा विश्वासलाग्दो प्रतिष्ठित व्यक्तित्व आफ्नो अघाडि पाएको थिएँ । एकजना

प्रसिद्ध उद्योपतिले कतै भनेको संझना भयो– 'कसैले राम्रो काम गरेको छ भने कहीं न कहीं कसै न कसैले त्यसको मूल्याङ्कन अवश्य गरिरहेको हुन्छ ।'

अभिव्यक्तिमार्फत् मैले गरेको साहित्यसेवा अथबा यसकालागि मैले बगाएको पसिनाको पनि कसैले मूल्याङ्कन गरेकोरहेछ जस्तो लाग्यो ।

अहिलेको अवस्थामा अभिव्यक्ति आफ्नो प्रकाशनको व्ययभार बोक्न आफैं सक्षम भइसकेको छ । पन्ध्र-बीसलाख जतिको एउटा अक्षयकोषको स्थापना गरेर वार्षिक दुई-तीन लाख रुपैयाँ ब्याज आउने व्यवस्था गरि दिन सके मेरो अनुपस्थितिमा अथबा मेरो अवसान पछि मैले गरिरहेको काम गर्नकालागि तलब भत्ता दिएरै पनि एउटा सक्षम व्यक्ति नियुक्त गर्न सकिन्थ्यो । यसको व्यवस्थापन/सञ्चालनका लागि आफ्नो परिवारका केही सदस्य र केही सहयोगी साथी भाइहरू समावेश गरी 'अभिव्यक्ति परिवार' वा 'सञ्चालक समिति' बनाइदिए भइहाल्छ भन्ने सोच पनि मेरो मनको एउटा कुनामा थियो । तापनि यस कुरामा म न त सकृय थिएँ न त गम्भीर नै । किनभने अभिव्यक्तिको सञ्चालनका क्रममा मैले कहिल्यै कसैसँग आर्थिक सहयोग लिने सोच बनाएकै थिइन, आशा अपेक्षा राखेकै थिइन । सकेसम्म आफैं चलाउँछु, नसके बरु बन्दै गरिदिन्छु भन्ने लिँढे ढिपी नै मनको एउटा कुनामा बज्रलेप गरेर राखेको थिएँ ।

'एउटा अक्षयकोष खडा गर्दा कस्तो होला ?' मेरा मनको कुरा थाहा पाएजस्तै गरी उहाँले नै फेरि भन्नु भयो ।

'हो, दुईतीन लाखसम्म ब्याज आउने कोष स्थापना गर्नसके हुन्थ्यो भन्ने त मेरो मनमा पनि थियो ।' भनें र मैले आफ्नो उपर्युक्त विचार पनि छोटकरीमा व्यक्त गरें ।

'अचेल बैंकहरूले राम्रै ब्याज दिन थालेका छन् । पन्ध-बीस लाख भयो भने त दुई-तीन लाख ब्याज आइहाल्छ । तपाईं चाहनुहुन्छ भने सुरुमा एकलाखको सीड मनी म राखिदिन्छु ...। मेरा केही सहयोगी मित्रहरू हुनुहुन्छ । उहाँहरूसँग पनि म कुरा गर्छु । आठ-दस लाख पुऱ्याउन केही गाह्रो पर्दैन । तपाईंका पनि जगदीश घिमिरे र सुहृद घिमिरेजस्ता भाइहरू छन् । उनीहरूले पनि सहयोग गरिहाल्छन् । अरू पनि सहयोगी इष्टमित्रहरू होलान्... पन्ध्र-बीसलाख त पुगिहाल्छ नि... ।' उहाँले बडो सहजताका साथ भन्नुभयो ।

राति सुत्दा, निदाउनु अघि धेरै बेरसम्म दिउँसोको कुराकानी खेलिरह्यो मनमा ।

त्यसपछि यस विषयमा अलिक गम्भीर भएर सोच्न थालें । सर्बप्रथम, नेपाली भाषा-साहित्यका समुन्नति कालागि समर्पित भएर तन, मन, धन मात्र होइन, सम्पूर्ण जीवनै अर्पण गर्ने आदरणीय अग्रज तथा भाषा, साहित्य, संस्कृति, कला, संगीत आदि वाङ्मयका सेवा-सम्वर्द्धनमा उल्लेखनीय/प्रशंसनीय कार्य गरिरहेका प्रेरणादायी व्यक्तित्वका शालीन अनुहारहरू सम्झें ।

तिनका अतिरिक्त मलाई सानो-ठूलो सहयोग गर्ने/गर्नसक्ने अन्य आफन्तका अनुहारहरू पनि आँखा वरिपरि घुमिरहे । म उत्साहित हुँदै गएँ ।

र आखिरमा, सबैको सानो-ठूलो सहयोगबाट ढीलो-चाँडो पन्ध्र-बीस लाख रुपैयाँ जम्मा गर्न सकिन्छ भन्ने लाग्यो र जीवा लामिछानेको एक लाख रुपैयाँको सीड मनीबाट अक्षय कोष स्थापना गर्ने निश्चय गरेँ । अनि, अरूहरूसँग सहयोगको अपेक्षा राख्ने मान्छेले पहिले आफैं अग्रसर हुनुपर्छ भनेर त्यसमा आफ्नातर्फ बाट एकलाख थपेँ र आज २०६७ साल असोज १९ गते 'दुर्गा भवानी बचत तथा ऋण सहकारी संस्था लिमिटेड', धुम्बाराहीमा खाता खोलेर दुईलाख रुपैयाँको 'अभिव्यक्ति अक्षय कोष' स्थापना गरेँ । खाता नं. हो 5 F 10625 ।

यति वेलीबिस्तार लगाइसकेपछि, अव अन्त्यमा, अभिव्यक्तिका सम्पूर्ण इच्छुक लेखक, पाठक, शुभचिन्तकहरूका साथै आफ्ना सबै साथी भाइ इष्टमित्रहरूसँग मेरो होस्टेमा हैंसे गरिदिनुहुन हार्दिक आग्रह गर्दछु ।

भोलि म भूतपूर्व भए पनि तपाईंहरूको यो सहयोग अभिव्यक्तिको इतिहासमा अभूतपूर्व भएर रहने छ ।

ꕥꕥ

## १५७को सम्पादकीय

अभिव्यक्तिको स्थायित्वका लागि गत २०६७ असोजमा 'अभिव्यक्ति अक्षय कोष'को स्थपना गरेपछि इच्छुक/सक्षम आफन्तहरूबाट थप सहयोगको अपेक्षा गरिएको व्यहोरा (पूर्णाङ्क– १४९मा) आफ्नो सम्पादकीयबाट अवगत गराएको थिएँ । त्यसपछि एक वर्षमा, अर्थात् २०६८ असोजसम्ममा अक्षय कोषमा पाँच लाख नब्बेहज्जार रुपैयाँ पुगेको थियो भने अहिले माघसम्ममा सातलाख पुगेको छ र सहयोगको निरन्तरता कायमै छ। आज यहाँहरू समक्ष यो जानकारी गराउन पाउँदा हामीलाई खुसी लाग्नु स्वाभाविकै हो– खुसी लागेको छ । यसका लागि सबै सहयोगीहरूप्रति हार्दिक कृतज्ञताका साथ धन्यवाद चढाउँछु ।

यस अवधिमा यस कोषका सम्बन्धमा दुईटा रमाइला टिप्पणि, जिज्ञासा अथवा प्रश्न उठेको चर्चा मैले सुनें र त्यसबारे आफ्नो सामान्य धारणा व्यक्त गर्नु मुनासिबै होला जस्तो लागेकाले सो व्यक्त गर्दैछु ।

पहिलो– कोही शुभचिन्तकहरूले भन्नुभएछ,– 'खोई, मलाई त नगेन्द्रजीले भन्नुभएकै छैन, नत्र म पनि केही सहयोग गर्ने थिएँ… …।'

दोस्रो– कोही शुभचिन्तकहरूले प्रश्न उठाउनु भएछ– 'नगेन्द्रजीले त गुठी राख्नुभएछ, राम्रै गर्नु भएछ… तर उहाँका सन्तानले के गर्लान्… … ?'

पहिलो प्रश्नका सन्दर्भमा म विनम्रतासाथ छोटकरीमा यत्तिमात्र निवेदन गर्न चाहन्छु– मैले कसैलाई पनि भनेको छैन । जे जति सहयोग प्राप्त भएको छ त्यो सप्पै नभनीकनै प्राप्त भएको हो । सम्पादकीयमै लेखिसकेपछि फेरि मुखले भनिरहनु आवश्यक पनि ठानिन, उचित पनि मानिन ।

हो, यो दोस्रो प्रश्न निकै गम्भीर छ । सामयिक पनि छ र सान्दर्भिक

पनि छ । किनभने हाम्रो वाङ्मयका क्षेत्रमा विभिन्न गुठी र पुरस्कारसम्बन्धी अनेकानेक घटना घटेका छन् । ठूला ठूला रकमका गुठी स्थापना भएको समाचार गडगडाएर आउँछन् अनि केही दिनपछि गुठी हराउँछन् । त्यसैगरी ठूला ठूला रकमका पुरस्कार स्थापना भएका समाचार आउँछन्, फाट्टफुट्ट पुरस्कार दिएको समाचार पनि गडगडाएरै आउँछन् अनि केही दिनपछि ती पुरस्कारहरू पनि बिलाउँछन् । त्यो हामी सबैले देखेको र भोगेको कुरा हो । त्यसकारण यो दोस्रो प्रश्न उठ्नु एकदम सभाविक छ तर यो प्रश्न ' अभिव्यक्ति अक्षय कोष'का लागि मात्र नभएर तपाईंको, हाम्रो र अरू पनि धेरै का गुठी/अक्षयकोषका लागि समानरूपले लागुहुने प्रश्न हो ।

अतः अरूका कुरा अरूहरू नै जानून्– 'अभिव्यक्ति अक्षय कोष'का बारेमा चाहिँ मेरो सोचाइ के छ भने– मैले मेरा नातिपुस्ता सम्मको अनुहार देखेको छु । तिनीहरूमाथि मलाई पूर्ण विश्वास छ– मेरा छोरा-नातिहरूले सकेसम्म यस कोषको संरक्षण गर्नेछन्, अभिवृद्धि गर्नेछन्– यो आफ्नो विश्वासको कुरा हो । अर्को कुरा, मैले जीवनमा कहिल्यै भरे र भोलिको पनि खासै चिन्ता नगरीकनै आजसम्मको जीवन बिताएँ । भने, म पञ्चतत्वमा विलीन भइसकेपछि, मैले देख्दैनदेखेका मेरा पनाति, खनाति वा जनातिका पालामा यो अभिव्यक्ति वा 'अभिव्यक्ति अक्षय कोष'को अवस्था के केस्तो होला– त्यसको चिन्ता म गर्दिन । बस् ।

उत्पन्न जिज्ञासाका बारेमा यति कुरा भएपछि अव यस अवधिमा मैले अनुभव गरेका एक दुईटा अन्य कुराहरू पनि गरिहालौं– यो कोषको स्थपना गर्नुपूर्व मैले यसबारे धेरै चिन्तन गरेको थिएँ– आँट्न त आँटँ तर आँटेको कुरा कसरी पूरा होला भनेर अनेक हिसाब-किताव गरेको थिएँ । त्यसबेला लेखेको थिएँ– सर्बप्रथम, नेपाली भाषा-साहित्यका समुन्नति कालागि समर्पित भएर तन, मन, धनमात्र होइन जीवन नै अर्पण गर्ने आदरणीय अग्रज तथा भाषा, साहित्य, संस्कृति, कला, संगीत आदि वाङ्मयका सेवा-सम्वर्द्धनमा उल्ले खनीय/प्रशंसनीय कार्य गरिरहेका प्रेरणादायी व्यक्तित्वका शालीन अनुहारहरू सम्झें... । तिनका अतिरिक्त मलाई सानो-ठूलो सहयोग गर्नसक्ने/गर्ने अन्य आफन्तका अनुहारहरू पनि आँखा वरिपरि घुमिरहे । म उत्साहित हुँदै गएँ । र, आखिरमा, सबैको सानो-ठूलो सहयोगबाट ढीलो-चाँडो पन्ध्र-बीस लाख रुपैयाँ जम्मा गर्न सकिन्छ भन्ने लाग्यो ।' आदि इत्यादि ।

हो, सामान्यतया मैले सोचेअनुसार नै धेरैजसो शुभचिन्तकहरू तथा सक्षम र इच्छुक आफन्तहरूबाट सहयोग पाएँ, पाइरहेको छु र पाइरहने छु भन्ने विश्वास पनि छ। तर पनि मैले के पनि अनुभूत गरें भने यस्तो किसिमको हिसाव-कितावमा म निकै कमजोर रहेछु। मेरो पूर्वानुमान वा हिसाव-किताव चाहिँ आंशिकरूपमा मात्र मिल्यो, धेरै मिलेन । मैले सम्झेका ती विशेष शालीन अनुहारहरूमद्धे कतिपयले मलाई संझदै संझेनन् । कतिले थाह पाउनै चाहेनन्, कसै कसैले थाह पाए पनि नपाए जस्तो गरे... । यो स्वाभाविकै

पनि हो । मैले सोच्दैमा कहाँ हुन्छ त ! सबैको रुचि अभिरुचि र सोच उस्तै हुँदैन । तर अहिले मैले भन्न खोजेको रमाइलो कुरा चाहिँ के हो भने मैले सोचेका/सम्झेका ती अनुहारहरूभन्दा मैले नसोचेका नसम्झेका, नदेखेका र नचिनेका कतिपय अनुहारहरूको सहयोग चाहिँ उल्लेखनीय रह्यो ।

यसबाहेक, 'म पनि सहयोग गर्छु' भन्ने साथीभाइ/साहित्यकार/साहित्य प्रेमीहरू पनि धेरै छन् । तिनमा पनि दुईचार जना कवि/साहित्यकार साथीहरूले 'राम्रै' सहयोग गर्ने वचन दिएका छन् । यस्तै, एकजना भाइ छन्– प्रतिष्ठित व्यवसायी तथा समाजसेवी हुन् । अत्यन्त सहयोगी स्वभावका छन् । सक्षम पनि छन्, मनकारी पनि छन् र उनले पनि 'विशेष' सहयोग गर्ने वचन दिएका छन् । अतः प्राप्त रकम र प्राप्त वचनका आधारमा 'अभिव्यक्ति अक्षय कोष'मा ढिलो-चाँडो अपेक्षित रकम जम्माहुने अवस्था देखिएको छ, यसमा मैले सन्तोष गरेको छु ।

सन्तोष त गरेकाछु, र पनि, एउटा कुराले भने मनमा बिझाइरहेको छ । त्यो केभने– यस अभियान, अनुष्ठान वा इतिहासमा मलाई 'नछुटे हुन्थ्यो' अथवा नछुट्नु पर्थ्यो भन्ने लागेका केही नामहरू छुटिरहेका छन् । एउटा उद्देश्य, अठोट र सदासयताका साथ मैले सुरु गरेको यस अभियान, अनुष्ठान वा इतिहासमा मेरा केही निकटस्थ साहित्यिक मित्रहरूका, अभिव्यक्तिसँग राम्रै लगाव भएका केही प्रतिष्ठित साहित्यकारहरूका, अनि वाङ्मयको सेवा/सम्बर्द्धनमा समर्पित केही आदरणीय वाङ्मयसेवी व्यक्तित्वहरूका नामहरू छुटिरहेका छन् । त्यस्ता केही गरिमामय नामहरू पनि समावेश भए यस अनुष्ठानको गरिमा अझ बढ्ने थियो, यस इतिहासको गौरव अझ बढ्ने थियो भन्ने लागिरहेको छ ।

विज्ञेषु किमधिकम्... ... ? ССС

## १९२को सम्पादकीय

सुयोग नै भन्नुपर्छ, यसवर्ष 'अभिव्यक्ति'का सम्पादकलाई तीनवटा प्रतिष्ठित पुरस्कार/सम्मान प्राप्त भए– २०७४ साल जेठ २५ गते 'मदन- शीला प्रतिष्ठान' काठमाडौंबाट रु.१,०१,०००/-को 'मदन-शीला साहित्यिक पत्रकारिता पुरस्कार', भाद्र ६ गते नेपाल सरकारबाट रु.१,००,०००/-को 'महाकवि देवकोटा पुरस्कार' र असोज १९ गते 'खेमलाल-हरिकला लामिछाने समाज कल्याण प्रतिष्ठान' चितवनबाट (संयुक्त रूपमा) रु.२,००,०००/-सहितको 'पद्मश्री सम्मान' ।

साहित्य सिर्जना तथा साहित्यिक पत्रकारिताको माध्यमबाट भाषा-साहित्यको सेवा गरेबापत् पुरस्कृत/सम्मानित भएकोले आज आफ्नो साहित्य सिर्जना र साहित्यिक पत्रकारिताका बारेमा केही बोल्नु उपयुक्त हुन्छ जस्तो लाग्दछ तर यस सन्दर्भमा बोल्नुपर्ने विशेष कुरा मसँग केही छैन । सिर्जना तर्फ मेरा जम्माजम्मी चारओटा मात्र पुस्तकाकार कृति प्रकाशित छन्– दुईटा

उपन्यास र दुईटा कथासंग्रह । त्यो पनि धेरैवर्ष अघिको कथा भइसकेको छ । म साहित्यको एउटा सामान्य विद्यार्थी मात्र हूँ । त्यस्तै, पत्रकारिताको हकमा पनि म एउटा सामान्य साहित्यिक पत्रकार हूँ । अभिव्यक्ति पनि एउटा सामान्य साहित्यिक पत्रिका हो– बस् । कुरा त यत्ति नै हो, तापनि साहित्य सिर्जना र साहित्यिक पत्रकारिताकै कारण पुरस्कृत/सम्मनित भएकाले आज यसै सन्दर्भमा केही बोल्नु प्रासंगिक ठानेको छु ।

मेरा उपन्यास र कथाकृतिबारे केही समीक्षकले समय-समयमा अलि अलि बोलिसकेका छन्– त्यसबारे म अहिले थप केही बोल्नु आवश्यक ठान्दिन । साहित्यिक पत्रकारिताका बारेमा केही  बोल्नुपर्दा– 'अभिव्यक्ति'को शुरुवात २०२७ सालदेखि गरेको हुँ । त्यसबेला मेरा केही कथा कविताहरू त प्रकाशित भैसकेका थिए तर साहित्यिक पत्रकारिता चाहिं मेरो रहर मात्र थियो । रोचक घिमिरे, भैरव अर्याल र जगदीश घिमिरेहरू मेरा निकटस्थ साहित्यिक साथी थिए । यिनै साथी भाइको प्रेरणा र सहयोग पाएर मैले अभिव्यक्तिको प्रकाशन शुरु गरेको हूँ । एउटा रहर, लहड, भाषा साहित्यप्रतिको अगाध अनुराग, आशक्ति र सेवाभावबाट प्रेरित भएर शुरु गरेको 'अभिव्यक्ति' अहिलेसम्म निरन्तर प्रकाशित भइरहेको छ र अहिले यसको १९२ औं अंक प्रकाशित भएको छ ।

त्यसबेलाका प्रचलित साहित्यिक पत्रिकाहरू भन्दा अलिक बेग्लै र आकर्षक बनाउने चाहनामा मैले केही प्रयोगहरू थालेको थिएँ । उदाहरणका लागि– साहित्यिक पत्रिकामा व्यंग्यचित्रहरू छाप्ने । लेख रचनाका अन्त्यमा रहेको खाली ठाउँमा राजा वा देशी बिदेशी चिन्तकहरूका महावाणीका सट्टा स्वदेशका नै वरिष्ट कनिष्ट साहित्यकारहरूका घतलाग्दा उक्तिहरू छाप्ने गरें । हास्य-व्यंग्य अन्तर्गत साहित्यकारहरूका जमघटमा हुने घतलाग्दा हास्य-व्यंग्यात्मक हास-परिहास, छेडछाड तथा घोचपेचका टिपोटहरू तिथि मिति र स्थानसहित् यथासम्भव जस्ताको तस्तै प्रस्तुत गर्ने गरें । र प्रकाशनार्थ रचना चयन गर्दा राजधानीका स्थापित नामभन्दा पाएसम्म/सकेसम्म मोफसलका उदीयमान साहित्यकारका रचनालाई प्राथमिकता दिएर छाप्ने गरें ।

०२७ साल फागुन ७ गते अभिव्यक्तिको पहिलो अङ्क प्रकाशित भयो । बेलाअनुसार कागत, छपाइ, सजावट– सबै राम्रै थिए । व्यंग्यचित्र र रमाइला हास्य-स्तम्भ/चुटकिलाहरू थिए । त्यसबेलाका बहुचर्चित/प्रतिष्ठित लेखक कविहरू– सर्बश्री केदारमान व्यथित, शङ्कर लामिछाने, भूपि शेरचन, भीमनिधि तिवारी, नीरविक्रम प्यासी, नारायणबहादुर सिंह, पारिजात, विमल राल्फा तथा वासु रिमाल यात्रीहरू थिए भने नयाँ उदीयमान् अनुहारमा सिर्जना भट्ट र जगदीश घिमिरे थिए । त्यस्तै, विदेशीमा सोल्भेनित्सिन, ज्याँ जेने, एभ्तुसेंको र सआदत हसन मन्टोका रचनाहरू (अनूदित) थिए ।

अभिव्यक्तिको पहिलो अंक सबैले मन पराए । म झनै उत्साहित भएँ र अभिव्यक्तिलाई सकेसम्म आद्योपान्त पठनीय पत्रिका बनाउने प्रयासमा लागें । आद्योपान्त पठनीय बनाउन त सकिन... तापनि यसका अत्यधिक

पृष्ठहरू पठनीय बनाउने प्रयासचाहिं आज पर्यन्त गर्दैछु ।

अनि संयोग कस्तो पऱ्यो भने अभिव्यक्तिको पहिलो अंक प्रकाशित भएको केही दिनपछि नै विराटनगरमा कवि-नेता केदारमान व्यथितको नेतृत्वमा 'साहित्य संस्थान'द्वारा आयोजित राष्टव्यापी साहित्य सेमिनार सम्पन्न भयो । त्यसमा म पनि आमन्त्रित थिएँ । त्यहाँ जाँदा अभिव्यक्तिको ठूलै भारी बोकेर गएँ । भेला भएका साहित्यकारहरूमा विभिन्न जिल्लाका स्कुल कलेजमा नेपाली पढाउने गुरुहरू लगायत् अधिराज्यका साठी-सत्तरी जिल्लाका साहित्यकारहरूको प्रतिनिधित्व थियो । त्यसबाहेक, भारतका सिलिगुडी, दार्जीलिङ, कालिम्पोंङ, डुवर्स, देहरादून, सिक्किम, असम आदिका साहित्यकारहरूको पनि उल्लेखनीय उपस्थिति थियो । त्यहाँ मैले अभिव्यक्ति बेस्सरी बाडें । सेमिनारका सहभागीहरू मार्फत् अभिव्यक्ति अधिराज्यभरि त फैलियो फैलियो, भारतका उक्त नेपाली भाषाभाषी क्षेत्रमा पनि फैलियो ।

त्यसपछि अभिव्यक्तिमा प्रकाशनार्थ रचना, खास गरी कविताहरूको त ओइरो नै लाग्न थाल्यो । अनि रचना माग्न मैले कसैकहाँ धाउनु परेन । प्राप्त कविताहरू त छापेरै नसकिने स्थिति भयो र अहिलेसम्म त्यस्तै छ ।

म एकोहोरिएर अभिव्यक्तिमा लागिरहें– भूत लागेजस्तै ।

घाम, पानी, जाडो, गर्मी केही नभनेर विज्ञापन बटुल्न विभिन्न कार्यालय धाउनु, प्रेसमा धाउनु; प्रशस्त परिश्रम, पसिना र सकेको केही पैसा पनि लगाएर अभिव्यक्ति छपाउँनु र ढाडै बाङ्गिने गरी झोलाभरि बोकेर नयाँ सकडको पीपलबोटमा, साहित्यिक समारोहहरूमा, साहित्यकार/साहित्यिक पत्रकारहरूको जमघट हुने मोतीमहल, इन्दिरा, आम्रपाली, बंगलोर कफी हाउस आदिमा सम्मिलित भएर पत्रिका बाँड्नु अनि मनमिल्ने मित्रहरू– हरिभक्त कटुवाल, भवानी घिमिरे, प्यासी, शशी र अझ तुलसीसँग नानाथरी रमझममा दिल खोलेर रमाउँनु; बेलाबेलामा पाँच पाण्डव वा अन्य साथीहरूसँग महफिल जमाउँनु र साथसाथै साहित्यिक पत्रकार संघ, सि.सा.स., पेन नेपाल आदि संस्थाहरूका स्थापना र सञ्चालनमा पनि सकृयता पूर्वक सहभागी हुनु… बस, यस्तै यस्तैमा दिन, महिना र वर्षहरू बित्दै गए ।

पत्रिका निकाल्दै गएँ– निकाल्दै गएँ ।

हाम्रो साहित्यिक पत्रकारिताको इतिहास धेरै लामो भएता पनि यसले अझै व्यवसायिक रूप लिन सकेको छैन । बिक्री र वितरण व्यवस्थाको जगै बसेको छैन । साहित्यिक पत्रिकलाई सरकारले कति उपेक्षा गरेको छ भने आजसम्म हुलाक दर्ता पनि दिएको छैन । अतः आज साहित्यिक पत्रिका चलाउनु निकै कष्टकर काम भएको छ । अझ यसलाई निरन्तरता दिनु चाहिं एक किसिमको कठोर तपस्या नै हो भन्दा कुनै अत्युक्ति नहोला ।

यति लामो अवधिसम्म साहित्यिक पत्रकारितामा यसरी अल्झिरहुँला भन्ने मैले सोचेको पनि थिइनँ । कुनै दीर्घकालीन योजना बनाएर म यसमा लागेको पनि होइन । जिन्दगीलाई कुन बाटो कसरी अघि बढाउने हो भन्ने विषयमा म कहिल्यै गम्भीर भइनँ । मेरो जिन्दगी आफैं अगाडि बढ्दै गयो

आफ्नो बाटो आफैं बनाउँदै । अथवा, भनौं नदीजस्तै बग्दै गयो आफैं आफ्नो बाटो पहिल्याउँदै । म साहित्यिक पत्रकारको रूपमा परिचित हुँदै गएँ– मेरो सिर्जनशील व्यक्तित्व पनि सम्पादक व्यक्तित्वको छायाँमा पऱ्यो । भनौं– जति जति मेरो सम्पादक व्यक्तित्व मौलाउँदै गयो– उति उति लेखक व्यक्तित्व वै लाउँदै गयो । यसरी म लेखक कम र सम्पादक बेसी हुँदै गएँ ।

साहित्यिक पत्रिका चलाउनु अवश्य पनि साह्रै कष्टकर काम हो । तर 'अभिव्यक्ति' प्रकाशनको क्रममा मलाई खासै त्यस्तो अतिशय दुःख कष्टको अनुभव गर्नु परेन । लगाउनु परेको श्रम र बगाउनु परेको पसिनाको मैले कुनै हिसाब राखिन । घाम पानी नभनेर प्रेसमा धाउनु परेको र कहिलेकाहीं खल्तीबाट अलिअलि पैसा लगाउनु परेकोलाई पनि मैले ठूलो कष्ट मानिन । यिनै सानातिना कुरालाई कष्ट मान्ने हो भने पनि यो कष्ट मलाई अरू कसै ले दिएको कष्ट थिएन– मैले आफैंले रोजेको थिएँ । स्वेच्छाले स्वीकारेको थिएँ । त्यसकारण यस क्रममा व्यहोर्नु परेका ती सानातिना दुखकष्टप्रति मेरो कुनै गुनासो छैन । बरु ती सम्पूर्ण दुख कष्ट झेलेर यस मुकाममा आइपुगेपछि आज त्यसबेलाको सम्झना गर्दा ती सबै दुखकष्ट त सुखकर पो लाग्दछन् । आनन्दको अनुभूति हुन्छ । किनभने त्यसवेला व्यहोरेका तिनै स-साना दुखकष्टका कारण मैले अनेकौं मान-सम्मान तथा पुरस्कारहरू पाएको छु र यी सबै पुरस्कारहरू भन्दा पनि महत्वपूर्ण पुरस्कारका रूपमा मैले धेरै धेरै अमूल्य मित्रहरू कमाएको छु– र यसै कमाइलाई मैले जीवनको सबभन्दा ठूलो उपलब्धि ठानेको छु ।

आज, मेरोजस्तो उमेरसमूहका, अवकाशप्राप्त जीवन बिताइरहेका मेरा कतिपय साथीभाइ आफन्तहरू भजन-कीर्तन गाइरहेका छन् । कोही ठाडा-तेर्सा टीका लगाएर मठ-मठ धाइरहेका छन् । कोही धर्मका व्यापारीका चङ्गुलमा फसेर राधे-राधेमै रमाइरहेका छन् । कोही जुवा तासमा व्यस्त छन् त कोही मापसेमा मस्त छन् । तर त्यस्ता कुनै पनि विषय, व्यसन वा व्याधिमा मेरो चित्त रमाएन– लागेन । मैले अक्षरसँगै खेल्न र अक्षरसँगै अल्मलिन रुचाएँ । अलि अलि लेखपढ गर्छु । बाँकी समय अभिव्यक्तिकै स्याहार सुसारमा अर्थात् सम्पादन, प्रकाशन र व्यवस्थापनमै बिताउँछु । मेरो सम्पूर्ण कर्म, धर्म, मनोरञ्जन, पूजा आराधना वा अम्मल– जे भने पनि अभिव्यक्ति नै हो । यसैमा रमाइरहेको छु ।

अभिव्यक्तिका बारेमा अब बढी नबोलौं होला । मैले बोलेकोभन्दा यसका पाठकले बोलेको कुरा बढी महत्वपूर्ण हुन्छ । त्यसकारण एकजना विशिष्ट विद्वान्, वरिष्ठ साहित्यकार, समीक्षक एवं गम्भीर पाठक, प्रा.डा. वासुदेव त्रिपाठीले अभिव्यक्तिका बारेमा व्यक्त गर्नु भएका केही पंक्तिहरू यहाँ प्रस्तुत गर्न चाहन्छु– *'म यो पत्रिका भेट्टाउनासाथ छिटो भन्दा छिटो पढ्न वा पढिसक्न लालयित हुने गर्दछु । म यस पत्रिकाको प्रत्येक अंकको सामग्री चयनमा, सामग्री विन्यासमा र छपाइमा पनि सम्पादकीय मिहिने त र सचेतताको सुस्पस्ट छाप परिरहेको पाउँछु र यो पत्रिका पढ्दा मलाई*

*पाठकीय सन्तुष्टिको अनुभव हुन्छ । हाल प्रकाशित भइरहेका अनेकन नेपाली साहित्यिक पत्रिकामध्ये यो पत्रिका मेरो प्रिय पत्रिका हो । सबै जसो उमेर समुहका, धाराका, प्रवृत्तिका नेपाली लेखकका स्तरीय विविध रचनाको सक्दो समावेश गर्ने उत्तरदायी र उदार सम्पादकीय दृष्टिकोणलाई यस पत्रिकाले पालना गर्दै आएको म पाउँछु र त्यसैले गर्दा यो पत्रिका मलाई विषेश मनपर्छ । मोफसलका लेखकलाई सक्दो प्राथमिकता दिने जुन प्रयास यस पत्रिकाले गर्दै आएको छ त्यो पनि मलाई धेरै राम्रो लाग्दछ । लेखकका प्रसिद्धि र नामभन्दा पनि कृतिको पठनीयता र स्तरीयतालाई ज्यादै महत्व दिने सम्पादकीय झुकाव यस पत्रिकाले देखाउँदै आएको छ । त्यसले गर्दा यस पत्रिकाको विभिन्न अंकमा पुराना नयाँ अनि स्थापित र उदीयमान सबै प्रकारका लेखकले यथायोग्य स्थान पाइरहेको अनुभव म पाठकको रूपमा गर्दछु । त्यसैले गर्दा मैले बारम्बार भन्दै आइरहेको छु– अभिव्यक्ति एउटा आद्योपान्त पठनीय पत्रिका हो ।'* (अभिव्यक्ति– पूर्णाङ्क १०० बाट)

अभिव्यक्तिको प्रकाशन/सम्पादनको जस मैले पाएको छु । पुरस्कार सम्मान पनि मैले पाएको छु तर यी सबै प्राप्तिको हकदार म एक्लै छैन– यसमा मेरो परिवार, मेरा साथी भाइ र इष्टमित्ररूको यथेष्ट सहयोग अन्तर्निहित छ । मेरा आदरणीय लेखक, पाठक, विज्ञापनदाताहरू र 'अभिव्यक्ति अक्षय कोष'का सम्पूर्ण सहयोगीहरूका अतिरिक्त, समय समयमा मलाई प्रेरणा दिने, सहयोग गर्ने शुभचिन्तकहरू पनि धेरै छन् । तर ती सबैको नाम यहाँ उल्लेख गरेर साध्य छैन तापनि केही अग्रणी नामहरू आदरपूर्वक उल्लेख गर्नु उपयुक्त ठान्छु र ती हुन्– वरिष्ठ साहित्यकार जगदीश घिमिरे, उद्योगपति सुहृद घिमिरे; वरिष्ठ साहित्यिक पत्रकार/साहित्यकार रोचक घिमिरे; वरिष्ठ कवि, समाजसेवी तथा उद्योगपति वसन्त चौधरी; पूर्व राजदूत एवं साहित्यकार प्रदीप खतिवडा; उद्योगपति, समाजसेवी तथा साहित्यकार जीवा लामिछाने; विशिष्ट अन्वेषक शिव रेग्मी; बरिष्ठ कवि हरिभक्त कटुवाल, वरिष्ठ गजलकार ज्ञानुवाकर पौडेल, बरिष्ठ कवि/नियात्राकार विष्णुबहादुर सिंह, वरिष्ठ साहित्यकार/समालोचक रमेश गोर्खाली आदि । आज, यी सबै महानुभावहरू प्रति पुनः कृतज्ञता व्यक्त गर्दै हार्दिक शुभकामना अर्पण गर्दछु– सबैको जय होस् ।

ଓଓ

## १९९को सम्पादकीय

दुईतिहाईको शक्तिशाली सरकारले शासनसत्ता सँभालेको एकवर्ष व्यतीत भएको छ । तर देश विकासका सन्दर्भमा एकवर्षको समयावधि त्यति लामो होइन, सरकारको कामको आँकलन गर्ने बेला भइसकेको छैन– सत्य हो । साथसाथै के पनि सत्य हो भने एकवर्षको समयावधि त्यति थोरै पनि होइन, एक वर्षमा सरकारले गरेको कामको आधारमा आगामी दिनहरूमा के

कस्ता काम सम्पन्न गरिएलान्, त्यसको अड्कल काट्न नसकिने पनि होइन ।

एउटा उखान छ नि– फिस्टाको मासु कति धार्नी छ भन्ने कुरा त्यसको खुट्टी देखेरै चाल पाइन्छ । त्यस्तै, सरकारले आगामी दिनहरूमा कस्तो काम गर्ला भन्ने कुराको आँकलन एकवर्ष भित्रैका काम-कार्यवाहीबाट गर्न सकिन्छ ।

प्रधानमन्त्री, मन्त्री र नेताहरूले बारम्बार आफ्ना भाषणहरूमा 'समृद्ध नेपाल, सुखी नेपाली' को रट लगाएर जतिसुकै कुर्लिए पनि तिनीहरूका कुरामा विश्वास गर्न सकिने चित्तबुझ्दो आधार आजसम्म देखापरेको छैन ।

सरकारले शासनसत्ता सँभालेको एकवर्ष व्यतीत हुँदा केही राम्रा कामका प्रयास पनि अवश्य भएका छन् तरपनि जनस्तरमा धेरैको गुनासो छ– सरकार तथा नेताहरू जनताको होइन, अपराधीहरूको, आफ्ना डन/तस्करहरूको संरक्षणमा जुटेका छन् । जनताको होइन, आफ्ना अन्नदाताका सेवामा समर्पित छन् ।

यसवर्ष जनताले प्रत्यक्ष्य देखेको– घर घरमा, गल्ली गल्लीमा, चिया पसल/बाटाघाटामा सर्बाधिक चर्चा भएका मुख्य विषयचाहिं तीनवटा मात्र छन्– १) कञ्चनपुरकी बालिका निर्मलाको बलात्कार र हत्याकाण्डमा सरकारले देखाएको अकर्मण्यता, २) मालिक रिझाउन होली वाइनपान गरेको तमासा, अनि ३) चिकित्सा शिक्षा विधेयक परित गर्न गरिएको अभद्र बलमिच्याइँ ।

यिनै नमुना काण्डका दृष्टान्तबाट सरकारको कार्यक्षमता, गति, मति, प्रवृत्ति सबै प्रष्ट भएको छ । देशमा हत्या, हिंसा, बलात्कार र दुराचार बेपत्ता बढेको छ । शान्ति र सुरक्षा कतै छैन । भ्रष्टाचार यत्रतत्र सर्वत्र चुलिएको छ ।

भाषणमा सधैं 'समृद्ध नेपाल, सुखी नेपाली' सुनिए पनि यथार्थमा 'समृद्ध नेता, दुःखी नेपाली' हाम्रो नियति बनेको छ । समृद्ध नेता दिनमा हजारौंको इम्पोर्टेड पानी पिइरहेका छन्, दुःखी जनता काकाकुल जिन्दगी जिइरहेकाछन्, समृद्ध नेता महँगा महँगा गाडी/हेलिकोप्टरमा सयर गरिरहेका छन्, दुःखी जनता तुइनमा झुण्डिएर नदी तरिरहेका छन्, सडकका खाडलमा खसेर मरिरहेका छन् । यसैकारण जनतामा सरकारप्रतिको विश्वास घट्दो छ, वितृष्णा बढ्दो छ ।

पूर्ववर्ति सरकारहरूमा– बाबुराम भट्टराई नेतृत्वको सरकार होस् वा पुष्पकमल दाहाल अथबा शेरबहादुर देउवा नेतृत्वको सरकार– ती कुनै पनि सरकारबाट जनताले खासै आशा अपेक्षा राखेका थिएनन् । ती सरकार केवल आफ्नो पार्टी, आफन्त र आसेपासेहरूलाई पोष्नका लागि मात्र बनेका थिए । जे गरे तिनीहरूकै लागि गरे । सरकारी ढुकुटीमा बह्मलुट गरे, गए ।

तर यो सरकार त्यस्तो सरकार होइन । जनताले अत्यधिक भोट दिएर जिताएको दुईतिहाईको शक्तिशाली सरकार हो । यस सरकारबाट जनताले गफ र भाषणमात्र होइन, उखानटुक्का र बलमिच्याइँ पनि होइन– शान्ति, सुरक्षा, सदाचार र सुशासन अनि समृद्धिको अपेक्षा गरेका छन्– चेतना भया ।

ɞɞ

# सत्ता पनि हजुरैलाई भत्ता पनि हजुरैलाई

लावण्य सापकोटा
विराटनगर

सत्ता पनि हजुरैलाई
भत्ता पनि हजुरैलाई
लत्ता-जुत्ता हजुरैलाई
कलकत्ता पनि हजुरैलाई

जनतालाई चैँ के के दिनुभो हजुर
सस्तो भाषण र निस्तो आश्वासनको गजुर

फलफूल पनि हजुरैलाई
पानफूल पनि हजुरैलाई
कन्दमूल पनि हजुरैलाई
शंखमूल पनि हजुरैलाई

तलकालाई चैं के के दिनुभयो हजुर
मल, जल, तेल सबैमा जालझेलको गजुर

भोज पनि हजुरैलाई
डोज पनि हजुरैलाई
डोसा पनि हजुरैलाई
कोसा पनि हजुरैलाई
डेरी पनि हजुरैलाई
सेरी पनि हजुरैलाई

धेरै घिचेर अपच भै छेरी गएमा
डाक्टर पनि हजुरैलाई
ड्रस पनि हजुरैलाई

अनि डोल्पा, डोरी र डँढेलधुरा तिर चै
के के दिनुभो हजुर
डायरिया र डिसेन्टीको गजुर
छेरौटीले लैजाला भन्ने
डरै डरको डङ्गुर ।

पान पनि हजुरैलाई
जापान पनि हजुरैलाई
जलपान पनि हजुरैलाई
मलपान पनि हजुरैलाई

जाँड पनि हजुरैलाई
साँड पनि हजुरैलाई
राँण पनि हजुरैलाई
भाँण पनि हजुरैलाई
जनता गणलाई चैं
के के दिनुभो हजुर
गाँडै गाँडको गजुर ?



# चार टुक्रा

चट्याङ् (मास्टर) मुरारि

१ उहिल्यै हेराहेर हुन्थ्यो
आजकाल मारामार हुन्छ
खोइ जाँड खाएर ढल्या सडकमा आइमाईहरू
त्यसै नारी-पुरुषमा बराबरी हुन्छ ?

२ श्रीमतीसँगको विछोड
कल्पना पनि गर्न सकिंदैन
कुनै दिन त यो सम्भव होला–
आश पनि मार्न सकिंदैन ।

३ मैले भने–
मेरी श्रीमती त स्वर्गकी अप्सरा हो
उसले भन्यो–भाग्यमानी रहेछौ–
आफ्नी त जिउँदै छ ।

४ साथीले भन्यो–
यत्रो उमेर भयो– अब बिहे गर्नु पर्दैन ?
मैले भने–
किन तिमीलाई म हाँसेको मन पर्दैन ?



# मेरी प्रेमिकाको के कुरा

प्रेम वली ढकलपुरे

मेरी प्रेमीकाको के कुरा
छुरा छे छुरा
जस्तो दिनोस् लाउँछे
जे दिनोस् लाउँछे
प्यान्ट, हाफ प्यान्टमा भन्दा
छोटो कट्टुमा झन् सुहाउँछे
छोप्दिन कहिल्यै ज्यान पुरा
मेरी प्रेमीकाको के कुरा
छुरा छे छुरा ।

कहिले रिसेप्सनिष्ट बन्दै
कहिले एकाउन्टेन्ट भन्दै
दुई चार दाम कमाउँछे
ह्वीस्की होस् कि ठर्रा
जे दिनुस् समाउँछे
चिसो लस्सीमा भन्दा
ह्वीस्की वियरमा रमाउछे
भजन कीर्तनमा मात्र हैन
डिस्को र दोहोरीमा पनि धाउँछे
त्यो पनि पाइएन भने
लोकल ठर्रामा पनि
रातभर गीत गाउँछे
तर गाउदिन कुनै गित पूरा
मेरी प्रेमीकाको के कुरा
छुरा छे छुरा ।

मेरी प्रेमीकाको के कुरा
छुरा छे छुरा ।

जस्ले जहाँ बोलाए पनि
टुप्लुक्क आउँछे
टन्न अघाउने गरी
प्रेमरस खुवाउँछे
मलाई मात्र हैन यो प्रेम
जस्लाई पनि चखाउँछे
छिन्छिन् बजाउँदै चुरा
मेरी प्रेमिकाको के कुरा
छुरा छे छुरा ।

कहिले चुरोट समाउँछे
कहिले भाङमा रमाउँछे
मात लागेपछि
जहाँ पनि डेरा जमाउँछे
होस् गर्नु होला है
भेटी भने
तपाईलाई पनि च्याप्प समाउँछे
दिनमा सद्दे भएपनि
रातमा ठ्याक्कै बौलाउँछे
बत्तीसै लक्षणले छे पुरा
मेरी प्रेमिकाको के कुरा
छुरा छे छुरा ।

ᏇᏇ

# नेताका पृय देवता

माधवप्रसाद गोज्यांग्रे
गाईघाट। खुवासभा

प्रचण्डले भैंसी पुजे बाबुरामले गिद्ध
जे भए नि नेता हुन् यी भोका जन्मसिद्ध
माधवजीले लुइँचे पुजे झलनाथले ढुकुर
ओलीजीले तित्रा पुजे रामचन्द्रले सुँगुर ।

सुजाताले साँढे पुजिन् सरीताले भाले
श्रीमान्लाई लत्याएर आफ्नो ईज्जत फाले
उपेन्द्रले भ्याउतो पुजे गच्छदारले स्याल
प्रधानमन्त्री खाने होडमा निकाल्दछन् र्‍याल ।

महन्थले झिंगा पुजे त्रिपाठीले मच्छर
राजेन्द्र चाहिँ जैले पनि समाई हिंड्छन् पुच्छर ।
कस्तो चलन चल्यो हजुर सधैं पूजा गर्ने
सत्तासँगै भत्ता खाने चोरी गोजी भर्ने ।

नेम्वाङ्जीले घोडा पूजे सुवेदीले गधा
अर्को नाम जुराउँदा भए कृष्ण राधा ।
सीपी अनि केशवजीले आलु पूजा गर्ने
दुवै एउटै ड्याङ्का मूला कतातिर सर्ने ।

थापा चन्द मन्द मन्द पुजे खुम्ले किरा
बेच्नु पर्ला भविष्यमा धनियाँ र जिरा ।
राणाजीले भालु पुजे कमलजीले राजा
दुवै फुर्ति गर्दै हिंड्छन् बजाएर बाजा ।

विजुक्छेंले काग पुजे चित्रजीले कोइली
ईमान्दार बन्दा बन्दै जान लागे ओइली ।
वम वम गर्ने वामदेवले पुजे आफ्नै तालु
पार्टी भित्रै विवाद ल्याउँछन् खान्छन् यिनले आलु ।

जनताको नाम लिई काम फायलमा
नम्बर एक चोर बन्न जान्छन् ट्रायलमा ।

कति गर्नु बयान मैले यी कीराको यहाँ
भित्र भित्रै खाई सके प्वाल जहाँ तहाँ ।

बिचार पुज्ने नरहरी, विश्वास पुज्ने निधि
राजनीतिको भड्खालोमा पुऱ्यौ आफ्नो गिदी ।
न्याउरी पुजे ईश्वरजीले विद्याजीले गोही
ढुङ्ग्रो लुकाई माग्ने गर्छन् हाम्रा नेता मोही ।

कति राम्रो बानी हजुर हाम्रा नेता ज्यूको
सधैं मिठाई खाई हिड्छन् सुँगरको घ्युको ।
टोपी टिप्दा धोती खुस्क्यो, धोती टिप्दा टोपी
गाउँ पस्दा लाज हुन्छ हिंड्छन् मुख छोपी ।

ᨀᨀ

## गजल

मुन पौडेल

रहर काठमान्डू शहर काठमान्डू
धूवाँ धुलोको जहर काठमान्डू ।

मेरो गाउँ थियो मलाई साह्रै प्रिय
तर उल्लूहरूको ठहर काठमान्डू ।

सबै तर्सी तर्सी पनि  दौडिरा’छन्
खोई के हुने हो  डर काठमान्डू ।

के भन्छ पहाड के भन्छ  मधेश
सुन्दैन  केही बधिर  काठमान्डू ।

जुर्दैन  ढिंडो  कसैलाई  खान
तर पिज्जा खान अधीर काठमान्डू ।

रहर काठमान्डू  शहर काठमान्डू
धूवाँ  धुलोको   जहर काठमान्डू ।

ᨀᨀ

# अवत होस् पऱ्याउ ए बुढा बा

शैलेन्द्र सिम्खडा
धादिङ

गाउँबाट हिँडदा बाले भन्नु भा थ्यो
बाबु खर्च थोरै छ यत्तिले पुऱ्याउनु,
जे सस्तो पाइन्छ त्यै किनेर ल्याउनु,
बाको पैसाले न खशी आँउदो र छ, न च्याङ्गा आउँदो रछ,
यो शहरमा त सबैभन्दा सस्तो मन्त्री र सभासद पाँउदो रछ,
सँधै दशैंका च्याङ्गाहरू भक्तपुर सल्लाघारीमा राखिन्थ्यो,
यस्पालि बानेश्वरमा राख्न पा'रछ,
समावेशीको नाउँमा कैफियत भा'रछ,
खसीबोकाको हुलमा बाख्री धेरै मिसा'रछ,
म दिक्क भएँ, र सरकारी बजारबाट तरकारी बजारतिर गएँ,
नेताले नटेरेपछि अब त जन्ताले तरकारीलाई गालिगर्न थालेछन्
त्यो अकवरे खुर्सानीलाई ज्यानमारा खुर्सानी भन्न थालेछन्
त्यल्ले कस्को ज्यानमाऱ्यो, कल्लाई अप्ठेरो पाऱ्यो ?
बिचरा जेमा हाले पनि रम रम रम स्वाद दिने समावेशी सर्वहारा,
यो कस्तो देश हो ज्यानमारा चैं नेता खुर्सानी चै ज्यानमारा ?
कस्तो देशमा जन्मिएछौं ? कस्तो पानी पिएछौं ? कस्तो आदत् लागेछ ?
अब त बाउको पैसा लिएर घरको सामान किन्दा पनि
कमिशन घिच्न मन लाग्छ,
कस्तो चुनाव भएछ ? कस्तो नेता छाने छौं ?
संबिधान सभाको हालत देख्दा, यो भोट हाल्ने हातलाई पनि
सिलौटामा राखेर लोहोरोले किच्न मन लाग्छ,
ठट्टा नगर्नु सिमानाबाट छिर्नेले पनि,
भित्र बसेर देश चिर्नेले पनि,
यहाँ देश बेचेर जन्ता किन्न पाउँदैन
नेपाली नबोल्नेले नेपालको झण्डा राखेर हिड्न पनि सुहाउँदैन,
बुझ्नेले बुझपचायो नबुझ्नेले त्यसै करायो,
हाम्रो नेपाल भन्ने शब्द हरायो,

मेरो हिमाल, मेरो पहाड, मेरो तराई,
त्यस्तो मुर्खै मुर्ख छान्न सक्ने नेपाली जनतालाई मेरो बधाई,
हेर्नुस् सँधैको लुछाचुँडी
कैले भर्ने श्याल, गिध्द र हुँडारको भूँडी ?
फलानालाई छवटा मन्त्री
ढिस्कानालाई नौवटा मन्त्री
फलानाकी स्वास्नी मन्त्री
फलानाकी छोरी मन्त्री
चुनाव जित्नु पर्दैन, कसैको पुत्री खा, कसैको पुत्रो खा,
नेपाली जनताले हालेको भोट चैं भुत्रो खा,
अन्तरिम सम्बिधान जाँसुकै जा
अवत होस् पऱ्याउ ए बुढा बा !

ଓଓ

## नानीचाको बोरिङ स्कूल

नवराज कार्की

नानीचाको छोरो बोर्डिङ स्कूल गएछ
कनीकुथी टच्याक्कटुक्क इंलिस बोल्ने भएछ ।

आमाले सोधिछ– 'के परिस् ट बाऊ ?'
छोरोले भनेछ– 'ए, बी सी दी मम्मी ।'

'ए: मलाई बिसिद्दी भन्छस् ?
तैंले स्कूलमा यै हो परेको ?'

छोरो भन्दोरैछ– 'मम्मी, मम्मी, आइ लभ यू ।'
आमाले सुन्दिरैछ 'मम्मी, मम्मी, अइला बिऊ ।'

परेन त फस्साद
कस्तो बोरिङ् स्कूल परेछ
घाँटीमा टाई बाँधेर छोराले त
गर्नुगरेछ !

ଓଓ

# भान्सा भो हजूर ?

## भैरव अर्याल

'भान्सा भो हजूर ?'

आँखामा सूर्योदेवको झुल्को पर्न नपाउँदै कानमा सुर्जे साहुको आवाज गुञ्जिन आइपुग्छ । निद्रा भट्टीवाल्नी कान्छी झैं हत्त न पत्त घैंटो लुकाउँदै जीउ टक्टकाउछे, सपनाहरु पुलिसको आवाज सुनेका जुवाडेहरुझैं कोही खाटमुनि लुक्छन कोही झ्यालबाट हामफाल्छन् । पिलिक्क आँखा उघार्दा मिलिक्क उही बूढो साहू महिना सुनाउन आएका बाजे झैं विपना सुनाउन भित्र पस्छ । झोकको झन्झावातमा मगज यस्तरी झन्झनाउँछ कि जुरुक्क उठेर साहुजीका चाउरिएको गालामा चड्याम चड्याम हिर्काउँदै जवाफ दिउँ,–'कौवाले समेत जलपान नगर्दै तेरो बाबुले भान्सा गर्छ त लठ्ठु ?' तर बोल्न नपाउँदै केटाकेटीले नै उसलाई उल्याउन थाल्छन्, म आफ्नो झोक तकियामै विसाएर सिरकले गुम्लुङ्ग मुख छोपी आफु नब्युझिएको बहाना गर्छु । किनभने एकैछिनको ध्यानदृष्टीले मलाई यो तथ्य पत्ता लगाउन गाह्रो पर्दैन–उक्त साहु अहिले भान्सा भएको नभएको सोध्न आएको किमार्थ हो इन, ऊ त अघिल्लो महिना भान्सा गरेको मुरीका मुरी चामलको उधारो उठाउने उदेश्यले मलाई ओछ्यानैमा उठाउन आइपुगेको हो । त्यसैले देशको एउटै प्रश्नबाट नेताहरुले बेग्ला बेग्लै अर्थ झिकेझैं साहुजीले एकाविहानै सोध्न आएको भान्सा गर्नु भो भित्र धेरै धेरै अर्थ लुकेको मैले पाएँ । पहिलो त हो–उसले कति दिन मेरो भान्सा चलाईदिएको थियो । ऊ जस्ता अन्नदाता साहु कहाँ मुखै नदेखाई अचल म कसरी भान्सा गर्छु ? न हिजो अस्ती मेरो परिवारले भान्सै गरेको छैन कि ? म एउटा जागिरजीवी अधिकृत पसलेको उधारै नखाई महिनाभर भान्सा गर्न गराउन सक्छु र ? उसको सोधाईको अझ सबभन्दा चूरो अर्थ के होला भने आफूले उधारो भान्सा गरे बापत् उसलाई तिर्नु पर्ने रुपैयाँ यतिन्जेन नतिरेकोले त्यसको पनि मैले भान्सा गरिदिए कि ? उधारो खाने पनि कुनै निश्चित समय र स्थान हुन्छ र ?उधारो, रिन, घुस, कमिसन, नाफा-नजराना भन्ने कुरा कौवाको बच्चाले जलपान नगर्दै खाएपनि हुन्छ रे, लाटाकसेराको बच्चाले न्यासध्यान नसिध्याउँदै वुत्याएपनि हुन्छ रे । यसरी रहस्य उघार्दै जाँदा उसले एकविहानै भान्साको प्रस्न उठाए बापत् उठेको झोक नशाले छाडेपछिको आत्मज्ञान झैं आत्मग्लानीमा परिणत हुन्छ । म सिरक भित्र दुम्सीले झै जीउ खुम्च्याएर दम्पच पारी आफुलाई लुकाउन खोज्छु, तर हिजो बेलुका गरेको काँचो कचिलो भान्साले भुँडीभित्रैबाट घ्वालाल्ला गरी शौचालयको घण्टी दिन्छ ।

भान्साको कुरा गर्दा गर्दै शौचालयको कुरा झिक्दा तपाईंलाई अलि बीभत्सताको गन्ध आउँला, वास्तवमा यी दुईको सम्बन्ध टिप्पणी आदेशको सम्बन्ध जस्तै घनिष्ट छ । भान्सा एउटा टिप्पणी हो भने शौच एउटा आदेश

हो । दार्शनिक भाषामा भन्सा भोगभुमि हो भने शौचालय त्यागतीर्थ हो । साँच्चै भनूँ भने आजको जटिल व्यस्त जीवनमा शौचालयजस्तो आनन्दी ठाउँ आर्को कुनै छैन, कारण यहाँ उधारो उठाउन आएको साहूले मात्र होइन, उधारो खान बाध्य बनाउने केटाकेटीकी माउले पनि झिजोल्न पाउन्न । कम से कम एकान्त साधना र आत्मचिन्तनको एउटा शान्त्र आश्रम शौचालय नै हो । त्यसैले म आश्रमभित्र पसि आशावद्ध भएर आत्मलीन हुँदै चिन्तन गर्नु थाल्छु मानौ मलाई भान्सा गर्नुको अर्थबोध हुन लाग्छ ।

भान्सा गर्नु भनेको खानु हो । खानु भनेको कुनै पदार्थलाई मुखद्वारबाट प्रवेश गराई आन्द्रे मार्गद्वारा भुडी भण्डारसम्म पुर्‍याउनु हो । तर खानुसित बढी मोह भएर हो कि खानुको समस्याले बढी सताएर हो नेपालीहरुले यसको अर्थ विस्तार यस्तरी गरेका छन् कि तन्काउनु र सुर्काउनु पनि खानु नै भनिदिन्छन् । उदाहरणका लागि हामी चुरोट पनि खान्छौ । चिया पनि खान्छौ । पाए रम पनि खान्छौ, नपाए गम पनि खान्छौ । तर अरु खानु सित त्यति चासो हुँदैन । हाम्रो खास खानु भात खानु हो । त्यसैले साझ विहान टुप्लुक्क कोही आइपुग्यो भने ढोगभेट पछिको दोस्रो प्रश्न हुन्छ–भात खानु भो ?

भात खानु भनेको ज्यूनार गर्नु, भान्सा गर्नु, हसुर्नु, घिच्नु र घोक्र्याउनु पनि हो । धनधान मानसानले ज्वाजल्यमान मानिसहरु ज्यूनार गर्छन्, हलो जोतेर खानु पर्ने परश्रमीहरु सायद हसुर्छन्, धोक्रा बोकेर ज्याला कमाउनेहरु शायद धोक्र्याउँछन् र साहै हिन्नेती ठहरिएका वा रिस उठेका मान्छेहरु घिच्छन् । कम से कम आफुलाई सन्तोष के छ भने हिजो बेलुका पानेरोटी धोक्र्याएको भए पनि, सुख्खा रोटी टोकेको भए पनि रिसाएको साहुले यसरी त सोधिदिएन–घिच्यो बाज्या ! घोक्र्यायो साहब ! हसुर्नु हो हजूर !

अर्थ उही भए पनि ज्यूनार गर्नु, भान्सा गर्नु, भात खानु र घिच्नुको ध्वानीमा ठूलो अन्तर छ । ज्युनार भन्ने वित्तिक्कै चौरासी व्यञ्जनका दर्जनौ दर्जन रिकापीहरु वरिपरि सजाएर बडेमानको थालमा घिउ चुहिने दुई पन्यूँ मसिनाको मसलदार भुजा पस्किएर चम्चाले एक पछि आर्को रिकापी चहारेको दृष्य ध्वनित हुन्छ । भान्सा गर्नुभन्दा कमसेकम दाल भात तरकारीको साथै ट्वाक्क एक थोक अचार, चार चौटा मासु या एक गिलास दुध र एक दुईवटा फलफुलको वास्ना आउँछ । भात खानु मात्र भन्दा सिलावरको वा पित्ले थालमा पस्केको रातो रातो चपरी भातकेही न केही एकथोक तरल तिहुन सित मुसेर गास हाल्नु भन्ने बुझिन्छ । अधिकांसः भद्र-भलाद्मी भात खाँदा फलफुलको त कुरै छाडौ दाल तरकारीको पनि नियमित प्रबन्ध हुँदैन, केवल भात खाए पुग्छ । त्यसैले दाल तरकारी खाए नखाएतिर वास्तै नराखी हामी सोध्ने गर्छौ–भात खायौ ? त्यही भात पनि उसिनेको पर्‍यो या चामलको कायम-मुकायम मकै, कोदो, फाफर या चनाले गराउनु पर्‍यो र घिच्रामा अड्काई-अड्काई निल्नु पर्‍यो भने त्यसलाई घिचेको भन्नमा कुनै आपत्ति छैन ।

कति जनालाई रिस उठाएर वा कतिदेखि रिसाएर गर्नुपर्ने हामी जस्ताको पेटभर्ने क्रियालाई भान्सा गर्नु भो ? भनी सोध्नुसट्टा- घिच्नु भो ? भनी सोधे स्वाभाविकै ठहरिएला कि भन्ने मलाई लाग्छ ।

त, शौचालयमा जति ज्ञान हासिल गरी जब म बाहिर निस्कन्छु, साहुजी गनगनाइरहेको सुनिन्छ–'हजूरहरुले यस्तो गरिदिएपछि हामीले के खाने ए ?' भनिदिउँ जस्तो लाग्छ–'तिमीले नाफा खाने हामीले उधारो खाने ।' तर त्यसो नभनि म उसलाई आश्वासन दिन्छु–'तिम्रो पैसा हामी खादैनौ साहुजी । अहिले केही दिन कम्पनीको हालत खराब भएकोले तलब आएको छैन, आउने वित्तिकै पुर्‍याउन पठाउँला !' मेरो भद्र आश्वासनले साहूजी त आस्वस्त भएर जान्छ तर भान्सा विभागकी अध्यक्षा श्रीमती देवीको लम्बे टिप्पणी आदेशार्थ प्रस्तुत हुन्छ–'चामल, चीनी, चना, चमसुर, रातोमाटो, मट्टितेल, हिङ, हलेदो, हिसाबको कापि, साबुन, साबदाना, स्टोभको वासर र सल्फागुनाइडिन ।' अफिसको माग फारम हुँदो हो त म त्यसलाई यस्तरी फाइलमा कोचिदिन्थे कि एक महिना पछि खोज्दा, खोज्न फेरी एक महिना लागोस् ! तर माग पर्‍यो बुढीकै, सर्दाम पर्‍यो भुँडीकै । जहानको समस्या पनि जनताको समस्या जस्तो टारेर टर्ने हो र ? न आश्वासनले टर्छ न भाषणले । न योजना बनाएर टङ्गारिन्छ न अभियान चलाएर । मैले त तुरुन्तै आदेश मात्र दिएर पुग्दैन निकाशा नै दिनु पर्छ नत्र एकछिन पछिको भात पाक्यो भनी सोध्ने अधिकार पनि मेरो हुनेछैन, मलाई भान्सा गर्नु भयो भनेर सोध्ने कर्तव्य पनि कसैको बाँकी छ कि ? या सापट नलिएका कुनै साथी वा सज्जन बाँकी छन कि ? तर तुरुन्तै सम्भनामा कोही पनि चढ्दैनन् । बरु यसपाली बत्ती धेरै चढेछ–छोरो भन्छ । पानी धेरै चढेछ–छोरी भन्छे । म पनि निकै चढेको छु भनी टेलिफोन घण्टी ठोक्छ ।

आधुनिक जीवनमा घण्टीको पनि घनिष्टता छ भन्ने कुरो मान्नै पर्‌यो । प्रसूति गृहमा आमाको गर्भबाट जब खुत्रुक्क ओर्लेथें नर्स दिदीले टिङरिग घण्टी बजाई मेरो धरावतरणको सलामी दिइथिन् रे ! त्यसैले स्कुल कलेजदेखि घर अफिससम्म नानाथरी घण्टीले मलाई छाडेको छैन । बेला न कुबेलाको यो घण्टीदेखि त यति भोक चल्छ कि उठाउँदै नउठाइदिउ तर कुनै भाग्यविधाताको घण्टी रहेछ भने के गर्ने ? त्यसैले उठाउँछु–भाञ्जी मैयाँको मधुर स्वर गुञ्जिन्छ–'उहाँ हजुरको मामालाई नभेटी नहुँनेरे । दिउँसो भेट हुँदैन भनेर हामी अहिले ती खानेगरी आउँदैछौ, माइजुलाई भनिदिनुहोला–उहाँ हजुर तेलमा बनाएको खाना ज्युनार हुन्न ।' आफैलाई सुन्न धौ धौ परेको सन्देश माइजुचाहिँलाई कसरी सुनाइदिने ? त्यसैले म रिसिभरको साथै कुरो बाटारेर उतैतिर फर्काइदिन्छु–'होइन नानी, त्यस्तो जरुरी भए उहाँ हजुरलाई  किन दुःख ! मेरो अहिले त्यतै पटि आउने काम छ, माइजु पनि भेट्नु छ भन्थी, भान्सा त्यही ठिक गर्नु । तिम्रो मामालाई तेलमा बनाएको मात्रै होइन, मट्टितेलमा बनाएको पनि मीठो लाग्छ भनी बज्यैलाई सुनाइदिनु ।'

भान्जी मैयाँ खिलखिलाउँदै टेलिफोन राख्छिन् । एकजोर पहुना हटाउनुको साथै भान्जीकहाँ एक छाक भान्साको चुलेनिम्तो माग्ने नकच्चर्याईमा आफु सफल भएकोमा टिएडिए सहितको विदेश भ्रमणको निम्तो मान्न सफल भएजस्तै खुशी लाग्यो ।

यही खुशीमा आरामकुर्सीमा बसी म मग्नसँग कोसेली फुक्न थालें । एकाएक एकजना बाजे चोकमा ठिङ्ग उभिएर झ्याउरे स्वरमा पाती पढ्न थाले–'आब्रह्मन् ब्रम्मणो ब्रम्हवर्च......' त्यसको मुल अर्थ न उनले बुझे का होलान् न मैले बुझेको छु, तर भावार्थ भने भात खानु हो भन्ने कुरा मेरा केटा केटीले समेत तुरुन्तै बुझेछन्, एक मुठ्टी भात बनाउने गेडा झोलीमा थपिदिइहाले । बाजे हिड्न नपाउँदै आर्को अवतार चोकमा अवतरित भयो, त्यो अवतार थियो– त्यही दही दाजुको । दुई हातले बडे बडे घैटा झुण्डाएको, बीचमा घ्याम्पिएको गाँठोले सकिनसकि हिड्नु पर्ने दहि दाजु, टोलभरिको परिचित विदुषक जस्तो थियो । झ्यालमुनि घैंटा बिसाउँदै मलाई नमस्कार गरेर उसले सविनय निवेदन गर्यो–तीन बीस ११ वर्ष खाइहालियो, अब दुई चार वर्ष खानलाई पर्नु हम्मे पर्यो हजुर ! म सुनेको नसुन्यैगरी उसको खानुको समस्या र आफ्नो खानुको समस्या जोर्न थाल्छु, केटाकेटीहरु उसलाई ठग बुढो, हण्डे बुढो, घ्याम्पे बूढो भन्दै गिज्याउँछन् । दहीमा च्याउँ मिसाएर ल्याउछ भन्छन् । तर ऊ यस्ता टिका टिप्पणीको कुनै वास्ता गर्दैन, न गिज्याइएको वास्ता गर्छ न खिज्याइको । खानको लागि उपेक्षा र अपमानहरु पहिले पचाउँनु पर्छ भन्ने उनको जीवन दर्शन ७० वर्ष देखिको अनुभवको आधारमा खारिएको दर्शन हो । सामान्य रुपमा दहि चाहिँदैन बूढाबा भन्यो भने एकपल्ट राम्रै भाषण गर्छ–आज एकादेशि, भोलि आइतवार, यो दही अघिपछिको जस्तो हैन, खावा दुधको दही खावा दुधको । धेरै जसो ऊ जित्छ हामी हार्छौं र दही किन्छौं । थोरैजसो ऊ हार्छ–रन्कन्छ, फन्कन्छ फेरि आर्को दिन टुप्लुक्क आइपुग्छ ।

दही दाजुको प्रस्थान पछि दूधमैया आइपुग्छे–एउटा फुलोपरेको आँखा मतिर चढाएर निकै लजाएझैं भित्र पस्छे र पहिल्यै आफ्नो महत्व गाउँछे–' आमालाई जाउन भनेको, तँ गए मालिकहरु खुशाउछन धेरै दुध किन्छन भन्छिन् । हुनपनि क्या बज्यै, ऊ त्यो टोलमा बस्ने देशी साहेब छ नि, आमाले लगेको बेला आधामाना दुध लिन्छ, म गएको बेला दुई माना लिन्छ र दुध ल्याएको ज्याला भनेर एक सुको पैसा बढ्तापनि दिन्छ ।' दुधवाल्नी बुढीको भान्सा गर्ने कलामा तरुनी छोरीको कति मदत रहेछ भन्ने बुझ्न मलाई गाह्रो पर्दैन । तर चुरोट बेस्सरी तान्नेसिवाय अरु केही बोल्दिन । दुधमैया झ्यालमुनिबाट फेरि एकनजर मतर्फ चढाई लचकदार पैताला चाल्छे–म हेरिर हन्छु, हेरिरहन्छु । हेर्दाहेर्दै धवाँको प्रवाहसित सम्झना प्रवाह पाँज्जिनछ–एउटा सेतो मुसो खोरमा पालेर ज्योतिष हेर्न टुँडिखेलको छेउँमा बसेको पिलन्धरे युवक, वियरको थोत्रा टीन दुईचारोटा बाटुली सुकेनासले खाएको छोरालाई

झुम्रे स्तन चुसाउँदै बेच्न बसेकी पसल्नी, बागीश्वरीको जलप्रसाद बाँड्न दिनहुँ अफिस अफिस चहार्ने बहिरा बागीश्वर पण्डीत, दिनभरी होटलको कप पखालेर साँझ चिउरा तरकारी चोरी स्वास्नी छोराछोरीलाई चारा लै जाने होटलब्यय, छेपारा बटुलेर उसिनी हरेक रोगको औषधि भन्दै दिनभर चिच्याउँदै हिड्ने मुसहर–सबै उही भान्सा भगवतीको उपासक हुन् । यस्ता प्रत्येक उपासकलाई दिनहुँ भेटेर कसले सोधिदिने–भान्सा भो हजुर ? बरु ने पथ्यबाट आफै फेरि सोधिन्छ–'भान्सा भो बाबु ?' मुन्टो बटार्दा जुम्लुङ्ग उनै ठाँहिलाबाजेका छोरा उपस्थित देखिन्छन् । म नमस्कार र प्रश्न दुबै फर्काउँदै सोध्छु–'तपाईंको भान्सा भयो नि ? पढे गुनेको नभएपनि ५२ हण्डर ५३ ठक्कर खाएका ठाँहिलाबाका छोरा भन्छन्–'भान्सा गर्न सकेको भए म विहान बिहान बाबुलाई झिंझलेर कतै बहिदार खाली भयोकि भनेर किन धाई रहन्थे बाबु !' अनि उनी भान्सा गर्नुको लामो कथा हाल्न आँखाभरी आशु पारेर भन्छन्–'हाम्रो मुल व्यथा नै भान्सा गर्नुको व्यथा हो बाबु ! त्यसैले जो पायो उहीसँग भान्सा गरेको नगरेको नसोध्नु नै राम्रो, बाबु नसोध्नु नै राम्रो !' त्यहाँ देखि मलाई पनि यस्तै लाग्छ–न सोध्नु नै राम्रो !

ᏊᏊ

## १७१/शिल्पी थिएटर, बत्तीसपुतली (०७१ १ २६)

न.रा.श. (विमोचित कृति– ध्रुवचन्द्र गौतमको 'वञ्चक' र रोशन थापा नीरवको 'अशह्य'का बारेमा बोलेर मञ्चबाट आएपछि) : राम्रो बोल्यौ गुरु– भाषण त लेखेरै ल्याएका रहेछौ ।

ध्रुव सापकोटा : कहाँ लेखेर ल्याउनु ? अहिले यहीं आएपछि 'बोल्दिनु पर्‍यो' भने । 'किताब पढेकै छैन कसरी बोल्नु ?' भनें । 'किन पढिरहनु पर्‍यो किताव-सिताव, यही पढिदिनुस् न' भनेर उनीहरूले नै लेखेर ल्याएको तयारी भाषण दिए– त्यही पढिदिएको हूँ ।

ᏊᏊ

## १७१/कार्की किचेन,गौशाला (०७१ १ २६)

ध्रुव सापकोटा : हिजो रोचकजीकहाँ तपाईंहरूको खिरपार्टीको जमघट थियो रे– कनकमणि स्क्याण्डलबारे सोध्नु भएन कमलमणिसित ?

न.रा.श. : अ हँ सोधिन ।

ध्रुव सापकोटा : किन ?

न.रा.श. : म त्यस्ता कुरा सोध्दिन । त्रिभुवन विश्वविद्यालयको लेखा शाखामा हाकिम भएर तिमी त्यत्रा वर्ष बस्यौ– कति कमिसन खायौ भनेर कहिल्यै सोधें ?

ᏊᏊ

# दमिनी बज्यै

## जगदीश घिमिरे

(यस स्तम्भमा प्रकाशित भएर ओझेल परेका घतलाग्दा रचनाको पुनरमुद्रण गरिन्छ)

कान्तवती मरेपछि स्वामी राजाले पहिले देउतालाई दण्ड दिए, अनि मान्छेलाई ।

उनले भने, 'म मेरी प्राणप्यारीलाई निको नपार्ने ती निमकहराम वैद्यहरूलाई सजाय दिन्छु । नत्र मेरो चित्त शान्त हुँदैन । तिनलाई पाता फर्काएर मेरा सामु ल्याओ ।'

कान्तवतीको उपचार गर्ने राजवैद्यहरूमाथि कोर्रा वर्सिए ।

स्वामीले राजवैद्य लक्ष्मीनारायणलाई पुरस्कार सुनाए, 'लक्ष्मे पाजीलाई चारपाटा मुडेर, मान्छेको मासु, गाईको मासु, सुँगुरको मासु, छत्तीस जातको गुहु र जाँड ख्वाएर, आँखामा सिउँडीको चोप हालेर अन्धो पारेर देशनिकाला गर् ।' दयासिन्धुले पुरस्कार थपे, 'त्यसकी बाहुनी दमैलाई दे । त्यसका सन्तान, भाइभतिजालाई सकस दिएर धपाइदे ।'

स्वामीले कविराज मिल्हम वैद्यलाई पुरस्कार सुनाए, 'मिलमे पाजी ! मेरी महारानीलाई परलोक पुऱ्याउने तैं होस् । यसको घर हात्ती लाएर भत्का र आगो लाएर खरानी बनाइदे । यसका दुवै हात कोलमा पेलिदे । यसलाई काटेर टुक्रा टुक्रा पारेर गुहुको खाडलमा गाडिदे । यसकी स्वास्नी पोडेलाई दे । बेथा नचिनीकन ओखती गर्नेको यही दशा हुन्छ भनेर झ्याली पिटाइदे ।'

काजीको हुकुमले लोठे दमाई र हाकुचा पोडे दण्डस्थलमा ल्याइएका थिए । स्वामीले  कड्केर भने, 'ए डुमरा, यो बाहुनीलाई घिस्स्या ।'

नचिताएको इनाम पाएर लोठेलाई भाउन्न भयो । हगूँ हगूँ, मुतूँ मुतूँ भयो । रनाहा छुटचो । के गरूँ के नगरूँ भयो । के भनूँ, के नभनूँ भयो । दुवै हात जोडेर थर थर काम्न लाग्यो । उसको मुखबाट बाम्बार एउटै शब्द निस्किरह्यो, 'प्रभु, प्रभु, प्रभु ।'

उसले घुँडा टेक्यो । भुइँमा टाउको बिसाएर डाँको छोडचो । केही बेर पछि आँट गरेर मुन्टो उठायो । घेरो मात्र रहेको टोपीले आँसु पुछचो । आँखा राता छन् । बोल्न खोज्छ, सक्तैन । मुख सुकेको छ, बाक्लो थुक च्याप च्याप छ । बल्लतल्ल भक्भकाउँदै लर्बराउँदै बिस्तारै बोल्यो, 'गरीबपरबर ! म कुजात दमै ! बज्यै त्यत्रो ठूलो जात, बाहुनी बज्यै । छुन पनि पाप लाग्छ कसरी घिस्स्याऊँ प्रभु ?'

स्वामीले हुकुम दिए, 'पाजी डुम ! हाम्रो हुकुम मान्दैनस् ? यसको छाला काढेर नूनचूक दल्दे !

लोठे बेहोश भएर लडचो । सिपाहीले लात हानेर उठायो, 'उठ्, ए डुमरा !'

ब्यूँझिदा लोठेले आफ्नू छाला कढ्ने सुरसार भएको देख्यो । अलल्लिएर

रुँदै भन्यो, 'गरीबपरबर ! दयासागर ! रिसानी माफ होस् ! प्रभु ! म जातको दमै, बोल्न जानिनँ गरीबपरबर । ज्यान बकस पाऊँ महाराज ! राजाबाट जे हुकुम हुन्छ गर्छु भगवान् ! ज्यान माफ पाऊँ । बालबच्चा भोकभोकै मर्छन् ।'

'ल ज्यान बकस पाइस् । तुरुन्त घिस्या तेरी आमालाई !' स्वामीले अनि काजीलाई हुकुम दिए, 'यो डुमलाई खाने मेलो गर्दे ।'

लोठेले फेरि भुइँमा टाउको जोतेर भावविह्वल हुँदै क्रन्दन गऱ्यो, ' महाराजको जय होस् । महाराजको जय होस् । गरिबलाई ज्यान बक्सिने, गाँसबास बक्सिने दयासागर महाराजको जय होस् । जय होस् ! जय होस् !'

उसका हात कामिरहेका थिए । ऊ बेहोश जस्तै थियो । ऊ सुस्तरी उठेर कतैतिर नहेरी मूर्च्छा परेकी बाहुनीको हात समाएर घिस्याउने रीत पुऱ्याउन लाग्यो ।

लोठेसँगै मिल्हम वैद्यकी दुलहीलाई घिसार्ने हुकुम पाएको पोडे नजीकै उभिएर थरथरी काम्दै केही नबोली हेरिरहेको थियो । ऊ पनि वैद्यनीलाई घिसार्न लाग्यो । अलिपर पुगेपछि दुवैले आआफ्ना पुरस्कारलाई घिस्याउन छोडेर बोकेर घरतिर लागे । बाटाभरि बोलेनन् ।

काजीले लोठे र हाकुचालाई मोरङको सालबाडी मौजामा जग्गा दिएर गरिखाने मेलो गरिदिए ।

बाहुनी बज्यै अघिदेखि नै मूर्च्छा पर्दै ब्यूँझदै थिइन् । पोइलाई पहिलो कोर्रा हानेको दख्दा बेहोश भइन् । अनि सजाय सुन्दा र अहिले दमाईलाई घिसार्ने हुकुम सुन्दा । लोठेले छोएदेखि उनी लगातार बेहोश थिइन् ।

बल्लतल्ल साँझमा घर आइपुगेर लाठेले अर्धमृत बज्यैको भारी बिसायो । बज्यै अनुहार ढाकेर घोप्टो परेकी छन् । कति चोटि बेहोश भइन्, कति चोटि ब्यूँझिन्-ब्यूँझिनन्, लेखा भएन । कति आँसु बग्यो थाहा भएन । कुनै हलचल छैन । सास फेरेको नफेरेको थाहा हुँदैन । मूर्च्छामा हो कि होशमा हो, भन्न सकिन्न । बेला बेलाको हिक्का, बाडुली र रुवाइले  मात्रै ज्यूँदै छिन् भन्ने थाहा हुन्छ ।

आँगनमा टोलका केटाकेटीहरू खेलिरहेका थिए । लाठेलाई देख्नेवित्तिकै भाइबहिनी बोकेर लुसुक्क आआफ्ना झुप्रातिर लागे । बाँकी बचे लोठेका छोर ाछोरी ।

बाहुनी बज्यैको भारी आफ्नू झुप्राको पेटीमा बिसाएपछि लोठे उनलाई छोइएला कि जस्तो गरीअलि पर हटेर बस्यो । उसको मनमा बाहुनी बज्यैलाई छोएर कति पाप लाग्यो होलाभन्ने पीडा थियो । टोपीको घेराले अनुहारको पसिना पुछ्यो । अनि दुलहीलाई करायो, 'ए, पानी खान दे त ।'

आँगनमा लुकामारी खेलिरहेका छोरीहरू एकै स्वरमा कराए, 'ए आमा, बाले के ल्याए ।'

थोत्रो गुन्यू बेरेकी मैलीधैली दमिनीले पानी लिएर बाहिर निस्केपछि देखी, पेटीमा त आइमाई पो घोप्टो परेकी छ । जिल्ल परेर सोधी, 'हैन के ल्या'को भन्या !'

'बज्यै !' लाठेले निर्विकार भन्यो ।

'के बज्यै भन्या ?'

बाहुनी बज्यै, राजाको वैद्यकी बाहुनी बज्यै क्या !

दमिनी नीली भई । मूर्च्छा पर्लीजस्तो भएर सोधी, 'हन, के भन्छौ तिमी ?

'भा' कुरा भन्या ।'

उसले दमिनीलाई एक सासमा राजाले राजवैद्य लक्ष्मीनारायण दाहाल र कविराज मिल्हम वैद्यलाई दिएको सजाय र अफूले वैद्येनी बज्यैलाई घिस्याउनु परेको कथा सुनायो । दमिनीले पक्क परेर सुनी र खङरङ्ङ भई । उसका ओठमुख सुके । भनी, 'मेरी आम्मै ! के सुन्नुपर्‍या हे दैव ! यस्तो पनि हुँदोरैछ !'

वैद्येनी बज्यै राम्रीमा, राम्रा राम्रा लुगा र गहना लाउनमा, दानीमा र मायालुमा कहलिएकी थिइन् । दमिनीले उनका हातबाट निकै बक्सिस पाएकी थिई । उनको यस्तो गति देखेर दमिनीलाई भाउन्न भयो । निकै बेर उसको वाक्य फुटेन । अनि बिस्तारै भनी, 'भ्याङ्लीका बा तै धन्न तिमी बाँचेर पो आ'छौ त !'

ञञ

(जगदीश घिमिरेको 'सकस'बाट सभार)

## १५०/अभिव्यक्ति अड्डा (०६७ असोज)

जगदीश घिमिरे : काभ्रेमा जग्गा लिएर कोलोनी बनाउने तपाईंहरूको योजना केभो ?

न.रा.श. : मुख्य योजना विनोदको हो । मलाई त्यसमा रुचि लागेन, लिन्न भनिदिएँ ।

ध्रुव सापकोटा : मेरो त तिहीँ घर छ, अलि पर अर्को घर बनाउने कुरै भएन ।

डा. ध्रुवचन्द्र गौतम : म पनि विनोदको करले हेर्नसम्म त गएँ । उकालो देख्दै सात्तो गइहाल्यो 'हिमाल हेरी हेरी किताव लेख' भन्थ्यो विनोद त, तर सोचेँ यत्रो उमेरसम्म हिमाल नहेरीकनै लेखियो भने अब लेख्नलाई हिमाल नै किन हेरिरहनु पर्‍यो ?

जगदीश घिमिरे : हो त नि । बोतलै हेरेर तीन दर्जन किताव लेख्न सक्ने मान्छेले किन हिमाल हेरेर लेख्नु ? बोतलबाट जस्तो हिमालबाट गिलासमा खन्याउन मिल्दैन ।

ञञ

## १४५/भरतपुर, चितवन (०६६ १ १५)

गणेश शर्मा : यसपालिको कृष्णकुमारी गुरुंग स्मृति पुरस्कार भूपिन व्यकुल र लक्ष्मणले गौतमले पाए ।

धनराज गिरी : हो, पाए । भूलले पाए ।

गणेश शर्मा : भूलले ? कसरी ?

धनराज गिरी : भू माने भूपिन ल माने लक्ष्मण । भएन त भूल ?

कपिल अज्ञात : तपाईंको यही प्रत्युत्पन्नमतिले कमाल गर्छ– कति छिट्टै आएको !

ञञ

# “नाकाबन्दी” भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ

वसन्त गौतम
पश्चिमाञ्चल क्याम्पस, पखेखटा
)

‘कुटचो’ भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।
‘हामी राजीखुसीले कुटिएका हौं !’ भन्नुपर्छ
‘लुट्यो’ भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ
‘हामीले राजीखुसी लुटिएकाहौं !’ भन्नुपर्छ
उसका लागि हामीले
‘रोटी-बेटी’को बुर्का ओढिदिइरहनुपर्छ
र उसले हाम्रो ढाडमा छुरा रोप्नपाइरहनुपर्छ ।

उसले ढाडमा छुरा रोपेको बेला
हामीले ‘ऐया !’ भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।
‘छुरा किन रोपिस् ?’ भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।
‘मेरो ढाड आफैं छुरा खोज्दै रोप्पिन गएको हो ।’ भन्नुपर्छ ।
ढाडबाट भुल्भुली निस्केको रगतलाई ‘रगतहोइन’ भन्नुपर्छ
त्यो त उसको ‘महान् मित्रताको निसानी हो’ भन्नुपर्छ ।
हाम्रो आँगनमाउसले बुट बजारे ताली बजाउनुपर्छ
हाम्रो मझेरीमा उसले खुट्टापसारे रमाइदिनुपर्छ
रमाउन मन नलागे आँखा चिम्लिनुपर्छ
उसको हात चिलाए हामीले गाला थापिदिनुपर्छ
उसको हात अझै चिलाएअर्को गाला थापिदिनुपर्छ
यसरी हामीले
गालापछि गाला थापिदिईरहनुपर्छ ।

नदी दिनुपर्छ, पानी दिनुपर्छ
पहाड दिनुपर्छ, ढुङ्गा दिनुपर्छ
‘बगेर पनिउतै जाने त हो नि !’ भन्नुपर्छ
उसका लागि हामी भेलमा बगिदिनुपर्छ
उसका लागि हामी बाढीमा डुबिदिनुपर्छ
तर गुनासो गर्नुहुँदैन, सम्बन्ध बिग्रन्छ
यौवन दिनुपर्छ, जीवन दिनुपर्छ
ठाउँ-ठाउँमा उसको जयगान गर्दिनुपर्छ

खटाई-खटाई सास फेर्नुपर्छ
लुकेर सुस्केरा हाल्नुपर्छ
तर हामीले चित्तदुखाउनु हुँदैन
हामी चित्त नभएका ढुङ्गा-मुढा बनिदिनुपर्छ ।
हामीले चित्त दुखाएउसलाई रिस उठ्छ
यसैले चित्तदुखाउनु हुँदैन, सम्बन्ध बिग्रन्छ ।
हामीले लामो सास ताने उसलाई झर्को लाग्छ
यसैले लामो सास तान्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।

'नाकाबन्दी गर्‍यो' भन्नुहुन्न सम्बन्ध बिग्रन्छ
'नाकाबन्दी' शब्दै निकाल्नुहुन्न
'नाकाबन्दी' भन्नुहुन्न,
'हामी आफैंले आफूलाई सकसमा पारेका हौं !' भन्नुपर्छ ।

'सम्बन्ध असहज भयो !' सम्म भन्न पाइन्छ
त्यो पनि 'असहज'मानी-मानी भन्न पाइन्छ
टाउको झुकाई-झुकाई मात्र भन्न पाइन्छ ।

हामीले
'हामी नै खत्तम, ऊ त महान !' भनिरहनुपर्छ
'गल्तीभयो ! माफ पाऊँ !' भन्दै उठबस गरिरहनुपर्छ
ऊ बाहेक कसैसँग नबोल्ने कसम खाइरहनुपर्छ ।

उठबस गरिरहनुपर्छ ।
कसम खाइरहनुपर्छ ।

'ऐया !' भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ
'छुराले किन रोपिस्?' भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।
चित्तदुखाउनु हुँदैन, सम्बन्ध बिग्रन्छ ।
लामो सास तान्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।
'नाकाबन्दी' भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।
'नाकाबन्दी' भन्नुहुन्न, सम्बन्ध बिग्रन्छ ।

(असोज १, २०७३)

*( वसन्त गौतमको 'छोटीको देशमा' कवितासंग्रहबाट साभार)*

# महँगा मदिराको संसार

सुजित महत/सुरेशराज न्यौपाने

मेनु : पाँचतारे होटेल हयात रिजेन्सी । आमन्त्रित : गिनेचुनेका पचास जना । कार्यक्रम : एक बोतल (७ सय ५० मिलिलिटर)को ९९ हजार पर्ने व्हिस्की जोनी वाकर ओडसीको स्वाद चखाउने । केही दिन अघि काठमाडौंमा भएको यो कार्यक्रमको आर्को विशेषता के थियो भने, पहुनालाई मदिरा सर्व गर्नु अघि स्कटल्याण्डबाट आएको बार टेण्डरले उच्च गुणस्तरीय मदिरा कसरी पिउने भनेर सिकाए ।

'मदिरामा पानी फिटिक्कै नहाल्ने', उक्त कार्यक्रममा आमन्त्रित एक व्यवसायीले बार टेण्डरलाई उद्घृत गर्दै भने, 'एक टुक्रा आइससम्म हाल्न सकिन्छ ।' पानी वा वरफ धेरै हाले मदिराको स्वाद आफैमा हराउने उनले बताए । ग्लास उठाएपछि केही बेर सुगन्ध लिएरमात्र खाने र मुखमा हाल्नासाथ ननल्निे, महंगो रक्सी खाने तरिका उनले यसरी बताए ।

एक बोतलको एक लाख पर्ने यो महंगो रक्सी जोनी वाकर ओडसीले नेपाली मिडिया र सोसल मिडियामा ठूलै स्थान पाएको थियो । लाख, करोड, हुँदै अर्वमा भ्रष्टाचार हुन थाल्दा मदिरा पनि लाख पर्ने आउन थालेछन्, दिपक भट्टराइले फेसबुकमा लेखें, भ्रष्टाचार र रक्सीको नाता गज्जब हुँदो रहेछ, भ्रष्टाचार जति बढ्दै जान्छ उति महंगो रक्सी नेपाल भित्रिदै जान्छ ।

तर, काठमाडौंको बजारमा एउटा बोतलको दुई लाख भन्दा बढी पर्ने रक्सी पहिले देखिनै उपलब्ध छ । यसको चर्चा नभएकोले एक लाखकै रक्सीले सबभन्दा महंगो रक्सीको उपाधि पायो । फ्रेन्च कोन्याग (लुइ १३) एक बोतलको दाम २ लाख १५ हजार पर्छ । खसेर फुट्ने डरले दरवारमार्गको स्टोरमा लुई १३को डमी राखिएको छ । जुन डमीकै दाम ४४ हजार रुपैयाँ छ । स्कच व्हिस्की 'आइल अफ स्काई' एक बोतल किन्न १ लाख २२ हजार खनखनी गन्नु पर्छ । यस्तो मदिराका ग्राहक एकदम सीमित हुन्छन्, ग्रिनलाइन सेन्टर (मदिरा स्टोर)का प्रबन्ध निर्देशक अमित अग्रवाल भन्छन्, तीसम्म सूचना पुगे भइहाल्छ, आम मानिसले थाह पाए पनि विक्री हुने हैन । गरीब मुलुकमा यस्तो मदिराको प्रचार गरेर अनावश्यक गालीमात्र खाइने उनलाई लाग्छ । यसैले उनले आफूसँग महंगो रक्सी हुँदा पनि हल्ला खल्ला गर्दैनन् ।

ग्रिनलाइन सेन्टरको दरवारमार्ग स्थित स्टोरलाई एशियाकै सबैभन्दा ठूलो (आठ हजार वर्ग मिटर) लिकर स्टोर दाबी गरिएको छ । इन्टरनेटका सर्च इन्जिनहरूले पनि देखाउँदछन् । स्टोरमा करिब छसय ब्राण्डका रक्सी छन् । 'ती ब्राण्डमा कति हजार भेराइटीका मदिरा छन् भनेर हामीलाई पनि थाह छैन' स्टोरका प्रबन्धक विनोद सुवाल भन्दछन्, गन्न सजिलो छैन, एउटै ब्राण्डमा पचासौं थरिका मदिरा हुन्छन् ।

अन्तर्राष्ट्रिय बजारमा उपलब्ध निकै महंगा मदिरा यहाँ बेच्न नसकिने

उनी बताउँदछन् । 'अस्ट्रेलियामा छँदा एक बोटल ह्वाइट वाइन १४ लाख अस्ट्रेलियन डरलमा लिलाम भएको थियो ।' सुवाल भन्दछन्, 'थाह पाउँदा झण्डै फेन्ट भएको ।' अमित पनि सिंगापुर एयरपोर्ट ड्युटी फ्रिमा १२ लाख सिंगापुर डलरको वाइन लिलाममा राखेको देखेको सुनाउँछन् ।

सय वर्षका 'हेनरी फोर्थ डुडगनन हेरिटेज' कोन्याक ब्राण्डसँग मिल्दो जुल्दो सम्भवतः विश्वकै सबभन्दा महँगो रक्सी मानिएको छ । हिराजडित आकर्षक हातले बनाइएको विशेष किसिमको बोतलको २० लाख अमेरिकी डलर भन्दा बढी पर्छ । यसगरी 'द म्याकलन १९२६', 'डलमोर ६२', 'सिंगल हाइल्याण्ड', 'ग्लेन फिडिक १९३७' बढी रुचाइएका महँगा मदिरामा दरिएका छन् ।

मदिराका विविध वर्गीकरणमा 'एलोकेशन' र 'नर्मल' एउटा वर्गीकरण हो । एलोकेशन श्रेणीमा पर्ने मदिराको उत्पादन सिमित संख्यामा हुने भएकोले अचाक्ली महँगा हुन्छन् । किनकि बजारमा माग बढ्दैमा तिनका उत्पादन बढाइँदैन् । हेनरी फोर्थ डुडगनन हेरिटेज  कोन्याक होस् वा आइल अफ स्काइजस्ता महँगा मदिरा एलोकेशन श्रेणीमा पर्छन् । यस्ता मदिराको प्रत्येक बोतललाई विशिष्ट नम्बर र कोड दिइन्छ । पिउनेले मैले यति नम्बरको मदिरा पिएँ भनेर याद गर्छ, साथीभाइलाई सुनाउँदछ । आइल अफ स्काई चारसय बोतलमा मात्र उत्पादन भएको छ । ग्रिनलाइनले ४० वटा बोतल भित्र्याएकोमा १३ वटा बिक्री भएको छ । यस्ता महंगा मदिरा आफैले पिउँन होइन कि उपहार दिन प्रयोग गर्ने गरेको पाइएको छ । एक समयमा ब्लु लेबल (बोतलको १६ हजार भन्दा बढी) नै उपहारमा प्रयोग हुन्थ्यो । तर ब्लु लेबल क्यासिनोको ग्राहकलाई पनि सर्व हुन थालेपछि स्टाटस मेन्टेन गर्न चाहनेले त्योभन्दा महँगा मदिरा माग गर्न थाले, महँगा मदिराको माग बारे विनोदको अनुभव छ । बोतलको ६३ हजार रुपैया पर्ने २५ वर्ष पुरानो सिभास रिगल एकैजनाले ८० बोतल किनेका छन् ।

मदिराको गुणस्तर त्यसको आयु अनुसार हुन्छ जति पुरानो रक्सी त्यति धेरै दाम ! 'मदिरा भनेकै सद्दे कुरालाई कुहाएर बनाइने हो' विनोद भन्छन् । 'यसैले जति पुरानो त्यति गुणस्तरीय ।' डिस्टीलेशन प्रक्रियाबाट तयार भएको मदिरालाई ओक भन्ने काठले बनेको ड्रममा राख्ने विधिलाई एजिंग भनिन्छ । त्यसरी भण्डार गर्ने ठाउँको तापक्रम स्थिर हुनु पर्छ । जति बढी समय त्यसरी भण्डारण गरियो त्यति नै मदिराको स्वाद र गुणस्तर बढ्छ । र, त्यसैसँग मूल्य पनि बढ्छ । यसैले एउटै ब्राण्डको मदिराको मोल उमेर अनुसार फरक हुन्छ ।

भण्डार गर्दा खर्च लाग्ने खर्च, नासिएर कम हुने भएकोले मात्र महँगो हुने होइन, विनोद भन्छन् गुणस्तरमा पनि फरक पर्छ । भण्डार गरिने क्षेत्र वरपरका हावापानीले यस्तो अवधि तलमाथि हुने गर्छ । भण्डार गरिएको मदिराले विषेश स्वाद र गुणस्तर प्राप्त गर्न स्थिर तापक्रम आवश्यक पर्ने भएकोले स्कटल्याण्ड, आयरल्याण्डजस्ता अति चिसो हावापानी भएका मुलुकहरूमा निकै लामो समयसम्म एजिग गरिन्छ । र, यस्ता मदिरा बढी

गुणस्तरीय पनि मानिन्छन् । ब्राण्डी, वाइन र व्हिस्कीलाई कम्तीमा ३ वर्ष र रम तथा टकिलाको औसत भण्डारण अवधि २ देखि ८ वर्षको हुन्छ । यस बाहेक ब्लेण्डिग (मिश्रण) ले पनि ह्विस्कीको गुणस्तर निर्धारण गर्छ । भिन्न स्वाद र फ्लेवरका ह्विस्कीप्रति मदिरा पारखीहरूको विशेष चासो रहने गरेको छ । वैवाहिक समारोह वा कुनै जमघटमा पियाउने पश्चिमा चलनको सिको नेपाली समाजमा भैसकेको छ । त्यसो त जन्मदेखि मृत्युसम्मको संस्कारमा मदिरा अनिवार्य हुने जातजाति र संस्कृति नेपालको विशेषता नै हो ।

समय क्रममा ब्राण्ड पनि फेरिदै गएका छन् । ब्लु लेबल र रोयल स्यालुटको स्थान ती  भन्दा महँगा मदिराले लिन थालेका छन् । राजधानीको क्यासिनोमा बढी चल्तीमा रहेको कारण ब्लु लेबलले त नेपालमा क्यासिनो ड्रिक्सकै उपमा पाइसकेको छ । तथापि नियमित सेवनका हिसाबले आज पनि ब्लुलेबल उच्च वर्गमै सीमित रहेको मदिरा व्यवसायी बताउँछन् ।

करिब एक दशक अगाडि जोनीवाकर कम्पनीले गरेको विश्वव्यापी सर्वेक्षणले प्रत्येक सेकेण्डमा तीनवटा रेड लेबल बोतल बिक्री हुने गरेको तथ्य बाहिर ल्याएको थियो । त्यसताका जोनी वाकर भन्ने वित्तिक्कै रेड लेबल भन्ने थियो । तर अहिले पश्चिमा मुलुकहरूमा मात्र नभई नेपालमा पनि अन्य ब्राण्ड र थरीका मदिरा उपलब्ध हुन थालेका छन् । साथै यस्ता पारखीहरू पनि बढ्ने क्रममा छन् । राजधानीको चोक चोकमा ठड्याएका  मदिराको होर्डिक बोर्डले पनि नेपालको मदिरा बजारको विकास क्रमलाई केही हदसम्म प्रतिबिम्बित गर्छन् । केही वर्ष अघिसम्म विदेशी ब्राण्डमा रेड लेबलको होर्डिग बोर्डमात्र भेटिन्थे भने अहिले त्यसका ठाउँमा ब्ल्याक लेबल र सिभास रि गलले लिएका छन् । यसमा पनि नेपालीको विदेशी मदिराको बजार र मदिरा पारखीहरुकोरुचिमा आएको बदलाव झल्काउँछ । तर, करिब डेढ दशकभन्दा बढी अस्ट्रेलियालगायतका मुलुकको मदिरा उद्योग र कारोवारको अनुभव सँगालेका सुवालको अनुभवमा विदेशी मदिरा पारखीहरू ब्राण्ड र डिजाइन भन्दा पनि स्वादलाई महत्व दिन्छन् जबकि नेपालमा भने त्यसको ठिक उल्टो आकर्षक बोतल र प्याकेजिग प्रति बढी चासो राख्ने गरिएको छ ।

धेरैजसो पारखी एउटा स्वाद बसेपछि त्यसलाई आफ्नो ब्राण्ड बनाएर मस्त हुन्छन् । र, थरीथरीका मदिराका स्वादबाट बञ्चित हुन्छन् । मदिरा मध्ये व्हिस्की, नेपाल र नेपालीको प्रिय ड्रिंक्समा दरिएको छ । जोनी वाकर कम्पनीको रेड, ब्ल्याक लेबल जस्ता पेयमा रमाउने कतिपय पारखीहरू सिंगल माल्ट तर्फ पनि आर्कर्षित हुँदै गएको सुवालको अनुभव छ । काठमाडौमा विशेषगरी ड्राइ वाइनको माग बढिरहेको तर राजधानी बाहिर स्विट वाइन बढी रुचाइने गरेको छ । तर, अधिकाश नेपाली स्वाद र ब्राण्ड पहिचान गरेभन्दा पनि अरूको लहलहैमा र देखासिकी गरेर वाइन पिउने गरेको व्यवसायिहरू बताउँदछन् । त्यसैले होला, हजारथरीका मदिराको भण्डार रहेको ग्रिनलाइनमै पनि रेड ले बल, ब्लाकलेबल, भ्याट ६९ र सिभास रिगलको माग चर्को छ । तैपनि मदिरा पारखीमाझ मदिरा प्रति चासो बढ्दो छ । सिंगलमाल्टले जोनी वाकरसँग दूरी

घटाउँदैछ । हुने खानेमा अहिले सिंगल माल्ट स्टेटस मेन्टेन गर्ने माध्यम बन्दै गएको छ । शहरमा अहिले सिंगल माल्टमा ग्लिनिफिडिग सबैभन्दा चलेको छ । ब्ल्याक लेबल, सिभास रिगलजस्ता चल्तीका पेयलाई  गतिलो टक्कर दिन थालेको छन् सिंगल माल्ट ह्विस्कीले । माल्ट ह्विस्कीमा पनि सिंगल, डबल, ट्रिपल, प्योर र हाई गरी पाँचथरीका पाइन्छन् । ब्रान्डीहरूमध्ये को न्याक सिरिजका ब्राण्डी विशिष्ट मानिन्छन् ।

फ्रिक आउटकोलागि काठमाडौं ठमेल र पोखराको लेकसाइड रेष्टुरेन्ट पुग्ने अधिकांश युवाको पहिलो रोजाइ हुने गरेको छ 'टकिला सट' । कागतीको टुक्रा र हर्थुंगोमा राखेको नुन चाट्दै धुटुक्क पारिने मेक्सिन टकिलाको सटमा नझुम्ने युवा जमात विरलै भेटिन्छन् । तर, त्यसको स्वादलाई समेत मात गर्छ पेट्रोनले । त्यसैगरी भरमउथ, सेरीजस्ता लिकरहरूको स्वाद बेग्लै हुन्छ ।

ककटेलका विशेष स्वाद प्रदान गर्ने मोलिनाजस्ता सिरप खोज्नेहरूको संख्या पनि क्रमशः बढ्दो छ ।

अल्कोहोलिक ककटेलमा र कफीजस्ता मिसाएर पिउन पनि नेपालीले सिक्न थालेका छन् । मोनिनाको मात्र सयभन्दा बढी प्रकार छन् । कुनै पनि पेयलाई विछट्टै स्वादिलो बनाउन सक्ने यसको क्षमताकै कारण मोनिनाजस्ता लिकरका पारखीहरू नेपालमा बढ्दै गएको सुवालको दावी छ । अमितका अनुसार मोनिना कम्पनीका मालिक मोनिन असोजमा नेपाल आउने तरखरमा छन् । नाम्चे गएर आफ्नो उत्पादनको प्रवर्द्धन गर्ने उनको योजना छ । चिलीको चर्चित ब्राण्ड भोन्टिसक्युरो वाइनका मालिक भेन्टिसक्युरो आफैले बोटल सहित सगरमाथाको शिखर चुम्ने योजना बनाएका अग्रवाल बताउँछन् 'बोतल चुचुरोमा गाड्ने लक्ष्य उनले बनाएका छन्' अमित सुनाउँछन् ।

नेपालमा थुप्रै मदिराप्रेमीमा स्कच भनेकै रेड लेबल भन्ने बुझाइ रहेको पाइन्छ । जब कि इयान म्याकलियोडको उत्पादन किंग्स रोबर्टका ब्लेन्डेड स्कच मदिरा पारखीहरूका अनुसार रेड लेबल भन्दा कुनै मानेमा कम छैनन् । त्यतिमात्र होइन, त्यही ब्राण्डका जिन, भोड्कासमेत बजारमा छन् । मदिरा व्यवसायीहरुका अनुसार अधिकांश नेपालीहरूले त वाइन र स्याम्पेनका फरक पत्ता लगाउँदैनन् । प्राकृतिक फर्मेन्टेसन्बाट निस्केको कार्बनडाइअक्साड मिसाइएका कारण बोतलभित्रै फिज हुने भएकोले स्पार्कलाइन वाइनलाई धेरैले स्याम्पेन ठान्ने गरेको विनोद सुनाउँदछन् ।

(साभार– शनिबार, ८ असार २०७०को कान्तिपुर दैनिकबाट)

ω3ω

# बरियारपुर : पश्चिमा बकवास

सौरभ

डिस्कभरी र एनिमल प्लानेट

यी दुवै नाम टेलिभिजन च्यानलहरूको हो । यिनमा आउने सामाग्रीको ठूलो मात्रा हुन्छ– सिंह र बाघले मृग र जेब्रालाई कसरी लुच्छन् ? गोहीले कसरी जिराफको बच्चालाई खान्छ ? ठूल्ठूला सर्पले खरायोलाई कसरी बेर्छन् वा डस्छन् ? एउटा चितुवा र सिंह बीच भिडन्त भयो भने कुन हदसम्म बल एक अर्कामाथि प्रयोग गर्न सक्छन् ? शार्क र पिरन्हाले कसरी शिकारको मासु चोक्टा-चोक्टा पार्छन् ? अर्थात् पशिचमा हिंस्रक सोच, हिंसा मनोविज्ञान, हिंस्रक मनोवृत्तिका ऐना हुन् यी च्यानलहरू ।

हामीले यिनै च्यानलका कार्यक्रम निर्देशन गरेको भए धेरै सम्भव छ– चराहरू कसरी कावा खान्छन् ? चैत वैसाखका बेला माछाहरू कसरी खोलाको उल्टोतिर पौडन्छन् ? मलेवाहरूले सधैं चारा कसरी भेट्छन् ? माथि बृत्तचित्र बनाउँथ्यौं होला । माथिको हरफले बुझ्नुपर्छ विश्वमा भएका यावत् गृहयुद्ध र युद्धहरू पशिचमका निम्ति यस्ता खेल मैदानहरू हुन्, जसलाई बार्बरिकले जस्तो आकाशबाट हेर्दा उनीहरूलाई आनन्द आउँछ ।

बीबीसी र सिएनएन

यी नामका पनि दुई टेलिभिजन च्यानलहरू छन् । यिनमा आउने सामग्रीको ठूलो मात्रा हुन्छ- चीनले किन र कसरी दैवी प्रकोपबाट परेको असरलाई व्यवस्थापन गर्न सकिरहेको छैन ? मलेशिया र श्रीलंकामा किन मजदुर हडतालमा उत्रिएका छन् । रुसको मस्को र त्यस वरपर बस्ने मानिसहरू कसरी बेरोजगारीका दिनहरू विताइरहेका छन् ? वर्मामा कारखानाहरूको ओभरहलिंग किन हुन सकिरहेको छैन ? सिरिया र इरानमा सडकहरूमा किन प्वाल परेका छन् ? अर्थात् आफूसँग सोझै मेल नखाने देशहरूमा भएका आपत विपत् देख्दा औधी खुशी लाग्ने, मन प्रफुल्ल हुने, दंग परेर उत्सव गर्न मन लाग्ने प्रवृत्ति पशिचममा देखिन्छ ।

बीबीसी

यसको नेपाली सेवाले भुटानबाट नेपालीहरू निकालिदै गरेका र तीमाथि भएका हिटलरी अत्याचारबारे कहिल्यै कुनै सामग्री प्रसारित गरेन, न मेघालय र आसामबाट खेदिएका नेपालीहरू बारे नै समाचार दियो । तर जब उसको सर्टवेभ बन्द हुन लाग्यो, ब्लगसाइटहरू मार्फत केही अजासुहरूले उसको प्रसारण जोगाउन समिति बनाए, आन्दोलन नै चलाए । जबकि भारतीय दूरदर्शनले सूर्यबहादुर थापाको ठाउँमा सूर्यप्रसाद थापा भनोस्, कुर्लिन्छन् नेपालीहरू ।

यसरी पशिचमप्रतिको आँखा चिम्लाइ अज्ञानतामा मात्र भएको होइन । एक विशुद्ध दासताले पनि भएको हो । त्यसैले नष्टाल्जिया शब्द विशेषतः भारतबाट सिकेर प्रयोग गर्दा त्यो बृटिस औपनिवेशिक कालको आनन्दलाई व्यक्त

गर्ने मात्र शब्द हो, जुन हामीसँग सरोकार राख्दैन भन्ने बुझ्दैनन् नेपालीहरू । त्यो 'राज'ले ब्रिटिशराजसंग धेरै सम्बन्ध राख्छ भन्ने बुझ्दैनन् । किन राणा नष्टाल्जिया चाहिँ नहुने त्यसो भए ? भन्नेतिर जाँदैनन नेपालीहरू ।

विश्व खाद्य संगठनले 'अराइजा' नभएर 'जिजानोइडस' चामल पो कालिकोटमा वितरण गरिरहेछ कि ? जीएम चामल पो बाँडिरहेछ छ कि ? वास्ता छैन । किनभने चामल भए पुग्यो । फाइलेरिया र जापानिज इन्सेफलाइटिसका औषधिहरूको जब देशव्यापी परीक्षण हुन्छ जानाजान गिनिपिग भइदिन्छन् नेपालीहरू । शिक्षाका, विज्ञानका, अर्थशास्त्रका, भूगोलका, व्यापारका, सुरक्षाका, कानूनका, इतिहासका, साहित्यका अर्थात् कुनै पनि विषय वा क्षेत्रका तथ्य-तथ्यांकहरू बरु नेपालीलाई उपलब्ध नहोलान् उनीहरूको निम्ति सजिलै सहजै उपलब्ध छन् । किनभने यी गोरा बाबुसाहेबहरूले कुनै दिन आफ्नो देशमा भतुवा लाग्न बोलाइदेलान्, यात्रा र खाना खर्च व्यहोरिदेलान् तालिमका नाममा भन्ने हरेक नेपाली कर्मचारी र बुद्धिजीवी अति ठूलो आशा राख्छन् । भारतको तीब्र बिरोध छ तर पश्चिमका हात हातमा तात्तात्तै विक्न तयार छन् उनीहरू ।

एचबीओ र सिनेम्याक्स

यी दुई नामहरू पनि टेलिभिजन च्यानलकै हुन् । यी दुई खुब सिनेमा प्रसार गर्छन्, मार्शल आर्टस्का, चाहे त्यो चिनियाँ साओलिन होस् वा जापानी जुडो वा कराते सिनेमा । नेपाली लाहुरे- मंगोल अनुहारमा एक उग्र स्वामीभक्ति हुन्छ भन्ने कुराको व्यापक प्रचार छ । यसैले गर्दा समावेशीका नाममा मंगोलहरूको उद्धारकर्ता उनीहरू आफैं नै हुन् भन्ने ठान्दछन् फिरंगीहरू । त्यसो त उनीहरूकै देशमा मंगोलहरू अर्थात् रेड इन्डियनहरूले दासताकै स्थानमा रहिदिएर उनीहरूलाई मानेकै छन् । तर त्यो रगतमा नश्लवाद छैन, ठान्छन् नेपालीहरू, बडो विचित्र छ ।

कम्पासन इन फार्म एनिमल

जेएनयुमा अध्ययनरत दुई इसाई विद्यार्थीहरूलाई २०३१ सालमा विवाह गराइदिएर नेपाली राजनीतिमा पूर्ण स्थापित गराउने गेरुधारी अग्निवेश, जसको फेटालाई थुतेर अन्ना हजारे अभियानकर्ताहरूले इसाई शब्दावलीमै भन्ने हो भने 'डी फ्रकिङ' गरे, तिनै बरियापुरमा गढीमाईको बलि निषेध अभियानको नेता पल्टिन नेपाल आए/ल्याइए ।

पादरी जोन बेकर, अलेक्जान्ड्रा बास्टेडो, योहाना लुम्लेदेखि पिटर सुलेभान, जोनाथन परेट, अलिया अल हुसैन लगायत् दर्जनौंको संरक्षकत्व रहेका कम्पासन इन फार्म एनिमलले राष्ट्रपति यादव र प्रधानमन्त्री कोइरालालाई बरियापुर मेलाको विरोधमा पत्र लेख्नु र पर्यटकहरूलाई नेपाल नजान पश्चिममा भयानक प्रचारवाजी गर्नुले अग्निवेशको नेपाल आगमन नै कसको आध्यात्मिक स्वार्थपूर्ति गर्न भएको हो ? भन्ने स्पष्ट छ ।

उसको यथार्थ

२५ वर्षअघि हेलिकप्टर चढेर झण्डै दश हजार हात्तीलाई गोली हानियो

अफ्रिकाको दक्षिणी भूभागमा र त्यसको मासुलाई टिनबन्दी गरेर हात्तीको मासु खाने 'रेसीपीड टाँसेर बजारमा बेचियो । त्यो विनाशमा यी २६ बादर मर्दा शोकसभा गर्ने 'नेफेज'का उग्र क्रान्तिकारी मानसिकताका अग्रज पश्चिमाहरू कहाँ थिए ?

गुआम टापुमा अमेरिकी सैन्य आखडा स्थापना गर्नुपूर्व हेलिकप्टरबाट जंगली अवस्थाका लाखौं बोका मारेर समुद्रमा हालियो । त्यतिबेला यी कहाँ थिए ।

अष्ट्रेलियाभर बर्षेनि लाखौं खरायो र हजारौं कंगारूहरू मारिन्छन् । अभियानकै रूपमा यो चलेको छ । यतिबेला त्यस मामिलामा यी किन मौन छन् ?

चीनले साँस्कृतिक क्रान्तिकालमा करोडौं चराहरू अभियान चलाएर मार्‍यो । ती किन त्यतिबेला मौन भए ?

जियाउल हकले धार्मिक कारणले सही पाकिस्तानमा जंगली बँदेल उन्मूलन गर्ने अभियान नै चलाए । त्यतिबेला तिनको आवाज के भएको थियो ?

तिनका आफ्नै देशहरूले वर्षको दसौंहजार व्हेल मारिरहेछन् समुद्रमा । ती किन मौन छन् ?

यी आधा दर्जन उदाहरण नै यतिबेललाई प्रशस्त छ । पंक्तिकारले सम्झनामा आएका केही बुँदाहरू लेखेको मात्रै हो । रुचि राख्नेहरूले इन्टरनेटमा क्युलिंग अन्तर्गत अरू थप जानकारी हेर्न सक्छन् । यसरी 'पृथ्वीको अति जान्ने बुझ्ने मै हुँ' मार्का फिरंगी उपदेशक र तिनका मतियार यो देशलाई कुनै हालतमा आवश्यक छैन । अब बाँदर अधिकारकर्मी र गधा अधिकारकर्मीका अनुहार हेर्दा लाग्छ, बाँकी कुनै कुरामा क्षमता नभएर यी चर्चामा आउन पाइने र डलर पनि पाइने अभियान यो वर्गलाई बढी पायक भएको छ ।

राजकुमारी हुसैन

राजकुमारी भइखाएकी आलिया हुसैनले मक्का मदिनामा जाने हजयात्रीलाई खुवाउन भनी प्रतिदिन काटिने लाखौं भेडा मध्येको झण्डै एक तिहाइ खेर जाने गरेको कुरामाथि मौनता साधेकै अचम्म लाग्दो छ, यो यादव र कोइरालालाई प्रेसित पत्रमा । हलाल गर्दा दिइने यातना बारेमा मौनता साधेकै उदेकलाग्दो छ, सुलेभान र आलिया हुसैनले । खैरासँग कुम जोड्न पाएपछि पुग्यो ?

पशु संहारका कुरा गर्ने तीन ओबीई (अर्डर अफ द ब्रिटिस एम्पाएर तक्माप्राप्त) कुपर, किथ र लुमले, दुई सीबीई (क्रस अफ द ब्रिटिस एम्पायर तक्माप्राप्त) सुलेभान र परियटले आफ्ना एम्पायरभित्रको अष्ट्रेलिया उत्तरको तास्मानियामा लाखौं 'एबोरिजिन' र अमेरिका महादेशमा लाखौं आदिवासी 'रेड इन्डियन'हरूलाई विना अपराध गोली हानेर जनसंहार (जेनोसाइड) गरेको कुराको अब जवाफ दिने बेला भएन ?

सत्रहजार मानिस मार्ने कारकतत्वले नै नेपालको संविधान बनाउन पाउनुपर्छ र नेपालमा हालीमुहाली गर्न पाउनुपर्छ भनेर पैसा ओइर्‍याइरहेको पश्चिम आफ्नो पुर्खा हिटलरको परम्परा थामिरहेको छैन ?

बेतुक पर्यटन सचिव

बरियापुरमा बलि दिएका जनावरका मासु खेर जान नदिई घर लगेर खान पाउन खुकुलो नियम बनाउने हो कि ? त्यसलाई परिशोधन गरेर मेला समितिले बजारमा लाने व्यवस्था गर्ने र आम्दानीले स्थानीय विकास गर्ने हो कि ? मेला अवधिभर अस्थायी 'स्लटर हाउस' बनाउने हो कि ? वैकल्पित उपाय हुन सक्छन् । किनभने हात्ती र गैंडाजस्तो संरक्षित जनावर हैनन् र राँगोहरू । तर त्यसले देशैका शिर निहुर्‍याएको ठान्ने सार्वजनिक अभिव्यक्ति दिने पर्यटन सचिव त्यस पदका निम्ति सर्वथा अयोग्य छन् । आफूले करोडौं कुकुर माथि खरबौं डलर बर्षेनी खर्च गर्ने तर अफ्रिकामा भोकमरी भएको गीत गाइरहने पश्चिम जस्तो असभ्य गोलार्ध अर्को छैन भनेर बुझ्न नसक्ने शिरको यो देशलाई के काम ?

(कान्तिपुर– १८ मंसिर, २०७१ बाट साभार)

ঙ্ঙ

## १४३/यौटा विहे भोज, टाँडी (०६६.६ १९)

खगेन्द्र संग्रौला : (जिब्रो लरबराउन थालेपछि) हामी सबै जँडचाहा हौं ।

धनराज गिरी : होइन दाजु ! अब देशमा गणतन्त्र आइसक्यो– अब कस्तै जँडचाहालाई पनि जँडचाहा भनेर होच्याउँन पाइँदैन ।

खगेन्द्र संग्रौला : जँडचाहालाई के भन्नु त ?

धनराज गिरी : अति सोमरसानुरागी ।

खगेन्द्र संग्रौला : अनि घुस्याहालाई ?

धनराज गिरी : घुस्याहालाई अति अर्थानुरागी ।

खगेन्द्र : अनि स्त्री लम्पटलाई नि ?

धनराजगिरी : स्त्री लम्पटलाई अति रतिरागानुरागी भन्नु पर्छ ।

ঙ্ঙ

## ४८/'हिमालय', बत्तीसपुतलीइ४३.८.१९६

जगदीश घिमिरे : भन्नुस् ध्रुवजी चिया खाने कि कफी ?

ध्रुव सापकोटा : हाँस्तै हो हो हो हो भैगो जगदीशजी केही पनि नखाऊँ होला ।

जगदीश घिमिरे : बुझें बुझें (यी ग्राण्ड अलको बोतल बढाउँदै) तर हेर्नुस् मसँग लोकल मात्रै छ ।

ध्रुव सापकोटा : ठीकै छ, नगेन्द्रजीकहाँ जहिले जाँदा पनि टन्न स्कच खाइन्छ, तपाईं कहाँ कहिलेकाहीं आउँदा पनि लोकल पाइन्छ... ।

ঙ্ঙ

# पुरानो पातो

प्रस्तोता : शिव रेग्मी
साहित्यमार्ग, पुरानो बानेश्वर

पुराना पत्रपत्रिका फेरि पल्टाएर अध्ययन गर्दा पहिले चिनेको मान्छे भेटहुँदाको जस्तो मज्जाको आनन्द हुँदो रहेछ, रमाइलो हुँदोरहेछ । जसरी पहिले भेटेको मान्छेसँग त्यतिखेर भएको कुराकानी वा घटना सर्लक्क फर्केर आउँदारहेछन् । यस पटक मलाई भएको तथ्य यस्तै छ ।

२०२८सालमा नगेन्द्रराज शर्माद्वारा लिखित 'महापुरुष' उपन्यास निकै चर्चित भएको थियो । 'यतिका फुलबारी' पूर्णाङ्क ८ मा प्रकाशित पुस्तक परिचय पढेपछि मैले पहिलो पल्ट उक्त पुस्तक किनेर पढेको थिएँ । उपन्यास साह्रै मीठो लागेको थियो । 'यतिको फुलवारी'मा प्रकाशित त्यो पुस्तक परिचय यहाँ म साभार उद्घृत गर्दैछु ।

पुस्तक परिचय त्यतिखेर अचेलको जस्तो पुस्तकको भूमिकामात्र पढेर (लामो भूमिका भए बीच बीचमा मात्र पढेर) छपाई सुन्दर छ, गेटअफ राम्रो छ, मूल्य चर्को छ जस्ता हल्का फुल्का टिप्पणीमात्र गरिदैन थियो । पुस्तक अद्योपान्त पढेर, त्यसको साङ्गो पाङ्गो विवेचना र विश्लेषण गरेर कमजोरी पक्ष पनि केलाइन्थ्यो । पुस्तक परिचय भए पनि वास्तवमा हिजोआज लेखिने विवेचनाको रूपमा हुन्थ्यो । हेरौं यसको नमूना-

महापुरुष
लेखक : नगेन्द्रराज शर्मा
प्रकाशन : रत्न पुस्तक भण्डार
मूल्य : २।५०
प्रकाशन समय : २०२८

अचेल देखा परेका अनेकौं पुस्तकहरु मध्ये महापुरुष एक विचित्रको पुस्तक हो । प्रथमतः यसको शीर्षकले नै पाठकलाई अन्यौल पार्छ किनभने यसका पन्नाहरूमा कहीँ कतै कोही महापुरुष भेट्टाइँदैन । यसमा केबल एउटा कथा छ– धनी बाबुको गरिब छोराको– एउटा इतिहास छ विग्रँदो सामन्ती परिवारको– एउटा इतिहास छ नेपालको– एउटा चित्रण छ डिल्लीबजारको– एउटा साँच्चिकै मार्मिक र सजीव चित्रण ।

र, सबैभन्दा गजबको कुरा के छ भने, 'कुण्ठा', 'विद्रोह', 'बाध्यता', ' विवशता' जस्ता शब्दहरूको पुस्तकभरि कतै प्रयोग नगरिकन पुस्तकभरि यिनै कुरा अर्थात् 'कुण्ठा', 'विद्रोह', 'बाध्यता', 'विवशता'को प्रदर्शन अत्यन्तै सफलतापूर्वक प्रस्तुत गरिएको छ ।

डेरा गरेर बस्ने पात्र 'म' ले आफ्नो 'घरपट्टी'को बयान गरेको छ । एउटा परिवारको, विवश परिवारको मार्मिक कथा । कथा पढ्दा कतै कथा पढेजस्तो लाग्दैन बरु कुनै सत्य घटना आँखैले देखेजस्तो अनुभव हुन्छ ।

लेखकले नायकको चरित्र प्रस्ट पार्न निक्कै जोड लगाएजस्तो बुझिन्छ तर पढुञ्जेल पाठकको मस्तिष्कमा नायिका कौशिल्या नै घुमिरहन्छिन् । नायक सँधै रक्सीमा डुबेको हुन्छ, उसको बिद्रोह र कुण्ठा पनि बडो विचित्रसँग प्रस्फुटित हुन्छ– कहिले ढुङ्गाले ढङ्गो धुलो पारेर त कहिले मुलसडकमा पिसाप फेरेर, कहिले अपरिचितको गुडिरहेको कारमा ढुङ्गा हानेर त कहिले हिलोमा उत्तानो परेर डंग्रग सुतिदिएर र अन्त्यमा मरिदिएर··· ।

'मरेर' मात्र हैन 'मरिदिएर' । मानौं ऊ तपाई हाम्रो निमित्त मरिदिएको छ । यस उपन्यासका विचित्रको कुराहरू यसप्रकार छन् । १. पूरा उपन्यासमा लोग्ने स्वास्नीको कुनै बोलचाल छैन (फ्लायसबैकमा बाहेक) । २. नायक श्याम विक्रम सँधै रक्सीमा चुर हुन्छन् तर नायिका कौशिल्या कहिल्यै यसको विरोध गर्दिनन् तैपनि उपन्यासको कथानक एकदम स्वाभाविकता लिएरै अघि बढिरहन्छ । ३. पुस्तक 'कालो कुकुरलाई' समर्पण (?) गरिएको छ । र ४. पुस्तक लेखकको तर्फबाट नै 'अनावश्यक उपन्यास' घोषित गरिएको छ । भाषा शैली आकर्षक छ । औपन्यासिकता छ । तर शुरुमा भने अलिक पट्यार (बोर)लाग्दो छ । अन्त्यतिर पुग्दा भने अत्यन्तै रोचक छ ।

अन्त्यमा पुस्तक पढिसक्दा यस्तो अनुभव हुन्छ कि हाम्रो मातृभाषाका उपन्यासहरूमा हिजोसम्म जो जो श्रेष्ठ उपान्यास मानिएका थिए तिनीहरूलाई पनि यसले पछारे जस्तो लाग्छ । पुस्तक पठनीय एवं मननयोग्छ छ । यस्तो सफल उपन्यासको निमित्ति लेखकलाई बधाई ।

ೞೞ

## १५७/मन्थली, धुनी-टेली गफ (०६८.९.१६)

धनराज गिरी : लक्ष्मणजी, ध्रुव दाजुको न्वारनको नाम त चेतचन्द्र रहेछ नि होइन ?

लक्ष्मण गौतम : हो, चेतचन्द्र नै हो । किन र ?

धनराज गिरी : चेतचन्द्र अर्थात् अंग्रेजीमा सी.सी. ।

लक्ष्मण गौतम : मतलब ?

धनराज गिरी : लः प्रा.डा. भएर पनि कस्तो नबुझेको ? सी.सी.अर्थात् चेतचन्द्र । न्वारनमै सि.सी.नाम पाएपछि उहाँले जीवनभर सिसी छाड्ने कुरै आएन– यो कुरा यायावरमा हालौं ?

लक्ष्मण गौतम : हुन्छ हुन्छ, हालौं, रमाइलो हुन्छ ।

धनराज गिरी : यायावरमा यो पढेपछि ध्रुवदाइले पनि 'एकपल्ट बसौं न भनिहाल्नु होला कि ?'

लक्ष्मण गौतमः बसौं त पक्कै भन्नुहोला तर आफ्नो घरमा होइन 'गोपीकै घर मा बसौं' भन्नुहोला ।

ೞೞ

# अन्तर्वार्ता

## प्रस्तोता : नगेन्द्रराज शर्मा

'मान्छे'लाई स्वतन्त्र, स्वाधीन र सार्वभौम बनाउनु मेरो लेखनको अभीष्ट हो । धर्तीमा 'मान्छे' र 'मान्छेको अस्तित्व' अनन्तकालसम्म रहोस्, मान्छेको सभ्यता युगयुगान्तर रहोस् भन्ने उद्देश्यले मान्छेकालागि 'मान्छे'का पक्षमा शब्दको सम्बोधन हो मेरो लेखन ।

–डा.दुबसु क्षेत्री

(डा.दुबसु क्षेत्रीसँग पटक पटक गरिएको वार्ता, बहस र विश्लेषणको टिपोटको आधारमा सम्पादित सार-संक्षेप हो यो प्रस्तुति । वाङ्मयका क्षेत्रमा आज डा.दुबसुलाई कसैले चिनाइरहनु पर्ने आवश्यका छैन– उनका कविताले नै उनलाई चिनाइसकेका छन् । त्यस बाहेक, आफ्ना अनेकानेक रचनाहरूबाट उनले पर्याप्त प्रसिद्धि पनि प्राप्त गरिसकेका छन् । यस अन्तर्वार्तामा व्यक्त गरि एका उनका प्रष्ट विचार, अवधारण र मान्यताहरूबाट उनको बहुआयामिक व्यक्तित्वको पनि परिचय प्राप्त हुनेछ । उनको निर्भीक/निसंकोच स्पष्टोक्तिले पाठकको मनलाई छुने छ प्रभावित पार्ने छ र मस्तिष्कलाई केही सोच्न उत्प्रेरित गर्ने छ भन्ने हामीलाई लागेको छ- नगेन्द्र)

प्रश्न १.आफ्नो साहित्यिक नाम 'दुबसु क्षेत्री' किन जुराउनु भयो ?

–हुन त मेरो वास्तविक नाम दुर्गा बहादुर सुवेदी क्षेत्रीकै संक्षिप्ति रूप हो दुबसु क्षेत्री । दुर्गाको 'दु',बहादुरको 'ब' र सुवेदीको 'सु' मिलाएर दुबसु बनेको हो । त्यसमा 'क्षेत्री' थपेपछि 'दुबसु क्षेत्री' भयो । खासमा २०३५-३६ सालतिर झापामा हाम्रो गाउँघरतिर थाल बटुका, गिलास, आम्खोराहरूमा नाम खोप्ने मान्छेहरू आउँथे । तिनीहरूले एक अक्षरको चार आना ज्याला लिन्थे । लामो नाम राख्दा पैसा बढी लाग्थ्यो । अनि मैले चलाखी गरेर पूरा नामको छोटकरी रूप बनाएँ । मेरा घरमा भएका थाल, बटुका, गिलासहरूमा दुबसु क्षेत्री भनेर खोपियो । यसरी मेरो अहिलेको साहित्यिक नाम दुबसु क्षेत्री पहिले पत्रपत्रिका वा पुस्तकमा नभएर थाल, बटुका र गिलासमा खोपियो । पछिमात्र २०३६ साल साउनमा आएर 'संक्रान्ति' पत्रिकामा दुबसु क्षेत्री नाम छापियो । पहिले दु.ब.सु. क्षेत्री लेख्थें । पछि थोप्ला हटाएर दुबसु क्षेत्री लेख्न थालें । यो ३७ बर्ष अघिको कुरा हो । अहिले आएर दुबसु क्षेत्री नेपाली साहित्यको वर्तमानमा एउटा चर्चित लोकप्रिय नाम भएको छ । दुबसु क्षेत्री एउटा ब्राण्ड जस्तो भएको छ । कतिपय साथीहरूले दुबसु क्षेत्री नाम नै एउटा संस्था भइसक्यो भनेर भनेको सुन्दा आफैंलाई हर्ष र गर्वको अनुभूति हुन्छ ।

२. तपाईलाई आफ्नो कुन कृति सबैभन्दा उत्कृष्ट लाग्छ ?

–लेखकलाई मन परेको कृति, समालोचकलाई मन परेको कृति र

पाठकलाई मन परेको कृति फरक फरक हुनसक्छ । मेरो सन्दर्भमा भने, मलाई मन परेको, समालोचकहरूलाई मन परेको र पाठकहरूलाई मन परे को मेरो कृति एउटै भयो–'अश्वेममध यज्ञका घोडाहरू' ।

वि.सं. २०६७ सालमा साझा प्रकाशनद्वारा प्रकाशित र सोही सालको साझा पुरस्कारद्वारा सम्मानित मेरो काव्य 'अश्वमेध यज्ञका घोडाहरू' ले मनग्य चर्चा र प्रशंसा कमाउन सफल भएको देख्दा आफूलाई हर्ष र गर्वको अनुभूति हुन्छ ।

३.कृति प्रसिद्ध भएपछि लेखकको मृत्यु हुन्छ भन्ने रोलाँ बाथेको भनाइप्रति तपाईंको के धारणा छ ?

–मान्छे मर्छ तर लेखक मर्दैन भन्ने मान्यता राख्दछु म । लेखक कहिल्यै मर्दैन, कृति पनि मर्दैन किनकि अक्षर मर्दैन । कृति मर्दैन किनकि आस्था मर्दैन । कृति मर्दैन किनकि आभा मर्दैन । कृति मर्दैन किनकि आदर्श मर्दैन । कृति नमर्ने हुनाले लेखक पनि मर्दैन । म कहिलेकाहीं लेखकले आत्महत्या गरेको अखवारमा पढ्छु । ईस्वी सन् १९७४ मा साहित्यमा नो वेल पुरस्कार पाएका सुप्रसिद्ध जापानी साहित्यकार यासुनारी कावावाताले आत्महत्या गरे भनियो । म लेखकले हत्या गर्छ भन्ने कुरा मान्दिन । म लेखकले आत्महत्या गर्छ भन्ने कुरा पनि मान्दिन । हो, हत्या गर्छ भने मान्छेले गर्छ । आत्महत्या गर्छ भने मान्छेले गर्छ । लेखकले गर्दैन । लेखक न कहिल्यै मर्छ न कसैलाई मार्छ । लेखक त मान्छेलाई बचाउन लेख्छ । लेखक मान्छे त्वलाई बचाउन लेख्छ, मानवतालाई बचाउन लेख्छ । रोलाँ बार्थले भनेको एउटै कुरा चाहिं म स्वीकार्छु– कहिलेकाहीं लेखकभन्दा कृति चर्चित हुन्छ, कहिलेकाहीं कृतिभन्दा लेखक चर्चित हुन्छ । नेपाली साहित्यकै सन्दर्भमा पनि त्यो भएको छ । डायमन शमशेर राणाभन्दा उहाँको 'सेतो बाघ' चर्चित भयो तर 'हाम्रो सपना र हामी' कृतिभन्दा केदारमान व्यथित चर्चित हुनुहुन्थ्यो । कहिलेकाहीं चाहिं लेखक र कृति दुवै चर्चित हुन पुग्छन् । भूपि शेरचन र उहाँका 'घुम्ने मेचमाथि अन्धो मान्छे' दुवै उत्तिकै चर्चित भए । वैरागी काइला र उहाँको 'मातेको मान्छेको भाषण' उत्तिकै चर्चित भए । मोहन कोइराला र उहाँको फर्सीको जरा उत्तिकै चर्चित भए । 'साले दुबसु क्षेत्री' कविताले गर्दा यो दुबसु क्षेत्री पनि उत्तिकै चर्चित भयो ।

४.तपाई आफूलाई कुन विधाको लेखकका रूपमा चिनाउन चाहनुहुन्छ ?

–मान्छेहरू दुबसु क्षेत्रीलाई कविका रूपमा बढी चिनाउँछन् । तर म आफूलाई लेखक भन्छु । अझ लेखकभन्दा पनि दुबसु क्षेत्रीलाई म वौद्धिक भन्छु । चिन्तक भन्छु । विधाको कुरा गर्दा मैले कविता नै बढी लेखें । त्यसो त संख्यात्मक रूपमा मेरा गीत, गजल र मुक्तकहरू पनि पाँच हजार भन्दा बढी भइसके होला । तर मान्छेहरू मलाई कवि दुबसु क्षेत्री भन्दछन् । आदरले, स्नेहले र सम्माानले आफूलाई जुनसुकै विशेषणका उपाधि दिए पनि मलाई स्वीकार्य छ ।

५.लेखनको प्रारम्भताकाका केही कुरा सम्झनुहुन्छ ?

–केटाकेटीमा म लेख्नेभन्दा वाचन राम्रो गर्दथें । म सानै उमेरदेखि सभामा, समूहमा बोल्न डराउँदिनथें । सानै उमेरमा कुरा मिलाएर, भाँती पुऱ्याएर बोल्ने गर्दथें । अहिले सम्झदा पनि अचम्म लाग्छ, नौ बर्षकै उमेरमा विद्यालयमा आयोजित साहित्यक गोष्ठीको म सभापति भएको थिएँ ।

केटाकेटीमा म आफूभन्दा ठूला कविहरूले लेखेको सिर्जना गहिरिएर पढ्थें । त्यसलाई मिलाएर लेख्ने कोशिस गर्दथें । तर अरू आफ्ना साथीहरू जस्तो म पूराका पूरा सार्दिनथें, चोर्दिनथें । त्यसरी मैले केटाकेटीदेखि नै आफूभन्दा ठूला कवि लेखकहरूको रचना पढ्ना थालेको रहेछु । माध्यमिक तहसम्म पुग्दा मलाई महाकवि लक्ष्मीप्रसाद देवकोटा, माधव घिमिरे, भीमनिधि तिवारी, अगमसिंह गिरी, गुरुप्रसाद मैनालीहरूको प्रभाव परेको रहेछ । मेरा बाल्यकालका रचनाहरूमा यी कविहरूको छाप र प्रभाव प्रशस्तै पाइन्छ । मैले थुप्रै कविताहरू मुनामदनको लयमा लेखेको छु । अहिले सम्झंदा अनौठो लाग्छ– मैले किशोरवयमा शार्दूल विक्रीडित, मन्दाक्रान्ता, वसन्ततिलका र शिखरिणी छन्दमा थुप्रै कविताहरू लेखेको छु । यो चाहिं म श्री जनता निम्न माध्यमिक विद्यालयमा पढ्दा र मेरा नेपाली गुरु श्री घनश्याम निरौला 'शास्त्री' को प्रभाव र प्रेरणा हो ।

६. जागिरे जीवन र साहित्यिक जीवनका वीच के फरक पाउनु भएको छ ? दुई भिन्न जीवनलाई कसरी संयोजन गरिरहनु भएको छ ?

–जन्मिदा मान्छे भएर जन्मेका हौं हामी । जन्मिंदै कोही साहित्यकार, कोही कलाकार, कोही जागिरे भएर जन्मिदैंन । जीवन भोग्दै जाँदा, आकांक्षाहरूले जरो हाल्दै जाँदा, समय र परिस्थितिहरूले मलजल हाल्दै गर्दा मान्छेले एउटा-एउटा पहिचान पाउने हो ।

मेरो जीवन अहिले मुख्यतः साहित्यकर्म र सरकारी जागिरेकर्ममा विभक्त भएको छ । हुन त म जागिरे हुनुभन्दा अघि नै लेखक भएको हुँ । कविता सिर्जना आरम्भ मैले सात बर्षकै उमेरमा गरेको हुँ । तर जागिर मैले बीस बर्षको भएपछि खाएको हुँ ।

साहित्यकारका रूपमा, लेखकका रूपमा जीवन स्वतन्त्र, स्वच्छन्द र सार्वभौम लाग्दछ । लेखकलाई कुनै पनि विधान, संविधान, ऐनकानून लाग्दैन । लेखकलाई राष्ट्रियता, भौगोलिक सिमाना, जातीयता, धर्म, सम्प्रदाय, वर्ग केही चीजले छुँदैन र रोक्दैन । तर जागिरेलाई नियम कानून, विधि, विधान, समयपालन, आज्ञापालन, अनुशासन, आचारसंहिता आदि कुराले बाँध्दछ, थुन्दछ । जागिरे स्वतन्त्र हुन सक्दैन, जागिरे स्वच्छन्द हुन सक्दैन । जागिरेका जहाँ पनि सिमानाहरू हुन्छन्, पर्खालहरू हुन्छन्, बन्धनहरू हुन्छन् । यी सिमानाहरू, पर्खालहरू, बन्धनहरू जागिरेको रूपमा मैले पनि तोड्न सक्दिन ।

तथापि एउटा लेखकका रूपमा मैले शब्दका अन्तिमेत्थमहरू प्रयोग गरेको छु । मैले आफ्नो सोच, विचार, आस्था र आदर्शलाई मर्न दिएको छै

न । मैले स्रष्टाका रूपमा आफूभित्रको आभाको दियोलाई निभ्न दिएको छैन र दिने पनि छैन ।

केही समयका, केही शासनका, केही प्रशासनका अप्ठचारा र अवरोधहरूबीच मैले दुर्गा वहादुर सुवेदी क्षेत्रीभित्र दुबसु क्षेत्रीलाई बचाइ राखेको छु, अझ यसो भनूँ– आफूभित्र मैले एउटा लेखकलाई बचाइराखेको छु । लेखकको आत्मसम्मान, स्वाभिमान, स्वतन्त्रता र सार्वभौमिकतालाई बचाइराखेको छु । लेखकको आस्था, आभा र आदर्शलाई बचाइराखेको छ ु।

७. जीवन भोग्नु र लेख्नुमा कस्तो फरक हुन्छ भन्ने ठान्नुहुन्छ ?

–मैले कतै भनिसकेको छु– बाल्यकालमा म जीवनलाई उत्सवजस्तो सम्झन्थें । युवक भएपछि मैले जीवनलाई संघर्षका रूपमा स्वीकारें । अहिले आएर जीवन एउटा सम्झौताजस्तो लाग्न थाल्यो । मैले अघि नै भनें नि, जागिरसँग पनि सम्झौता गर्नुपर्ने । घर, पत्नी र परिवारसँग पनि सम्झौता गर्नुपर्ने । साथीभाइ, इष्टमित्र र शत्रुसँग पनि सम्झौता गर्नुपर्ने । बाँच्नका लागि, बाँच्नुका नाममा सम्झौता गर्नुपर्ने ।

जीवन सायद भोग्नुको नाम नै होला । जीवन भोग्नुको पनि एउटा मजा रहेछ जस्तो लाग्न थाल्यो । जीवन भोग्नुभन्दा जीवन लेख्नु झन् आनन्द जस्तो लाग्छ मलाई । कहिले पत्थरमा ठोकिन्छु, कहिले पर्खालमा ठोकिन्छु । कहिले पत्थर ढोग्छ, कहिले पर्खाल ठोक्छ । जिन्दगी यसरी अनेकौं सात याम र आयामहरूमा भोगिंदाको चित्रण साहित्यमा आउँदा झन् इन्द्रेणीजस्तो लाग्छ । जीवन भोग्दाभन्दा जीवन लेख्दा झन् मजा लाग्छ । जीवन लेख्दाभन्दा जीवन पढ्दा झन् रमाइलो लाग्छ । जीवन लेखेर भोग्नुभन्दा जीवन भोगेर लेख्नु कठिन कार्य हो भन्ने  लाग्छ । लेखकको यही कठिन कार्य नै महान् कार्य हो भन्नेल लाग्छ ।

८.लेख्न बस्दा कुनै साहित्यिक दृष्टिकोण, सिद्धान्त र संरचनाबारे सोच्नुहुन्छ ?

–मैले लेख्ने भनेकै आफ्नो आस्था, आदर्श र आभाको अभिव्यक्ति हो । मैले आफूभित्र जोगाएर राखेको आस्थाको दियो नै समाजलाई प्रकाश प्रदान गर्न सल्काउने हो लेखनीका माध्यमबाट । मैले आफूले आदर गरेर राखेको आदर्शको मियो नै समाजमा मानक बनाएर राख्ने हो लेखनीका माध्यमबाट । मैले आफ्नो विचारबाट समाज, मुलुक र विश्वलाई नयाँ दृष्टि र दीप्ति दिने हो साहित्यका माध्यमबाट । त्यसैले लेख्न बस्दा म आफूलाई झन् जिम्मेवार, इमान्दार र गम्भीर पाउँछु । लेखिरहँदा मेरा पाठकहरू मभन्दा बढी अध्ययनशील, सचेत र गम्भीर छन् भन्ने म ठान्दछु ।

मेरो लेखनको प्रारम्भिक चरणमा मैले आफ्ना भावनाहरूलाई छताछुल्ल बहन दिएँ । जे मभित्र पाक्दै हुन्थ्यो, त्यो म सरासर पस्किदिन्थें । अहिले आएर भने म आफ्ना सिर्जनाहरूमा शब्दको दुबसु चातुर्य, अभिव्यक्तिको दुबसु शैली र वौद्धिकताको तीक्ष्ण प्रस्तुतिमा जोड दिन्छु । त्यसो त मैले ईस्वी सन्

२००० को जनवरी १ देखि साहित्यमा चौथो आयामको नयाँ अवधारणा नै घोषणा गरेको छु । यसले नेपाली मात्र होइन, विश्वसाहित्य लेखनमा नै नयाँ सोच, शैली र संरचनाको परिकल्पना र प्रस्ताव गरेको छ ।

९. तपाई आफैंले १ जनवरी २००० मा नयाँ साहित्यिक सिद्धान्त 'चौ थो आयाम' को घोषणा गर्नु भएको छ । चौथो आयामको मूल्य र मान्यता के हो ?

–मैले एक्काईसौं शताब्दीको पहिलो दिन अर्थात १ जनवरी २००० मा साहित्यमा चौथो आयामको अवधारणा घोषणा गरेको हुँ । वास्तवमा चौथो आयामको सिद्धान्त साहित्यमा मात्र नभएर संस्कृति, अर्थशास्त्र, मानवशास्त्र, समाजशास्त्र, राजनीतिशास्त्र, दर्शनशास्त्र, शिक्षाशास्त्र, भाषाशास्त्र र कूटनीतिशास्त्रमा पनि प्रतिपादित गरेको छ ।

एक्काईसौं सताब्दीको मान्छेलाई धर्म, जाति, भाषा, पूँजी र भूगोलका सिमानाहरू भत्केर सीमाहीन विश्व (बोर्डरलेस वर्ल्ड) र एउटै विश्व, (वान वर्ल्ड) को निर्माण भइरहेको परिप्रेक्ष्यमा मान्छेको विकास र सभ्यतालाई नयाँ रूपमा परिभाषित गर्न चौंथो आयामको मान्यता प्रस्तावित गरे को हुँ । मानवसभ्यता र विकासको यो मोडसम्म आइपुग्दा सभ्यताका पुराना स्थापत्यहरू भत्किंदैछन्, पुराना केन्द्रहरू ढल्दै छन् । एकल केन्द्रहरू मेटिदैंछन् । त्यस ठाउँमा बहुसंस्कृति, बहुसभ्यता, बहुधर्म र बहुधारणा ठडिदै बहुकेन्द्रहरू निर्माण भइरहेको बहुलवादी आजको मान्छे र मानव सभ्यतालाई नयाँ कोण र दृष्टिकोणबाट हेर्ने प्रयत्नमा चौथो आयामको आविर्भाव भएको हो ।

साहित्यमा आउँदा भने मैले भूत्याप्तिवाद, सार्वभौम मानववाद, सम्पूर्ण जीवनवाद र निर्वन्धतावादका चार आयामहरूबाट मान्छेलाई हेर्ने आधार खडा गरें । मैले साहित्य हार्दिकता र वौद्धिकताका वीचबाट लेखिनुपर्छ भनें । साहित्य अध्यात्म र विज्ञानका बीचबाट लेखिनुपर्छ भनें । मैले साहित्य सत्य र सत्ताकावीचबाट लेखिनुपर्छ पनि भनें । साहित्य ईश्वरीयता र निरीश्वयरीयताका बीचबाट लेखिनुपर्छ पनि भनें । नेपाली साहित्यमा यो मान्यता घोषणा गर्दा अलि अनौठो पनि मानियो । नयाँ कुरा पनि मानियो । नयाँ कुरा घोषणा हुँदा अनौठो हुनु अस्वाभाविक पनि होइन । अनि नयाँ कुरालाई स्वागत र आत्मसात् गरिहाल्ने प्रवृत्ति नेपाली समाजमा अहिले पनि छैन । त्यो कुरा नेपाली बौद्धिक जगतमा पनि लागू हुन्छ । हुन त साहित्यमा चौथो आयाम नेपाली साहित्यका लागि मात्र आएको पनि होइन । यो अवधारणा त विश्व  साहित्यकै लागि आएको हो । चौथो आयामको यो अवधारणालाई मैले अंग्रेजी, फ्रेञ्च, जापानी र जर्मनी भाषामा पनि अनुवाद गराउँदैछु । त्यसपछि पश्चात्य साहित्यमा पनि चौथो आयामको मेरो नयाँ अवधारणामाथि वृहत् बहस र चर्चा हुने मैले आशा र अपेक्षा गरेको छु ।

१०. दुबसु क्षेत्रीको रचनाको जति प्रशंसा भएको छ उत्तिकै विरोध पनि

भएको छ, यसबारे तपाईंको भनाइ के छ ?

–मैले अघि कतै भनेको पनि छु– दुबसु क्षेत्रीलाई ईर्ष्या गरी गरी माया गर्नेहरू पनि छन् । माया गरी गरी ईर्ष्या गर्नेहरू पनि छन् । मैले आफैंले विश्लेरषण गर्दा कतिपयले दुबसु क्षेत्रीको रचनालाई भन्दा दुबसु क्षेत्रीलाई बढी विरोध गरेका छन् । कतिपयले दुबसु क्षेत्रीलाई भन्दा दुबसु क्षेत्रीको रचनालाई विरोध गरेका छन् । व्यक्तिको विरोध गर्नेहरू शक्तिको विरोध गर्नेहरू हुन्, सामर्थ्य र समृद्धिको विरोध गर्नेहरू हुन् । उनीहरूलाई दुबसु क्षेत्रीको शक्ति, सामर्थ्य र समृद्धिको ईर्ष्या लागेको पनि हुन सक्छ । मेरा रचनाहरूको विरोध गर्नेहरूलाई म आदर र कदर गर्न चाहन्छु । सतही विरोध गर्नेहरूलाई म वास्ता गरिरहन चाहन्न, भ्याउँदिन पनि । रचनाको गम्भीर अध्ययन र विश्लषण गर्नेहरू, मेरा कमजोरी र दुर्वल पक्षहरू औंल्याउनेहरूलाई म सलाम गर्न चाहन्छु । एउटा लेखकका रूपमा उहाँहरू मेरा सच्चा प्रशंसक हुनुहुन्छ भन्ने ठान्दछु ।

कहिलेकाहीं त दुबसु क्षेत्री भन्ने नाम नै एउटा ब्राण्ड भइसकेजस्तो लाग्छ । एउटा स्थापित र प्रतिष्ठित ब्राण्डको आलोचना नगरी अर्को ब्राण्ड स्थापित हुन सक्दैन भन्ने पनि लाग्छ । एक्काईसौं शताब्दीको नेपालका चेतनशील नेपालीहरूका माझ साधारण मानिसका रूपमा बाँच्न त गाह्रो भइसक्यो, स्वाभिमानी, स्वतन्त्र र सार्वभौम लेखकका रूपमा बाँच्न त झन् गाह्रो छ । यसरी बाँच्ने थोरै दुबसु क्षेत्रीहरू कसैको मायाका, कसैको ईर्ष्याका पात्र बन्दछन् । यो स्वाभाविक कुरा हो ।

११.तपाईको दृष्टिमा दुबसु क्षेत्री के र को हो ?

–दुबसु क्षेत्री सर्वप्रथम एउटा मान्छे हो । त्यसपछि नेपाली हो । मान्छेमा पनि ऊ एउटा लेखक हो । लेखकमा पनि स्वाभिमान सँगालेर, आस्था र आदर्श अँगालेर उभिएको लेखक हो । थुप्रै समकालीनहरूका माझमा व्यक्तिका रूपमा पनि, लेखकका रूपमा पनि दुबसु क्षेत्री अग्लो पनि छ, अलग्ग पनि छ । सग्लो पनि छ, स्वाभिमानी पनि छ ।

त्यसो त ऊ जागिर पनि खान्छ । तर अहिलेसम्म जागिरले उसलाई खाएको छैन । ऊभित्र लेखक पनि बाँचेको हुनाले उसले अहिलेसम्म आफ्नो स्वतन्त्रता, सार्वभौमसत्ता र स्वाभिमानलाई लिलाममा राखेको छैन र राख्ने पनि छैन ।

१२. नेपाली साहित्यको वर्तमानमा आफूलाई कहाँनिर पाउनुहुन्छ ?

–नेपाली साहित्यमा एउटा स्थापित लेखकका रूपमा रहन पाउँदा हर्षको अनुभव गरेको छु । नेपाली समाजमा एउटा प्रतिष्ठित बौद्धिकका रूपमा उभिन पाउँदा गर्वको अनुभूति गरेको छु । एउटा लेखकका रूपमा दुबसु क्षेत्रीको एउटा अलग्गै पहिचान, परिचय र प्रतिष्ठा पाएको छु । लेखकका रूपमा चर्चा, प्रशंसा र लोकप्रियता पनि कमाएको छु । राष्ट्रले एउटा स्थापित साहित्यकार र वौद्धिक व्यक्तित्वको रूपमा सम्मान र कदर

गरेको छ । एउटा व्यक्तिका लागि यो महत्वपूर्ण कुरा हो । अब साहित्यकारका रूपमा मेरो कहाँ स्थान छ, म कुन ठाउँमा उभिएको छु, यो कुरा पाठकहरूले, समालोचकहरूले मूल्याङ्कन गर्ने कुरा हो । म एउटा कुरा चाहिं भन्न चाहन्छ– मसँगै सिर्जना यात्रामा लागेका कैयन् साथीहरू बाटैमा छुटे, कतिले थाकेर यात्रा रोके । कति हराए, कति बिलाए । म भने सिर्जना यात्रामा निरन्तर छु । साहित्ययात्रामा मात्र होइन, जीवन यात्रामा नै थाकेको छैन र हारेको छैन । आफैंले आफ्नो प्रशंसा गरिरहँदा त्यो आत्मश्लाघा जस्तो पनि होला । म आत्मश्लाघा गर्नतिर लाग्दिन तर आत्मसम्मान भन्ने कुरा गुमाउन पनि चाहन्नँ ।

१३.तपाईंसँगै कतिपय तपाईंकै समकालीन मित्रहरू पनि लेखिरहेका छन् । तपाईं आफूलाई आफ्नो पुस्ताका लेखकहरूभन्दा कसरी अलग सावित गर्नुहुन्छ ?

–नेपाली साहित्यमा दुबसु क्षेत्री भन्ने नाम स्थापित र प्रतिष्ठित हुनु नै एउटा अलग परिचय, पहिचान र प्रतिष्ठा हो भन्ने  म ठान्दछु । साहित्यकर्म गर्नेहरूको भीडमा, स्रष्टाहरूको भीडमा दुबसु क्षेत्री अलग र अग्लो देखिन्छ । शायद त्यो नै दुबसु क्षेत्रीको परिचय र पहिचान होला ।

चार दशकभन्दा अघिदेखि लेखिरहेकोले होला, मेरो साहित्यकर्मको निरन्तरता, मेरो प्रतिभा र लगनले पनि छुट्टै परिचय बनाउन मद्दत गऱ्यो, होला । लेखनकै कुरा गर्दा पनि अभिव्यक्तिको दुबसु शैली, दुबसु शिल्पचातुर्य र बौद्धिकताको दुबसु प्रस्तुति एउटा मानकका रूपमा स्वीकार भइसकेको छ । कृतिका रूपमा पनि, योगदानका रूपमा पनि वर्तमान नेपाली साहित्यमा दुबसु क्षेत्रीको उपस्थित टड्कारो र सम्मानपूर्ण देखिन्छ । एउटा साहित्यकार का रूपमा मैले पाएको सम्मापन र पुरस्कारहरू हेर्दा पनि नेपाली समाजले दुबसु क्षेत्रीलाई एउटा उत्कृष्ट लेखकका रूपमा स्वीकार गरेको जस्तो लाग्छ ।

१४. तपाईंको जीवनमा लेखनको स्थान के रहेको छ ? लेखन तपाईंको सोख हो कि व्यवसाय ?

म लेख्न कै लागि जन्मेको हुँ भन्ने ढोंगी कुरा गर्दिन । जिन्दगी भोग्दै जाँदा, जिन्दगी ढोग्दै जाँदा साहित्य जन्मेको हो । बाँच्नु ठूलो कुरा हो । बाँचेर लेख्नु झन् ठूलो कुरा हो । म बाँचिरहेको पनि छु र बाँचेर लेखिरहेको पनि छु । लेखकको रूपमा नेपाली समाज र नेपाल राष्ट्रले चिन्दा र सम्मान गर्दा मेरो जीवनमा लेखक व्यक्तित्वको महत्वपूर्ण स्थान रहेको छ भन्ने लाग्छ । म लेखक नभएको भए नेपाली समाजमा यसरी चिनिने थिइनँ होला अथवा नेपाली समाजले आदर र सम्माननको दृष्टिले हेर्ने पनि थिएन पनि होला । जागिरे मात्र भएको भए वा अध्यापक, प्रध्यापकमात्र भएको भए वा रोजगारीका लागि विदेशतिर पलायन भएको भए मेरो नामनिशान नै हुने थिएन होला । त्यसैले साहित्यिक लेखनले मेरो परिचय र प्रतिष्ठा निर्माणमा महत्तम योगदान पुऱ्याएको छ जस्तो लाग्छ ।

तर लेखन मेरो सोखमात्र हो, व्यवसाय होइन । म लेखेर बाँच्छु र लेखकस्वले घर, परिवार पाल्छु भन्ने कुरा सोच्दा पनि सोच्दिन । हो, व्यावसायिक लेखकहरू पनि नेपालमा बाँच्न सक्ने, स्वाभिमानपूर्वक बाँच्न सक्ने अवस्था सिर्जना हुँदै गएको छ । मेरै थुप्रै समकालीन मित्रहरू ले खेरै नाम मात्र होइन, दाम कमाउन पनि सफल भएका छन् । सरूभक्त, कृष्ण धरावासी र नयनराज पाण्डेहरू अहिले पूर्णकालीन लेखक भएका छन् र लेखेरै बाँचेका छन् । नेपालमा समाचार पत्रिकाहरू, विशेष गरी दै निक पत्रिकाहरूको संस्थागत विकासले लेखकहरूमा केही आडभरोसा दिएको छ । कृतिको बजारीकरण र पारिश्रमिकको अवस्था पनि सन्तोषजनक नै रहेको देखिन्छ । अखबारी पत्रकारिताका तुलनामा नेपाली साहित्यिक पत्रकारिता भने दुब्लाउँदै गएको देख्छु ।

१५.लेखनमा झण्डै चालिस वर्ष विताइसकेपछि फर्केर हेर्दा आफ्नो लेखक जीवन कस्तो लाग्छ ?

–लेखकका रूपमा मैले सगरमाथा नै आरोहण गरिसकेको त छै न– तर म नाम्चेसम्म भने अवश्य पुगिसकेको छु । मेरो शिखरतर्फको यात्रा निरन्तर जारी छ । मैले चालीस बर्षअघि सिर्जना शुरू गर्दा नाम र दाम कमाउँला भनेर सोचेको थिइन । त्यो बेला मेरो प्रतिभा र उत्साहले उचालिरहे को समय थियो । अहिले चालीस बर्षपछि काठमाडौंको यो भीडमा उभिएर हेर्दा आफूलाई थुप्रै लिलिपुटहरूका माझमा अग्लो नै पाउँछु । तेत्तीस बर्षअघि उच्चशिक्षा अध्ययन गर्न भनेर काठमाडौ आउँदा मलाई धरहरा र धरहराभन्दा अग्लो आफ्नो महत्वाकांक्षाले थिच्ला भन्ने पीर थियो । तर म आफ्नो प्रतिभा, मेहनत र लगनशीलताले व्यक्तिगत जीवनमा झैं साहित्यिक जीवनमा पनि असल र अब्बल हुन पुगें । अहिले वैशाख १२ को महाभूकम्पले भीमसेन थापाले बनाएको नौतले धरहरा ढल्यो तर मैले बनाएको मेरा उचाइ भने अटल छ । मलाई विश्वास छ– मेरो प्रतिभा, इमान्दारिता र लगनशीलताको जगमा ठडिएको मेरो लेखक व्यक्तिको उचाइ ढल्ने छैन, कहिल्यै पनि ढल्ने छैन ।

१६.तपाईं आधुनिक नेपाली साहित्यको एउटा स्थापित नाम हो । तपाईंचाहि आफूलाई कसरी चिनाउनुहुन्छ ?

–विगत चालीस बर्षदेखि म निरन्तर लेखिरहेको छु । आजभन्दा ३७ बर्ष अघि मेरो पहिलो रचना प्रकाशित भएको हो । मैले नेपाली साहित्यलाई र नेपाली समाजलाई निरन्तर निस्वार्थ योगदान गरिरहेको छु । साहित्य सेवा गरेवापत् समाजबाट वा सरकारबाट केही लिउँला, पाउँला भनेर सोचेको पनि छैन । नेपाली समाज र नेपाल राष्ट्रले स्नेह दिएको छ, सम्मान दिएको छ, प्रतिभा र लगनशीलताको आदर र कदर गरेको छ । एउटा व्यक्तिले, एउटा लेखकले पाउने आत्मसन्तुष्टि र आत्मसम्मान मैले पाएको छु ।

मैले लेखक भएर खर्चेका मेरा विगतका चालीस बर्षहरू, त्यसमा पनि

उर्वर, ऊर्जाशील र उत्साहका यौवनावस्थाका तीस बर्षहरू मैले नेपाली साहित्यको विकास र विस्तारमा सुम्पेको छु। त्यसमा मेरा जीवनको बीसदेखि पचास बर्षको उमेर मेरो जीवनकै रहरलाग्दा, भरलाग्दा दिनहरू थिए। मेरो जीवनकै यी सुनौला समय र इन्द्रेनी आकांक्षालाई मैले साहित्यमा समर्पित गरें। साहित्यको मेरो यो सेवा र समर्पण निस्वार्थ हो। म बाँचुञ्जेल नेपालको कला, संगीत, संस्कृति र सभ्यताको संरक्षण एवं नेपाली भाषा र साहित्यको सम्वर्द्धनमा बिताउन चाहन्छु। साहित्यले मलाई के दियो भनेर म सोच्दिन, मैले साहित्यलाई, नेपाली समाजलाई के दिन सक्छु भन्ने म सोचिरहन्छु।

१७. साझा पुरस्कारद्वारा सम्मानित काव्य 'अश्वनमेध यज्ञका घोडाहरू' का बारेमा संक्षेपमा केही भन्नुहोस् न– त्यो कृतिले पाउनुपर्ने चर्चा पाएजस्तो लाग्छ तपाईंलाई ?

–'अश्वामेध यज्ञका घोडाहरू' हेर्दा शृङ्खलाबद्ध कविताहरूको संग्रहजस्तो लागे पनि यो एउटा काव्य हो। शुरुमा मैले शृङ्खलाबद्ध कविताहरूकै संकलन भन्ने विचार गरेको थिएँ। मैले घोडालाई विम्ब बनाएर दर्जनौं कविता ले खिसकेपछि 'घोडा'लाई विषय बनाइएको कविताहरूको संग्रहमात्र बनाऊँ कि भन्ने पनि नसोचेको होइन। पछि यसलाई काब्यका रूपमा प्रस्तुत गर्ने विचार गरेपछि यसको उठान, विस्तार र बैठान बनाएँ। काव्यमा प्रयुक्त उपोद्‌घात, उप-कविता र उप-संहारहरू काव्यको उठान, विस्तार र वैठानका रूपमा आएका छन्। अस्वतन्त्रता र अस्वाधीनताका विरुद्धमा र स्वतन्त्रता, स्वाधीनता र शान्तिका पक्षमा शब्दको अन्तिमेत्यम् हो यो काव्य। मूलतः यो काव्य मानवताको पक्षमा र मानव अस्तित्व, मानव जाति र मानवसभ्यताको नैरन्तर्यका लागि वाणीको सम्वोधन हो यो काव्य। साझा प्रकाशनले आफ्नो प्रकाशकीयमा 'अश्वमेध यज्ञका घोडाहरू' काव्यलाई भूगोल, धन, राजनीति आदिका सीमा तोड्दै विश्व-मानव समाजमा जीवनवाद, निर्वन्धतावाद, सार्वभौम मानववादको प्रतिस्थापन गर्नु प्रस्तुत कृतिको अभिष्ट हा' भनेर स्पष्ट उल्लेख गरेको छ। साझा प्रकाशनले यो कृति 'निरङ्कुशता लाद्ने काला मन र काला विचारविरुद्ध, युद्धरच्ने युद्धपिपासु विरुद्ध, अँध्यारोविरुद्ध, निमानवीयता विरुद्धको हुङ्कार हो।' भनेर उल्लेख गरेको छ। साझा प्रकाशनले आफ्नो भूमिकामा अश्वअमेध यज्ञका घोडाहरूका कविताहरू 'विचार र चिन्तले भरिपूर्ण भई मानवीयताको गन्तव्यतर्फ उन्मुख हुँदै बौद्धिकता, आस्था र दर्शकका संवाहक बनेका छन्' भन्न् विचार व्यक्त गरेको छ, जसमा द्विमत हुँदैन भन्ने मलाई लाग्दछ।

मैले आफैंले यो काव्यका बारेमा फूलबुट्टाहरू भरिरहनु आवश्यक ठान्दिन। तर एउटै कुरा चाहिं मैले के भन्नुपर्छ भने यस काव्यमा अभिव्यक्तिको दुबसु शैली र संरचना एवं दुबसु क्षेत्रीको काव्यिक शिल्पचातुर्य एवं गम्भीर बौद्धिकता देख्न पाइन्छ। खासमा मैले प्रतिपादन गरेको चौथो आयामको दर्शन र संरचनाको सफल प्रयोग भएको एउटा उत्कृष्ट काव्य हो भन्दा

अतिशयोक्ति हुने छैन । मेरो साहित्यिक जीवनको यो एउटा सार्थक, मानक र महत्वपूर्ण कृति हो भन्दा पनि सायद द्विमत हुँदैन ।

तर यस कृतिले पाउनुपर्ने चर्चा, प्रशंसा र महत्व पाएको भने मलाई लाग्दैन । पहिलो कुरा त साझा प्रकाशनबाट यो कृति प्रकाशन हुँदा (२०६७ चैत्र) म देश बाहिर थिएँ । म नेपाल सरकारको कूटनीतिज्ञका रूपमा टोकियोस्थित नेपाली राजदूतावासमा उप-प्रमुखका रूपमा कार्यरत थिएँ । अर्को शब्दमा भन्दा म समालोचकहरू, पाठकहरू, प्राध्यापकहरू र पत्रपत्रिकाहरूबाट टाढा थिएँ । स्पष्ट शब्दमा भन्नुपर्दा यहाँ हुने प्रोपोगाण्डा र प्रचारप्रसारबाट निकै टाढा र अनभिज्ञ थिए । तर 'अश्वमेध यज्ञका घोडाहरू' सोही बर्षको साझा पुरस्कारद्वारा सम्मानित भयो । डा. ध्रुवचन्द्र गौतम, डा. गोविन्दराज भट्टराई, डा. लक्ष्मणप्रसाद गौतम, डा.कुमारप्रसाद कोइराला, कृष्ण धरावासी जस्ता ख्यातिप्राप्त लेखक समालोचकहरूले यस कृतिको गम्भीर समालोचना गर्दै खुलेर प्रशंसा गरे ।

'अश्वमेध यज्ञका घोडाहरू' प्रकाशित भएपछि दुबसु क्षेत्रीको चर्चा चुलिएको हो । तर पुरस्कार, सम्मान पाएपछि मात्र कृति चर्तित हुन्छ भन्ने म ठान्दिन । प्रोपोगाण्डा, प्रचारप्रसार र विज्ञापन गरेर कृतिलाई चर्चित बनाउन म चाहन्न र त्यसरी हल्ला र विज्ञापन गरेर मात्र कृति पठनीय र संग्रहणीय हुँदैन ।

१८.तपाईं विश्वसाहित्यको, विशेषगरी अंग्रेजी, फ्रेन्च र जापानी साहित्यको गहन अध्येता पनि हुनुहुन्छ । विश्व साहित्यसँग नेपाली साहित्यको तुलना गर्नुपरे के भन्नुहहुन्छ ?

म साहित्यको विद्यार्थी होइन । विश्वसहित्यको वा पाश्चात्य साहित्यको औपचारिक अध्ययन मैले गरेको छैन भन्दा पनि हुन्छ । मलाई विश्वसाहित्यको सामान्य पाठकभन्दा पनि हुन्छ । साहित्यभन्दा अलग्ग विषय (अन्तर्राष्ट्रिय सम्बन्ध) को उच्च शिक्षा अध्ययन गर्न सन् १९९३-९४ मा बेलायत बस्दा मैले अंग्रेजी साहित्यको सक्दो अध्ययन गरें । फ्रेञ्च भाषाको प्रारम्भिक कोर्स नेपालमै गरेको हुनाले बेलायतमा रहँदा फ्रेञ्च साहित्यको अध्ययनमा पनि चाख बढ्यो । इटाली, जर्मनी, स्वीस र स्वीडिस एवं स्कान्डेनेभियन मुलुकहरूको साहित्य अंग्रेजी भाषामै अध्ययन गरें । चार बर्ष जापान बस्दा जापानी साहित्यको पनि गहिरो अध्ययन गरें । जापानी साहित्यको उपन्यास र हाइकु मैले ध्यान दिएर पढेको हुँ । जापानमा रहँदा पेन जापान र मासाओ फुकुदा पोएट्री एसोसिएसनको मानार्थ सदस्य भएर पनि मैले समकालीन जापानी साहित्यको चाखपूर्वक अध्ययन गरें । 'हाइकु' त विश्व साहित्यलाई जापानी साहित्यको महत्तम उपहार नै हो । त्यसो त विश्व उपन्यासको प्रादुर्भाव पनि जापानी भूमिबाटै भएको हो । 'गेञ्जी का कथाहरू' बाट विश्व साहित्यमा आख्यानात्मक धाराको आविर्भाव भएको हो । विश्वसाहित्य र नेपाली साहित्यको तुलनात्मक रूपमा मैले अध्ययन गरेको छैन । गुणवत्ता,

बौद्धिकता, एवं शैली, शिल्प र संरचनाका दृष्टिले नेपाली स्रष्टाहरूका कृतिहरू विश्व साहित्यका कृतिहरूसँग कुम जोडेर उभिन समर्थ छन् भन्नै मलाई लाग्दछ। आख्यानमा नेपाली साहित्य विश्व साहित्यभन्दा, पाश्चात्य साहित्य भन्दा कम छैन। कथा र उपन्यास आख्यानका दुवै विधामा नेपाली स्रष्टाहरू धेरै अघि छन्। आधुनिक नेपाली कविता पनि विश्व साहित्यका कविता लेखनभन्दा तल छैन। मोहन कोइराला, वैरागी काँइला, ईश्वरवल्लभ र तुलसी दिवस लगायतका कविहरूले नेतृत्व गरेको आधुनिक नेपाली कविता लेखन अंग्रेजी, फ्रेञ्च, जर्मन र हिन्दी साहित्यभन्दा पछि छैन। कतिपय अर्थमा अगाडि नै छन् भन्छु म।

नेपाली नाटक र निबन्ध भने विश्वसाहित्य, मुख्यतः पाश्चात्य साहित्यका दाँजोमा केही पछि परेका देखिन्छन्। तर नेपाली नियात्रा साहित्य भने मौलिकता र शैलीका दृष्टिले मीठा पनि लाग्दछन्, निख्खिर, तिख्खर र प्रखर लाग्दछन्। नेपाली साहित्यका थुप्रै कृतिहरूको अंग्रेजी भाषामा अनुवाद गर्न अव ढिलो भइसकेको छ। अंग्रेजीमा मात्र होइन, फ्रेञ्च, जापानी, जर्मन, इटली, हिन्दी र चिनियाँ भाषामा पनि नेपाली साहित्यका उत्कृष्ट कृतिहरूको अनुवाद र प्रचारप्रसार हुनु आवश्यक छ। यसका लागि त्रिभुवन विश्विव्वद्यालय, संस्कृत विश्वविद्यालय, नेपाल प्रज्ञाप्रतिष्ठान र साझा प्रकाशन जस्ता संस्थाहरूको प्रयत्न र प्रतिवद्धताको आवश्यकता टड्कोरो भइसकेको छ।

१९. एक्काईसौं शताब्दीमा लेखक कसरी हिंड्नुपर्छ जस्तो लाग्छ ?

सैद्धान्तिक रूपमा भन्दा चौथो आयामको आफ्नो अवधारणाका आधारहरू लिएर म भन्छ– एक्काइसौं शताब्दीको लेखकले हार्दिकता र बौद्धिकताका बीचबाट हिंड्नु पर्छ। एक्काईसौं शताब्दीको लेखकले अध्यात्म र विज्ञानका बीचबाट हिंड्नुपर्छ। एक्काईसौं शताब्दीको लेखकले सत्य र सत्ताका बीचबाट हिड्नुपर्छ। एक्काईसौं शताब्दिको लेखकले ईश्वरीयता र निरीश्वसरीयताका बीचबाट हिंड्नु पर्छ।

सतही रूपमा भन्दा एक्काईसौं शताब्दीको लेखकलाई प्रविधि, इन्टरनेट आदि सञ्चारको जालोले घेरेको छ। कम्प्युटर, ल्यापटप, आइप्याड र मो वाइलले एक्काईसौं शताब्दीको लेखकलाई सजिलो पनि पारेको छ, अप्ठ्यारो पनि पारेको छ। मुद्रण, प्रचारप्रसार, पाठकसँग छिटो सम्पर्क, सम्बाद र सञ्चार गर्न सजिलो भएको छ। तर इन्टरनेटको सुविधा र सञ्चारको सञ्जालबीच आजको पाठकले साहित्यलाई पनि गम्भीर वौद्धिक खुराक नठानी फाष्टफूडजस्तो छिटो, मिठो 'लञ्च'जस्तो ठान्न  थालेको छ। पुस्तक कम पढिन थालेको छ, सट्टामा कम्प्युटर, ल्यापटप, आइप्याड र मोवाइलमा रचना पढ्न थालिएको छ। गम्भीर, बौद्धिक र लामा सिर्जनाहरू ओझेल पर्न थालेका छन्।

पठन संस्कृति त बढेको छ तर पुस्तक संस्कृति घटेको छ। केही

बर्षपछि मान्छेहरूका घरमा पुस्तकहरू हुने छैनन् । पुस्तक हेर्न पुस्तकालय र वाचनालय जानुपर्ने परिस्थिति पनि नआउला भन्न  सकिन्न ।

२०.तपाईं आफूलाई प्रयोगवादी लेखक मान्नुहुन्छ ?

–मैले आफ्नो लेखनको प्रारम्भिक चरण पार गर्नासाथ लेखनमा केही नयाँपन, केही नयाँ सोच ल्याउने प्रयत्न गरेकै हो । अलिपछि म साहित्यिक सोचका पुराना केन्द्रहरू भत्काउनतिर लागें । स्पष्ट शब्दमा भन्नुपर्दा म परम्परित लेखनलाई विस्थापन गर्दै नवलेखन र नवदृष्टिकोण स्थापना गर्नतिर लागें । म बहुलतामा विश्वास गर्ने लेखक हुँ । लेखनमा पनि एकल केन्द्र र एकल नायकत्वमा विश्वास गर्दिन । म बहुकेन्द्रहरूको निर्माणमा लागेको हुँ । म त्यसैले लेखनको प्रारम्भबाटै अरू लेखकभन्दा भिन्न, अरू भन्दा नयाँ सोच्ने र नयाँ लेख्ने बाटोमा लागेकै हुँ । मैले आफू हिंड्ने  बाटो आफैं खन्न लागेकै हुँ । आफू हिड्ने बाटो आफैं खन्नु एउटा साहस पनि हो, दुस्साहस पनि हो । त्यो साहस र दुस्साहस मैले गरेकै हो ।

ईश्स्वी  सन् २००० मा आइपुग्दा त मैले विधिवत् रूपमा साहित्यमा नयाँ सिद्धान्त चौथो आयामको घोषणा गरेर साहित्यमा नयाँ धार र धारणासहितको यात्रा तय गरेको हुँ । नयाँ सिद्धान्त, सोच र दर्शनसहित साहित्यमा नयाँ आयाम घोषणा गर्नु भनेको आफूलाई अरू भन्दा भिन्न दे खाउनु पनि हो । लेखकहरूको भीडमा आफूलाई अलग देखाउनु पनि एउटा साहस र दुस्साहस हो । त्यो साहस र सुस्साहस दुबसु क्षेत्रीले गरेकै हो ।

२१.नेपाली साहित्यिक पत्रकारिताबारे तपाईंको धारणा के छ ?

नेपाली भाषामा अखवारी पत्रकारिताभन्दा पहिले साहित्यिक पत्रकारिता शुरु भएको हो । वि.सं. १९५५ मा प्रकाशित ‘सुधासागर’ नेपालको पत्रकारि ताको इतिहासको प्रारम्भविन्दु हो । ‘सुधासागर’ साहित्यिक पत्रिका थियो । तर आज अखवारी पत्रकारिताले धेरै ठूलो छलाङ मारिसक्दा पनि साहित्यिक पत्रकारिता भने आशलाग्दो अवस्थामा छैन ।

म एउटा कुरा स्पष्ट भन्छु– नेपालमा साहित्यिक पत्रिका निजी प्रयासमै चलेका हुन् । निजी प्रयासमै प्रकाशित साहित्यिक पत्रिकाहरू स्तरीयता र लोकप्रियताका दृष्टिले उल्लेख्य रहेका छन् । सुब्बा ऋद्धिबहादुर मल्लले वि.सं. १९९१ मा प्रारम्भ गर्नुभएको ‘शारदा’ देखि नेपाली साहित्यिक पत्रकारिताको आरम्भ हुन्छ । ‘शारदा’ पहिलो साहित्यिक पत्रिका हुनाले ऐतिहासिक त छँदैछ तर नेपाली साहित्यमा आधुनिक युग पदार्पण गर्नमा समेत महत्वपूर्ण योगदान गरेको छ ।

उत्तम कुँवर र बालमुकुन्ददेव पाण्डेले सम्पादन गर्नुभएको रूपरेखा अर्को महत्वपूर्ण साहित्यिक पत्रिका हो । ‘रूपरेखा’ले आधुनिक नेपाली कविता, कथा, निवन्ध र समालोचनाको विकास र विस्तार गर्न कोसेढुंगाको काम गरे को छ । नारायणप्रसाद वाँस्कोटाको प्रयासमा प्रकाशित ‘प्रगति’ ले पनि नेपाली साहित्यको आधुनिक युगमा महत्वपूर्ण योगदान गरेको छ । भवानी घिमिरेको

सम्पादन र प्रकाशनमा निस्केको 'भानु', कमल दीक्षितको सम्पादन र मदन पुरस्कार पुस्तकालयको प्रकाशनमा निस्कने 'नेपाली', नगेन्द्रराज शर्माको सम्पादन र प्रकाशनमा निस्कने 'अभिव्यक्ति', रोचक घिमिरेको सम्पादन र प्रकाशनमा निस्कने 'रचना', वासु शशीको सम्पादनमा निस्केको 'सञ्चय', हरिभक्त कटुवालको सम्पादनमा निस्केको 'आँखीझ्याल'लेआधुनिक नेपाली साहित्यको विकास र विस्तारमा सार्थक योगदान पुऱ्याएका छन् ।

संस्थागत रूपमा प्रकाशन भइहेका साहित्यिक पत्रिकाहरूमध्ये नेपाल प्रज्ञाप्रतिष्ठानको 'माधुर्य', 'कविता', गोरखापत्र संस्थानको 'मधुपर्क',नेपाल राष्ट्रबैंकको 'मिर्मिरे', कृषि विकास बैंकको 'समष्टि', रेडियो नेपालको 'झङ्कार' र साझा प्रकाशनको 'गरिमा' साहित्यिक पत्रिकाहरू हुन् । यी मध्ये पनि ' मधुपर्क',र 'गरिमा' लाई समकालीन नेपाली साहित्यको प्रतिनिधि पत्रिका मानिन्छ। नेपाल प्रज्ञाप्रतिष्ठानले वर्तमानमा प्रकाशन गरिरहेका प्रज्ञा, सयपत्री र समकालीन साहित्य पनि पठनीय साहित्यिक पत्रिकाहरू हुन् ।

अहिले निजीस्तरमा प्रकाशन भएका जूही, बगर, शिवपुरी सन्देश, आरोहण, मञ्जुषा, अन्तर्बोध, शब्द संयोजनहरू पनि समकालीन नेपाली साहित्यका महत्वपूर्ण पत्रिकाहरू हुन् । बसुन्धरा-मान प्रज्ञाप्रतिष्ठानबाट प्रकाशित भइरहेका समकालीन नेपाली साहित्य (मासिक), वसुन्धरा (द्वै मासिक), मानश्री (त्रैमासिक), चौथो आयाम (चौमासिक) र बुहारी (अर्धवार्षिक) पनि पठनीय र संग्रहणीय पत्रिकाहरू हुन् । नेपाली लेखक संघको मुखपत्र 'लेखक' र प्रगतिशील लेखक संघको मुखपत्र 'प्रलेस' वर्तमान नेपाली साहित्यका प्रतिनिधि साहित्यिक पत्रिकाहरू हुन् ।

मैले देख्दादेख्दै 'आरोहण' बन्द भयो । विश्वदीप, साहित्यालोक, सासंक, जूही, बगर जस्ता पत्रिकाहरू बन्द भए। 'रूपरेखा' जस्तो ऐतिहासिक साहित्यिक पत्रिकाको अवसान भयो । साझा प्रकाशनको 'गरिमा'र कृषि विकास बैंकको 'समष्टि' आरोहण, मञ्जुषा, अन्तर्बोध आदि पनि नियमित हुन छाडे ।

नेपाली साहित्यिक पत्रिका नियमित हुन नसक्नु, असमयमै अवसान हुनुमा आर्थिक कारण नै मुख्य हो भन्ने मेरो बुझाइ छ। नेपाल सरकारले दिनुपर्ने सहयोग र सदाशयताको कमी पनि हो। नियमित रूपमा विज्ञापन प्राप्त गर्न नसक्नु र विद्युतीय सामग्रीहरूबाट सूचना र मनोरञ्जनको अत्यधिक उपलब्धताले गर्दा साहित्यिक पत्रिकाका पाठकहरू क्रमशः घट्नुले पनि नेपाली साहित्यिक पत्रिका र नेपाली साहित्यिक पत्रकारिताको भविष्य अझै अनिश्चित जस्तै देखिन्छ ।

२२.नेपाली समालोचनाबारे चाहिं कस्तो धारणा राख्नुहुन्छ ?

नेपाली समालोचना 'समालोचना'जस्तो नभएर समीक्षाजस्तो मात्र लाग्दछ । अझ स्पष्ट शब्दमा भन्नुपर्दा अधिकांश नेपाली समालोचनाहरू प्राध्यापकीय टिपोटहरूजस्ता लाग्दछन् । वास्तवमा भन्ने हो भने नेपाली

समालोचनाको अभिभारा नेपालीका प्राध्यापकहरूले नै बहन गरिरहेजस्तो देखिन्छ । त्रिभुवन विश्वविद्यालयको स्नातक र स्नातकोत्तर तहका पाठ्यक्रम हेरेर लेखिने समालोचनाहरूले नेपाली समालोचनाको विकास र विस्तारलाई ठोस योगदान पुऱ्याउने देखिदैंन । नेपाली साहित्यमा समालोचनालाई सिर्जनशील साहित्यको एउटा अभिन्न अङ्ग मानिएको पनि छैन । जति समालोचकहरू छन् वर्तमान नेपाली साहित्यमा– उहाँहरूमा पनि आग्रह, पूर्वाग्रह बढी नै पाइन्छ । कृति, कृतिको गुणवत्ता, कृतिको शिल्प, संरचना र मूल्यभन्दा व्यक्ति, व्यक्तिको आस्था र व्यक्तिको साहित्यिक उचाइ हेरेर समालोचना गर्ने वृत्ति र प्रवृत्तिले नेपाली समालोचना टाक्सिएजस्तो लाग्दछ ।

अझै पनि नेपाली समालोचना डा. वासुदेव त्रिपाठी, डा. तारानाथ शर्मा, कृष्णचन्द्रसिंह प्रधान र डा. दयाराम श्रेष्ठहरूको घेराभन्दा माथि उठ्न नसक्नुले नेपाली समालोचनाको दारिद्र्यलाई इङ्गित गर्दछ । यद्यपि, डा. गोविन्दराज भट्टराई, कृष्ण प्रधान, डा. खगेन्द्रप्रसाद लुइटेल, डा. कुमार प्रसाद कोइराला, डा.लक्ष्मणप्रसाद गौतम, डा. ज्ञानु पाण्डे र ताराकान्तजस्ता प्रतिभाशाली समालोचकहरूको उपस्थितिले नेपाली समालोचनाले एउटा उचाइ लिन सक्ने मैले आशा एवं विश्वास गरेको छु ।

२३. तपाईंको लेखनको अभीष्ट के हो ?

'मान्छे'लाई स्वतन्त्र, स्वाधीन र सार्वभौम बनाउनु मेरो लेखनको अभीष्ट हो । धर्तीमा 'मान्छे' र 'मान्छेको अस्तित्व' अनन्तकालसम्म रहोस्, मान्छेको सभ्यता युगयुगान्तर रहोस् भन्ने उद्देश्यले मान्छेकालागि 'मान्छे'का पक्षमा शब्दको सम्बोधन हो मेरो लेखन । मान्छेले भोगिरहेको जीवन र मान्छेले टेकिरहेको 'जगत्'को सादृश्यमा मान्छेको 'सत्य' र मान्छेको 'सत्ता' खोज्ने काममा मेरो लेखन प्रतिबद्ध रहेको छ ।

अहिलेको विश्वमा कुनै पनि किसिमको सिमाना रहनु हुँदैन भन्दै सीमाहीन विश्वको निर्माणमा मेरो लेखन प्रतिवद्ध रहेको छ । भौगोलिक सिमानाहरू, धार्मिक, राजनैतिक, सांस्कृतिक, आर्थिक, सामाजिक, जातीय र राष्ट्रियताका सिमानाहरू भत्काएर सार्वभौम मानवको खोजी मेरो साहित्य लेखनको अभीष्ट हो ।

२४.अब अन्तिम प्रश्न– तपाईंको लेखनयात्राको गन्तव्य कहाँसम्म हो ?

स्तरीयता, लोकप्रियता र चर्चाका दृष्टिले शिखरमा पुगूँ भन्ने चाहना सबै लेखकहरूमा हुन्छ होला । दौंतरीहरूको भीडमा टाढैबाट टड्कारो रूपमा दुबसु क्षेत्री अलग र अग्लो देखियोस् भन्ने इच्छा मलाई पनि छ । मेरा सिर्जनाहरूले देशको सीमा नाघेर विश्वसम्म पुगुन् भन्ने चाहना पनि हुँदोरहेछ । आफ्ना सिर्जनाहरूको सही र गम्भीर मूल्याङ्कन होस् भन्ने पनि लाग्दारहेछ ।

☙☙

**नेपाल प्रज्ञा-प्रतिष्ठान** कमलादी, काठमाडौं, नेपाल
फोन : ०१-४२२१२८३, ४२२१२४१,४२२१२४२
फ्याक्स : ९७७-०१-४२२११७५, ४२४१७८६
पो.ब.नं. : २३०५८, काठमाडौं, नेपाल
website : www.nepalacademy.org.np

# शुभकामना

नेपाली साहित्यिक पत्रकारिताको इतिहासमा आफ्नो स्थापना कालदेखि नै निरन्तरता कायम गर्दै आजसम्म नियमित रूपमा प्रकाशित भइरहेको निजी क्षेत्रका पत्रिकामा रचना र अभिव्यक्ति पत्रिकाको नाम लिनुपर्ने हुन्छ । वि.सं. २०२७मा पहिलो अंक प्रकाशित भई अहिलेसम्म नियमित रूपमा प्रकाशित भइरहेको अभिव्यक्ति पत्रिकाले आफ्नो २०० औं अंकलाई विशेष अंकको रूपमा प्रकाशित गर्न लागेको कुरा थाहा पाएर मलाई खुशी लागेको छ । आफ्नो स्थापनाको पचासौं वर्ष प्रवेशको उपलक्ष्यमा प्रकाशित हुने यो अंकले साहित्यिक पत्रकारिताको इतिहासमा निजी क्षेत्रको प्रयासको, लगनशीलताको नमुना प्रस्तुत गरेको छ । लगनशील भएर आफ्नो अठोटलाई प्रयोग गर्दै जाँदा एक प्रकारको सुखद् अनुभूतिको प्रकट हुँदो हो यसका प्रकाशक र सम्पादकलाई । यस्ता सुखद् अनुभूतिबाट हुने सन्तोषमा साझेदारी जनाउँदै म यहाँ विशेष गरी अभिव्यक्तिका सम्पादक नगेन्द्रराज शर्मालाई विशेष धन्यवाद ज्ञापन गर्दै उहाँका सहयोगीहरू समेतलाई बधाई ज्ञापन गर्दछु ।

आफ्नो व्यक्तिगत लगानीमा एउटा साहित्यिक पत्रिकाले नियमित रूपमा २०० अंकसम्म प्रकाशन गर्नु कम कष्टसाध्य कुरा होइन । यस्तो कष्टबाट प्राप्त हुने सुखद् अनुभूतिको मूर्त रूप अभिव्यक्तिको यो अंकलाई मैले लिएको छु । आधुनिक नेपाली साहित्यका वरिष्ठ स्रष्टासमेत रहेका अग्रणी साहित्यिक पत्रकार श्री नगेन्द्रराज शर्मा आफ्नो जीवन अभिनयको ८२ औं वर्षमा प्रवेश गर्नुभएको छ । आफूले प्रकाशन गर्न थालेको अभिव्यक्ति मासिक पत्रिकाको पचासौं वर्षगाँठ, यसको नियमितताको अभिलेख बताउने आफ्ना २००औं अंक प्रकाशन र आफ्नो ८२ औं जन्मोत्सवको सुखद् घडी गरी उहाँलाई तीन सुखद् संयोग मिलेका छन् । स्रष्टा एवम् साहित्यिक पत्रकार श्री नगेन्द्रराज शर्मालाई २०७६ सालको आगमनसँगै यस अवसरमा म उहाँको सुस्वास्थ्य, दीर्घायु र सफलताको कामना गर्दछु । साथै अभिव्यक्तिको नियमितता र निरन्तरताका लागि शुभकामना व्यक्त गर्दछु ।

**गङ्गाप्रसाद उप्रेती**
कुलपति
नेपाल प्रज्ञा-प्रतिष्ठान

२०७६–१–१०
कमलादी, काठमाडौं



# अभिव्यक्ति सँगको सामीप्य

गङ्गा अभिलाषी
भैटहवा ,९८०७५१०९६१

उमेरले तीनदशक पार गरेपछि ०५८ सालको महाकवि लक्ष्मीप्रसाद देवकोटा जन्मजयन्तिबाट मेरो साहित्यिक यात्राले निरन्तरता पाएको हो ।

०६१ साल चैत्र १२ गते आदरणीय स्रष्टा रुद्र दुःखी शर्माले ०६१ सालको असारको 'अभिव्यक्ति' दुईमहिने साहित्यिक पत्रिका (वर्ष ३५ पूर्णङ्क ११९) सप्रेम दिनुभयो । पत्रिका पढने क्रममा धरानमा मलाई ६।७ कक्षा पढाउनु भएको शिक्षक वद्री पलिखेको 'गामवेशीका कवि क्षेत्रप्रताप अधिकारीसँग' भन्ने लेख पढन पाएँ ।

मलाई अन्त्यन्तै मनपर्ने गीत संगीत नै हो । यस पत्रिकामा 'म त लालीगुराँस भएछु' र 'देउरालीमा राजा भेटियो, भञ्ज्याङ्गमा रानी भेटियो'का गीतकार क्षेत्रप्रताप अधिकारी भनेर थाहा पाउदा मन फुरुङ्ै भएको थियो । त्यही समयदेखि यो पत्रिका मेरो मानस पटलमा बस्न सफल भएको थियो । केही समयपछि सायद ०६४ सालतिर होला आदरणीय स्रष्टा विजय सागरले पनि मलाई अभिव्यक्ति पत्रिका दिनुभयो । लगभग ०७० साल सम्ममा यो पत्रिकामात्र दुईवटा प्राप्त भएको हो ।

०६६ साल चैत्र २९ गते झापाको साहित्यिकयात्रामा यस पत्रिकाका सम्पादक नगेन्द्रराजशर्मालाई स्रष्टा भनेर चिन्ने अवसर पाएँ । उहाँको जन्मदिन र फोन नं. डायरीमा कैद गरेकोले वर्षमा एकपटक चैत्र २१ गते ०६७ सालबाट फोनमा कुराकानी गर्ने गर्दथे ।

संजोगले मधुपर्क पत्रिका पढ्दा नगेन्द्रराजशर्मा 'अभिव्यक्ति' पत्रिकाका सम्पादक तथा मदन पुरस्कार बिजेता जगीदश घिमिरेका दाजु भनेर बल्ल थाहा पाएँ । अनिपो मलाई त्यो दुईवटा प्राप्त पुरानो पत्रिका अभिव्यक्ति झलझली याद आयो । अनि यस पत्रिकाको सम्पादक भनेर थाहा पाएपछि माथि उल्लेखित कुराबारे संस्मरणात्मक अनुभूति लेख्न आत्माले घचघच्यायो र तुरुन्त कलम चलाएँ । अनि अभिव्यक्तिलाई पठाइदिएँ । हौसला प्रेरणा स्वरूप मेरो लेख ०७१सालको पुस-माघ अंकमा छापियो ।

त्यसपछि ०७५ बैशाख जेठ अंकमा 'अन्तराल' कवितासंग्रहमा एकनजर' समीक्षा छापियो । त्यसपछि ०७५ भदौ असोजमा लधुकथा ' जिज्ञासा' छापियो । आभार प्रकट गर्दछु । यस पत्रिकामा प्रकाशित प्राय सबै लेख रचनाहरू स्तरीय, सन्देशात्मक, प्रेरणादायी र सरल भाषाशैलीका हुने भएकाले पाठकको मन जितेको छ ।

यस पत्रिकामा एउटा रमाइलो कुरा के पाएँ भन्दा स्रष्टाहरूको यात्रामा तथा भेटघाटको क्रममा भएको कुराकानीबारे जस्ताको यस्तै लेखिदिएर 'जमघटहरुबाट' भन्ने स्तम्भले जो कोही पाठकलाई हसाँएर मनमस्तिष्क फुरुङ्ग गराएको अनुभूति गराएको छ । यो स्तम्भले मेरो मन अवश्य छोएको छ ।

अन्त्यमा यो पत्रिका अनवरत प्रकाशित भई २०० औ विशेषाङ्क प्रकाशितगर्न सफल भएकोमा प्रधान सम्पादक एवम् सम्पादक मण्डललाई धेरै धेरै शुभकामना शुभेच्छा दीर्घायुको कामना व्यक्तगर्दछु । ७७

# अभिव्यक्तिसँगको अन्तरङ्ग

गायत्रीकुमार चापागाईं
विराटनगर ९८४२०३४१४७

नेपाली भाषा साहित्यको उन्नयनमा विगत पाँचदशक अघिदेखि निरन्तर रूपमा प्रकाशित भै प्रमुख भूमिका निर्वाह गरेको 'अभिव्यक्ति' द्वैमासिक साहित्यिक पत्रिकाले यही जेठ महिनामा २०० औं अङ्क प्रकाशित गर्दैछ भन्ने सुखद् शुभ समाचार यसका सम्पादक नगेन्द्रराज शर्माबाटै मैले प्राप्त गरें । त्यसका निम्ति अभिव्यक्तिमै केन्द्रित भै केही लेखिदिए हुन्थ्यो भन्ने सत्प्रेरणा र उहाँसँगै भएका अन्तरङ्गका कुराकानीका आधारमा केही लेख्ने जमर्को गरिरहेको छु । केही वर्ष अघिदेखि मेरा पनि रचनाहरूलाई अभिव्यक्तिले प्रकाशित गर्दै आएको छ । 'नेपाल साहित्यिक पत्रकार संघ'मा आबद्ध भै म पनि नगेन्द्रराज शर्मासँग नुवाकोट र बनारससम्मको सहयात्रामा सामेल भएको छु। मैले नजिकैबाट उहाँमा रहेको चरित्रगत विशेष गुणहरूलाई देख्न पाएको छु र असी वर्षको उमेर नाघिसक्दा पनि उहाँमा रहेको युवा शक्ति झैं सक्रियता, लगनशीलता र स्पष्टवादिताको म प्रशंसक पनि छु । बनारसको प्रसिद्ध विश्वनाथ बाबाको मन्दिरको ढोका अगाडि पुगेर उहाँ हाम्रा मो वायइल, ब्याग, जुत्ता रूँगेर बस्नुभयो । मन्दिरभित्र छिर्नु भएन । पुराना यहीं पढ्दाका संस्मरण सुनाउँदै हामीलाई रोमाञ्चित पार्नु भयो । जो मेरा लागि आश्चर्यजनक र अत्यन्तै प्रभावकारी थिए । यस्ता सिर्जनशील तथा कर्मठ व्यक्तिबारे लेख्न पाउनु अहोभाग्य ठान्दैछु ।

पत्रिकालाई स्तरीय रूपमा प्रकाशन गर्ने प्रमुख भूमिका सम्पादककै हुन्छ । यसको जीवन्तताको प्रश्न सँधै चुनौतीपूर्ण देखिन्छ । साहित्यिक पत्रिकारिताको इतिहास हेर्दा युवाकवि तथा नेपाली भाषाका अनन्यसेवी मोतीराम भट्टसम्म पुग्नुपर्छ । उनले नै बनारसमा रहँदा वि.सं. १९४३ मा 'गोर्खा भारत जीवन' नेपाली साहित्यिक पत्रिका प्रकाशन गरे भन्ने मानिन्छ । यस्तै, उनैले वि.सं. १९५५ मा 'सुधा सागर' नामक पत्रिका नेपालबाटै प्रकाशित गरे । यही नै नेपालको जेठो साहित्यिक पत्रिका हो, भनिन्छ । वि.सं. १९५८ मा प्रकाशित अखवार 'गोर्खापत्र'ले पनि साहित्यका विविध विधाहरू प्रकाशित गरे पनि मूलतः यो समाचार पत्रकै रूपमा स्थापित छ ।

भारतमा रहेका नेपालीभाषीहरूले बनारस, खर्साङ, दार्जिलिङ, देहरादून आदिबाट प्रकाशित गरेका विभिन्न साहित्यिक पत्रिकाहरूले नवोदित प्रतिभाहरूलाई स्थापित गर्न मदत पुऱ्याएका छन् । त्यस्ता पत्रिकाहरूमा सुन्दरी (१९६३), माधवी (१९६५), चद्र (१९७१), गोर्खाली (१९७२), चन्द्रिका (१९७२), गोर्खा संसार (१९८३), तरूण गोर्खा (१९८५), साहित्य सम्मेलन (१९८८), गोर्खा सेवक (१९९२), उदय (१९९३) आदि रहेका छन् ।

१९९१ मा नेपालबाट प्रकाशित ऋद्धिबहादुर मल्लको 'शारदा' पत्रिकाको साहित्यिक इतिहासमा ठूलो महत्व रहेको छ । यसबारे नगेन्द्रराज शर्मा भन्नुहुन्छ– 'ऋद्धिबहादुर मल्ल राणाका निजी सुब्बा हुन् । उनी सोझा नेवार थिए । सरकारी सुविधा लिन र राणाविरोधी गतिविधि चाल्न बालकृष्ण सम, राममणि आदिको समूह, यो पत्रिका प्रकाशन गर्न सक्रिय रह्यो ।' जे भए पनि कविशिरोमणि लेखनाथदेखि महाकवि लक्ष्मीप्रसाद, बालकृष्ण सम, भीमनिधि तिवारी, पुष्कर शमसेर जस्ता नेपाली साहित्यिक हस्तीहरूका रचनाहरूले ' शारदा' पत्रिकाको महत्व बढेकै देखिन्छ । २००७ सालको क्रान्ति अघि उद्योग (१९९२), साहित्यस्रोत (२००४), आँखा (२००५), युगवाणी (२००४), भारती (२००६) प्रकाशित भएका छन् ।

२००७ सालको क्रान्तिपछि भने सेवा (२००८), प्रतिभा (२००९), प्रगति (२०१०), धरती (२०१०), साहित्यस्रोत (२०१६), रूपरेखा (२०१७), स्वास्नीमान्छे (२०१७), रचना (२०१८), भानु (२०२०), वेदना (२०२०),मधुपर्क (२०२५), सुस्केरा (२०२७), अभिव्यक्ति (२०२७), गरिमा (२०३९) र ज्ञान गुनका कुरा (२०४३) प्रकाशित भएका छन् ।

यीमध्ये धेरै पत्रिकाहरूले आफ्नो नियमित प्रकाशनको बाटो बन्द गरिसकेका छन् । सरकारी सुविधाप्राप्त मधुपर्कको तुलना अन्य प्रकाशनसँग गर्न सुहाउँदैन । त्यसमा सरकारी सुविधा प्राप्त कर्मचारी छन् । 'रचना' अभिव्यक्तिभन्दा ९ वर्ष जेठो भएपनि २०० औं अङ्कमा पुग्न सकेको छैन । यसबारे जिज्ञासा राख्दा नगेन्द्रराजजी भन्नुहुन्छ, 'रोचकजीको आँगनमै प्रेस थियो । त्यसमाथि भैरव अर्याल, रमेश विकल, वासुदेव त्रिपाठी, रमेश बाँस्कोटा जस्ताको सरसहयोग रोचकले पाएकै हुन् तर पनि यो बीच-बीचमा अड्कियो । अहिले भने नियमित छ, यो खुशीको कुरा हो ।

धरती, साहित्यस्रोत र प्रगतिले जे जति अङ्क निकाले, ती स्तरीय थिए ।

उत्तम कुँवरको 'रूपरेखा'ले साहित्यिक जगतमा हलचल ल्याए पनि यो पनि अस्तायो । साझा प्रकाशनबाट प्रकाशित 'गरिमा' सुत्तै, ब्युँझदै गर्छ । हाल आएर 'शारदा' लाई ब्युँझाउन पनि प्रयत्न गरिँदैछ । यी सबै साहित्यिक पत्रिकाहरूका कथा-व्यथाहरूका बीचमा अभिव्यक्तिलाई नितान्त पारिवारिक पृष्ठभूमिमा हुर्केको मान्ने शर्माजीको कथन छ, 'त्यसबेला भाषा सेवाको भावना भन्दा पनि व्यक्तिगत लहड भनौं या रहरले नै पत्रिका प्रकाशन गर्ने इच्छा जागेको हो । यसले मेरो व्यक्तित्वको विकास पनि भयो ।'

उहाँले यसो भने पनि यसको नियमित प्रकाशनले भने नेपाली भाषा साहित्यकै विकासमा योगदान पुऱ्याएको छ र नवोदित स्रष्टाहरूलाई स्थापित गराउन पनि महत्वपूर्ण भूमिका खेलेकै छ । जतिबेला उहाँले यो पत्रिका प्रकाशन गर्न थाल्नु भयो त्यतिबेला अहिलेजस्तो पत्रिका प्रकाशन गर्न सजिलो थिएन । त्यसबारे उहाँको संस्मरण छ, 'पहिलो कपी निकालेर अञ्चलाधीश

कार्यालय पुऱ्याउनु पर्थ्यो । त्यसले सेन्सर गरेर स्वीकृति दिएपछि मात्रै नयाँ सडकको पीपल बोटमा बिक्री वितरणका लागि राख्न सकिन्थ्यो । आफ्नो त टेक्ने, समाउने आफैं मात्र । राजारानी, युवराजको जन्मोत्सव परेको बेला के ही संघ-संस्थाहरूले विज्ञापन दिन्थे । विज्ञापनबाट रू. ५००/- जम्मा भए एउटा अङ्कको खर्च पुग्थ्यो । त्यही जोगाएर राख्थैँ । नपुगे आफ्नै गोजीबाट बेहोर्थें । विज्ञापन दिने जनकपुर चुरोट कारखाना, एन् सी सी एन् निर्माण कम्पनी, यातायात संस्थान, छाला जुत्ता कारखाना, गुठी जीर्णोद्धार समिति आदि थिए । जहाँ पनि आफैं दौडधूप गरेर पुग्नु पर्थ्यो ।'

पहिलो अङ्कै प्रकाशनको वितरणमा भएको सफलताले उहाँलाई ऊर्जा मिलेको रहेछ। उहाँले भन्नुभयो– 'अभिव्यक्तिको पहिलो अंक प्रकाशित भएको केही दिनपछि नै विराटनगरमा कवि-नेता केदारमान व्यथितको नेतृत्वमा 'साहित्य संस्थान'द्वारा आयोजित राष्टव्यापी साहित्य सेमिनार सम्पन्न भएको थियो । त्यसमा म पनि आमन्त्रित थिएँ । त्यहाँ जाँदा अभिव्यक्तिको ठूलै भारी बोकेर गएँ । भेला भएका साहित्यकारहरूमा विभिन्न जिल्लाका स्कुल कलेजमा नेपाली पढाउने गुरुहरू लगायत् अधिराज्यका साठी-सत्तरी जिल्लाका साहित्यकारहरूको प्रतिनिधित्व थियो । त्यसबाहेक, भारतका सिलिगुडी, दार्जीलिड, कालिम्पोंङ, डुवर्स, देहरादून, सिक्किम, असम आदिका साहित्यकारहरूको पनि उल्लेखनीय उपस्थिति थियो । त्यहाँ मैले अभिव्यक्ति बेस्सरी बाडें । सेमिनारका सहभागीहरू मार्फत् अभिव्यक्ति अधिराज्यभरि त फैलियो फैलियो, भारतका उक्त नेपाली भाषाभाषी क्षेत्रमा पनि फैलियो ।'

त्यसपछि अभिव्यक्तिलाई देश तथा विदेशबाट रचनाहरू आइरहनाले कहिल्यै रचनाहरूको कमी नभएको र विशेषाङ्कै ढङ्गमा सबै अङ्कहरू प्रकाशित भैरहेका कुरा उहाँ सगर्व बताउनुहुन्छ ।

आफ्ना प्रकाशित सबै अङ्कहरूलाई बाइन्ड गरेर राख्नु भएका शर्माजीसँग सबै अङ्कहरू सुरक्षित रहेछन् । पहिलो अङ्कको आवरण चित्र कलाकारबाटै बनाए पनि त्यसमा आफैले चिन्हहरू थपेकोमा कलाकर असन्तुष्ट भएको चर्चा र गुनासो उहाँले व्यक्त गर्नु भयो । पहिलो अङ्कमा पारिजात, शङ्कर लामिछाने, भीमनिधि तिवारी, केदारमान व्यथित, भूपि शेरचन, नारायणबहादुर सिंह, वासु रिमाल यात्री, जगदीश घिमिरे, सुशीला थापा, विमल राल्फा, नीर विक्रम प्यासी, सिर्जना भट्ट, नर्मन मेलर, एभ्तु सेन्को, ज्याजेन, सोल्भे नित्सिनका कथाको अनुवाद छापिएको रहेछ । हाँस्य स्तम्भमा बल्ल थाहा भो, साहित्यकारको छेडखानी र 'इ-याल'-'झ्याल' को व्यङ्ग्य चित्र छापिएको रहेछ । यसले कुन 'झ' प्रयोग गर्ने भन्ने बारे साहित्यिक क्षेत्रमा त्यतिबेला भएका विवादलाई देखाएको रहेछ ।

पहिलै अङ्कमा देश तथा विदेशका ख्यातिप्राप्त लेखकहरूका रचना प्रकाशित गर्नाले र त्यसको समुचित वितरण हुनाले सम्पादकलाई उत्साह र गौरव एकैचोटि प्राप्त भएको रहेछ । पहिलो पत्रिकालाई रचना माग्न

जाँदा पारिश्रमिकका कुरा गर्ने मोहन कोइराला जस्ता क्लिष्ट कवि, ईश्वर वल्लभजस्ताका रचनाहरू आफूले कहिल्यै छाप्तै नछापेको कुरा पनि शर्माजी सगौरव बताउनु हुन्छ ।

आफूले भेटे र पाएसम्म मोफसलका लेखकहरूलाई महत्व दिएर र चनाहरू प्रकाशित गर्ने गरेको शर्माजीको भनाइ छ । उहाँ भन्नुहुन्छ, 'ओ लाङचुङदेखि महेन्द्रनगरसम्मका लेखकहरूलाई मैले समेटेको छु । अन्तका नपाए मात्र काठमाण्डौंका नाम चलेका लेखकहरूका छानेर रचनाहरू प्रकाशित गर्ने गरेको छु ।'

पत्रिकाको खाली ठाउँमा नेपालकै नयाँ, पुराना स्रष्टाका घतलाग्दा उक्तिहरू छापिएका रहेछन् । सुरूका ५-७ अङ्कसम्म व्यङ्ग्य चित्र छापिए पनि पछि कलाकारको सरल उपलब्धता नभएपछि छाडिएको रहेछ । यस्तै राजा, महाराजाका घत लाग्दा उक्तिहरू पनि पहिले राखिए पनि अहिले छाडिएको रहेछ । राम्रो केही रचना वा अंशहरू अन्यत्रबाट साभार गर्ने पनि गरिएको रहेछ । कवि तथा साहित्यकारका घत लाग्दा कुराहरूलाई चाहिँ निरन्तरता दिइएको रहेछ । महिनालाई, मासिक भने झैं ऋतुलाई कहने शब्दको खोजी गर्दा धनबज्र बज्राचार्यले 'आर्तव' भनिन्छ भनेर सुझाएका रहेछन् । उनी साँच्चिकै पुस्तकालयमा पढिरहने अध्ययनशील व्यक्ति रहेको, ज्ञानका भण्डार भएकाले आफूले उनलाई 'नेवार' भए पनि गुरु मानेको शर्माजीको भनाइ रह्यो । यस्तै आफू जान्ने हूँ भन्ने ब्राह्मण परिवारको सदस्य, बनारसमा पढे को भए पनि धनबज्र बज्राचार्यलाई जस्तै माधवलाल कर्माचार्य र साझा प्रकाशनका चिमकाजी श्रेष्ठलाई पनि गुरु मानेको रोचक प्रसङ्ग र घटनाहरू पनि उहाँसँग सुरक्षित रहेछन् । जो सुन्नेका लागि प्रेरणास्पद हुनेछन् ।

ऋतु अनुसार नै केही अङ्कहरू प्रकाशित भए पनि चैत्र र वैशाखको वसन्त ऋतु एकै वर्षमा नपर्ने हुनाले ऋतुअनुसार 'आर्तव' नामले अङ्कहरू प्रकाशित हुन छाडेछन् ।

विशेषाङ्क बारे उहाँको स्वीकारोक्ति छ, 'मेरा सबै अङ्क विशेषाङ्क सर हकै बनाउने मेरो प्रयास हो तर सकेको छैन । केही स्मृति अङ्कहरू छन् । ती हुन्- हरिभक्त कटुवाल स्मृति अङ्क, साम्बभक्त सुवेदी, स्मृति अङ्क, शरद शाह स्मृति अङ्क, जगदीश घिमिरे स्मृति अङ्क, आदि । दरवारको भित्रिया, खुफिया मानिने शरदचन्द्रका बारे उहाँ भन्नुहुन्छ, 'उनी राजावादी थिए । राजा मान्थे तर दिलका सफा थिए । मेरा अभिन्न मित्र थिए । उनलाई मैले नै साहित्यमा ल्याएँ ।'

दीर्घकालसम्म 'अभिव्यक्ति' साहित्यिक पत्रिकासँग जोडिएका नगेन्द्रराज शर्मा र अभिव्यक्ति एक अर्काका परिपूरक पर्यायवाची शब्दजस्ता देखिन्छन् । नितान्त पारिवारिक पृष्ठभूमिमा हुर्किएको यो विरुवाले आधा शताब्दीसम्म एउटै छहारी पाउनु सौभाग्यको कुरा हो । उहाँले आफूसँगै आफ्ना छोराहरूलाई पनि अनुयायी बनाउनु भएको छ । यस्ता दीर्घतपसीले आफ्नो निवासलाई

‘अभिव्यक्ति परिसर’ को नाम दिनु र बेलावखत ‘अभिव्यक्ति साहित्यिक भेला’ गराउनु पनि उहाँको अभिव्यक्तिप्रतिको अनुराग हो । हुनत उहाँको व्यक्तित्वका विविध पाटाहरू छन् । तिनीहरूलाई हामी निम्नानुसार अध्ययन गर्न सक्छौं, जस्तो :-

१.साहित्यिक पत्रकार : अभिव्यक्तिलाई वि.सं. २०२७ सालदेखि २०७५ सालसम्म अर्थात् झण्डै ५० वर्षको वयस्क उमेरमा पुऱ्याएर २००औं अङ्कमा पुऱ्याउन सक्नुले उहाँ सफल साहित्यिक पत्रकारको उच्च सूचीमा पर्नुहुन्छ । देशमा साहित्यिक पत्रकारिताको क्षेत्रमा राखिएका सबै पुरस्कारहरू उहाँले प्राप्त गरिसक्नु भएको कुरा उहाँ सगर्व सुनाउनुहुन्छ । अब प्राप्त गर्न केही बाँकी छैन । यस क्षेत्रमा लाग्ने सबैका लागि उहाँ प्रेरणाका स्रोत हुनुहुन्छ । अग्रजप्रति सम्मान र अनुजप्रति उत्साह थप्ने काममा उहाँ कहिल्यै कञ्जुसी गर्नुहुन्न । हुनत उहाँको व्यक्तित्वका अन्य पाटाहरू पनि छन् तर साहित्यिक पत्रकारिताले उहाँका अन्य पाटाहरू ओझेलमा पारेका छन् । अर्थात् यही उच्च पाटाले अरू व्यक्तित्वलाई किचेको छ । छायाँमा पारेको छ ।

२. साहित्यकार : साहित्यको आख्यानको क्षेत्रमा उहाँले कलम चलाउनु भएको छ । उहाँका दुई उपन्यास र दुई कथा सङ्ग्रहहरू प्रकाशित छन् । ती हुन्- महापुरूष, उपन्यास, २०२८, दिवास्वप्न, उपन्यास, २०२९, पीपलको बोटमुनि, कथासङ्ग्रह, २०३९, एकान्तका आफन्तहरू, कथासङ्ग्रह, २०५५ । यी बाहेक केही कविता, निबन्ध, लेख, रचनाहरू पत्र-पत्रिकामा प्रकाशित भएका पाइन्छन् । अन्य लेखकहरूका दुई दर्जन साहित्यिक पुस्तकहरू पनि उहाँले प्रकाशित गर्नु भएको छ ।

३. साहित्यिक संगठक : विभिन्न समयावसधमा– साहित्यिक पत्रिकार संघ, (२०२९) नेपाल प्रज्ञा प्रतिष्ठान, सिर्जनशील साहित्यिक समाज, अन्तर्राष्ट्रिय पेनको नेपाल शाखा, युगकवि सिद्धिचरण प्रतिष्ठान, गम्की वसुन्धरा पुरस्कार प्रतिष्ठान, ईश्वर वल्लभ प्रज्ञा निकेतन, अस्वीकृत विचार साहित्य पुरस्कार गुठी जस्ता दर्जनौं साहित्यिक संस्थामा संलग्न भएर एक कुशल साहित्यिक संगठकरूपमा विभिन्न पदमा रहेर उहाँले कुशल तथा अभिभावकीय भूमिका निर्वाह गरिसक्नु भएको छ । हाल उहाँ नेपाल साहित्यिक पत्रिकार संघको सभापति हुनुहुन्छ ।

४. अनुसन्धानकर्ता : वि.सं. २०२७ सालदेखि २०४८ सालसम्म ‘सेडा’ (आर्थिक विकास तथा प्रशासन अनुसन्धान केन्द्र) मा रहेर उहाँले रिसर्च पर्सनका रूपमा काम गर्नु भएको छ । पछि यो संस्था त्रि.वि.मा समायोजन भयो र उहाँलाई सहायक प्राध्यापक सरहको सुविधा प्रदान गरिएको थियो ।

लामो समयसम्म यस्तो अनुसन्धान केन्द्रमा रहेर विद्वत् वर्गको सर-सङ्गत, अनुभवले उहाँलाई झन् खारेको देखिन्छ ।

५. व्यक्तिगत गुण : यी विविध पाटाहरूबाहेक उहाँमा रहेको शालीनता

विनयशीलता, भद्रता, काम र कर्मप्रतिको विश्वास, लगनशीलता, कर्तव्य परायणता, प्रौढताभित्रको युवा जोश र जाँगर आदिले हामीलाई पनि ऊर्जा प्रदान गर्दछ । यी सद्‌गुणहरूको जति प्रशंसा गरे पनि कमी नै हुन्छ ।

अन्त्यमा 'अभिव्यक्ति साहित्यिक द्वैमासिक' पत्रिकाले जुन इतिहास निर्माण गर्न सक्यो, जे-जति साहित्यकारहरूलाई नेपाली साहित्यको भण्डारमा स्थापित गर्न सक्यो त्यसलाई कम महत्वको ठानिने छैन । यसका सेवक नगेन्द्रराज शर्मा हाम्रो लागि अनुकरणीय व्यक्तित्व ठहर्छन् । उनले देखाएको बाटोमा हिँड्न, उनका पदचाप पछ्याउन उनका सन्तानहरूले नछाडून्, उनले रोपेको वटवृक्षको छहारीले नेपाली साहित्यिक क्षेत्र उन्नत र उर्वर भै रहोस् । यसको निरन्तरताको हार्दिक शुभेच्छा ।

२०६५।१०।१६

ᏅᏅ

## १५७/धुनी गफ, मन्थली(२०६८ ९ २६

जगदीश घिमिरे : अब अमला नानीका अलि कमला गजल सुनौं ।
अमला अधिकारी : छैनन् बाबु, निरज आज ज्ञानु भए चल्छ
जिन्दगीको गजल दीयो यसरी नै बल्छ

जगदीश घिमिरे : यसमा वाकरजीको भनाइ पनि गजलमै जाओस्

ज्ञानुवाकर : लाग्छ डर त्रिपुराको सत्य धरोधर्म
प्रभा, तृष्णा वरिपरि मान्दैछु म सर्म
अमला अधिकारी : बाउ, काका चारैतिर छैन मलाई पीर
मानेकाछौं गजलमा ज्ञानुलाई बीर
ज्ञानुवाकर : के के भन्छ दुनियाँले ? दिन्छ ताली गाली
भन्छु म त आफूलाई गजलको माली

कमल दीक्षित : पख्नुस् पख्नुस् एक शेर म पनि भन्छु –
यायावर जिन्दगी भो कर्म चरैवेति
राम्रो भयो मन्थलीमा हाम्रो 'मकै खेती'

जगदिश घिमिरे : तीन लाल जन्माउने रामेछाप हाम्रो
बनाउँछ तासेसले रामेछाप राम्रो
न.रा.श. : हुने थियो अझै रोचक आएनछ गोपी
बोलाएमा अर्कोसाल आउँछ मौका छोपी ।

ᏅᏅ

# हार्दिक शुभकामना

आदरणीय नगेन्द्रराज शर्माज्यू
सम्पादक"अभिव्यक्ति'' आर्तव प्रकाशन

नेपाली वाङ्मयका जति पनि साहित्यका मूर्धन्यदेखि नवप्रतिभा छन् ती सवलाई साहित्यिक पत्र-पत्रिकाले ठाउँ दिएर, नाउँ दिएर नै स्थापित गराएका हुन् । वाङ्मयको विकासका लागि साहित्यिक पत्र-पत्रिकाको ठूलो योगदान रहिआएको छ ।

यसै क्रममा तपाईंको सम्पादन र प्रकाशनमा प्रकाशित 'अभिव्यक्ति'को दुईसयौं अङ्क प्रकाशन हुनलागेकोमा नेपाली वाङ्मयका सवैले मुक्त कण्ठले वधाई ज्ञापन गर्दै जयजयकार मनाउनु पर्छ, हर्ष वढाईं गर्नुपर्छ भन्ने मलाई लाग्दछ । व्यक्तिगत रूपमा म आफू 'अभिव्यक्ति' र 'अभिव्यक्ति'का व्यक्ति अर्थात् तपाईं सम्पादक नगेन्द्रराज शर्मासँग निकट मात्र होइन निकटतम् सम्वन्ध भएको व्यक्ति हुँ भन्ने मलाई लाग्दछ । मैले धेरै पटक धेरै ठाउँमा भनेको यौटा स्वीकारोक्ति आज यो अवसरमा पुनः दोहोऱ्याउन चाहन्छु, कथाकारका रूपमा मलाई नेपाली साहित्यमा स्थापित गराउन 'अभिव्यक्ति'को अहम् भूमिका छ। मेरो २०४० सालमा साझा प्रकाशनवाट प्रकाशित पहिलो कथा सङ्ग्रह 'सुतेको समुद्र'को शिर्षक कथा 'अभिव्यक्ति'मै प्रकाशित भएको थियो। त्यस्तै धेरै साहित्यकारलाई स्थापित गर्न यो पत्रिकाले गरेको योगदान अमूल्य छ ।

अमेरिकामा केही साहित्यिक गतिविधि गर्नका लागि सन् २०१४ मा स्थापित 'अमेरिका नेपाल साहित्य प्रतिष्ठान'को संस्थापक अध्यक्षका साथै प्रिय 'अभिव्यक्ति'को लेखकको नाताले २००औं अङ्कको सफलताको साथै पत्रिकाको दीर्घ जीवनको कामनागर्दछु ।

**गोविन्दगिरी प्रेरणा**
अध्यक्ष
अमेरिका नेपाल साहित्य प्रतिष्ठान

०७५ चैत ७

ঙ্গঙ্গ

# साहित्यिक धरोहर नगेन्द्र दाइ र अभिव्यक्तिको ...यायावरीय सवाइ

चेतनाथ कणेल 'हरित'
गुल्मी, हालः नयाँबानेश्वर, शङ्खमूल, काठमाडौं

बयासीको उकालो लागेका युवावयका नगेन्द्रराज शर्मा दाइलाई देख्दा एकपटक सबैमा जोश थपिन्छ । युवाले गर्नुपर्ने के हो ? कस्तोलाई युवा भन्ने ? यी यावत् प्रश्नको जवाफ थाहा पाउन नगेन्द्र दाइसँग केही दिन संगत गरे पुग्छ । अथक र अनुकरणीय युवाजोश उहाँमा निरन्तर छ । जुन जोशको फाइदा नेपाली साहित्यिक धर्ती र साहित्यको उर्वर फाँटले पाइरहेको छ ।

म उहाँसँग केही वर्षदेखि सान्निध्यमा छु । सन्दर्भ जुटाएको हो नेपाल स्रष्टा समाजले । अझ हाम्रो सम्बन्धको बान्की मिलाउनमा सहजीकरणको भूमिका छ नेपाल स्रष्टा समाजका निवर्तमान अध्यक्ष तथा हालका संरक्षक वरिष्ठ कवि पवन आलोक दाइ र प्रमुख सल्लाहकार परशु प्रधान दाइको । हामी केही वर्षदेखि सँगसँगै भएकै कारण हामीबीचको सम्बन्ध प्रगाढ छ । मेरा लागि उहाँहरू असल अग्रज, प्रेरक व्यक्तित्व, घच्घच्याउने कलमयात्री !

मेरो हातमा कलम हुनु भनेको उहाँहरूका लागि पनि सन्तुष्टिको विषय । आजभोलि म पनि उहाँहरूको साहित्यिक सामिप्यतामा रमाउँछु । आजकाल बाहिरफेर हिँड्ने, सहयात्रा गर्ने काममा नगेन्द्र दाइको सक्रियता जारी छ । परशु दाइ भने स्वास्थ्यका कारण हिँड्ने कम गर्नुहुन्छ, सभा-समारोहमा पनि जानैपर्ने ठाउँमा बाहेक जाने काम कमै गर्नुहुन्छ । तर नगेन्द्र दाइको घुमघाम घटेको छैन । खानपिन र रमाइलो घटेको छैन । उहाँहरूसँगको भेटले एक अतिरिक्त ऊर्जा मिल्छ, अलिकति अभिव्यक्तिमय खुराक भेटिन्छ । पछिल्लो समय म विद्यावारिधिको सिलसिलामा अलिक बढी नै व्यस्त छु, तथापि समयले अलिकति पनि भ्याएसम्म उहाँहरूको नजिकमा रमाउन मन पर्छ । मलाई किन किन सृजनक्षेत्रमा अभिभावकत्व पाएको अनुभूत हुन्छ । उहाँहरूको धत् र गाली पनि मेरा लागि ताली बन्छ, उहाँहरूको पृष्टपोषणमा सधैँ थप ऊर्जा पाउँछु म ।

नगेन्द्र दाइ आजका मेरो 'हिरो' । उहाँकै कुरा गर्छु । उहाँले सम्पादन र प्रकाशन गर्दै आएको 'अभिव्यक्ति' राष्ट्रिय साहित्यिक द्वैमासिकले २००औं अंकको यात्रा गर्ने अवसर पायो । यो चानचुने कुरा होइन । अझ यतिबेला नगेन्द्र दाइ 'नेपाल साहित्यिक पत्रकार संघ'को अध्यक्ष पनि हुनुहुन्छ । अध्यक्षको मार्गमा अहिले थुप्रै साहित्यिक पत्रकार र सम्पादकहरू यात्रारत छन् । अभिव्यक्ति पत्रिकाजस्तै कसरी नियमित निकाल्ने, र कसरी २००औं श्रृङ्खला वा अझ माथि-माथि पुग्ने भन्ने सपना हरेक सम्पादक र प्रकाशकले

राखिरहेका छन् नेपालमा । निजी वा गैरसरकारी क्षेत्रबाट यस्तो काम हुनु भनेको एउटा 'हर्कुलियन एक्सन' नै हो । थाल्न सजिलो, निरन्तरता दिन महासागर ! यो महासागरमा पौडी खेल्दै, रमाउँदै सफलता हासिल गर्दै अगाडि बढ्नु भनेको नेपालमा फलामका चिउरा चपाउँदै बाटो काट्नुजस्तै हो । फलाम पनि चपाउनु, बाटो पनि हिँड्नु ! कति कठिन ! त्यही कठिन यात्राका एक सफल यात्री नगेन्द्र दाइ !

आजभन्दा बीस वर्षअघि म पनि धनकुटाको पाख्रीबासमा कार्यरत थिएँ । त्यहाँबाट 'अरुण' साहित्यिक पत्रिका निकाल्थ्यौं । जसको प्रधानसम्पादकत्वको भूमिका मैले पनि पूरा गरेँ । कुल ५ वटा अङ्क निकाल्यौं । वार्षिक साहित्यिक प्रकाशनको रूपमा पूर्वाञ्चलमा राम्रै स्थान जमाउन सफल हुँदै थियो । तर पछि 'पाख्रीबास कृषि केन्द्र' नामक बेलायती परियोजना नेपाल सरकारलाई (नार्कलाई) हस्तान्तरण भयो । त्यहाँ रहेका कर्मचारी लाखापाखा लाग्यौं । म पनि काठमाडौंतिर आएँ । त्यहाँ गठित साहित्यिक समिति त्यसै सेलायो । 'अरुण' पनि त्यसकै मारमा पऱ्यो । 'अरुण'का ती ५ वटा अंक पनि अहिले पाख्रीबासको साहित्यिक इतिहास केलाउनका लागि अध्ययनयोग्य विषयवस्तु भएका छन् । कतिपयले त 'अरुणमा एमएको थेसिस नै तयार पार्न चाहेका छन् भनेर सुनें । 'कर्मण्ये वाधिकारस्ते मा फलेषु कदाचन' (कर्ममा तिम्रो अधिकार छ– फलमा होइन) भनेको सायद त्यही हो ।

'अरुण'को प्रकाशनमा पनि हामीहरू खासमा मधुपर्क, गरिमा, अभिव्यक्ति, रचना, शारदा, रुपरेखाजस्ता काठमाडौंबाट निस्कने स्थापित साहित्यिक पत्रिकाहरूबाट प्रेरित थियौं भन्दा फरक पर्दैन । कसरी निकाल्ने भन्ने कुरामा पनि हाम्रा लागि ती पत्रिका आरम्भमा 'स्टाइल-गाइड' बनेका थिए प्रत्यक्ष वा परोक्षरूपमा । म, पवन आलोक, तोया गौतम, मुकुन्द कट्टेल, लीला श्रेष्ठ आदि प्रत्यक्ष जोडिएका थियौं 'अरुण' पत्रिका प्रकाशनसँग । गोजीबाट पैसा उठाएर र मनकारीहरूसँग विज्ञापन शुभकामना मागेर पत्रिका छाप्ने त्यो पच्चीस वर्षअघिको पहल सम्झँदा अहिले पनि आनन्द आउँछ । नगेन्द्र दाइलाई 'अभिव्यक्ति'को २००औं अंकले कति आनन्द दिँदै होला ? म कल्पनासम्म गर्न सक्छु । यथार्थमा भोग्ने त सायद उहाँमात्रै । उहाँको परिवारमात्रै ।

काठमाडौं आएपछि नेपाल स्रष्टा समाजसँग जोडियौं । फेरि साहित्यिक पत्रिका निकाल्ने हुटहुटीले छोयो । न्युजलेटर (बुलेटिन) को रूपमा निस्कने 'स्रष्टा दर्पण'लाई प्रत्येक ६-६ महिनामा निकाल्ने गरी आँटियो । न्युजलेटरको अवधारणा तत्कालीन अध्यक्ष चन्द्रप्रसाद भट्टराइले ल्याउनुभयो । प्रत्येक ३, ३ महिनामा निकाल्यौं । करिब ३ वर्ष न्युजलेटरकै स्वरूपमा निकालेपछि विस्तारै साहित्यिक रचना थप्दै, बुलेटिनको आकार किताबजस्तो साइजमा ल्याउँदै 'स्रष्टा दर्पण' साहित्यिक प्रकाशन भनेर नियमितता दिन थालियो । चन्द्रप्रसाद भट्टराई, पवन आलोक, चेतनाथ कणेल 'हरित', विधान आचार्य,

पुष्पा खनाल, रोशन थापा 'नीरव', रमेशजंग थापा, नगेन्द्रराज रेग्मी आदि हुँदै थामिएको 'स्रष्टा दर्पण' केही वर्षदेखि नियमित छ। वर्षको २ वटा अंक निकाल्छौं। नेपाल स्रष्टा समाजको कार्यसमिति सम्पादन र प्रकाशनको विशेष जिम्मेवारीमा रहने हुँदा विभिन्न समयमा सम्पादकीय नेतृत्व गर्ने व्यक्ति फेरिए पनि 'स्रष्टा दर्पण'को प्रकाशन निरन्तर छ। यी पङ्क्ति कोर्दासम्म हामी २४ वटा अंक निकाल्न सफल भएका छौं। २५औं अंकको तयारीमा विशेष सम्पादकीय जिम्मेवारी डा. पुष्करराज भट्टलाई दिइएको छ। हालका अध्यक्ष विधान आचार्य प्रधानसम्पादक रहिसक्नुभएकोले उहाँको नेतृत्वमा सम्पादकीय टिम झन् बलियो बनेको छ। यो पत्रिका सम्पादन र प्रकाशनमा पनि हाम्रा लागि मधुपर्क, गरिमा (अब गरिमा नियमित होला आशा गरौं), अभिव्यक्ति, रचना, समकालीन साहित्य, शारदा आदिजस्ता अब्बल साहित्यिक पत्रिकाको उदाहरणले ऊर्जा भर्छ।

सीमित शक्ति र स्रोतसँग पौंठेजोरी खेल्दै नेपाली साहित्य विस्तारमा अहम् भूमिका निर्वाह गर्दै आएका दायित्व, जनमत, कल्पतरु, शब्दसंयोजन, शारदा, भानु, शब्दाङ्कुर, बैजयन्ती, कौशिकी, शिवपुरी सन्देश, अन्तर्बोध, तन्नेरी, नयाँ सत्मार्ग, नवप्रज्ञापन, दोभान, नारीस्वर, भृकुटी, हाम्रो मातृभूमि, रजस्थल, रूपायन, लहरा, बनिता, शाल्मलि, हाम्रो पुरुषार्थ, हाम्रो सिर्जना, हिमाली गुराँस, ज्ञानगुनका कुरा आदि साहित्यिक पत्रिकाको भूमिका पनि यतिबेला म खुब सम्झिरहेको छु। जो सबै नगेन्द्रराज शर्मा दाइ, रोचक घिमिरे दाइ र स्व. भवानी घिमिरेलगायतका साहित्यिक योद्धाको बाटोमा हिँड्ने प्रयास गर्दैछन्। यी कुरा भने पनि नभने पनि हामीमाझ छर्लङ्ग छन् भन्छु म। अग्रजका सकारात्मक प्रभावबाटै सृजनामा निरन्तरता आउने हो।

काठमाडौंमा हुने साहित्यिक भेलाका अवसर होऊन् वा देशदेशावर घुम्ने क्षणहरू, वा 'विहीवारे अभिव्यक्ति भेटघाट' होउन् नगेन्द्र दाइसँगका क्षण र पलहरू विशेष बन्छन्। साहित्यिक इतिहासको पाप्रोमात्र कोट्टिनुपर्छ, नगेन्द्र दाइ 'इन्साइक्लोपेडिया' भएर प्रस्तुत भइहाल्नुहुन्छ। मिठा मिठा अनुभव र कुरा सुन्दा समय गएको पत्तै हुँदैन। अनुभव अरूसँग पनि हुन सक्छन्, तर उहाँको अभिव्यक्तिकला छ, सुनाउने बानी छ, बोल्न मन पराउने गुण छ, सुनाउन चाहने इच्छा छ। विस्तारै कुरा गरेर रात पनि कटाउन सक्ने ऊर्जा छ। हामीले किताबमा पढेका मूर्धन्य साहित्यिक स्रष्टाहरूका एक एक कथा र अनुभव छन् उहाँसँगका प्रत्यक्ष सान्निध्य र व्यवहारका। कसले के खान रुचाउँथ्यो, को कहाँ कहाँ गएर चाकडी गर्न माहिर थियो, कसले कसका लागि लेखिदिने गर्थ्यो, कसले अलिकति मापसे गरेपछि बेहोसै हुने व्यवहार देखाउँथ्यो, कसले धन भएर पनि सधैं दरिद्रता देखाउँथ्यो, कसले समूहमा खाँदा कहिल्यै पनि एक पैसा गोजीबाट निकाल्दैनथ्यो, कसले सधैं पाहुना बन्न हुरुक्क बन्ने तर अरूलाई आफ्नो घरमा एकदिन पनि पाहुना हुन बो लाउँदैनथ्यो, कसले लेखाइमा कत्ति पनि ध्यान नदिने तर छपाइमा सधैं दबाब

दिने गर्थ्यो, कसले मलिा साहित्यकारसँग लठ्ठ पर्दै हिँड्ने बानी देखाउँथ्यो, को पदका लागि … जे पनि समर्पण गर्न पछि पर्दैनथ्यो, कसले साहित्यिक चोरीका आरोप के के कारणले खप्नुपरेको थियो र तिनका प्रतिक्रिया के थिए, आदि आदि प्रसंग, सन्दर्भ र नबिर्सने कथाका भकारी छन् नगेन्द्र दाइसँग । ती भकारी कहिल्यै पनि रित्तिदैंनन् । बसउठका क्रममा प्रसङ्ग ल्याउनुमात्र पर्छ दाइको 'इन्साक्लोपेडिया' खुल्छ । हामी त्यसै लठ्ठ !

अभिव्यक्तिको दर : यायावर !

'अभिव्यक्ति' पत्रिकामा म दुई कुरा सबैभन्दा पहिला हेर्छु । पहिलो सम्पादकीय, अनि यायावरको 'जमघटहरूबाट' । यी दुई स्तम्भले मलाई छाप पारेका छन् । यायावर भनेको घुमन्ते । दाइ खुब घुम्नुहुन्छ, विशिष्ट भेलाहरूमा जानुहुन्छ । त्यहाँबाट रमाइला प्रसङ्ग दिमागमा 'सेभ' गर्नुहुन्छ (किनकि तत्काले टिपेको कहिल्यै देखिँदैन) । र, बडो रसिक पारामा 'अभिव्यक्ति'का हरेक अंकमा प्रकाशन गर्नुहुन्छ । यो यायावरीय कुराकानी अर्थात् यथार्थ 'सवाइ' किन किन मलाई बढी नै मन पर्छ । साहित्यकारहरूका आपसी ठट्ठा, छेडपेचका रमाइला प्रसंग पस्किने यो कुनो मेरा लागि एउटा रसिक कुनो बनेको छ, 'अभिव्यक्ति'को टेबलमा भान्साको खुराकिलो दुनो बनेको छ । दुनोमा स्वादिलो तीजीय 'दर' राखेजस्तो लाग्छ मलाई ।

अब त लाग्छ, 'अभिव्यक्ति' नेपाली साहित्यको एउटा सशक्त र मूर्त जिउँदो इतिहास हो । यो मज्जाले बाँचेको छ । साहस र गर्वका साथ बाँचेको छ । गहनता र प्रभावका साथ बाँचेको छ । अक्षयकोषको अवधारणा ल्याएर नगेन्द्र दाइले आफ्नो शेषपछि पनि अभिव्यक्ति बाँच्ने वातावरण तयार पारिसक्नुभएको छ ।

दाइका छोराहरूको पनि यसले राम्रो माया र आधार पाएको छ । सदस्यहरू र पाठकको सम्मान, सहयोग र प्रशंसा पनि पाएकै छ । नगेन्द्र दाइ र 'अभिव्यक्ति' अब पर्याय बनेका छन् । अर्थात् 'अभिव्यक्ति' भनेकै नगेन्द्र दाइ, नगेन्द्र दाइ भनेकै 'अभिव्यक्ति' ! चिसो भनेकै … भनेजस्तो !!

अभिव्यक्तिले २००औं अङ्क बाँचेर देखाएको उदाहरण नेपाली साहित्यका लागि एउटा असल मानक बनेको छ । २००, ४००, ६००, ८००, १,००० … … यो यसैगरी जुगान्त बाँच्नेछ । नेपाली साहित्यको बहुखुराकी सच्चा अभिव्यक्ति बन्नेछ । यात्रा जारी रहोस् । हार्दिक शुभकामना ! हार्दिक बधाइ नगेन्द्र दाइ र समस्त 'अभिव्यक्ति' एवम् घिमिरे परिवारमा !!

इमेल : chetnathkanel@gmail.com
२०७५ चैत ३ गते, आइतवार



# बधाई
## ध्रुवचन्द्र गौतम

नगेन्द्रजी,

बधाई ! बधाई !! बधाई !!!

र

धेरै धेरै धन्यवाद ।

'अभिव्यक्ति' प्रकाशन/सम्पादनको (२०२६-२०७६) ५०औं वर्षप्रवेशका लागि पहिलो बधाई ।

'अभिव्यक्ति' को २००औं भव्य विशेषाङ्कका लागि दोस्रो बधाई ।

तपाईंको सकृय र सार्थक जीवनको ८२औं वर्ष प्रवेशका लागि तेस्रो बधाई ।

र

मलाई लेखकका रूपमा चिनाउन 'अभिव्यक्ति'ले निर्वाह गरेको भूमिकाका लागि धेरै धेरै धन्यवाद ।

'अभिव्यक्ति'को निरन्तरता अनि तपाईंको सुस्वास्थ्य र दीर्घायुको कामना गर्दछु ।

ଔଔ

# शुभकामना
## मातृका पोखरेल

अभिव्यक्ति आफैंमा एउटा पाठशाला हो । यसको माध्यमबाट पक्कै पनि धेरै स्रष्टाहरूले  साहित्यको राष्ट्रिय मूलधारमा आफूलाई समाहित गराए ।  एकजना व्यक्तिको प्रयासले एउटा पाठशाला चलाउनु पक्कै सजिलो काम होइन । धेरै थोरैले मात्र इतिहासमा यस्तो महान् कार्य गर्न सक्छन् । अभिव्यक्तिका माध्यमबाट आदरणीय नगेन्द्रराज शर्माले आफ्नो जीवनलाई साँच्चै सार्थक बनाउनु भएको छ ।

मानिसहरूका साधना गर्ने फरकफरक तरिका हुन्छन् । साधना विभिन्न उद्देश्य प्राप्तिका लागि गरिन्छ । व्यक्तिगत फाइदाभन्दा माथि उठेर सोच्नेले मात्र यो काम गर्न सक्छन् । अभिव्यक्तिजस्तो स्तरीय साहित्यिक पत्रिकाले दुईसय पूर्णाङ्कको यात्रा पूरा गर्न सामान्य साधनाले सम्भव हुँदैन ।

साधक नगेन्द्रराज शर्मालाई म हृदयदेखि नै सम्मान व्यक्त गर्दछु ।

ଔଔ

# उकालो लागेको नै हो

ध्रुव सापकोटा

अभिव्यक्ति आफ्नै पत्रिका हो । यो भाव यसै आएको होइन । नगेन्द्रजीसँगको निकटताको कारण यो पत्रिका आफ्नो भयो । यो पत्रिकामा मैले आफ्ना सबै किसिमका रचना छपाउँने मौका पाएँ । पुस्तक समीक्षा गर्ने मौका पाएँ । समीक्षा गर्दा मेरा आग्रह हुने नै भए । मेरो आग्रहलाई उहाँले स्थान दिनु भयो । यथावत छाप्नु भयो । उहाँले निर्देशन गर्नु भएन । स्वतन्त्र छाड्नु भयो । मलाई फुक्का छोड्दा उहाँलाई हुने नोक्सानीको हिसाब गर्नु भएन । अभिव्यक्ति स्वतन्त्रताको सम्मान गर्नु भयो । मेरा लेखाइ अभिव्यक्तिमा छापिएका छन् । यात्रा संस्मरण छापिएका छन् । आफ्ना कुरा मजासँग अभिव्यक्त गर्न पाएको छु । लामो छोटो केही सोच्नु परेन । हिसाब गर्छु । कथाहरू बढी छापिएका छन् । धेरै समय कथा छापिएन भने उहाँ आफै भन्नु हुन्छ– 'धेरै भयो तिमीले कथा दिएका छैनौ, देऊ ।' आफ्नो भन्नलाई यो नै पर्याप्त छ ।

पुराना कुरा सम्झनामा आउँछन् । सत्ताइस साल तिर नै हो । हामीहरू नयाँसडकको पीपलबोटमा जम्मा हुन्थ्यौं । बेलुका पाँच बजेपछि अफिस छुटेर त्यहीं गइन्थ्यो । त्यहाँ बरिष्ट कनिष्ठ सबै प्रकारका साहित्यकारसँग भेट हुन्थ्यो । जिल्लाबाट पनि साहित्यकारहरू त्यहाँ आउँथे । कुराकानी हुन्थ्यो । साहित्यिक गैर सहित्यिक सब कुरा हुन्थे । त्यो ठाउँ पनि गज्जबको थियो । त्यहाँ साहित्यकार मात्र हैन राजनीतिज्ञ पनि पुग्थे । त्यहाँ सरकारी जासुस पनि पुग्थे । सबको आ-आफ्नो समूह थियो । अलग अलग ठाउँ थियो । त्यसरी भेला हुनकसैले ठाउँ तोकिदिएको थिएन । स्वतः बनेको साहित्यिक भलाकुसारी र चिनजान गर्ने थलो । त्यो ठाउँमा सधैं गइन्थ्यो । एकदिन गइएन भने खल्लो लाग्ने । के के न महत्वपूर्ण कुरा छुटेको अनुभव हुने । भरे छुटेको केही पनि नहुने । यो मनको भ्रम मात्र थियो । त्यही ठाउमा नगेन्द्रजी हाते झोला बोकेर आउनु हुन्थ्यो । अभिव्यक्तिको नयाँ अंक बाँड्नु हुन्थ्यो । साहित्यकारहरू आफ्नो रचना दिन्थे । यो रचना आदान प्रदान गर्ने थलो पनि थियो । पीपलबोटको महत्व अब इतिहास भएको छ ।

अभिव्यक्तिको मूल्य तोकिएको छ । तर साहित्यकारलाई निशुल्क उपलब्ध गराउँदै आउनु भएको छ । कतै साहित्यिक भेला छ भने त्यहाँ पनि अभिव्यक्ति बाँड्नुहुन्छ । साहित्यकारले अभिव्यक्ति प्राप्त गरुन् र अपनत्वको अनुभव गरुन् भन्ने उहाँको भावना छ । त्यसैले त कतै जाँदा पनि अभिव्यक्ति उहाँकै साथमा हुन्छ । नगेन्द्रजीको यो शौक मान्नु पर्छ ।

दुईमहिने अभिव्यक्ति अव दुई सय अंकमा पुगेको छ । पत्रिकाले शिखर चढेकै हो । अव अभिव्यक्ति फेदीमा छैन । दुई/चार अंकमा नै नमस्कार गर्ने धेरै पत्रिका छन् । साहित्यिक पत्रिकालाई मागीखाने भाँडो बनाउँन गाह्रो छ । सेवा भावले लाग्ने मात्र टिक्छन् । नगेन्द्रजीले काँधमा राखेर अभिव्यक्तिलाई शिखर

मा पुऱ्याउनु भयो । धेरै वर्षको धैर्य र मेहनत पछि अहिले आएर स्यावासी पाउनु भएको छ । विभिन्न पुरस्कार प्राप्त गर्नु भएको छ । अभिव्यक्तिको कुशल सम्पादकको जस पाउनु भएको छ । उहाँको परिचय अभिव्यक्ति बन्न गएको छ । समाजमा साहित्यिक पत्रकारको सम्मान प्राप्त गर्नु भएको छ ।

यो उहाँको पछिल्लो परिचय हो । यसभन्दा अघि उहाँ आख्यानकार हो । उहाँका कथासङग्रहहरू र उपन्यासहरू प्रकाशित छन् । उहाँ स्थापित साहित्यकार हो । यो परिचयले अभिव्यक्ति प्रकाशन गर्न सहज भयो । धेरै साहित्यकारहरू मित्र भएका कारण रचना माग्न न त गाह्रो भयो न त प्राप्त गर्न । त्यसमाथि उहाँको सबैसँग मिलिजुली गर्ने स्वाभाव छ । कसैसँग भैरभाव छैन । अनि त के चाहियो नेपालका सबैजसो स्थापित र बरिष्ठ साहित्यकारका रचनाले अभिव्यक्तिमा ठाउँ पाएका छन् । उहाँले अनुरोध गरेपछि कसैले पनि नाइ नास्ति गर्दैनन् । अभिव्यक्तिका लागि यो ठूलो उपलब्धि हो ।

अभिव्यक्तिको अर्को कुरा पनि मलाई यहाँ भन्न मन लागेको छ । यो पत्रिकालाई उहाँले कुनै गुट उपगुटको बनाउनु भएन । कुनै पनि साहित्यकारले मेरो रचना अभिव्यक्तिमा छापिँदैन भन्ने गुनासो गर्ने ठाउँ दिनु भएको छैन । सबै गुट अभिव्यक्ति गुट । गुटको कुरा आउँदा बादको पनि कुरा आउँछ । कुनै पनि वादको पृष्ठपोषक भएन अभिव्यक्ति । विशुद्ध साहित्यिक पत्रिका बन्यो । वाद र गुटबाट टाढा । अभिव्यक्तिको चिनारी ।

समय निकै बदलियो । लेटरप्रेसमा छापिने अभिव्यक्ति अफसेटमा छापिन थाल्यो । सफा र चिल्लो कागज । प्रष्ट बुझिने अक्षर । रचना प्राप्त गर्न नगेन्द्रजीले पीपलबोट वा साहित्यिक कार्यक्रममा आउनु परेन । इमेल मार्फत स्वदेशबाट मात्र हैन विदेशबाट पनि अभिव्यक्तिका लागि रचना आउन थाले । समस्या अब छनौटको छ । समस्या स्तरियताको मात्र छ । त्यसका लागि नगेन्द्रजीको अनुभवले काम गर्दछ । यो हिसाबले गर्दा अभिव्यक्ति फराकिलो भएको छ । नगेन्द्रजी पनि ढुक्क हुनुहुन्छ ।

अरू पत्रिकामाझैं कथा, कविता, लेख निबन्ध, समीक्षा आदि छापिन्छन् अभिव्यक्तिमा । यायावरको स्तम्भ भने अरू पत्रिकाबाट भिन्न छ । अभिव्यक्तिमा नै पहिलो पटक यायावर देखा परेको हो । यो यायावर को स्तम्भ लोकप्रिय छ । पत्रिका पाउँनासाथ मान्छेको आँखा यायावरमा नै जान्छ । गजब छ ।

नगेन्द्रजीले अभिव्यक्तिलाई दुईमहिने 'सामान्य' पत्रिका भन्नुभएको छ । यो समान्य पत्रिका आज दुई सयौं अंकमा पुगेर 'असमान्य' तर्फ पाइला चलाइ रहेको छ । हामी यो कुरा भन्छौं तर नगेन्द्रजी त अझै पनि विशिष्ट भन्न चाहनुहुन्न । सामान्य नै भन्नु हुन्छ । अभिव्यक्तिलाई यहाँसम्म ल्याउनु भयो । नगेन्द्रजीलाई बधाइ छ । कुनै सुझाव र सल्लाह यो अवस्थामा दिनु पर्ला जस्तो लाग्दैन । निरंतरताको कामना गर्न भने मन लाग्छ । अनि फेरि मनले भन्छ, यो कामना त मेरो होइन उहाँको हो । उहाँको मनबाट खोसेर मैले भनेको हो । जसलाई कोश स्थापना गर्ने जोश र जागर आउँछ र काम गर्ने गर्छ त्यसलाई निरन्तरताको सल्लाह दिनु भनेको जिस्काउनु मात्र हो । ठट्टा गर्नु मात्र हो । म ठट्टा गर्न चाहन्न ।

ᏔᏔ

# अभिवादन अभिव्यक्ति

**नवराज रिजाल**
नवप्रज्ञापन साहित्यिक पत्रिका, धाटा

२००औं अङ्क प्रकाशनको सङ्घारमा आइपुगेको छ अभिव्यक्ति । नगेन्द्र दाइ हिंडिरहनु भएको छ अभिव्यक्तिको साथ । ठ्याक्कै पचास वर्ष लागेछ अभिव्यक्ति प्रकाशित हुन लागेको । दाइका पाइला थाकेका छैनन् त्यसैले उहाँ निरन्तर-निरन्तर हिंडिरहनु भएको छ । हिंड्ने नथाक्नेहरूले नै हो । गल्नेहरू हिंड्नै सक्दैनन् । त्यसकारण ती जहाँको त्यहीँ रहिरहन्छन् वर्षौं वर्षदेखि । तर नगेन्द्र दाइ र नगेन्द्र दाइहरू कहिल्यै थाक्नु भएको छैन र थाक्नु हुन्न पनि । तसर्थ उहाँहरू हिंडिरहनु भएको छ र हिंडिरहनु पनि हुनेछ । कुनै आँधी बेहरी, झरी, बादल र वर्षाले उहाँहरूलाई छेक्न सक्ने छैन, यो प्रमाणित भइसकेको छ ।

२०२७ सालदेखि निरन्तर प्रकाशित भइरहेको अभिव्यक्ति संभवतः वर्तमानमा जीवित दोस्रो साहित्यिक पत्रिका हो । पहिलोको स्थानमा २०१८ देखिको रचना रहेको छ । हामी साहित्यिक पत्रिका निकालिरहेका छौं । किन ? यसको उत्तर हामीसँग छैन तथापि हामी आफ्नो कर्म गरिरहेका छौं र यसैमा रमाइरहेका पनि छौं । प्रेस काउन्सिलको वर्गीकरणमा साहित्यकै नाउँमा वर्गीकृत पत्रिकाको सङ्ख्या ५७ छ । प्रेस काउन्सिलको वर्गीकरणका निम्ति मापदण्डमा नपरेका पत्रिकाहरूको सङ्ख्या सयौं छ । ती आंशिक रूपमा प्रकाशित भइरहेका छन् ।

वर्तमानमा अधिकांश मानिसहरू साहित्यलाई अनुर्वर मान्छन् । यतिसम्म कि नीति निर्माण तहमा रहेकाहरूको नजर समेत सकारात्मक मान्न सकिन्न । हिजो लामै समय साहित्यिक पत्रकारिता गरेर राज्यको महत्त्वपूर्ण ओहोदामा पुगेकाहरूको विचार समेत उत्साहजनक देखिंदैन । तिनीहरूको विचार यसलाई मलजल गर्नेतिर भए जस्तो लाग्दैन । प्रत्यक्ष रूपमा इन्कार नगरे पनि तिनीहरूको भित्री मन साहित्यिक पत्रिकाको उन्नति र प्रगतितिर छ भन्ने आधार भेट्न धौ-धौ नै छ ।

तथापि अभिव्यक्तिहरू अभिव्यक्तिका रूपमा आइरहेका छन् र आइरहने पनि छन् । सबैलाई एउटै आँखाले हेर्न सकिन्न । माया गर्ने मनहरू पनि सकारात्मक सोच बोकेर हिंडिरहेका छन् । त्यस्ता मनहरू कहिल्यै थाक्दैनन् । जस्तोसुकै वाधा व्यवधानका बीचमा पनि उनीहरू हिंडिरहन्छन्, हिंडिरहन्छन् र हिंडिरहन्छन् । त्यस्तै हिंडिरहनेहरूमध्ये एक हुन् अभिव्यक्तिका सम्पादक नगेन्द्र राज शर्मा ।

अभिव्यक्ति २००औं अङ्क प्रकाशनको अवसरमा दुवैलाई अभिवादन चढाउनु म आफ्नो कर्तव्य सम्झन्छु ।

൸൸

# संस्मरण : नगेन्द्र दाइ

नारायण तिवारी
विराटनगर-७, मोरङ

नगेन्द्रदाइसितको मेरो चिनाजानी पुरानै हो । कहाँ, कहिले, कुन बेला प्रथम चिनाजानी भयो उहाँसित- उति सम्झिन सक्दिन । दुइहजार बावन्न वा त्रिपन्न सालतिर उहाँ विराटनगरका कार्यक्रमहरूमा आउनुभएका बेला वा त्योभन्दा धेरै अघि नै पिपलबोट (काठमाडौं नयाँसडकको पिपलबोट) मुन्तिर…? अहँ, सम्झिन सक्दिन ।

ꕥ

सम्झिन्छु, नगेन्द्रदाइ लुखुर-लुखुर हिँडिरहनु भएको छ– एक्लै, पिपलको बोटमुनि, अलि तलतिर, पल्याक्पुलुक हेर्दै । म देख्छु, उहाँलाई । 'नमस्कार' भन्छु, हात जोड्छु । उहाँको सदाबहार हँसिलो अनुहार झन् खुल्छ र झन् हँसिलो पार्दै सोध्नुहुन्छ– "कहिले ?' अर्थात् विराटनगरबाट काठमाडौं कहिले ?

म पनि एक्लै, पिपलबोटमुनि साँझमा कोही भेटिन्छन् कि सहकर्मी परिचित भनेर भौंतारिरहेको थिएँ। पीपलको बोटमुनि नै त कोही बस्दैनथे। (पहिले-पहिले बस्दथे, बीचमा कहिले बस्दथे कहिले बस्दैनथे, अहिले यो लेखिरहेको कालखण्डकालमा फेरि बस्न थालेका छन् ।) अलि तलतिर, बाटैछेउको एउटा चियापसलमा बस्न थालेका थिए अलिक पछि-पछि । त्यो बाटोछेउको चिया पसलेले पनि कलमजीविलाई बेहोर्न सकेन छ र उठेछ त्यो खुद्रा चिया पसले त्यहाँबाट । अनि कलमजीविहरू अचेल त्यतै कतै, अलिक भित्रपट्टि कुनै चिया पसलमा साँझमा बस्न थालेका छन् अरे भन्ने सूचनाका आधारमा म त्यति बेला पल्याक्पुलुक गर्दै, चियापसलतिर, चियाउँदै थिएँ ।

'म पनि तपाईं जस्तै कोही भेटिने हुन् कि खोज्दैछु ।' नगेन्द्रदाइले यसै भन्नुभएको थियो ।

केही छिन् हामी दुवै भएर पल्याक्-पुलुक गर्‍यौं, चिया पसलतिर चियायौं । तर अहँ, कोही कलमजीवी भेटिएनन् त्यो साँझ ।

त्यस भेटमा नगेन्द्रदाइले भन्नुभएको अझै सम्झिरहेको छु- 'खोइ, आजकाल त अभिव्यक्तिलाई पठाउन छोड्नुभयो त ?'

मैले त्यो प्रश्नको जवाफलाई के भनें ? सायद मुस्कुराएर टारेँ त्यति बेला । तर मलाई लागेको थियो– हो, अभिव्यक्तिमा रचना पठाउन मैले अल्छि गरेकै हो ।

त्यसपछि नगेन्द्रदाइसित म छुट्टिएथैं । यो सायद २०६२।०६३ को जनआन्दोलन समाप्त भइसकेको कुनै साँझ थियो ।

ꕥ

एकपटक नगेन्द्रदाइलाई भेट्न मित्रपार्क, चावहिलस्थित उहाँको घर खोज्दै एक्लै पुगेको सम्झिन्छु । लेख्न थालेको धेरै वर्षपछि, २०५४ सालमा

मात्र निकालिएको, झण्डै-झण्डै मेरो प्रथम सङ्ग्रह भन्दा पनि हुने (यस अघि मेरो २०३९ मा मुक्तक सङ्ग्रह, 'सपनाहरू जिन्दगीका' निस्किए पनि त्यो प्राविधिक रूपले उल्लेखनीय हुन सकेको थिएन) कथासङ्ग्रह 'अस्थिपञ्जर' अभिव्यक्तिमा पुस्तक समीक्षा होओस् भन्ने अभिप्रायले दिन हो वा आफू निकटतम् मान्यजनलाई पुस्तक निस्किएको खुशियालीस्वरूप 'उपहार' दिन हो, म उहाँका समक्ष उपस्थित भएथेँ ।

☙

उहाँसित विराटनगरमा समेत भेट भएको सम्झिन्छु, वाणीप्रकाशनको कार्यक्रममा हो वा कुन कार्यक्रममा, उहाँ विराटनगर आउनुभएको थियो ।

☙

जेहोस् मेरो साहित्यिक जीवनको, २०३२।०३३ देखि हालसम्मको लामो कालखण्डमा नगेन्द्रदाइसित पातलै भए पनि भेट भइरह्यो । उहाँले 'अभिव्यक्ति' प्रकाशित गरिरहनुभएर साहित्यको श्रृवृद्धिमा पुऱ्याइरहनु भएको योगदानलाई मूल्यवान ठान्दै उहाँसित हार्दिकतायुक्त सम्बन्ध रहोस् भनेर सधैँ सचेत रहेँ । आदर गर्न मनलाग्यो– गरिरहेँ । उहाँका वैचारिक कुराहरू जो यदाकदा 'अभिव्यक्ति'मा प्रकट हुन्थे, सित मत मिलाउन अत्यन्त कठिन लागे पनि ती उहाँका निजी विचार हुन् भन्दै आफैँलाई झट्किन्थेँ । लाग्दथ्यो- साहित्य त यी सबै मत-मतान्तर, निजी वाद-विचार भन्दा माथि छ नि त…! फेरि आफ्नै मत ठिक भनेर पनि त लोकतन्त्रमा कहाँ चल्छ र लोकतन्त्र…! साहित्यलाई यी सबै भन्दा 'माथि' राख्नु नै राम्रो– यस्तै ठान्दथेँ, ठान्दछु ।

नगेन्द्रदाइ सरल हुनुहुन्छ, यही नै सबैभन्दा राम्रो । नगेन्द्रदाइ हँसिलो, रसिलो र सहृदयी हुनुहुन्छ– यो पनि हो सबै भन्दा राम्रो । उहाँको भद्रता मलाई मनपर्छ । उहाँको सरलता नै उहाँको शालीनता हो भन्ने लाग्छ । शालीनताका लागि अन्य आवरणहरू उहाँका लागि आवश्यक लाग्दैनन् ।

एकपटक नेपाल टेलिभिजनमा उहाँको अन्तर्वार्ता हेरेथेँ, 'सुगर छ, प्रेसर छ, के-के छ तर पनि रक्सी खान्छु'– अरे । स्पष्ट अभिव्यक्ति…! त्यो भाष्कर राजकर्णिकारले चलाएको कार्यक्रम थियो जहाँ धेरै मानिसहरू जम्मा गरेर सवाल-जवाफ गरिएको थियो । कार्यक्रमको नाम बिर्सिएँ । जे होस्- त्यस कार्यक्रमले उहाँको व्यक्तित्वलाई बाहिर प्रकट गरिदिएको थियो । त्यो कार्यक्रम हेर्नेहरूले अवश्य पनि झलझली नगेन्द्रदाइ र उहाँको स्पष्ट जवाफमा मुखरित शालीन सरलतालाई अहिले पनि सम्झिने छन् भन्ने मलाई लाग्दछ ।

☙

एकपटक सहकर्मी साहित्यिक रासाका साथ लागेर नगेन्द्रदाइलाई भेट्न उहाँको नयाँ घरमा पुगेको सम्झिन्छु । त्यो चावहिलको मित्रपार्क ठेगाना भएको घर नभएर चावहिलकै पम्बु मार्ग, गौरीनगर, ठेगाना भएको अर्को घर थियो जहाँ आजकाल नगेन्द्रदाइ बस्नुहुन्छ । भलाकुसारी गरेर, चिया

खाएर, 'अभिव्यक्ति'का प्रकाशित नयाँ अङ्क बोकेर फिर्ता भएथ्यौं । यो करिब ३ वर्ष अघिको कुरा होला ।

केही समय अघि मात्र नगेन्द्रदाइलाई सम्मान अर्पण गरिएको एक कार्यक्रममा उपस्थित हुने मौका प्राप्त गरेथेँ । यो अवसर जुराइदिनुभएको थियो शेषराज शिवाकोटीले । अर्थात् शेषराज शिवाकोटीको संस्था ज्ञानगुन साहित्य प्रतिष्ठानले उहाँलाई सम्मान गर्दै थियो । किष्ट कलेज, कमलपोखरीमा सम्पन्न सो कार्यक्रममा सहभागी हुन मलाई सहृदयतापूर्वक शिवाकोटीजीले फोन गर्नुभएको थियो । मेरो अहोभाग्य, नगेन्द्रदाइलाई हार्दिक अभिनन्दन गरिएको कार्यक्रममा सहभागी हुने अवसर पाएथेँ । केही कालदेखि काठमाडौंमा बसिरहेकोले यो संभव भएको थियो । विराटनगरमा भएको भए कहाँ पाउनु यस्तो अमूल्य अवसर··· ?

ʚ

काठमाडौं आएको पनि दुई वर्ष नाघिसकेछ । यता आएर 'अभिव्यक्ति'मा केही कथा, लघुकथा पठाइरहेकै छु– छापिइरहेकै छन् । नगेन्द्रदाइसित बेला-बखत पातलै भए पनि कुनै कार्यक्रममा भेटघाट हुँदै नै छ ।

मैले रचना पठाएको जानकारी दिंदा उहाँ हर्षित देखिनु हुन्छ । यो उहाँको मप्रतिको, मेरो श्रृजन कर्मप्रतिको 'मान्यता' हो भनेर म पनि हर्षित हुन्छु··· ।

जेहोस्, नगेन्द्रदाइको सरल, सहज, मिलनसार एवम् शालीन व्यक्तित्वबाट प्रभावित नभइरहने कोही नहोलान् । उहाँमा लाग्छ, देखाउनु पर्ने कुनै घमण्ड छैन । प्रदर्शन गर्नुपर्ने 'उच्चता'को कुनै आवरण छैन । 'शालीन व्यक्तित्व' को निर्माण सरलताबाट पनि हुनसक्दछ भन्ने ज्युँदो प्रमाण हुनुहुन्छ नगेन्द्रदाइ, 'अभिव्यक्ति'का नगेन्द्रदाइ, मेरो नगेन्द्रदाइ, सबका नगेन्द्रदाइ, हाम्रा नगेन्द्र दाइ...!

ʚ

नगेन्द्रदाइबारे यति लेखिसकेपछि लागेको थियो यो संस्मरण तुरियो । तर, त्यस्तो भएन । लेख्नुपर्ने सन्दर्भ अझै बनिँदै गए । म काठमाडौं आएको दुईवर्ष नाघिसकेको कुरा माथि लेखेँ । तर, यो फेरि थप कुरा लेखिरहँदा काठमाडौं आएको त दस वर्ष पो नाघिसकेछ । यसबीच नगेन्द्र दाइसित पटकपटक भेट भए । विभिन्न कार्यक्रमहरूमा भेट भए ।

नगेन्द्रदाइले 'कार्की किचेन'मा हरेक महिनाको प्रथम विहीबार 'अभिव्यक्ति-भेटघाट कार्यक्रम'को आयोजना गर्नुहुँदोरहेछ । त्यहाँ पनि भेट हुन्थ्यो । त्यहाँ म पहिलो पटक कवि मित्र पवन आलोकजीसित साथ लागेर पुगेको थिएँ ।

एउटा आनन्ददायक घटना सम्झिन्छु । एक पटक नगेन्द्रदाइले फोन गरेर अभिव्यक्तिका लागि रचना माग गर्नुभयो । अर्थात् तोकेरै एउटा कथा 'अभिव्यक्ति'का लागि पठाइदिन आग्रह गर्नुभयो । मेरो बानी थियो पैसा नदिने

पत्रिकालाई रचना त दिने तर आफैंलाई अलिक कमसल लागेका मात्र दिने । तर, 'अभिव्यक्ति'का हकमा मैले फरक सोचेँ । सोचेँ, पत्रिका निकालेर कपाल सेतै फुलाउनु भएको छ । नेपाली साहित्यको सेवामा समर्पित हुनुभएको छ । यस्ता त्यागी पुरुषलाई मैले पैसै नपाए पनि आफ्नो चित्तबुझेको कथा दिनु पर्छ । अरू बेला जे गरे पनि, यसपटक मुख फोरेर मसित कथा माग्नु भएको छ । त्यसैले यसपटक आफूलाई चित्त बुझेको एउटत राम्रो कथा 'अभिव्यक्ति'लाई दिएँ । कथा पनि त्यसो त कहाँ धेरै लेख्थेँ र ! सधैं लेखिरहने अभ्यास/क्षमता नभएको मलाई भन्ने वित्तिकै कथा उपलब्ध गराइहाल्नु कठिन काम थियो । तर, त्यसैबेला एउटा 'हुण्डरी' शीर्षकको कथा सम्झिएँ, जुन आफूलाई चित्त बुझेको थियो । र, कतै छापिइसकेको थिएन । त्यही कथालाई पारिश्रमिकको माया मारेर नगेन्द्रदाइको 'अभिव्यक्ति'लाई पठाएँ । र, यसरी त्यो कथा 'अभिव्यक्ति'मा छापियो ।

कथा छापिएपछि 'अभिव्यक्ति' प्राप्त गर्दाको यो रोचक र आनन्ददायक घटना, जुन मैले टिपोट गरेर राखेको थिएँ, यहाँ उल्लेख गर्नु सान्दर्भिक लागेको छ ।

माथि पनि भनें, प्रत्येक महिनाको पहिलो विहीबार साँझ कार्की किचेन, गौशालामा 'अभिव्यक्ति-भेटघाट कार्यक्रम'मा साहित्यकारहरूको जमघट हुने गर्दोरहेछ । (नगेन्द्रदाइको अगुवाइमा २०५८ साल देखि अभिच्छिन्न चलिआएको त्यो कार्यक्रम अहिले नारायणगोपाल चोकतिर सरसिकेको थाहा पाएको छु ।) वि.सं.२०७१ चैत महिनाको पहिलो विहीबार- ५ गतेको दिन नगेन्द्र दाइले फोन गर्नुभया– 'कहाँ हुनुहुन्छ ?'

मैले भन– 'यतिबेला काठमाडौंमा छु दाइ !' म विराटनगर आउनेजाने गरिरहने हुनाले र कथा पठाउन फोन गरेको बेला म विराटनगरतिर भएकोले यतिबेला कहाँ हुनुहुन्छ भनेर सोध्नुभएको होला ।

'लौ भरे कार्की किचेनमा भेटौं ।' उहाँले भन्नुभयो ।

'किन र दाइ ? मैले पत्रिका त पाइसकैं, रासाले दिइसक्नु भयो ।'

'आउनुहोस् न तैपनि, भेटघाट हुन्छ ।'

म त्यसबेला सिभिल अस्पतालमा भर्खरै घाँटीको हड्डी खिएको कारणबाट फिजियोथेरापी गराएर गेट बाहीर निस्कँदै थिएँ । भनेँ– 'दाइ, खोइ आउन सकिएला कि नसकिएला । घाँटीको हड्डी खिएर अलिक रेस्टमा पो छु ।'

'यो बुढेसकालको रोग हो । सकभर आउनुहोस् है ।'

मैले केही नलागेर 'हुन्छ, आउँछु' भनेर फोन राखेँ ।

बेलुका सकीनसकी गएँ कार्की किचेन । नगेन्द्र दाइ लगायत त्यहाँ उपस्थित हुनुहुन्थ्यो राप्रउ पोखरेल, राममणि पोखरेल आदि । पछि कुवेर शर्मा र चन्द्रप्रसाद भट्टराई पनि आउनु भयो ।

नगेन्द्र दाइले 'अभिव्यक्ति'का दुई अङ्कहरू मतर्फ बढाउनु भयो । हेरें–

एउटामा मेरो कथा 'हुण्डरी' छापिएको थियो । पत्रिकाका पाना पल्टाउँदै गएँ । मेरो कथा 'हुण्डरी'मा च्यापिएर केही नोट बसेको रहेछ । मैले नगेन्द्रदाइका आँखामा हेरेँ– उहाँले मुस्कुराउँदै हातले 'राख्नुहोस्',को संकेत गर्नुभयो । मैले नोट झिकेर गोजीमा हालेँ । त्यतिबेला गनिनँ । पछि गनेँ– तीनसय रहेछ ।

म नोट देख्दा पहिले त अचम्मित भएको थिएँ तर, नगेन्द्रदाइको इसाराले ढुक्क भएँ र आनन्दित पनि ! यो मेरो 'अभिव्यक्ति'मा रचना छापिए बापत प्राप्त प्रथम पटक हात लागेको पारिश्रमिक थियो । र, यो मेरा लागि ज्यादै महत्वपूर्ण र आनन्ददायक विषय थियो । मैले थाहा पाएँ, जोसित रचना माग गरेर छाप्नुहुन्छ, तिनलाई उहाँले थोर बहुत जे भए पनि पारिश्रमिक दिने गर्नुहुन्छ । यो घटना सम्झँदा खुशी लाग्छ, आनन्दित हुन्छु ।

ҩ

यसपछि पनि केही पातला भेट भइरहे नगेन्द्रदाइसित । पछिल्लो भेट भने फेरि उल्लेखनीय हुन पुग्यो । उहाँको घरमा उहाँलाई भेट्न पुगेको मेरो यो तेश्रो पटक थियो । पहिलो पुरानो घरमा र दोश्रो र यो तेश्रो पटक चावहिलको पम्बु मार्ग, गौरीनगरस्थित बाहीर गेटमै 'अभिव्यक्ति परिसर'को बोर्ड भएको नयाँ घरमा । गएको विहीबार फागुन २३ गते म उहाँको घरमा पुगेको थिएँ । यो भेट जुराएको थियो मेरो पछिल्लो संस्मरण किताब 'स्मृति कतिकति' ले । जो प्रकाशित भएको झण्डै एकवर्ष हुन लागिसकेको थियो । ढिलै भए पनि यो पुस्तक मैले यसै दिन उहाँका हातमा पुऱ्याएको थिएँ । मेरा साथमा हुनुहुन्थ्यो कथाकार मित्र रत्न कोजू । रत्नजी र मैले त्यसबेला नगेन्द्र दाइसित हार्दिक भेटघाट गऱ्यौं । नगेन्द्रदाइले रत्नजीसितका पुराना कुरा सुनाउनुभयो । ध्रुव मधिकर्मी र रत्नजी उहिले कसरी कति खर्च गरेर दुई रुपियाँको 'अभिव्यक्ति' किन्न उहाँकहाँ आउनु हुन्थ्यो, स्मरण गर्नुभयो । त्यस बेला नगेन्द्रदाइ यही 'अभिव्यक्ति'को दुईसयौं अङ्क प्रकाशनका लागि खटिराख्नु भएको रहेछ । उहाँले पुराना 'अभिव्यक्ति'बाट छानेर रचनाहरू दुईसयौं अङ्कमा समावेश गर्ने आफ्नो विचार पनि हाम्रा सामु प्रकट गर्नु भयो । पुराना केही अङ्कहरू हेर्ने सौभाग्य पनि हामीलाई प्राप्त भयो । मैं ले नगेन्द्रदाइलाई त्यसो भए यो त विशेषाङ्क हुने भयो भनेँ । उहाँले त्यस्तो केही होइन, अलिक मोटोचाहिँ हुनेछ भन्नुभयो । जसको तात्पर्य आफ्नो सदाबहार 'सामान्य' पत्रिका लेख्ने गरेको तर्फ सङ्केत गर्नुभएको हो कि भन्नेजस्तो मलाई यतिबेला लाग्दैछ । 'अभिव्यक्ति'लाई चिनाउन यसका हर अङ्कहरूमा लेखिने गरेको वाक्य हो- 'दुई महिने सामान्य साहित्यिक पत्रिका' । यसैले सायद पचास वर्षभन्दा बढी भाषासाहित्यको.सेवामा समर्पित भइसकेर दुईसयौं खुड्किलो चढिसक्दा पनि उहाँ 'अभिव्यक्ति'लाई आफैँ विशेष दर्जा दिन चाहनु हुन्न । दुईसयौं अङ्कलाई पनि उहाँ विशेषाङ्क भन्न चाहनुहुन्न । अर्थात्, यसको मूल्याङ्कनको जिम्मा उहाँ तपाईं हामीलाई अर्थात् पाठकलाई, भाषासाहित्य वृत्तलाई छोड्न चाहनु हुन्छ । यो मपाईं युगमा आफैंलाई यति

सरल र सामान्य रूपमा प्रस्तुत गर्नु नगेन्द्र दाइको अत्यन्त प्रशंसनीय चरित्र होजस्तो मलाई लाग्छ ।

नगेन्द्रदाइका दुई उपन्यास, दुई कथासङ्ग्रह पनि छन् । तर, उहाँ आफैं साहित्यिक व्यक्तित्वलाई साहित्यिक पत्रकार व्यक्तित्वले छोपिसकेको स्वीकार गर्दै लेख्नुहुन्छ-'...मेरो सिर्जजनशील व्यक्तित्व पनि सम्पादक व्यक्तित्वको छायाँमा पर्‍यो । भनौं– जतिजति मेरो सम्पादक व्यक्तित्व मौलाउँदै गयो- उति उति लेखक व्यक्तित्व वैलाउँदै गयो ।...' (पूर्णाङ्क १९२)

यसैगरी आफ्नो र अभिव्यक्ति पत्रिकाको सरलतालाई लिएर लेख्नुहुन्छ– '… पत्रकारिताको हकमा पनि म एउटा सामान्य साहित्यिक पत्रकार हुँ । अभिव्यक्ति पनि एउटा सामान्य साहित्यिक पत्रिका हो ।...'(पूर्णाङ्क १९२)

आफैंले आफूलाई 'सामान्य' भन्नु सरल मानिसमा हुने गुण हो भन्ने म ठान्दछु । नगेन्द्रदाइले अभिव्यक्तिलाई यसैगरी 'मपाईं' लेखकका भन्दा सामान्य लेखकका रचना छाप्न बढी परिचालित गर्नुभएको हो कि भन्ने लाग्दैछ मलाई यतिबेला । यसैले केन्द्रभन्दा उहाँ 'मोफसल' भनिने ठाउँका लेखकलाई स्थान दिनुहुन्छ । अभिव्यक्तिमा उहाँले लेख्नुभएको छ– '… प्रकाशनार्थ रचना चयन गर्दा राजधानीका स्थापित नामभन्दा पाएसम्म सकेसम्म मोफसलका उदीयमान साहित्यकारका रचनालाई प्राथमिकता दिएर छाप्ने गरें ।...' (पूर्णाङ्क १९२)

आफूलाई र आफ्नो पत्रिकालाई सामान्य भन्नु आफैंले आफूलाई मपाईं नभन्नु हो । मूयाङ्कन गर्ने पाठकहरू हुन् । समाज छ । साहित्यिक वृत्त छ । राष्ट्र छ । उहाँलाई राष्ट्रले, 'महाकवि देवकोटा पुरस्कार (रु.१लाख)', समाजले, 'मदन-शीला साहित्यिक पत्रकारिता पुरस्कार (१लाख १हजार) र ' पद्मश्री सम्मान (रु.२लाख, संयुक्त रूपमा) आदि प्रदान गरेर सम्मान गरेको धेरै भएको छैन । मलाई जानकारी नभएका, विगतदेखिका सम्मान/पुरस्कार अरू पनि धेरै होलान् । पाठकको माया, सम्मान पनि नगेन्द्रदाइप्रति उच्च रहेकै छ भन्ने म ठान्दछु । साहित्यिक जगतमा त झन् हँसिला नगेन्द्रदाइ सबैका प्यारा… ।

हरेक मानिसमा केही कमिकमजोरी हुन्छन्, त्यो नगेन्द्र दाइमा पनि होला । तर, उहाँको सरलता, मृदुता, समर्पणभावको म कायल छु । भाषा साहित्यसेवामा समर्पित यस्ता तपस्वीले वि.सं.२०२७ वैशाखदेखि प्रकाशन प्रारम्भ गरेको 'अभिव्यक्ति' पत्रिकाको आगामी अङ्क दुईसयौं अङ्कका रूपमा प्रकाशित हुँदैरहेछ । सम्भवत यो २०७६ को जेठमा प्रकाशित हुनेछ । नगेन्द्र दाइबारे यति लेखिरहँदा म नगेन्द्रदाइ र उहाँको नामको पर्याय 'अभिव्यक्ति' पत्रिकालाई एकैसाथ सुस्वास्थ्य र दीर्घायुको शुभकामना व्यक्त गर्न चाहन्छु ।

शुभकामना नगेन्द्र दाइ ! शुभकामना अभिव्यक्ति

!अस्थायी (हाल) : कोइलटार, मध्यपुर ठिमी- ३, डाँफे टोल, भक्तपुर

फोन. ०१-६६३७०७८, मो. ९८४९०७३२६७

cscs

# नगेन्द्रराज शर्मा : संक्षिप्त परिचय

नारायण निरौला

जीव शब्दको पर्यावबाची प्राण हुन्छ । जसमा प्राण रहन्छ त्यसलाई प्राणी भनिन्छ अथवा जसमा जीव रहन्छ त्यसलाई जीवन भनिन्छ । जिउँदो हुँनु नै जीवन हुनु हो । यस अर्थमा जीवन सम्बन्धी सम्पूर्ण घटनाको संग्रहलाई जीवनी भनिन्छ । त्यस्तो जीवन लेखिने क्रममा लेखकको बुद्दि विस्तारले भ्याएसम्म प्रमुख दुई घटनाहरूलाई उल्लेख गरेर संक्षेपमा लेख्ने परम्परा रहेको छ। वास्तवमा भन्नु पर्दा आत्मकथा लेख्नेहरूले पनि जीवनका सम्पूर्ण घटना विवरण कपीमा उतार्न सकिरहेका हुँदैनन् सम्भव पनि छैन र आवश्यक पनि । समाजलाई चाहिने जीवनी प्रमुख घटना मात्र हुन् ।

जीवनी दुई प्रकारका हुन्छन् संक्षिप्त र विस्तृत । हिजो आज संक्षिप्तलाई कथा र विस्तृतलाई उपन्यासका रूपमा पनि चित्रण गरिएको पाइन्छ। विस्तृत पनि दुई प्रकारका देखिएका छन्– आत्मपरक र व्यक्तिपरक । आत्मपरक भन्नाले आफ्नो कथा आफैले लेखेको, व्यक्ति परक भन्नाले अर्काको जीवनकथा लेखिएको । जीवन काँडा कि फूल, अन्तर्मनको यात्रा र आधा बाटो आत्मपरक उपन्यास हुन् भने कालिदासको आत्मकथा र राजाभोजको आत्मकथा व्यक्ति परक उपन्यास हुन् ।

जीवन एउटा गोरेटो नभएर शहरको फराकिलो बाटो जस्तो हुन्छ, जसका अनेक शाखा हुन्छन् । कुनै कच्ची बन्छन् त कुनै पक्की । कुनै ठूलै हुन्छन् भने कुनै गल्ली । कुनै सजिला हुन्छन् त कुनै अप्ठयारा । कुनै सिधा हुन्छन् त कुनै सारै घुमाउरा, कहाली लाग्दा र डर लाग्दा । यस्तै हुन् जिन्दगीहरू पनि । बाटाका झैँ जीवनका भोगाइ र चाहनाहरूको पनि कहिल्यै अन्त्य हुँदैन । अनेक कुरामा पुनरावृत्ति उसको धर्म हो । पुनरावृत्ति विना हरेक कुराको सफलताको चुचुरोलाई चुम्न सक्दैनन् । यो शाश्वत सत्य हो र यही नै जीवन हो ।

धनकुटा जाँदाको घुमाउरो बाटो झैँ घुमाउरो, डोल्पाको अप्ठचयारा बाटा झैँ अप्ठ्यारो र हालको विराटनगर झैँ धुलाम्य बाटाका समष्टिरूप झैँ झमक घिमिरेको जीवन बाटो रहेको छ । नेपाली साहित्यमा काशीको तीर्थ (प्रो.दिवाकर प्रधान, नेपाली प्रभाग, काशी हिन्दु विश्व विद्यालय वाराणाशी अनुसार) दुर्गा प्रसाद श्रेष्ठले पनि उदयको त्यस्तै स्थितिलाई धानेका छन् । यस दृष्टिमा नगेन्द्रराज शर्माको जीवनमार्ग त्यतिको अप्ठ्यारो नरहेको हुनुपर्छ ।

यस्ता धेरै धरोहरहरू हाम्रा आशपाशमा रहेका हुन्छन् जसलाई धरोहरको रूपमा हाम्रो बुद्धिले जर्जरको रूपमा स्वीकार गरिरहेको हुन्छ । जब अर्काले त्यसको बारेमा बताउँछन् अनि हाम्रा आँखा खुलेका हुन्छन् । धरोहर हुनलाई पुरात्वात्विक नै हुनु पर्छ भन्ने हुँदैन । कुनै पनि वस्तुको लामो समय देखि महत्व बोकेको बस्तु वा व्यक्ति नै धरोहर हो । हिजोआज पुरातात्विक वस्तुलाई मात्र धरोहरको रूपमा व्याव्या गरेको देख्न वा सुन्न पाइन्छ ।

वास्तवमा त्यो मात्र सत्य हैन । कुनै पनि वस्तु वा व्यक्तिको अर्न्तराष्ट्रिय वा राष्ट्रिय संस्थाले धरोहर घोषित गर्दैमा त्यो मात्र धरोहर हो वा होइन भन्न मिल्दैन । धरोहर शब्दको अर्थ संरक्षण हो । यस अर्थमा कहीं वस्तुको कहीं व्यक्तिको र कहीं भावको संरक्षण गर्नुपर्ने हुन्छ ।

अहिलेको समयमा नगेन्द्रराज शर्मा एक व्यक्ति मात्र नभएर नेपाली साहित्यका साधक हुन् । यस अर्थमा यो संक्षिप्त जीवनी नेपाली सहित्य साधकको हो व्यक्तिको मात्र होइन ।

नेपाली साहित्यिक पत्रिका अभिव्यक्तिको स्थापनाकाल (२०२७) देखि अनवरत यसको उत्थानमा समर्पित नगेन्द्रराज शर्माको भूमिका उल्लेख्य छ । यसको अर्थ यो पनि होइन कि यसको अन्य सदस्य, सहयोगी र लेखकहरूको भूमिका छँदैछैन् । जस्ता प्रकारले प्रहरी, आर्मी, राजनीतिकर्ता, कुटनीतिज्ञ, गुप्तचर, सम्पूर्ण तहका कर्मचारी, किसान, उद्यमी, व्यापारी, आदिको पनि राष्ट्रको सुरक्षा र निर्माणमा महत्वपूर्ण योगदान रहेर पनि अन्ततोगत्वा श्रेय राष्टप्रमुखलाई  नै जान्छ । त्यसरी नै अभिव्यक्तिको मुख्य श्रेय पनि श्रीमान् नगेन्द्रराज शर्मा ज्यूलाई नै जान्छ ।

सन्धान शब्दको अर्थ खोज, शोधन, रोपण आदि हुन्छ । त्यसमा अनु उपसर्ग लागेपछि पछाडि भन्ने अर्थ लाग्छ, जस्तै शब्दले पनि पछाडि गरिने कार्य भन्ने अर्थको बोध गराउँदछ अथवा जुन कार्य पहिले नै छ त्यसैको खोजलाई अनुसन्धान भनिन्छ र वास्तवमा त्यस्ता सबै प्रकारका खोजलाई विज्ञान भनिनु पर्ने हो तर अहिले विज्ञान शब्दले विशेष गरेर खगोल सम्बन्धी अनुसन्धानलाई मात्र जनाउने गरेको छ । उपनिषद् आदि रहस्य शास्त्रहरूमा आत्माको ज्ञानलाई नै विज्ञान भनिएको छ– विज्ञानात्मा (प्रश्नोपनिषद् ४।११) 'विज्ञानं ब्रम्ह चेद्वेदम्' (तैत्तिरीयोपनिषद् १) यस अर्थमा अनुसन्धान शब्दको अर्थ अनुकृतिको अनुकृति रहेछ । अनुकृतिको अनुकृतिलाई कला वा साहित्य मान्दछन् अरस्तु । त्यस्तो विज्ञानमय साहित्यको सरंक्षण र अभिवर्धनका लागि जीवनका अमूल्य समय व्यतीत गर्नु भएका अथक परिश्रमी स्रष्टा, प्रकाशन तथा सम्पादन आदि कार्यमा संलग्न व्यक्तित्व नगेन्द्रराज शर्मा ।

अभिव्यक्तिको ५०औं वर्षको अवसरमा पहिलो अंकलाई पनि नियाल्न मन लाग्यो । पहिलो अंक 'आर्तव साहित्यिक प्रकाशन'को नामबाट  प्रकाशित भऐको रहेछ । यसको दर्ता नं. अ.का.वा.अ.द.नं. ३२।०२७-२८ रहेको छ । शिशिर ॠतु २०२७, सम्पादक नगेन्द्रराज शर्मा । त्यस अंकमा कवि केदारमान व्यथित, भूपि शेरचन, पारिजात, शङ्कर लामिछाने, भीमनिधि तिवारी, नारायणबहादुर सिंहलगायत् त्यस बेलाका चर्चित १९ जना स्रष्टाको रचना रहेको छ ।

सम्पादकीय भने अभिव्यक्तिको पहिलो अंकमा मात्र शुरुमा छपाइएको छ दोस्रो अंक देखि १९९ सबै अंकमा सम्पादकिय लेख अन्तिममा राखिएको छन् । यस पत्रिकाको विशेषता पनि यो हो ।

जन्मः आदरणीय व्यक्तित्व नगेन्द्रराज शर्माको जन्म रामेछापको

मन्थलीमा वि.सं. १९९४ चैत्रमा भएको हो । पिता सुब्बा इन्द्रप्रसाद शर्मा घिमिरे र माता पद्मा घिमिरे हुन् ।

वृत्तिः जीवन धान्नका लागि कुनै न कुनै पेशा सबैले गर्न पर्ने हुन्छ । शर्माज्यूको संलग्नता त्रिवि अन्तर्गत आर्थिक विकास तथा प्रशासन अनुसन्धान केन्द्र (सेडा)मा (२०२७-०४८) थियो ।

भ्रमण : नेपालका सत्तरी जिल्ला । विदेशमा भारत, भुटान, बैंकक, हंङकङ, जर्मनी, इटली, अष्ट्रिया, बेलायत, क्यानडा, अमेरीका आदि ।

प्रकाशित कृतिहरू : महापुरुष (उपन्यास-२०२८) रत्न पुस्तक भण्डार ।

दिवास्वप्न (उपन्यास-२०२९) रत्न पुस्तक भण्डार ।

पीपलको बोटमुनि (कथा सग्रह-२०३९) साझा प्रकाशन

एकान्तका आफन्तहरु (कथा संग्रह-२०५५) ॐ क र ह प्रकाशन

विभिन्न पत्र-पत्रिकामा अनेकौं कथा, कविता, लेख, निबन्ध प्रकाशित छन् ।

सम्पादन : अभिव्यक्ति १ देखि २०० अंकसम्म (२०२७-२०७६सम्म)

त्यसबाहेक जसराज किरातीको ‘उज्यालो खोज्ने आँखाहरू’ तथा कन्चन पुडासैनीको ‘विचार-विहार’लगायत् विभिन्न लेखकका एक दर्जनजति साहित्यिक पुस्तकको सम्पादन

प्रकाशन : अभिव्यक्ति प्रकाशनका नामबाट कतपिय लेखकहरूका डेढ दर्जन जति साहित्यिक पुस्तकको प्रकाशन । तिनमा केही हुन्–

मेरा अस्वीकृत मान्यताहरू–कविताराम / एक शहरमा एक कोठा– ध्रुवचन्द्र गौतम / संरक्षक– ध्रुवचन्द्र गौतम / अन्त्यपछि– ध्रुवचन्द्र गौतम / बाल्यकाल– ध्रुवचन्द्र गौतम / जेलको संझना– दुर्गा घिमिरे / हवन– नीलम कार्की निहारिका / लहरिएका आकांक्षाहरू– गायत्री विष्ट गाउँले / जीवन सरिता– धर्मरत्न यमि / मायालु बतास– डा. ईशान गौतम / अभिव्यक्ति : केही प्रदीपका केही प्रदीपसम्बन्धी– प्रदीप खतिवडा / मनभित्र पनि आकाश हुन्छ– डा. दुबसु क्षेत्री । आदि आदि

सहभागिता :

१. अन्तरराष्ट्रिय पेन सम्मेलन, भिएना, अष्ट्रिया, २०४७

२. भारत-नेपाल लेखक संगोष्ठी, नयाँ दिल्ली, भारत, २०५३

३. द्वितीय नेपाल-भारत नेपाली लेखक सम्मेलन, धनगडी, २०५७

४. तृतीय भारत-नेपाल नेपाली लेखक सम्मेलन, वाराणासी, २०५९

५. अन्य विभिन्न राष्ट्रिय एवं अन्तराष्ट्रिय साहित्यिक गोष्ठीहरू ।

अन्य केही साहित्यिक गतिविधि

२०२७ देखि हालसम्म निरन्तर ‘अभिव्यक्ति’ दुईमहिने साहित्यक पत्रिकाको सम्पादन तथा प्रकाशन ।

२०२७ देखि हालसम्म : स्वतन्त्र पत्रकारिता

२०२९ देखि २०३८ सम्म : साहित्यिक पत्रकार सङ्घको संस्थापक सदस्य, उपसभापति र सभापति

२०३९ देखि २०४७ सम्म : सिर्जनशील साहित्यिक समाजको संस्थापक सदस्य, उपसभापति तथा कार्यवाहक सभापति

२०४५ देखि २०६५ सम्म: अन्तर्राष्ट्रिय पेनको नेपाल शाखा (पेन नेपाल) को संस्थापक सदस्य एवं उपसभापति

२०५० देखि २०५८ सम्म : उपाध्यक्ष, युगकवि सिद्धिचरण प्रतिष्ठान

२०५० देखि २०५८ सम्म : उपाध्यक्ष, गंकी वसुन्धरा पुरस्कार प्रतिष्ठान

२०५० देखि २०५८ सम्म : कार्यकारणी सदस्य, डा. ईश्वर बराल प्रज्ञा निकेतन

२०५१ देखि २०५५ सम्म : सदस्य प्रज्ञा सभा, नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

२०५४ देखि २०६८ सम्म : महासचिव, अस्वीकृत विचार-सहित्य पुरस्कार गुठी

२०६८ देखि २०७३ सम्म : सभापति, अस्वीकृत विचार-सहित्य पुरस्कार गुठी

२०७३ असोजदेखि हालसम्म : अध्यक्ष, नेपाल साहित्यिक पत्रकार संघ।

केही उल्लेखनीय पुरस्कार तथासम्मान : सडक नाटच समूह, गैंडाकोट, नवलपरासी– २०५२

: भवानी साहित्यिक पत्रकारिता पुरस्कार– २०४६

: मैनाली कथा पुरस्कार–२०५५

: सुप्रवल गोरखा दक्षिणवाहु–२०५५

: साहित्यिक पत्रकारिता पुरस्कार–२०५६ (बीरगंज साहित्य परिषद्, वीरगंज)

: सुश्री लक्ष्मी कार्की 'साहित्यिक पत्रकारिता पुरस्कार'–२०५७

: श्रृजना सम्मान–२०५७ (सुनकोशी साहित्य प्रतिष्ठान)

: गङ्गा लक्ष्मी साहित्यिक पत्रकारिता पुरस्कार–२०५७ (पद्मानन्द ट्रष्ट, जनकपुर धाम)

: प्रेस काउन्सील साहित्यिक पत्रकारिता पुरस्कार–२०५७ (प्रेस काउन्सील नेपाल, काठमाडौं)

: धुस्वाँ सायमि सिर्जना पुरस्कार–२०६१

: पल्लभ साहित्य सम्मान– २०६६–पल्लव साहित्य प्रतिष्ठान नारायण गढ, चितवन

: विष्णु-पुष्पा साहित्यिक पत्रकारिता पुरस्कार– २०६६ शिवपुरी साहित्य समाज, हत्तीगौंडा

: अभिनव साहित्य सम्मान– २०६७, अभिनव साहित्य समाज, जोरपाटी

: सुरभि नवरत्न स्रष्टा सम्मान– २०६७, सुरभि साहित्य प्रतिष्ठान, जोरपाटी

: बन्धु पन्त स्मृति सम्मान/पुरस्कार– ०६७, पन्त स्मृति प्रतिष्ठान, धापासी, काठमाडौं

: नेपाल साँस्कृतिक संघ पुरस्कार– २०६७, नेपाल साँस्कृतिक संघ, डिल्लीबजार

: कदरपत्र– दुर्गा भवानी बचत तथा ऋण सहकारी संस्था लिमिटेड– २०६८

: श्यामप्रसाद शर्मा साहित्यिक पत्रकारिता सम्मान-०६८ ज्ञानगुन प्रतिष्ठान, काठमाडौं

: उत्तम शान्ति विशेष सम्मान–२०६९, उत्तम कुँवर स्मारक पुरस्कार गुठी, काठमाडौं

: भानु–भवानी घिमिरे पत्रकारिता पुरस्कार–२०७१ भानु नेपाली मासिक, काठमाडौं

: साहित्यिक पत्रकारिता सम्मान– २०७१, चेतना संरक्षण प्रतिष्ठान, विराटनगर

: सम्मान पत्र तथा गोपाल पाँडे असीम पुरस्कार– २०७२ नेपाल शिक्षा परिषद, काठमाडौं

: दायित्व वाङ्मय विशिष्ट सम्मान २०७३– दायित्व वाङ्मय प्रतिष्ठान, नेपाल

: मदन-शीला साहित्यिक पत्रकारिता सम्मान -२०७३– मदन-शीला प्रतिष्ठान, काठमाडौं

: महाकवि लक्ष्मीप्रसाद देवकोटा पुरस्कार– २०७३– नेपाल सरकार

: पद्मश्री साधना सम्मान– २०७३– खेमलाल-हरिकला लामिछाने प्रतिष्ठानः चित्तौन

: 'वनिताश्री साहित्य शिरोवर्ती सम्मान' २०७५– वनिता त्रैमासिक पत्रिका

: 'बद्री राष्ट्रिय कलाश्री पत्रकारिता पुरस्कार' २०७५– नेपाली कलासाहित्य डटकम प्रतिष्ठान

तथा अन्य अनेकौं सम्मान/पुरस्कार र अभिनन्दनहरू ।

आदरणीय दाइ (हजुरवुवा जस्तो व्यक्तित्वलाई दाइ भन्नै अप्ठ्यारो तर धेरैले दाइ नै भन्दा रहेछन् । नगेन्द्रराज शर्मासँग गरिएको कुराकानीको केही अंश निम्न लिखित छ ।

प्रश्न– तपाईंको पारिवारिक परिचय र बाल्यकाल सम्बन्धी केही कुरा भनिदिनोस् न ।

उत्तर– मेरा पिता पुर्खा पूर्व २ नं. (पहिले भन्ने गरेको) रामेछाप मन्थलीका जिम्मावाल थिए, त्यसकारण मेरो बाल्यजीवन कुनै कष्टकर थिएन । त्यो समय खेलेर खाएर रमाएर वितेको हो । त्यहाँका हाम्रा साथी संगी भनेको माझी, मझिनी, गोठाला, खेताला, घाँसीहरू नै थिए । स्कुले साथीहरू भएनन् । किनभने त्यसबेला त्यता स्कुलै थिएन । हाम्रो स्कुल भनेको काले खत्रीको दलान थियो । त्यहाँ चन्द्रप्रसाद ढुंगाना गुरुले पढाउनु हुन्थ्यो क ख । यस्ता प्रकारले गाउँको बाल्यकाल वितेको थियो । पछि

काठमाडौ आएपछि भने एस् एल् सी सम्म यहीं पढें । त्यस पछि अलाहवाद बोर्डबाट आइ ए गरें । त्यसपछि वि एच यु मा व्याचलर एक वर्ष पढें । दास्रो घर आएको थिएँ फेरि वनारस जान अनकुल मिलेन । जान पाइन । त्यसरी मेरो पढाइ विचैमा रोकियो ।

पछि सेडाबाट अध्यनकै क्रममा अमेरीका गएँ र त्यहाँको पिट्स्बर्ग युर्निभरसिटीमा एड्मिनिस्ट्रेटिभ म्यनेजमेन्ट तथा प्रब्लेम सोल्भिग इत्यादिको अध्ययन गरें ।

प्र. कति भाषा र लिपिको जानकार हुनुहुन्छ ?

–भाषामा नेपाली, अंग्रेजी, हिन्दी, मैथली भोजपुरी बंगाली र अलि अलि उर्दु पनि जान्दछु र यिनैमा प्रयोग हुने लिपि पनि । रन्जना लिपि सिक्ने तिर ध्यानै गएन ।

प्र. लेखन, प्रकाशकीय र सम्पादकीय कार्य गर्दाका नविर्सने क्षणहरू बताइदिनुहोस न् ।

–नितान्त आफ्नो रहर र रुचीको कार्य गरेको हुँदा कठिनाइको अनुभव गरिनँ । मैले अभिव्यक्ति प्रकाशनमा पनि दुःख पाइनँ । मेरो साथीहरू अनेक दुखेसो गर्छन् सरकारले सहायता गरेन भनेर तर मैले सरकारका लागि काम गरेको होइन र सरकारले सहयोग गर्ला कि भन्ने आशाले गरेको पनि होइन, तसर्थ यसका भोगाइहरूले मलाई दुःख नभएर सुख र आनन्द दिइरहेका छन् । ती घाम पानीको दौड, जाडोमा काम्दै र गर्मीमा पसिना पुछ्दै भोक प्यास विर्सेर भूत लागे झैं अभिव्यक्तिको काममा लागिपरेका दिनहरू संझदा आज पनि आननद आउँछ । काम गर्ा भएका त्रुटिहरूबाट सिकेको ज्ञान र साथीहरूसँगको हेलमेल, वादविवाद र सहकार्यबाट मिलेको अनुभवको संग्रहले यस बुढेश कालमा पनि आनन्दले दिन काट्न मदत गरिरहेको छ । मैले कुनै सम्पादकीयमा लेखेको छु,– 'आज, मेरोजस्तो उमेरसमूहका, अवकाशप्राप्त जीवन बिताइरहेका मेरा कतिपय साथीभाइ आफन्तहरू भजन-कीर्तन गाइरहेका छन् । कोही ठाडा-तेर्सा टीका लगाएर मठ-मठ धाइरहेका छन् । कोही धर्मका व्यापारीका चङ्गुलमा फसेर राधे-राधेमै रमाइरहेका छन् । कोही जुवा तासमा व्यस्त छन् त कोही मापसेमा मस्त छन् । तर त्यस्ता कुनै पनि विषय, व्यसन वा व्याधिमा मेरो चित्त रमाएन– लागेन । मैले अक्षरसँगै खेल्न र अक्षरसँगै अल्मलिन रुचाएँ । अलि अलि लेखपढ गर्छु । बाँकी समय अभिव्यक्तिकै स्याहार सुसारमा अर्थात् सम्पादन, प्रकाशन र व्यवस्थापनमै बिताउँछु । मेरो सम्पूर्ण कर्म, धर्म, मनोरञ्जन, पूजा आराधना वा अम्मल– जे भने पनि अभिव्यक्ति नै हो । यसैमा रमाइरहेको छु ।'

प्र. विश्व साहित्यमा नेपाली स्थान कुन स्तरमा होला ?

–साहित्यको तुलना यस्ता प्रकारले हुँदैन । वास्तवमा साहित्य तुलना गर्ने विषय नै होइन । प्रचारमा आएकालाई माथिल्लो स्तर र प्रचारमा नआएकालाई तल्लो स्तर भन्न मिल्दैन । यस अर्थमा नेपाली साहित्यले विश्व साहित्यमा समताको हैसियत राख्दछ किनभने अनुभूति र भावना मानवीय

गुण नै हुन् । परिवेश अनुरूपका साहित्य जन्मन्छन्– फरक त्यति हो । जुन बेला बृटिस साम्राज्यमा घाम नै अस्ताउँदैनथ्यो त्यसबेला अंग्रेजी साहित्यले पनि संसारै पिटेको थियो । त्यसपछि रसिया जर्मनी आदिको साहित्यले बजार लियो । हाम्रो नेपाली साहित्य अन्य भाषामा अनुवादित छैन । अन्य भाषामा अनुवाद गरेर विश्व बजारमा पुर्‍याउन सक्ने हो भने विश्वले साहित्यको फरक स्वाद पाउने थियो । यसरी विश्वमा कम चर्चित भएका साहित्यहरूमा पचासौं सयौं भाषाका साहित्य रहेका छन् ।

प्र. साहित्यभन्दा बाहिरी क्षेत्रमा गरिएका सेवाहरू पनि केही छन् कि ?

– बाहिर अस्पताल आदिमा बसेर काम पनि गरेको छु । 'पशुपति क्षेत्र स्वास्थ्य व्यवस्थापन समिति'को आजीवन सदस्य तथा सल्लाहकार छु ।

प्र. आर्थिक र बौद्धिक रूपले कस्तो परिवारमा जन्म भएको हो ?

–दुवै हिसाबले ठिकै मान्नु पर्छ किनभने खान, लाउन, खेल्न, डुल्न पुगे कै थियो र छ पनि । साहित्यिक र बौद्धिक विषययमा  भन्नु हुन्छ भने मेरा काकाहरू हृदयराज शर्मा, भरतराज मन्थलीय विद्वानमै गनिन्छन् । मेरो भाइ जगदीश घिमिरेले पनि विद्वानमै नाम कमाएको छ । यस कारणले पनि हाम्रो परिवारमा बौद्धिकताको पनि अभाव नभएको स्पष्ट हुन्छ ।

प्र. साहित्य जगतले नदेखेको त्यस्तो पाटो जुन देखिनु जरुरी छ ।

–त्यस्तो केही छैन ।

प्र. अबको नेपाली साहित्य कस्तो हुनु पर्छ ?

–साहित्य यस्तै हुनुपर्छ भनेर भन्न त म सक्दिन । नदीले जस्तो साहित्यले पनि आफ्नो बाटो स्वयं बनाउँदछ र बनाउन दिनु पर्छ । प्रकृति प्रदत्त उदात्त चेतनाको विकासको विस्तारमा कवि साहित्यकारहरूले सर्वस्व समर्पण गरेका हुन्छन् जसमा नयाँ केही कुरा प्रस्फुरित भएर पल्लिवित हुँदै गर्दा जुन वासना र सौन्दर्यको विकास एक साथ हुन्छ त्यो उत्तमोत्तम साहित्य रत्नको रूपमा देखा पर्दछ । मानव मन/मष्तिस्कको कुन चाहिँ चेतनाको अन्तस्करणमा त्यस्तो ललित्यमय काव्य सिर्जनाको बीज रहेको हुन्छ, त्यसलाई सिमानाको जालोले जेलेर राख्न मिल्छ र ? अवश्य मिल्दैन । यस कारणले साहित्य यस्तै हुनुपर्छ भन्ने हुँदैन । साहित्य, साहित्यजस्तै हुनुपर्छ ।

प्र.वर्तमानको राजनीति र साहित्यलाई कसरी हेर्नुहुन्छ ?

–यी दुवै भिन्न तत्व हुन् । तैपनि राजनीतिको प्रभाव साहित्यमा पर्छ नै किनकि राजनीति भनेको सबै कुराको टाउको हो । यसबेला राजनीति ज्यादै गन्हाएको छ, तर साहित्यको त्स्तो दुर्गति छैन ।  राजनीतिमा अनुशासनहीनता छ, शासनहीनता छ । यत्रतत्र चापलुस, घुसखोर र दलालहरूको विगविगी बढेको छ । भ्रष्टाचार, दुराचार बेपत्ता बढेको छ । शान्ति सुरक्षा छैन । हाम्रा आँखा अगाडि दिनहुँ जसो हत्या, हिंसा, बलात्कारका घटनाहरू घटिरहेका छन् । अर्कोतिर साहित्य भने सोसल मिडियाको सहायताले पनि झन् भन्दा झन् फराकिलो हुँदै गइरहेछ ।

प्र.नयाँ पुस्ताको कस्तो भूमिका हुनुपर्दछ ?

–जस्ता प्रकारले प्रकृतिले उमेर अनुसार भावना चाहनाको विकास गर्दछ । ऋतु अनुसार परिवर्तन पनि हुन्छ । जवान हुँदै गर्दाको छोरोको जुंगा उम्रिनुमा बाउको कुनै भूमिका रहदैन प्रकृतिको मात्र भूमिका रहन्छ । त्यस्तै साहित्यमा पनि युवाहरूको अन्तस्करणमा उत्पन्न भावका उद्वेलित तरंगहरूलाई सञ्चय गरेर स्मृति र अनुभवको बलले पुरानो पुस्तालाई जित्ने प्रयत्नमा संलग्न रहनुपर्दछ । नयाँ पुस्ताले पुरानाको अनुशरण मात्र गर्न हुँदै न । उछिन्नु पर्दछ । उछिन्न सक्नु पर्दछ ।

प्र. अभिव्यक्तिको २०० अंकको उपलक्ष्यमा २०० अक्षर सम्पादक कै अक्षरमा लेखिदिनुहुन आग्रह गरें ।

–हुन्छ, लेखिदिन्छु– 'यति लामो अवधिसम्म साहित्यिक पत्रकारितामा अल्झिरहुँला भन्ने मैले सोचेकै पनि थिइनँ । कुनै दीर्घकालिन योजना बनाएर म यसमा लागेको पनि होइन । जिन्दगीमा कुन बाटो कसरी अघि बढ्ने हो भन्ने विषयमा म कहिल्यै गम्भीर भइनँ । म साहित्यिक पत्रकारको रूपमा परिचित हुँदै गएँ । मेरो सिर्जनशील व्यक्तित्व सम्पादक व्यक्तित्वको छायामा पर्‍यो । भनौं जति जति मेरो सम्पादक व्यक्तित्व मौलाउँदै गयो, उति उति मेरो लेखक व्यक्तित्व वैलाउँदै गयो । यसरी म लेखक कम सम्पादक बढी हुँदै गएँ ।'

नगेन्द्रराज शर्मालाई केही साहित्यिक पत्रकारहरूको दृष्टिमा मैले नियाल्ने कोशिस गरें । अब हेरौं क कसले के के भनेका छन् ।

'कोही पनि जिवित व्यक्ति विशेष भित्र सिमित रहेर कलम चलाउँदा कि कसैको चाप्लुसी कि कसैलाई गाली हुने हुनाले मैले जिवित व्यक्तिको बारेमा कलम चलाउने गरेको छैन । मित्र नारायणजी अभिव्यक्तिको विशेषतामा कलम चलाउनु न भनेर जिद्दी गर्ने थेत्तरो मान्छे रहेछन् तर आफू अभिव्यक्तिको बारेमा पूर्ण जानकार नहुँदा सामान्य जानकारीको भरमा ५० वर्षको इतिहास बोकेको अभिव्यक्तिको संघर्षको गाथा कसरी र के लेख्नु है ? आदरणीय दाजु नगेन्द्रराज शर्मा र स्वर्णवर्ष प्रवेशको संघारमा पुगेको अभिव्यक्तिलाई वैजयन्तिको तर्फ लाखौं लाख शुभकामना ।'

–विनयकुमार शर्मा नेपाल, निर्देशक वैजयन्ति साहित्यिक पत्रिका ।

व्यत्तित्व : 'गेन्द्रराज शर्मा त्यस्ता व्यक्तित्व हुनुहुन्छ जो साहित्यिक पत्रकारका रूपमा स्थापित हुनुहुन्छ । उहाँ सृजनात्मक प्रतिभाका पनि धनी हुनुहुन्छ । उहाँका कथा कविता, उपान्यासहरू पनि प्रकाशित छन् । उहाँ एक वरिष्ट साहित्यिक पत्रकार हुनुहुन्छ भन्ने कुरामा दुईमत छैन । अभिव्यक्तिको निरन्तरताका लागि नै उहाँको रचनात्मक प्रतिभा ओझेलमा परेको छ । साहित्यिक पत्रकारितालाई उँभो लगाउने व्यक्तिहरूमा उहाँ बलियो रुपमा स्थापित हुनुहुन्छ ।'

–रोचक घिमिरे, सम्पादक रचना साहित्यिक पत्रिका ।

यही भनाई नै उहाँको व्यक्तित्वको परिचायक हो ।

समर्पण : 'आफैमा नेपाली साहित्यिक पत्रिकाको एउटा सिंगै युग हो नगेन्द्रराज शर्मा । आधा शताब्दी लगाएर । आधा शताब्दी लगातार पत्रिका

निकाल्नु समर्पणको उत्कृष्ट उदाहरण होला, निरन्तर स्तरीय पत्रिका निकालिर हनु चाहिँ नगेन्द्रराज शर्मा हुनु हो । सम्पादक बनेको मौकामा भए नभएको सिर्जना क्षमता दुरुपयोग गरेर हतार हतार लेखक बनि टोपल्ने संस्कार बीच आफ्नो लोभलाग्दो आख्यानकार व्यक्तित्वलाई पाखा लगाएर अरूलाई लेखक बनाईरहेने दुस्साहस गर्नु भनेको नगेन्द्रराज शर्मा हुनु हो । यसर्थ जो कसैलाई नगेन्द्रराज शर्मा हुनु मुश्किल छ ।'

–लक्ष्मी भट्टराई परिधि, सम्पादक शाल्मलि साहित्यिक मासिक ।

व्यवहार : 'मानवजीवनको अपरिहार्य तत्व व्यवहार नै हो । व्यवहारले नै मानिसलाई आफ्नो सामुदायमा स्थापित गराउँदछ । त्यतिमात्र नभएर सर्वत्र नै एक प्रकारको छाप छाड्छ । अनेक प्रकारको व्यवहार हुने भएकोले मानवीय गुणको उत्तम स्वभावको व्यवहारको त्यहाँ मुल्याकंन हुने गर्दछ । जहाँ समान ज्ञान, योग्यता, दक्षता, लगनशीलता वय लिंग आदि बीच तुलना गरेर एकलाई छान्नु पर्ने हुन्छ । पाँच दशक पुरानो अभिव्यक्ति पत्रिकाको प्रधान सम्पादक एवं नेपाली भाषा साहित्यसेवी, जसको नेपाली साहित्यको आख्यान र निबन्धमा विशेष गरेर कलम चलेका छन् । अत्यन्त सरल एवं स्वभिमानी व्यक्तित्वका रूपमा  मैले चिनेको छु । साहित्य सेवाको निरन्तरता र एक बरिष्ठ साहित्यिक पत्रकारको रूपमा प्रतिष्ठापित हुनु भएका व्यक्तित्व जसको सान्धियमा रहँदा एक अभिभावकको संरक्षण भएको महशुस हुन्छ । सानादेखि ठूलासम्म, हिमाल देखि तराईसम्म जहाँ कही जुन सुकै अवस्थामा पनि रोमान्टिक रहनसक्ने व्यक्तित्व हुनुहुन्छ नगेन्द्रराज शर्मा । यो पक्ष नै उहाँको राम्रो व्यवहारिक पक्ष हो ।'

–ठाकुर शर्मा भण्डारी, प्रधान सम्पादक वैजयन्ति साहित्यिक पत्रिका ।

गुण : 'राम्रा काम गर्ने व्यक्तिका धेरै राम्रा गुण हुन्छन् त्यसमा पनि आनन्दका लागि कुनै विशेष कार्य गर्ने व्यक्तिमा अझ पाउन सकिन्छ । सुख वा खुशी प्राप्त गर्नका लागि गरिने काममा भन्दा आनन्द प्राप्तिका लागि गरिने कामबाट ज्यादा सन्तुष्टि मिल्दछ । सुख, खुशी र आनन्द पर्यावाची हो इनन् । सुखको मूल अर्थ हो । अर्थले सुखका साधनहरू हासिल गर्न सकिन्छ । सुख र दुख विरोधी हुन् यी दुईको ३६को आकडा रहन्छ । सुखमा दुख र दुखमा सुख एकसाथ धेरै समय रहन सक्दैन । तर आनन्द सुखमा पनि रहन्छ र दुखमा पनि रहन्छ । आनन्दको विशेषता यही हो । त्यही आनन्दलाई नै साहित्यमा स्वान्त सुख भनिएको हो । हामी जब करुणरसले युक्त काव्य पढिरहेका वा सुनिरहेका त्यसबेला हामी धेरैनै दुखी भइरहेका हुन्छौं तर पनि हामी त्यसलाई पढ्नमा वा सुन्नमा निरन्तरता दिइरहेका हुन्छौं । यसको अर्थ हो दुःखी अवस्थामा पनि आनन्दको अनुभूति भइरहेको हुन्छ आँखाबाट आशु झरे पनि  । अन्तस्करणमा जब आनन्दको लहरहरू जब तरंगित हुन थाल्दछन् त्यस्तो अवस्थाको व्यक्ति वास्तवमा सुखी हुन्छ । सुखको कारण भौतिक साधन हो भने आनन्दको कारण अर्न्तबोध हो ।

उहाँ समझदार हुनुहुन्छ र अलि फराकिलो पनि । बनारसमा भएको

गोष्ठीको कार्यपत्रमा केही मित्रहरूले आफ्नो पत्रिकाको नाम छुटेकोमा गुनासो गर्नुभयो तर उहाँले भन्नुभयो– 'कार्यपत्र प्रस्तुत गर्नेले नियतवश छुटाएको होइन भने गुनासो व्यर्थ छ। छुटेको करेक्सन गर्न मिलिहाल्छ नि।' यो भनाई सानो दिलबाट निस्कदैन। यो उहाँको विशेष गुण हो।

–डिल्लीराम पोखरेल।

चिन्तन : 'जीवनलाई अनित्य मान्दै कसैको कर कापमा भन्दा पनि आनन्दको साथमा रमाएर अरूलाई पनि खुशी पार्दै काम गर्ने व्यक्ति हो– नगेन्द्रराज शर्मा। यो जीवन क्षणभंगुर छ त्यसैले यसको सद्पयोग गर्नु रम्नु रमाउनु, हाँस्नु हसाउनु, खानु खुवाउनु खुशी रहनु खुशी राख्नु जस्ता कर्म गर्नु पर्दछ भन्ने व्यक्ति उहाँ काम भनेको प्रयोजनका लागि गरिने हो सम्मानका लागि होइन। आफूले गरेको कर्म समाजले मन पराइदिनु नै सम्मान हो त्यसैले कुन पनि कमा गर्दा आनन्दका साथ गर्नु पर्दछ। उहाँको जीवन प्रतिको चिन्तन स्तर निक्कै उचाइको छ। उहाँ भविष्यको आवश्यकता भन्दा ज्यादा चिन्तन गर्नु हुन्न। यस्तो प्रकारको उहाँको चिन्तन परम्परा कुनै वास्तविक वैरागीको भन्दा अत्युक्ति हुँदैन।'

–रामप्रसाद शर्मा, सम्पादक दायित्व दैमासिक साहित्यिक पत्रिका।

रुचि : 'संस्कृत साहित्यमा एउटा प्रसिद्ध वाक्यांश छ रुचिनां वैचित्र्यम् अर्थात् मानिसको रुचि इच्छाहरू अनेक र विचित्र प्रकारका हुन्छन्। प्रत्येक व्यक्तिका अनेक रुचि हुन्छन् जसमध्ये एउटा प्रधान हुन्छ र त्यही जनमानसको भावना रहन्छ।

एक शालीन भद्र र संवेदनशील व्यक्तित्व जो साहित्यिक पत्रकारिताको क्षेत्रमा उच्चस्तरीय मानकको रूपमा स्थापित हुनुहुन्छ। आख्यानमा दख्खल राख्ने व्यक्ति जसको नेतृत्वमा हामीले सानो भएको पाएका छैनौं त्यसैले पनि हाम्रा गुरु हुनुहुन्छ नगेन्द्रराज शर्मा। यस ८२ वर्षको उमेरमा पनि उहाँको जोश जागर र गतिशीलतालाई देखेर हामीलाई गर्व लाग्छ। उहाँको पहिलो रुचि भनेको नेपाली साहित्यको सेवा हो भने दोस्रो रुचि चाहिँ नयाँ ठाउँ घुम्ने त्यहाँबाट केही सिक्ने र जति सकिन्छ मनोरञ्जन गर्ने नै हो।'

–लक्ष्मी उप्रेती, सम्पादक बनिता साहित्यिक पत्रिका।

विशेषता : 'साहित्यिक पत्रकारिताको सिंगो इतिहास जसले सुनौलो अवसर श्रष्टालाई दिएको छ, कैयौ प्रतिभा उठाएको छ। फलामको चिउरासरी पीडा उठाएर पनि सुन्दर र साझा थलोको रूपमा अभिव्यक्तिलाई उभ्याउनु भएको छ। त्यस्ता व्यक्तित्व अब्बल साहित्यिक पत्रकारको नमुना बनेको नगेन्द्र दाई  सबैका प्रेरणाको श्रोत हुनुहुन्छ। यही नै उहाँको विशेषता हो।'

–चेतनाथ धमला, सम्पादक कौशिकी साहित्यिक पत्रिका।

नेतृत्व : 'साहित्यप्रति उर्लंदो रुचिको बेला थियो २०५१ सालतिर। अभिव्यक्ति साहित्यिक पत्रिकामा उल्लेखित फोन नं.मा सम्पर्क गरी सम्पादक नगेन्द्रराज शर्मालाई उहाँकै निवास चावहिलमा भेट्न पुगें। मैले पनि भर्खर २०५०सालदेखि लिब्जु-भुम्जु त्रैमासिक पत्रिका प्रकाशन थालेको थिएँ। मभन्दा

एक वर्ष पछि २०२७ सालमा जन्मिएको अभिव्यक्ति २०७५ सालसम्मै प्रकाशन हुनु सम्पादकको प्रतिवद्धता साँच्चै अनुकरणीय लाग्दछ । समाजशास्त्रको विश्लेषणमा २५ वर्षको एक पुस्ता मानिन्छ । अभिव्यक्तिले दुई पुस्ताको नेतृत्व गरेको छ । २०७५ माघ १० गते नारायण निरौलाजीको अनुरोधमा अभिव्यक्तिप्रतिको अभिव्यक्ति ।'

–गणेश राई सम्पादक लिब्जु-भुम्जु, त्रैमासिक साहित्यिक पत्रिका ।

'नेपाली साहित्यिक पत्रिकाको क्षेत्रमा विर्सन नसकिने र नमिल्ने व्यक्तित्व हुन नगेन्द्रराज शर्मा । रामेश्वर राउत ।'

निष्कर्ष–

उपर्युक्त कथनहरू नै उहाँको जीवन दर्शनको निष्कर्ष हो । उक्त कुराहरूबाट के जान्न सकिन्छ भने नगेन्द्रराज शर्मा एक व्यक्ति मात्र नभएर स्वयंमा एक संस्था हुनुहुन्छ वा त्यस्तो एक वटवृक्ष जसको हाँगामा छायामा धेरैले एकसाथ वा अगल अलग विश्राम लिएर ढुक्कको स्वास फेर्न पाउँछन् । अभिव्यक्तिले धेरैको प्रतिभालाई फलाउने फुलाउने गरेको छ । जगदीश घिमिरे, पारिजात, भिमनिधि तिवारी, भुपि शेरचन, केदारमान व्याथित, शंकर लामिछाने आदिले अभिव्यक्तिको हाँगामा फुल्न र फल्न पाएँ । त्यही हाँगामा हाम्रा पुस्ता पनि झुण्डिदैछ, अझै त अभिव्यक्तिले हामीजस्तालाई झुलिरहनको लागि सहयोग पुर्‍याइ रहेको छ ।

५० वर्षको निरन्तरताका लागि नगेन्द्रराज शर्मा दाइलाई र २०० अंकमा प्रवेश गर्न लागेको अभिव्यक्ति दुवैलाई हार्दिक शुभकामना साथै अभिव्यक्तिको उत्तरोत्तर वृद्धिको कामना ।

ꕥꕥ

# अभिव्यक्तिलाई शुभकामना

**अरुण नदी खत्री**

*सामाखुसी मार्ग, काठमाडौं, मोबाइल ९८४१७९७६६४*

२०६० सालदेखि मैले अभिव्यक्ति साहित्यिक द्वैमासिक पत्रिका नियमित रूपमा पढ्दै आइरहेको छु । बेला बेलामा साहित्यिक रचनाहरू पनि पठाउने गरेको छु । कृति समीक्षा, हाइकु, लघुकथा बेला बेलामा प्रकाशित भएका छन् । अभिव्यक्ति पत्रिका हामीहरूले वेवसाइटबाट पनि हेर्ने सुविधा पाइरहेका छौं । यो पत्रिका पूर्णाङ्क २०० सम्म आइपुग्दा मलाई अत्यन्तै खुशी लागेको छ । अभिव्यक्ति नियमित रूपमा प्रकाशित हुदै जान सकोस् भन्ने हार्दिक कामना गरेको छु । अभिव्यक्तिमा सबै साहित्यकारहरूका रचनाले स्थान पाउन सकुन् । पत्रिका बेच्ने सबै पसलहरूमा अभिव्यक्ति साहित्यिक झुण्डिएको देख्न पाए अझै राम्रो हुने थियो ।

अभिव्यक्तिको पूर्णाङ्क १९९ मा हरि कट्टेलको नदी शीर्षकको कविता निकै राम्रो लाग्यो । रीता ताम्राकारका उदिग्न मन शीर्षकको कथा ज्यादै मार्मिक रहेछ । बिनोद नेपाल मुक्तकमा जमेका छन् । अभिव्यक्तिको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

ꕥꕥ

# युगौं युग बाँचिरहोस 'अभिव्यक्ति'

पवन आलोक

प्रत्येक क्षण आफैँमा इतिहास हो ।

"अभिव्यक्ति"ले आफ्नो गौरवमय इतिहास निर्माण गरिरहेछ । विक्रमसम्वत् २०२७ साल फागुनमा पहिलो अङ्क प्रकाशन सुरू गरेको यो द्वैमासिक साहित्यिक पत्रिकाले आफ्नो प्रकाशनको लगभग पचास वर्ष पुरा गर्न लागेको र २०० औँ अङ्कको प्रकाशन गर्ने तरखरमा छ भन्ने सुन्दा हामी सम्पूर्ण नेपाली साहित्यप्रेमीहरूलाई अपार हर्ष लाग्नु स्वाभाविकै हो । साहित्यलाई अनुत्पादक क्षेत्र मान्ने हाम्रो जस्तो देशमा आफ्नो निजी प्रयासबाट आधा दशकसम्म निरन्तरता दिन सक्नु चानचुने कुरा होइन । यसको सम्पूर्ण श्रेय यसका प्रधानसम्पादक वरिष्ठ साहित्यकार/साहित्यिक पत्रकार नगेन्द्रराज शर्मालाई जान्छ । तपस्या विना यो सम्भव छैन । उहाँको यो तपस्यालाई म श्रद्धापूर्वक अभिवादन गर्दछु ।

"अभिव्यक्ति" ले नेपाली साहित्यमा विशिष्ट स्थान ओगटेको छ र यो हामी सम्पूर्ण पाठकहरूको प्रिय पत्रिका हो । हाम्रा थुप्रै साहित्यकारहरूलाई स्थापित गराउन र प्रशिद्धिको शिखरमा पुऱ्याउन यसको अहम् भूमिका र हँदै आएको छ र यो निरन्तर जारी छ । अर्को अर्थमा "अभिव्यक्ति"ले नेपाली साहित्यको विकास र उन्नयनमा अत्यन्त महत्वपूर्ण योगदान दिइरहेको छ भन्दा कसैको पनि विमति नहोला ।

"अभिव्यक्ति" अर्थात् नगेन्द्रराज शर्मा । नगेन्द्रराज शर्मा अर्थात् "अभिव्यक्ति" । नगेन्द्र दाई र "अभिव्यक्ति" एक अर्काका पर्याय र पहिचान बनेका छन् । सबैले आदर गर्ने व्यक्तित्व नगेन्द्र दाई । चालिस वर्षभन्दा बढी समय पहिलेदेखि चिनेको हुँ मैले उहाँलाई । म अभिव्यक्तिको नियमित पाठक हुँ र भेटेसम्म प्रत्येक अङ्क खोजेर पनि पढ्ने गरेको छु । मलाई यसबाट पर्याप्त साहित्यिक खुराक मिल्ने गरेको छ । नेपाली साहित्यमा 'शारदा', 'रूपरेखा', 'रचना', 'मधुपर्क', 'गरिमा' र अन्य केही पुराना पत्रिकाहरूले पनि महत्वपूर्ण योगदान दिएका थिए र दिंदै आएका छन् । यसरी यी पत्रिकाहरूले आ-आफ्नो इतिहास निर्माण गरेका छन् र तिनको आ-आफ्नै विशेषता रहिआएको छ । वरिष्ठ साहित्यिक पत्रकार रोचक घिमिरेज्यूको सम्पादनमा निरन्तर प्रकाशित भइरहेको "रचना"को भूमिका पनि अत्यन्त महत्वपूर्ण रहँदै आएको छ । निर न्तर रूपमा प्रकाशित हुँदै आएका अन्य थुप्रै साहित्यिक पत्रिकाहरू पनि छन् । आ-आफ्नो क्षेत्रबाट नेपाली साहित्यको उत्थान र विकासमा उल्ले खनीय योगदान पुऱ्याउँदै आएका जनमत, दायित्व, शारदा (धेरै वर्षपछि हाल आएर विमल भौकाजीको सक्रियता र सम्पादनमा निरन्तर प्रकाशित हुँदै आएको), भानु, वैजयन्ती, कौशिकी, शिवपुरी सन्देश, कल्पतरू, शब्द संयो जन, वनिता, समकालीन साहित्य, कविता, माधुर्य, प्रज्ञा, शब्दाकुंर, उन्नयन,

तन्नेरी, नव प्रज्ञापन, नारीस्वर, हाम्रो मातृभूमि, रूपायन, कपन बानेश्वर, चेतना सन्देश, संगम अभियान, अक्षरमार्ग, सुलेख, शाल्मली, ज्ञानगुनका कुरा, हिमाली सन्देश, बगर, कथालिका, अन्तरबोध, नयाँ सतमार्ग, स्रष्टा दर्पण, दोभान, भृकुटी, लहरा, रजस्थल, हाम्रो पुरूषार्थ, हाम्रो सिर्जना, समष्टि लगायतका पत्रिकाहरूको प्रशंसा गर्नै पर्छ । यो लिष्टमा पुराना र नयाँ थुप्रै पत्रिकाहरूको नाम छुटेको अवश्य होला । मैले अहिले सम्झिन सकेसम्म मात्र राखेको हुँ । त्यसको अर्थ यो लिष्टमा नपरेका ती पत्रिकाहरूको योगदान छैन भन्न खोजेको पक्कै होइन ।

"अभिव्यक्ति"सँग जोडिएको अर्को एउटा पक्ष पनि छ, त्यो हो- "अभिव्यक्ति मासिक भेटघाट कार्यक्रम" जो विगत १७/१८ वर्षदेखि निरन्तर चलिरहेको छ । यो नितान्त औपचारिक भेटघाट हो । प्रत्येक महिनाको पहिलो बिहीबार साँझ स्रष्टाहरू एक ठाउँमा भेट्ने र एकआपसमा छलफल एवं साहित्यिक अन्तरक्रिया गर्ने गर्दछन् । देशका केही स्थापित र विशिष्ट साहित्यिक हस्तीहरूको उपस्थिति र भेटघाट यसको विशेषता हो ।

"अभिव्यक्ति" जस्तो महत्वपूर्ण साहित्यिक पत्रिका निरन्तर प्रकाशित होस भन्ने हाम्रो चाहना अनुरूप प्रधानसम्पादक नगेन्द्रराज शर्माज्यूले (जो नेपाल साहित्यिक पत्रकार संघको कर्तमान अध्यक्ष पनि हुनुहुन्छ) अभिव्यक्ति अक्षयकोष स्थापना गर्ने अभियान थाल्नु भएको छ । यस कोषको माध्यमबाट पत्रिकालाई आर्थिक रूपमा आत्मनिर्भर बनाएर यसलाई निरन्तरता दिने वहाँको सत्प्रयासमा धेरैले सहयोग पुऱ्याउँदै आउनु भएको छ । हालसम्म उक्त कोषमा रू. दस लाखभन्दा बढी रकम जम्मा पनि भइसकेको छ । आशा छ, नगेन्द्र दाईको यो दुरदृष्टिको कारणबाट "अभिव्यक्ति"को नियमित प्रकाशन सम्भव हुनेछ । नेपाली साहित्यको विकास र प्रवर्द्धनमा अत्यन्त महत्वपूर्ण भूमिका खेल्ने यो पत्रिका युगौं युगसम्म बाँचिरहोस् भन्ने म चाहन्छु, मेरो हार्दिक शुभकामना छ ।

ঔঔ

# हार्दिक बधाई एवं शुभकामना

**नवराज पुडासैनी**
प्रधान सम्पादक, कल्पतरु द्वैमासिक

आधा शताब्दीदेखि निरन्तर प्रकाशित हुँदै सयौं मूर्धन्य साहित्यकार स्थापित गराउन सफल अभिव्यक्ति 'द्वैमासिक' साहित्यिक पत्रिका आफ्नो २००औं विशेषाङ्क प्रकाशनको तयारीमा रहेको खबरले म रोमाञ्चित भएको छु । यो पत्रिकालाई यहाँसम्म ल्याइपुऱ्याउनुहुने प्रधान सम्पादक नगेन्द्रराज शर्माज्यूप्रति हार्दिक बधाई ज्ञापन गर्दै आगामी दिनमा नेपाली साहित्यिक पत्रकारिता क्षेत्रले यहाँबाट पाउँदैआएको नेतृत्वदायी भूमिका कायमै रहोस् भन्ने हार्दिक मङ्गलमय शुभकामना अर्पण गर्दछु ।

ঔঔ

# शुभयात्राका लागि शुभकामना

मोहन दुवाल
प्रधान सम्पादक : जनमत मासिक
बनेपा-८, जनमतचोक, काभ्रे

साहित्यिक पत्रकारिताकै अभिव्यक्ति भएर 'अभिव्यक्ति' प्रकाशन भएको पनि ५० वर्ष पुग्न लागेको छ। रुप-रङ्ग केही नबिगारिकन साहित्यिक भावनामा आफूलाई सधैं साँच्न लगाई साहित्यिक पत्रकारिताको एउटा मानक इतिहासका बिम्ब बन्न सफल नगेन्द्रराज शर्मालाई म अग्रज साहित्यिक पत्रकारका रुपमा सधैं आदर र स्मरण गर्छु ।

साहित्यलाई अर्थपूर्ण ढङ्गले नहेर्ने, अप्ठ्यारो ठाउँमा फलेको फर्सीजस्तो सम्झिने, उपलब्धीमूलक विषय र वस्तु होइन भनेर बेवास्ता गर्ने कूपमण्डूक राजनीतिकर्मी र सत्ताधीशहरुका लागि 'अभिव्यक्ति' को साहित्यिक पत्रकारिताको इतिहास उल्लेख नहुनु आश्चर्यको विषय नहोला ? तर साहित्यको गहनता बुझ्नेहरुका लागि अभिव्यक्तिको इतिहास अभिनन्दनीय छन् ।

म पनि 'जनमत' नामक साहित्यिक मासिकको माध्यमबाट राष्ट्रका साहित्यकारहरुको माझ पुगिरहेकै कारणले म बुझ्छु रोचक घिमिरेका 'रचना' गाथाहरु, भवानी घिमिरेबाट भएका 'भानु' का साहित्यिक पद्चापहरु र नगेन्द्रराज शर्माका 'अभिव्यक्तिका कलापूर्ण स्वरहरु' । अग्रज साहित्यिक पत्रकारहरुमा नगेन्द्रराज शर्मा पनि मेरा अग्रज आदरणीय साहित्यिक पत्रकार हुन् । जसले जेसुकै भने पनि, जस्तोसुकै आपदविपद आए पनि आफ्नो साहित्यिक ध्वजा निरन्तर फहराइरहन रुचाउनु हुने साहित्यिक पत्रकारिताका एकजना धरोहर नगेन्द्रराज शर्मालाई 'अभिव्यक्ति' को २०० (द्विशताङ्क) प्रकाशनका लागि अर्थात् शुभयात्राका लागि साहित्यिक शुभकामना जनमतका तर्फबाट दिन रुचाइरहेछु ।

मिति : २०७६ वैशाख २९

ꕥꕥ

# हार्दिक शुभकामना

जानु धिताल

अभिव्यक्तिका पानाहरू यसरी नै २०० बाट २००० अङ्कसम्म निरन्तर बगिरहोस् !

असीम शुभकामना तथा अनन्त स्नेहिल माया !

ꕥꕥ

# त्याग र सर्मपणको प्राप्ति अभिव्यक्ति २००

**महेश्वर शर्मा**

चिलाउनेघास, स्याङ्जा

राजनीतिले झुमलेको बेला २००९–१० तिर हृदयराज शर्माको पाथे भाइ भएर पनि नगेन्द्रराज शर्मा र जगदीश घिमिरेसँग भने धेरै पछि मात्र मेरो सम्पर्क भयो । हृदयराज शर्माको जल्दोबल्दो राजनीतिक व्यक्तित्व विशेष रूपमा नेपाली काँग्रेसका महासमिति र महाधिवेशनहरूमा मुखारित हुन्थ्यो । त्यो समूहमा चारजना थियौं– हृदयराज, एन डी प्रकाश, रामकुमार जीवनमित्र र म । चित्त नबुझेको बुँदामा हामी पालैपालो खरो रूपमा उत्रन्थ्यौ । आज राजनीतिमा आएको विकृति देख्दा तिनै निर्भीक र इमान्दार साथीहरूको सम्झना हुन्छ । आज त्यो समूहको म मात्रै बाँकी छु, तर राजनीति बाहिर ।

नेपाली साहित्य र साहित्यिक पत्रकारिताको फाँटलाई नगेन्द्र र जगदीशले जसरी हरियो भरियो बनाएकाछन्, जीवित रहेका भए हृदयराज पनि राजनीतिमा चम्किने क्षमता राख्थे । नगेन्द्रजी र हृदयराजको पाटो र बाटो बेग्लै भएपनि काका-भतिजा भएको नाताले मात्र मैले यो प्रसंगको कोट्याएको हुँ ।

यहाँ मूल प्रसंगमा अभिव्यक्ति छ । आधा शताब्दी देखि सक्रिय भएर अनवरत रूपमा स्तरीय साहित्यिक पत्रिका चलाउनु चानचुने कुरा होइन । मन्थलीको माटो ज्यादै मलिलो रहेछ। त्यहाँका घिमिरे बन्धुको कुलीन र शालीन परम्परा जुनसुकै क्षेत्रमा पनि प्रभावशाली रहँदै आएको छ। त्यसैको प्रतिविम्ब नगेन्द्रजीको व्यक्तित्वमा पनि छ। नेपाली साहित्यप्रति उहाँको अथक साधना र समर्पणको उज्जवल उदाहरण हो 'अभिव्यक्ति' । यसले धेरै लेखक– साहित्यकारहरू जन्माएको छ । यो सबै नगेन्द्रजीको त्याग, तपस्या, निष्ठा, आँट र जाँगरको सुपरिमाण हो भन्ठान्छु म ।

सरकारका उपेक्षपूर्ण व्यवहारका कारण घिपधिपे स्थितिमा रहेको नेपाली साहित्यिक पत्रकारितालाई ऊर्जा थपेर जनस्तरसम्म पुऱ्याउने नगेन्द्रराज शर्माको अठोट स्तुत्य र प्रशंसनीय छ। आज एकथरि नेपाली भाषाका मानक भत्काउन लागीपरेका छन् भने प्रज्ञा प्रतिष्ठान समेत मतियारको भूमिकामा रहेको संकटको अवस्थामा मौलिकता जोगाउनु पर्ने दायित्व समेत थपिएको छ । यो स्थितिमा नेपाली बाङ्मयको संरक्षणका लागि अभिव्यक्ति रचना जस्ता अग्रणी साहित्यिक पत्रिकालाई सबैतिरबाट भरथग गर्नु अति आवश्यक भएकोछ ।

यस सन्दर्भमा अभिव्यक्तिलाई २००औं अंकसम्म पुऱ्याउने काम लरोतरो प्रयासबाट भएको होइन, नगेन्द्रजीको दह्रो मुटुले थामेर सम्भव

भएको हो । यो अङकले नगेन्द्रजीलाई पाती चढाउने देउरालीमा पुऱ्याएको छ । अभिव्यक्तिका माध्यमबाट शर्मा त उठ्नु भएकै छ । तेसको साथ साथ अरूलाई र साहित्यिक पत्रकारितालाई उठाउने उहाँको अभियान ज्यादै प्रशंसनीय छ। उहाँको प्रकाशकत्व र सम्पादनमा अभिव्यक्तिले आधा सताब्दी बीच नेपाली साहित्यलाई जुन ऊचाइमा पुऱ्याउन योगदान गरेको छ त्यस्तै यागेदान उहाँको नेतृत्वले साहित्यिक पत्रकारितालाई पनि अझ माथि उठाउन गरेको छ ।

नगेन्द्रजी २०२९ सालमा स्थापना भएको साहित्यिक पत्रकार संघको संस्थापक सदस्य, उप सभापति र सभापति हुनुहुन्थ्यो २०२९-३८सालसम्म भने पनि हाल 'नेपाल साहित्यिक पत्रकार संघ'को सभापति हुनुहुन्छ। उहाँको सक्रियता आज पनि उत्तिकै छ । फलतः विभिन्न संघ सस्थाद्वारा सम्मानित अभिनन्दित र पुरस्कृत हुँदै आउनु भएका शर्माको यो सुकीर्ति उहाँकै समर्पणको उपलब्धि हुनाले अभिव्यक्तिको २००औं अंक प्रकाशनको यस सुखद अवसरमा उहाँप्रति शतश शुभकामना तथा धन्यवाद अर्पण नमन गर्छु ।

ॐॐ

## हार्दिक शुभकामना


**लक्ष्मी उप्रेती**

*सम्पादक, वनिता*


नेपाली भाषा साहित्यलाई उचाल्न साहित्यिक पत्रिकाको योगदान महत्वपूर्ण हुन्छ भन्ने यथार्थ सबैलाई अवगत नै छ । लमो समयसम्म साहित्यिक पत्रिका निरन्तर प्रकाशन गर्नु चानचुने कुरो होइन ।

अभिव्यक्ति साहित्यिक पत्रिका वि. सं २०२७ सालदेखि निरन्तर प्रकाशनमा आइरहेको एउटा गुणस्तरीय र उत्कृष्ट पत्रिका हो । यसका सम्पादक वरिष्ठ कथाकार नरेन्द्रराज शर्माको लगनशीलता, रुचि र मेहनतका कारण अभिव्यक्ति ऐतिहासिक पत्रिकाका रूपमा स्थिापित भइसकेको छ । अभिव्यक्ति र नगेन्द्रराज शर्मा एक अर्काका पर्यायका रूपमा रहेको कुरा संसारभरि छरिएर रहेका नेपाली साहित्यका पाठकको मन मष्तिस्कमा र हिसकेको छ ।

साहित्यिक पत्रिकाको मानक नै भइसकेको अभिव्यक्ति पत्रिका सफलताका साथ २०० अंक पुगेकोमा यसका सम्पादक नगेन्द्र दाइलाई विशेष बधाईका साथ यसको निरन्तरताका लागि हार्दिक शुभकामना व्यक्त गर्दछु ।

ॐॐ

# अभिव्यक्ति लाई हार्दिक शुभकामना एवं बधाई

राप्रउ पोखरेल
कमपा-७, सिफल

'अभिव्यक्ति' साहित्यिक पत्रिकासित मेरो साक्षात्कार २०२७ सालमा मित्र जगदीश घिमिरे मार्फत मैतीदेवीको पुलपारीको डेरामा भएको थियो । अभिव्यक्तिको पहिलो अङ्क प्रकाशित भइसकेको थियो, दोस्रो अङ्क निकाल्ने सुरसार थियो । सुरुको अङ्कदेखि नै भैरव अर्याल, रोचक घिमिरेहरुको प्रोत्साहन र सहयोग पायो । त्यससँगै, प्रतिष्ठित साहित्यकारहरुको रचना छाप्न पाएर एक स्तरीय साहित्यिक पत्रिकाको रुपमा स्थान बनाउन सफल बन्यो ।

यहाँ हालको प्रदेश नं, दूईको राजधानी जनकपुरलाई सम्झिनु पर्ने हुन्छ । सम्बत् २० को दसकमा जगदीश घिमिरे त्यहाँ बस्ता जनकपुर एक प्रकारले मोफसलको साहित्यिक केन्द्रजस्ता बनेको थियो । त्यसको प्रेरणा र प्रोत्साहनको स्रोत प्रा.डा.धीरेश्वर झा 'धीरेन्द्र' थिए । जगदीश घिमिरे, मनुब्राजाकीको साहित्यिक विकास त्यहीँ भएको थियो । लीलासिंह कर्मा, कुलदीपप्रसाद कुमुद, लेखनाथ शर्मा, माधवप्रसाद आचार्यहरु पत्रकारितासँगै नेपाली भाषा-साहित्यका सम्बर्द्धक थिए । अनि मैले मुकुन्ददाई भनेर सम्बोधन गर्ने जगदीश घिमिरेका दाजु नगेन्द्रराज शर्मा केही महिनाकालागि त्यस माहोलमा मिसिन आउनु भएको थियो । जनकपुरको त्यस बसाईबाट प्रेरित भएर पनि होला र त्यससँगै काठमाडौंको साहित्यिक मित्रमण्डलीको प्रोत्साहन र सहयोगबाट पत्रिका निकाल्ने आँट गर्नु भएको थियो भन्ने बुझेको छु ।

अभिव्यक्ति पहिलो अङ्कदेखि नै पठनीय थियो र सङ्ग्रहणीय पनि । स्थापित साहित्यकारहरुका रचना छाप्नुका साथै नया प्रतिभाहरुलाई पनि स्थान दिएर लेखनतर्फ प्रवृत्त गराउन अभिव्यक्तिको सहयोगी एवं सहृदयी भूमिका वन्दनीय छ । अभिव्यक्ति पचास वर्षमा पुग्दै छ । यसको रचनात्मक भूमिकाले निरन्तरता पाइरहेकै छ । यस पत्रिकाले भाषा साहित्यको माध्यमबाट राष्ट्रलाई गहन योगदान पुर्‍याएको छ । भविष्यमा यसले प्रगति गरिरहोस्, चिरजीवी बनोस् यिनै शब्दहरुले अभिव्यक्ति र त्यसका जन्मदाता आदर्णीय नगेन्द्र दाईमा हार्दिक शुभकामना एवं बधाई अर्पण गर्छु ।

## १८३/होटेल हार्दिक, साहित्यकार संघको चुनाव (०७३.१.२१)

प्रेम राई : (चुनावअघाडि परिचय गर्दै) म प्रेम राई, खोटाङबाट आएको ।

डा. तुलसी भट्टराई : म पनि तुलसी राई, ताप्लेजुङ बाट आएको । तपाईं खोटाङको चामलिङ राई, म ताप्लेजुङको भट्ट राई ।

# स्रष्टा संस्कृतिका संपोषक एवं प्रतिपादक : प्रा नगेन्द्रराज शर्मा

रमेश गोर्खाली

समकालीन नेपाली साहित्यको सम्पोषण र चिन्तनमा संवत् २००७ र २०६३को लोकतान्त्रिक परिवर्तनले ठूलो भूमिका खेलेको इतिहास छ। कतिपय बुद्धिजीवी एवं साहित्यसेवीले राजनैतिक कालखण्डलाई आआफ्नो किसिमले आत्मसात् गर्दै आधुनिक नेपाली वाङ्मयलाई गौरवान्वित तुल्याएको देखिन्छ। प्रा.नगेन्द्रराज शर्माले अभिव्यक्ति आर्तव पत्रिकाको प्रारम्भ संवत् २०२७मा गरेका हुन्। आधा शताब्दी वारिपारि आइपुग्दा यस पत्रिकाको बहुपक्षीय सेवा राष्ट्रिय सन्र्दभमा गौरवशाली रहेको स्पष्ट छ। नराश (यायावर) सम्पोषित स्रष्टा संस्कृति (राइटर्स एण्ड थिंकर कल्चर)ले नेपाली बौद्धिक इतिहासमा विशिष्ट चिन्तन प्रदान गरेको प्रष्ट छ। स्रष्टा संस्कृति सूचक वैविध्यले कालसूचक एउटा मानकलाई स्पर्श गरेकोले मिनि ट्रेण्डसेटर लेखक र नवीन सन्र्दभका सम्पादक चिन्तक (ट्रेण्डी) ठहरिएको स्थिति छ। कतिपय ज्ञाता र बरिष्ठको ध्यान एवं सुदृष्टि यस दिशामा नपरेपनि प्रा. नराशले ज्ञात र अल्प ज्ञात रूपमा नेपाली भाषा र साहित्यमा सम्प्रदाय (स्कुल)को संस्थापन गरेको देखिन्छ। कतिपय स्रष्टा र साहित्यकारहरूले मैले यो गरें त्यो गरें तथा यस्तो लेखें भनी आफ्नो गुणगान गरी मपाईंवाद फैलाउने चेष्टा गर्छन्। यस्ता बीच कतिपय मिथ्या उद्घोषक प्रमाणित भएका छन्। नराशको कुरा आउँदा थुप्रैले देख्छन्– यौटा प्रशंसापूर्ण आयाम (डाइमेन्सन) यीबाट अनायास जन्मिसकेको रहेछ र त्यो पक्ष विवेच्य छ। सूक्ष्म संस्कृतिको विशेषता र समानुभूतिलाई हामी नराशको जीवनसूचक यौटा दर्शन (फिलासफी)का रूपमा अनुभूत गर्न सक्छौं। अर्धशताब्दीको कालप्रवाहमा थुप्रै आरोह-अवरोह एवं विकट परिस्थितिलाई झेलेर यिनले आफूलाई साथीभाइ र समाजबीच गम्भीर मनोचिन्तकका रूपमा खडा गरेको पाउँछौं।

नगेन्द्रसूचक यायावरवादको रूपमा स्थापित छ र त्यो सन्दर्भ विश्लेषणीय छ। समयको सूचकांक मान्छेको जीवनको त्यस्तो वैभव वा श्रीसम्पत्ति हो जसको पुनरावृत्ति कठिन छ। तसर्थ कसैले आफ्नो जीवनको सिंहावलोकन गर्दा सन्तुष्टिको अनुभूति गर्दछ भने तिनलाई समाजले धाप दिनु पर्छ।

नराशको वैयक्तिक जीवनको आफ्नो अवरोह र आरोह छ जसलाई यिनका कतिपय समवर्ती र सुपरिचितले थाहा नपाएको हुन सक्दछ। उहिलेका ऋषिमुनिहरूले ध्यानस्थ अवस्थामा मानवोचित तथ्य बटुलेर यौटा जीवन दर्शन दिएझैं नराशले आफ्नो व्यक्तिसत्ताले समाज र राष्ट्रको ध्यान आकृष्ट गर्न सकेको स्थिति परीक्षेय छ। देख्दा देख्दै आधा शताव्दी वितिसकेछ ए गाँठे भन्दै यिनका कतिपय मित्रको महातन्द्रा टुट्न सक्दछ यस सन्र्दभ र

यसको परिप्रेक्ष्यमा । शारीरिक र मानसिक तन्तुहरूले विश्रामको क्षण खोज्न सक्दछ दीर्घावधिमा । सृजनात्मक मानक पहिल्याएर केही लेखक देवकोटा, सम, पौडेल, घिमिरे, तिवारी, मल्ल, रिमाल, विष्ट, गौतम र सिद्धिचरणझैं युग समीप रेखांखित हुन्छन् भने ती त्यसै एकै दिनमा बन्दैनन् । रिजाल, रिसाल, धिमाल, दुवाल र सुवाल के कस्ता हुन् वा ७०० पृष्ठको थेसिस र १७ पृष्ठको सोधपत्रमा कसको महत्व बढी छ त्यहाँ पुनः अन्तर्द्वन्द एवं मनोद्वन्द जन्मिन सक्दछ विषय केलाउँदा । फलामलाई चुम्बकले ताने झैं अधिसंख्यक निर्दयी व्यक्ति भएको विकासोन्मुख समाजमा कोही पनि होस् सुस्थापित हुने चेष्टा कठिन हुन्छ ।

फुटबल, हकी र कृकेटका उत्कृष्ट खेलन्तेले आफ्नो सुस्पष्ट परिचय समयसीमामा छाडेझैं कालखण्ड र कालगणनामा आफ्नो पहिचान दिने सर्जक नेपाली रचनाधर्मितामा अल्प छन् । नराशले अर्धशताब्दीको कालावधिमा विग्रह भन्दा संग्रह तथा कलह भन्दा सुलहको स्थितिलाई उजिल्याएको देखिन्छ । वस्तुतः यस स्थितिलाई यिनले मात्र संवहन गरेका हैनन् यिनका अन्य केही समवर्ती समेत यसमा संलिप्त लाग्छन् ।

एउटा युगप्रवाहको समय खण्ड अज्ञात रूपमा बितेको र बिताइरहेको रहेछ भनी डुबिल्किंदा थुप्रै फलप्रद परिणाम दृष्टिगोचर हुन्छन् । नेपाल राज्यको अज्ञात स्थितिलाई एक क्षण विस्मृत गर्दा जेसुकै भए पनि राष्ट्र निर्माता, रणनितिकर्ता र आधुनिककर्ता पृथ्वीनारायण शाहदेव रहेका हुन् । चट्याङ् माष्टर (चमाटर) कृष्णमुरारि गौतमजस्ता कतिपयले दशौ करोडको लागतमा पृथ्वीवादका जनकको भव्य शालिक स्थान बन्नुपर्ने एकताका परामर्श दिएको तथ्यको स्मरण हुन्छ । त्यस नांगो यथार्थलाई विस्मृत गरे पनि नेपाल देश भन्नु पृथ्वीनारायणको उत्तराधिकार रहेको यथार्थलाई केही निर्धिणी एवं घृणितले बिर्सन खोजेको पाइन्छ । केही बुझक्कड आफू नांगिएता पनि राष्ट्रिय सम्पूर्णतामा त्यस्ताले बालहठ अँगालेको स्थिति छ देशमा । 'दिएपछि आफू नांगो नत्र सम्धीको मुख बांगो' भन्ने नग्न यथार्थको झिलिमिलीमा एक थरिले यथार्थको गूढता नबुझेको स्वाँग गरेको भेटिन्छ देशमा । आफू बसेको डुंगामा प्वाल पार्दा अरू मात्र डुब्ने होइन आफू पनि डुबिन्छ भन्ने तथ्यलाई केहीले हृदयंगम नगरेको घटनाक्रम छन नेपालमा ।

स्रष्टा संस्कृतिको गंगामा आकण्ठ डुबेका नराशले प्रत्येक प्रतिनिधि युवालाई नेपालीपनको मौलिक छनक प्रदान गरेको भेटिन्छ । सिर्जनाको संसारमा आर्थिक, सामाजिक, राजनैतिक, साँस्कृतिक, प्राज्ञिक, बौद्धिक, प्राविधिक र वैज्ञानिक दृष्टि एवं दृष्टिकोणले नेपाली मौलिक बौद्धिकतालाई नराशले समाकलन गरेको हामी पाउने गर्छौं । जुन स्रष्टा संस्कृतिको मूल आत्मा हो एवं यायावरवादी स्रष्टा संस्कृति हो ।

धरातलीय यथार्थ (ग्राउण्ड रियालिटी)लाई राम्ररी नबुझाई युवा पुस्ता अगाडि बढ्न सक्तैन । अत्यावश्यक सन्दर्भमा मौन बस्दा अधिसंख्यक नेपालीले त्यसको दुस्परिणाम कालान्तरमा भोग्नुपर्ने हुन्छ । प्रत्यक्षतः सकारात्मक

बस्तुबोधलाई ठम्याई नयाँ पुस्तालाई राष्ट्रवादी चिन्तनमा कसैले दीक्षित गराउन खोज्दछ भने त्यस्तो सत्कार्यलाई सराहनीय मान्नु पर्छ । नराशले त्यस किसिमको दायित्वलाई प्रशंसनीय ढंगमा पुरा गरेका परिस्थिति छ । भनिन्छ कि कस्तुरी मृगले सुगन्धको खोजीमा आफ्नो विशेषतालाई आफैले नबुझेझै अधिसख्यक युवा कतिपय स्थितिमा भ्रमित रूपमा रहेको देखिन्छ । त्यस्तालाई राष्ट्रिय वस्तुभूमिको ज्ञान दिंदै तिम्रो दायित्व यो हो भनी विपरीत परिस्थितिमा सम्झउने मान्छे कम हुन्छन् । नराशजस्ता एक दुई जना बुद्धिजीवीले यस सूचकांकलाई पूर्वानुमान गर्न सकेको प्रतीत हुन्छ । यसरी एउटा नेपालोपयोगी सम्प्रदाय (स्कुल) खडा भएको छ । नेपाली चिन्तन जगतमा सर्वमान्य विद्धतवर मदनमणि दीक्षितले यस दिशाबोधलाई आफ्नो उर्वर समयमा ठम्याएका हुन् । यथार्थतया राष्ट्रजीवनमा एउटा मात्र महापुरुष यथेष्ट हुँदैन । थुप्रै पृथ्वीनारायण, गोविन्द नारायण, देवनारायण, थुप्रै देवकोटा, सम, रिमाल, तिवारी थुप्रै मल्ल, घिमिरे, विष्ट, कोइराला र गौतमको आवश्यकता पर्दछ राष्ट्रिय सन्दर्भमा । हेर्दा हेर्दै आधा शताब्दी वित्नु समयको नियमित प्रवाह मात्र हो मान्छेको सक्रिय जीवनमा । यस यथार्थलाई राष्ट्रोपयोगी र सर्वोपयोगी रूपमा विताउन सक्नुको बोध विशिष्ट ठहरिन्छ । अध्ययन गर्न पाइए अनुसार नराशका एक जना पूर्वज राष्ट्रिय योद्धा पण्डित उदय नारायण घिमिरेले फिरंगीसित भएको सिन्धुली गढीको युद्धमा विजयश्रीका लागि निर्णायक भूमिका निर्वाह गरेका थिए र मकवानपुर गढीको भिडन्तमा झैं नेपाल राष्ट्रको विजय अभियानमा तिनले अपूर्व योगदान दिएका थिए । लोकतान्त्रिक, गणतन्त्रमा कालीदेखि मेचीका नेपालीले विदेशको भन्दा आफ्नो बौद्धिकताको निजत्व प्रदर्शित गर्नु पर्ने ठहर नराशको छ । नराश जस्ता केहीले आफू दुब्लाए पनि राष्ट्रिय बाङ्मय पुष्ट तुल्याउन चालेको प्रयास अभिनन्दनीय मान्नु पर्छ । तेस्रो, चौथो, पाँचौ, छैटौं, सातौं र आठौं दशक वरिपरि समष्टिचेत नेपाली सिर्जना एवं बौद्धिकतालाई झण्डै दायित्वशील सैद्धान्तिक जीवनबोध दिनु सामान्य कुरो होइन । नराशको जीवानुभूतिका अन्तरसंघर्ष एकातिर छन् भने अर्कोतिर अलमलमा परेको नवपुस्तालाई चिन्तनप्रणालीको दिशाबोध दिन यिनी चुकेका छैनन् । बाटो विराएर भुलभुलैयामा परेकालाई यिनले प्रदान गर्ने मानक सबैका लागि अनुकरणीय रहेको छ । प्रजातन्त्र, लोकतन्त्र, दलतन्त्र र गणतन्त्र हुँदै जसरी नेपाली राजनीतिक व्यवस्थामा लोकतान्त्रिक गणतन्त्र आच्छादित छ त्यो सबैले आत्मग्रहण गर्ने किसिमको हुनु पर्ने यिनको धारणा छ । नेपाली बौद्धिक सत्ता स्वतन्त्र ढंगमा विवेकोचित रूपमा सुस्थापित हुनु पर्ने यिनको तर्क छ– जुन मननीय छ । सृजनकारितामा भविष्यवेक्ता झैं यिनले नेपालको राजनीतिक प्रसंग र बौद्धिकतालाई प्रष्ट तुल्याउन दिएको विचार सबैले गम्नु आवश्यक छ ।

समयनायक बन्दै नगेन्द्रराज शर्मा, रोचक घिमिरे, ध्रुवचन्द्र गौतम, विनोद दीक्षित र ध्रुव सापकोटा प्रभृति 'पम्ल्याहा'को कर्मठ पुस्ता एवं अनगिन्ती

संचेतनावादीले युगीन सन्दर्भको रचनाधर्मितामा समयसापेक्ष ऊर्जा थपेको स्थिति छ । यो वस्तुबोध वैयक्तिक र सामूहिक शक्तिको उदय एवं क्रमिक चिन्तन प्रणालीबाट भएको हो । अलमलिएका र छरिएकालाई अत्यावश्यक आधार दिएर अभिव्यक्तिका संस्थापकले सहसम्बन्धको आत्मीयतालाई दरिलो बनाएको पाइन्छ। द्वैध र अनेकपक्षीय स्थितिमा यौटा प्रामाणिकतालाई नराशले प्रबुद्ध नेपाली समक्ष पस्कनुको आफ्नो महत्व छ। जो क्रमिक रूपमा यायावर सूचक नगेन्द्रवाद ठहरिन्छ । नगेन्द्रीय कर्मेन्द्रीयले साहित्यानुभूतिलाई छामेर अगाडि बढ्दा प्रत्येक समयाघातलाई देख्नु पर्ने हुन्छ। यस्तो जीवनानुभूतिको संकल्पलाई सिद्ध गर्नु खोज्नु कठिन हुन्छ। समकालीन नेपाली परिवेश संघीय लोकतान्त्रिक गणतन्त्र र समावेशी बहुदलीय पद्धतिमा विस्तारित छ। राष्ट्रिय सत्ता लोकतान्त्रिक गणतन्त्रमा आधारित भएकोले दलीय शक्ति निर्णायक रहेको छ। बृद्ध र मृद्ध (ओल्ड एण्ड लुजर)का रूपमा नेपाली आकांक्षा न्यूनीकृत भएको नभई नेतापरक महत्वाकांक्षाले परिवेश कमजोर बनेको यथार्थ हो । आर्थिक रूपमा पछौटेपन त्यति घटेको छैन जति समृद्धिको बखान गरिन्छ । दक्षिणी (असमृद्ध) र उत्तरी (समृद्ध) वृत्तको फलकमा राष्ट्रियता अलमलिएकोले कालावधिक राजनीतिक परिवर्तनले राष्ट्रवासीलाई यथार्थतः दुविधा थपेको छ । सूर्यबहादुर थापाले एकपल्ट संक्षिप्त कुराकानीमा प्रथमतः हामीले देश सम्झौं भन्ने सम्प्रेषणीय सूक्ति प्रदान गरेका थिए । नेपाल र नेपालीको सुख एवं समृद्धि नेपालीको निर्णयमा अवलम्बित हुनु पर्छ । मान्छे मान्छे बीचको मनोभूमिको पार्थक्यलाई राम्ररी बुझेकोले नराश देवाधिदेव शंकरले कुनै समय सतीलाई बोकेर पृथ्वी भ्रमण गरेझैं कहीं कतै शिव शैलीमा यायावरीय प्रवृत्तिलाई प्रस्तुत गर्न रुचाउँछन् । जसबाट आधुनिक नेपाली भाषा साहित्य र बाङ्मयमा बल पुगेकोमा दुविधा छैन । उदाहरणको लागि, कवि लावण्य सापकोटा छोटो अवधिमा लोकप्रिय बनेका श्रष्टा हुन् । महाकवि लक्ष्मी प्र.देवकोटा, भाषाशास्त्री महानन्द सापकोटा र चर्चित आख्यानसेवी ध्रुव सापकोटाझै यी अन्य विख्यात विनोदशास्त्री सापकोटाको रूपमा उदाएका छन् । देवकोटीय सृजनाझैं उत्तरवर्ती सापकोटीय रचनालाई अभिव्यक्ति द्वै मासिक पत्रिकाले विशेष किसिमले स्थान दिएको छ। देश विदेश भनौं वा स्थानपरक नेपालीहरू बीच यायावर ठाउँ ठाउँमा सिर्जनात्मक कारणले पुगिरहेन गर्छन्। जसबाट नेपाली सिर्जनाको वैशिष्टच खुल्न पुग्दछ। यसबाट विविध ठाउँका नेपालीको लोकाचार विविधांगी सोचबारे राम्रो जानकारी मिल्ने गर्दछ र नराशको बहुपक्षीय सम्बन्धको आकर्षणको बोध हुने गर्दछ। 'अभिव्यक्ति'को दरिलो सम्बन्धनले गर्दा कतिपय कनिष्ट र बरिष्ट साहित्यकार यसको शुभेच्छुक रहेका छन् । विकासोन्मुख बाह्य नेपाली समाजमा यो क्रम झन् वृद्धि हुदै गएको छ । गंभीरताले निरूपण गर्दा नेपाली बौद्धिक संस्कृतिलाई नगेन्द्रको यायावरवादले झन् पुष्ट तुल्याएको देखिन्छ । 'तिमी पनि माइलो म पनि माइलो, माइलो माइलो दुवै मिली गरौ रमाइलो' (महाकाव्यकार रमेश खकुरेलसितको वार्तालाप) 'स्रष्टा स्रष्टाको भेटघाट भयो

घ्याम्पोजत्रो पेट भयो' का रूपमा कुनै लेखकसित लामो कुराकानी कोहीसित छोटो विचार विमर्श र समय समयका मित्रोचित संलापको यथार्थ क्षणलाई यायावरले आफ्नो मूल्य मान्यता र विविध रंग अनुसार पस्किएको पाइन्छ । यायावरको चर्तिकलाले मानवाधिकार र मानवधर्मी सीमामा बसेर सहज किसिमले बहुपक्षीय छलफललाई औचित्य दिएको भेटिन्छ ।

आधा सताब्दीको समयसीमा अभिव्यक्तिको स्वर्णोत्सव र पचासवर्षको तपस्याको सिंहावलोकन हुनु स्वभाविक हो । यथार्थतः व्यतीत कालखण्डले नेपालीलाई राजनैतिक दृष्टिले अलिकति पनि सन्तोष दिन सकेको देखिंदैन । जनआन्दोलन र वैदेशिक प्रपंचले झण्डै तीनसय वर्ष पुरानो राष्ट्रिय एकीकरणको कारक शक्ति राजसंस्था नेपालमा अब रहेन । जसको रिक्ततालाई विविध दृष्टिले समाकलन गर्न थालिएको परिस्थिति छ । राजनीतिशास्त्री र विद्वानका अभिमत छन्– सुयोग्य नेतृत्वमा राष्ट्रको एकीकरण हुन्छ भने काँचो नेतृत्वमा राष्ट्रले विखण्डनको स्वरूप पहिल्याउन थाल्दछ । यसर्थ क्रमिक रूपमा  अनायास प्रस्टिने विखण्डन र क्षयीकरणको स्थिति रोक्ने कार्य शुरु हुनु पर्दछ । नेपाली नागरिकको नाताले यायावरले समयोचित राष्ट्रिय गौरव र गरिमाको स्थितिलाई सूक्ष्म ढंगमा विश्लेषण गर्नुको विशेष महत्व रहेको छ । अर्धशताब्दीको वारि र पारिलाई केलाउँदा विकृति एवं विसंगति पहिले पनि थिए, अहिले पनि छन् र पछि पनि धेरै थोरै रहलान् । तर राष्ट्रिय मूल्य र मान्यतालाई भविष्यचेत पुस्ताले सँभाल्न सकोस्, देशलाई तिनले भड्खालोमा नपारुँन् भनी सूक्ष्मदर्शी बनेर मूल्योचित ढंगले नराशले तिनलाई आफ्नो मौलिक चिन्तनमा छामेको भेटिन्छ ।

यसरी एकजना गडफादर वा बिगबोसको रूपमा परिचित स्रष्टा पुस्तालाई मार्गदिशा प्रदान गर्न सफल छन्– नराश । राजनैतिक एकता भन्दा विविधतावादी परिवर्तनको विग्रहसूचक कचिंगललाई साहित्यिक धरातलमा देशले झेलेको पाइन्छ । नेपाल राज्य अनेकता र विविधतामा एकक्रित र संगठित भएको धरातल हो । राम्ररी विचार गर्दा एकथरी कुलांगारहरू विदेशीको इशारामा राष्ट्र अहितमा प्रवृत्त लाग्छन् । नराशजस्ता केही मौलिक चिन्तनमा राष्ट्रलाई सुदृढ तुल्याउँनेमा पर्छन् । सातवटै प्रदेश र सतहत्तरै जिल्लामा भ्रमण गरर यिनले नयाँ पुस्तालाई नेपालवर्षको गौरवको परिचय गराइरहेको टड्कारो देखिन्छ । सम्प्रदाय (स्कुल) त्यसै बन्दैन र त्यसै खुल्दैन पनि । वैयक्तिक प्रयास र सामूहिक आसक्तिले मौलिक अस्तित्वसत्ता तयार हुने गर्दछ । नराशमा अन्तर्वाह्य दृष्टिले यस सम्बन्धी प्रस्ट जागरुपता रहेको महसुस हुन्छ । त्यसले यौटा गरिमाबोध प्रदान गरेको देखिन्छ ।

विभूति कवि, राष्ट्रकवि र महाकविका रूपमा माधव घिमिरेको शताब्दी सूचक सृजनधर्मिता प्रष्टिएझैं नराशको व्यक्तित्वले अन्य घिमिरेका रूपमा विशिष्ट दिशाबोध प्रदान गर्न सकेको देखिन्छ । यथार्थतयाः अर्को पचास वर्ष पश्चात् अधिसंख्यक हामी रहँदैनौ । त्यसेबलाका नेपाली पुस्ताले ' अभिव्यक्ति र नराशको कर्म र मर्म'लाई सोधखोजको निर्वाह गरेमा त्यहाँ पुनः

यायावरवाद तेर्सिने छ । र यसको कालौचित्यको गरिमा बुझ्ने प्रयास गर्लान् भन्ने अनुमान गरौं । देशले सर्वांगिण र बहुपक्षीय समृद्धि अंगालोस् भन्ने प्राय: सबै नेपालीको सदीक्षा रहिआएको छ । बस्तुत विकाससूचक स्पष्ट मार्गको रेखाकंन गर्न सबै शक्ति मिलेको स्थितिमा नेपाल अन्तरर्वाह्य दृष्टिले अगाडि बढ्ने निश्चित छ । यसका लागि राज्यमा नायकत्व र नेतृत्वको सर्वमान्य कर्मठता आवश्यक हुन्छ । हामी देख्छौं– न्यायाधीश इन्द्रप्रसाद घिमिरे तथा श्रीमती पद्माकुमारी घिमिरेको दाम्पत्यमा संवत् १९९४ चैतमा जन्मेका प्रा.नराशको स्रष्टासूचक संस्कृति र प्रवृत्ति (कल्चर एण्ड टेन्डेन्सी)ले त्यो दायित्व क्रमिक रूपमा संवद्धलाई सम्झाउन र नवीनता प्रदान गर्न सक्षम छ ।

पश्चिम युरोपेली भूमिबाट दृष्टिगत श्यामव्यग्य (ब्ल्याक कमेडी) झै यायावरवादलाई केहीले रामव्यग्यको रूपमा अभिग्रहण गर्न सक्छन् । मेरो विचारमा यायावरवाद (नगेन्द्रिजम) सारतया स्रष्टासंस्कृति (आएन इनोभेटिम राइटर्स कल्चर) को विविधांगी सन्दर्भमा अन्तरनिहीत विश्राम व्यंग्य र सदावहार कामदी (ग्रीन कमेडी)का रूपमा निर्दिष्ट र विकासोन्मुख विश्लेषणीय मूल चिन्तन हो ।

ॐॐ

## अभिव्यक्तिका विशिष्ट सदस्यहरू

सुहृद घिमिरे– चुनदेवी/घनश्याम राजकर्णिकार– कृष्णपाउरोटी चोक, कमल पोखरी/रोचक घिमिरे– गहना पोखरी, टङ्गाल/रमेश गोर्खाली– वीरगञ्ज/विनोद दीक्षित– कालिकास्थान/चन्द्रिकानन्द खरेल– डिल्लीबजार/भुवन ढुंगाना– गौशाला/कन्चन पुडासैनी– जोरपाटी/ विनयदेव शर्मा लुइँटेल– ढुङ्गाअड्डा/रमेश खकुरेल– कमलपोखरी/ डा.कविताराम श्रेष्ठ– अनामनगर/हरीश कल्पित– काठमाडौं/शङ्कर शाह– 'आशियाना' रङ्गचोक, ठमेल/एस.बी. शाह– जाजरकोट/मोहन दुवाल– बनेपा/रत्नश्री श्रेष्ठ– त्रिपुरेश्वर /डा.उपेन्द्र महतो– मस्को, रुस/जीवा लामिछाने– मस्को, रुस/डा.विन्दिता लामिछाने– मस्को, रुस/खेमराज लामिछाने– मस्को, रुस/डा.मणि पोखरेल– मस्को, रुस/डा.भीष्म आचार्य– मस्को, रुस/गोविन्द गिरी प्रेरणा– अमेरिका/इल्या भट्टराई– महाराजगञ्ज/जीवनपानी– ओराष्टे, स्याङ्जा– ६, हाल : कुलेश्वर/प्रदीप खतिवडा– कालिकास्थान, डिल्लीबजार/विष्णुबहादुर सिंह– जुकेना- ६, अर्घाखाँची, हाल : मण्डिखाटार/माया ठकुरी– धोबीघाट/नगेन्द्र– मण्डिखाटार/कुबेरप्रसाद शर्मा– बानेश्वर/ कृष्ण बजगाईं– बेल्जियम/डा. सुषमा आचार्य– ललितपुर/डा.दुवसु क्षेत्री– विशालनगर/दामोदर पुडासैनी 'किशोर'– ग्वंगबू/रुकु कार्की– हेटौंडा/वसन्त रिजाल– जोरपाटी/पुरुषोत्तम बस्नेत– सिफल/डा.शोभा पोखरेल– सानेपा/एल.बी. क्षेत्री– कैलाशनगर, भरतपुर, चितवन/पवन आलोक– कालिकामार्ग, डिल्लीबजार/ शिवप्रकाश– बोस्टन, अमेरिका/पोषरमण चापागाई– दिङ्ला, नागी, भोजपुर/केदारनाथ खनाल– भरतपुर– १०, चित्तौन/प्रभाकर पण्डित– नारायणगढ, चित्तौन/वियोगी बुढाथोकी– हात्तीगौंडा, काठमाडौं । **(अचेल विशिष्ट सदस्य बनाउने व्यवस्था छैन ।)**

का.मे.अ.द.न. ११९/२१३

रचना

दुई महीने साहित्यिक प्रकाशन
प्रधान सम्पादक एव प्रकाशक
**रोचक घिमिरे**

७१ लामोढुङ्गा मार्ग
गहनापोखरी, टङ्गाल, काठमाडौं-५
फोनः-४४३२७०३, ४४३२२०१
Email: nepalirachana@gmail.com

मिति : ०७६/१/३०

# जय अभिव्यक्ति

नितान्त एक्लो व्यक्ति नगेन्द्रराज शर्माको दीर्घ साधना, श्रम, सीप र पसीनाको परिचायक हो-'अभिव्यक्ति' । साहित्यिक पत्रकारिता जस्तो कठिन बाटोमा पाँच दशकसम्म कहिल्यै नथाकेर गतिशील भैरहनु सामान्य कुरा होइन । वि.सं.२०२७ सालमा 'रचना' कार्यालयमा भैरव अर्याल, जगदीश घिमिरे सहितको जमघटमा नगेन्द्रजीलाई 'अभिव्यक्ति' प्रकाशित गर्न हौस्याउनेमा म पनि भएको अहिले सम्भदा अपार खुसी अनुभव भैरहेछ ।

'अभिव्यक्ति' ले आफूलाई 'दुई महीने सामान्य साहित्यिक पत्रिका' भने पनि नेपाली साहित्यिक पत्रकारितामा अविस्मरणीय इतिहास बनाउन सफल यो पत्रिकाको विशेषता असामान्य छ ।

'अभिव्यक्ति' प्रकाशनले निरन्तरता पाइरहोस् भनेर 'अभिव्यक्ति अक्षय कोष' समेत स्थापित गरिएको छ । यसबाट यो पत्रिका प्रकाशनले निरन्तरता पाइरहने पाठकको विश्वास फलीभूत होस् भनेर कामना गर्दछु ।

दुई शयौं अङ्क प्रकाशनको यस सुखद अवसरमा 'अभिव्यक्ति' परिवार र विशेष गरेर यसका प्रधान सम्पादक-प्रकाशक नगेन्द्रराज शर्माप्रति हार्दिक शुभकामना व्यक्त गर्दछु ।

जय अभिव्यक्ति !
जय नेपाली साहित्यिक पत्रकारिता !!

# अभिव्यक्तिप्रति अभिव्यक्ति

**रामप्रसाद पन्त**

सबैभन्दा कठिन यात्रा काँडाघारीको हुन्छ क्यारे ! त्यसैमा पनि बाटो उकालो भयो भने झनै कठिन । दायाँतिरबाट काँडाले घोच्ने हो कि बायाँतिर बाट ! मुखैमा घोच्ने हो कि आँखै छेड्ने हो ! टोपी नै तानिदिने हो कि लुगा नै च्यातिदिने हो ! वा शरीरै रक्ताम्मे पारिदिने हो ! ठेगान हुँदैन । त्यसमाथि रापिलो घाम र चट्टानी गोरेटो बाटो भयो भने त असिनपसिन, स्याँस्याँ तीर्खा लागेर ओठ मुख सुकेर चौपट ।

यस्तै यस्तै हो जस्तो लाग्छ मलाई साहित्यिक पत्रिकाको इमानदार सञ्चालन ।

अर्को अर्थमा भन्ने हो भने साहित्यिक पत्रकार भनेको मैनबत्ती हो । आफू पग्लिन्छ र अरुलाई उज्यालो दिन्छ । उसले जुत्ता खियाउँछ, पसिना चुहाउँछ, भोक प्यास लुकाउँछ, साहित्यकारको घरदैलो धाउँछ, निवेदन चढाउँछ र र चना सङ्कलन गर्छ । विज्ञापनदाताको कार्यालयमा पुग्छ, हात जोड्न योग्य वा अयोग्य जस्तोसुकै भए पनि हात जोड्छ, साहित्यिक पत्रिकाबारे बयान दिन्छ, केही लिन्छ वा रित्तो हात फर्किन्छ । गोजीबाट पैसा निकालेरै भए पनि पत्रिका छाप्छ र बाँड्दै हिँडेर आनन्द लिन्छ ।

मैले भनेको छु, साहित्यिक पत्रिकाको इमानदार सञ्चालन । इमानदार यस अर्थमा भन्दै छु– यदाकदा देखिने गरेको छ, साहित्यिक पत्रकारितामा पनि फट्याइँकला । जसले गर्दा दुःखजिलो गरेर, साहित्यिक पत्रकारिताको स्तर कायम गरेर, लोभ लालचमा नपरेर, साहित्यिक पत्रकारिता गर्नेहरुलाई पनि अप्ठ्यारो स्थितिमा पर्नुपर्ने अवस्था रहन्छ । यस्तो परिस्थितिबाट पनि बच्नुपर्छ इमानदार साहित्यिक पत्रकार ।

साहित्यकार तथा साहित्यिक पत्रकार नगेन्द्रराज शर्माका बारेमा केही लेख्न खोज्दा जोडिएको पृष्ठभूमि हो यो ।

नगेन्द्रराज शर्माले साहित्यिक पत्रिका ‘अभिव्यक्ति’लाई जन्म दिनुभयो – २०२७ सालमा । उहाँले केही पाउँला भनेर थालनी गर्नुभएको होइन र के ही खाउँला भनेर सञ्चालन गर्नुभएको पनि होइन । पर्दाभित्र लुकेको अलिकति नामको लोभ होला ! बाँकी साहित्यिक सेवा नै हो । मलाई लाग्छ, उहाँलाई अलिकति ‘रचना’बाट प्रेरणा मिल्यो होला ! अलिकति ‘रुपरेखा’बाट ।

कुनैपनि चीजको थालनी गर्दा त्यसको पछाडि कि त कसैको प्रेरणाले काम गरेको हुन्छ, कि त आवश्यकताले । नगेन्द्रराज शर्मा जागिर खाएर केही पैसा हात लगाएको र पैतृक सम्पत्तिले पुगेको व्यक्तित्व भएकोले साहित्यिक पत्रकारिता गर्ने आवश्यकता भएन । अर्को कुरा उहाँलाई साहित्यिक पत्रकारि

ताको मर्म पनि थाहा नभएको थिएन । स्पष्ट थाहा थियो– साहित्यिक पत्रकारिता गर्नु भनेको दुःख पाउनु हो, अपजस सँगाल्नु हो र तरिका बिग्रियो भने पैसा गुमाउनु पनि हो । यस कारण भन्न सकिन्छ, उहाँको साहित्यिक पत्रकारिता अलिकति रहर होला, बाँकी साहित्य सेवा नै हो ।

साहित्यिक पत्रकारिताको कठिन यात्रामा लागेर अठ्चालीस वर्ष व्यतीत गर्नुभनेको चानचुने साहस होइन । त्यसैमा पनि 'अभिव्यक्ति'जस्तो गुणस्तरीय एवम् पठनीय पत्रिका निरन्तर सञ्चालन गरेर २०० अङ्क पुऱ्याउनु भनेको नेपाली साहित्यिक पत्रकारिताको इतिहासमा आश्चर्यजनक कुरा नै हो ।

'दायित्व' साहित्यिक पत्रिका सञ्चालनको अनुभव मसँग पनि भएकोले म भन्न सक्छु– एउटा तपस्वीबाट मात्र साहित्यिक पत्रिकालाई निरन्तरता दिन सम्भव छ । निजीस्तरबाट प्रकाशित हुने साहित्यिक पत्रिका एकल प्रयासबाट मात्र सम्भव हुने भएकोले एक जना तपस्वी बन्नै पर्छ । उसले आफ्ना इच्छा र आकाङ्क्षाहरुलाई त्याग गर्नैपर्छ । रचना सङ्कलनदेखि प्रकाशन र बजारीकरणसम्म आफ्नो संलग्नता देखाउनै पर्छ र आलोचना सुन्न पनि तयार हुनै पर्छ ।

नगेन्द्रराज शर्माले कसैले केही देला र चलाउँला भनेर 'अभिव्यक्ति' थालनी गर्नुभएको होइन । विज्ञापनको कुनै निश्चितता नभएको अवस्थामा पनि आफ्नै बलबुताले कसरी चल्यो, चल्यो । नेपालमा गणतन्त्र आएपछि भने साहित्यिक पत्रिकाहरुलाई पनि गणतन्त्र लाग्यो र प्रेस काउन्सिल नेपालबाट वर्गीकरणका आधारमा कल्याणकारी विज्ञापन उपलब्ध गराउन थालियो ।

यसबाट साहित्यिक पत्रिकालाई दुईवटा फाइदा भयो । एक, केही नै नभएको अवस्थामा थोरै भए पनि आर्थिक आधारशिला तयार भयो । दुई, आर्थिक सहयोग लिन चाहने साहित्यिक पत्रिकाले प्रेस काउन्सिलको नियम अनुसार निरन्तरता र समयसापेक्ष हुनुपर्ने बाध्यता सृजना भयो । जुन साहित्यिक पत्रिकारिता जगत्का लागि उपलब्धिपूर्ण नै भयो ।

वर्तमान परिस्थितिमा 'अभिव्यक्ति' पनि यस सुविधाको भोक्ता भएकोले सञ्चालनमा केही सुविधा पुगेको हुनुपर्छ तर व्यक्ति पञ्चभौतिक प्राणी भएकोले सधैँ अभिव्यक्तिसँग दाँजिएर हिँड्न सक्ने अवस्था रहन्न । अहिले 'व्यक्ति' र 'अभिव्यक्ति'मा आएको तात्विक भिन्नता पनि यही हो ।

नगेन्द्रराज शर्माले 'अभिव्यक्ति'लाई जन्म दिनुभयो । अभिव्यक्तिले आफूलाई दुई सयको सङ्ख्यामा हिँडाएर जवानीको उत्कर्ष देखाइरहँदा जन्मदाताको उमेरको दौड भने आठ दशक उकालो लागिसकेको छ । अब यस वेला नगेन्द्रराज शर्मा सोच्दै हुनुहुन्छ र त्यस्तो इमानदार र सक्षम व्यक्ति खोज्दै हुनुहुन्छ, जसले अभिव्यक्तिलाई दुई सयमाथिको यात्रा गराओस् ।

नगेन्द्रराज शर्माले कति दुःखजिलो गरेर अभिव्यक्तिलाई यहाँसम्म

ल्याउनुभयो र केही कोषको जोहो पनि गर्नुभयो । अबका सञ्चालकलाई नगेन्द्रयात्रा गर्नुपर्ने छैन । तर आफूले दुःख गरेर संरक्षण गरी हुर्काएको सन्तानलाई पालनपोषण गरिदिने इमानदार एवम् सक्षम सुपात्र त चाहियो नि ! आमाले दिएको त्यो अपार प्यार र ममता दिने मानिस पाउन त गाह्रै पर्ला तर खोजी गर्ने हो भने इमानदारहरुको अनिकालै त परेको छैनजस्तो लाग्छ मलाई ।

नगेन्द्र दाइ ! हामी पनि तपाईंकै अनुयायी हौँ, तपाईंकै बाटोमा हिँडिरहेका छौँ । तपाईंले लिएको चिन्ताले हामीलाई पनि कुनै दिन पिरोल्ने छ र तपाईंले खोजेको बाटो हामीले पनि खोज्नुपर्ने छ । साहित्यिक पत्रिकाको मर्म बुझ्नेहरुबाट सहयोग र पथप्रदर्शन भयो भने नेपालको पत्रकारिताभन्दा जेठो साहित्यिक पत्रकारिताले उचाइ प्राप्त गर्ने नै छ । प्रतीक्षा गरौँ ।

२०० पूर्णाङ्कको इतिहास बोकेको 'अभिव्यक्ति' सहस्राङ्कतर्फ उन्मुख होओस् । दायित्व साहित्यिक पत्रिकाको तर्फबाट मेरो शुभकामना ।

अध्यक्ष तथा सम्पादक<br>
दायित्व वाङ्मय प्रतिष्ठान, नेपाल<br>
'दायित्व' साहित्यिक पत्रिका ।

ઙઙ

# ब्रान्डेड नगेन्द्रराज शर्मा

**लक्ष्मी भट्टराई 'परिधि'**

सम्पादक, शाल्मलि साहित्यिक मासिक

नेपाली साहित्यिक पत्रकारिताको आफैँमा एउटा सिङ्गै युग हो– नगेन्द्रराज शर्मा । आधा शताब्दी लगातार पत्रिका निकाल्नु समर्पणको उत्कृष्ट उदाहरण होला; निरन्तर स्तरीय पत्रिका निकालिरहनुचाहिँ 'नगेन्द्रराज शर्मा' हुनु हो । 'सम्पादक' बनेको मौकामा भए-नभएको सिर्जन-क्षमता दुरुपयोग गरेर हतारहतार लेखक बनिटोपल्ने संस्कारबीच आफ्नो लोभलाग्दो 'आख्यानकार व्यक्तित्व'लाई पाखा लगाएर अरूलाई लेखक बनाइरहने दुस्साहस गर्नु भनेको नगेन्द्रराज शर्मा हुनु हो । यसर्थ, जोकसैलाई 'नगेन्द्रराज शर्मा' हुन मुस्किल छ ।

एक दिन कुनै प्रसङ्गमा भन्नुभएको थियो, "अहिले जो बाँचिरहेको छु, नाफाको जिन्दगी हो ।" तर, अरु साउँको भन्दा ब्याजको लोभ गर्छन्, उहाँ साउँसमेत ब्याजमा गाभेर अरूलाई बाँडिरहनुभएको छ । त्यसो गर्न धन होइन, मन चाहिन्छ । त्यस्तो मन नहुँदो हो त नगेन्द्रराज शर्माको यो उचाइ सम्भव हुन्थेन ।

अप्ठ्याराहरू उहाँको अगाडिपनि अप्ठ्यारै बनेर आउँदा होलान् । सप्ठ्यारोमात्रै त के हुन्थ्यो र जिन्दगीमा ! नगेन्द्रराज शर्माको सरल, शालीन र ओजपूर्ण व्यक्तित्वको आकर्षण बेग्लै होला, मलाईचैँ उहाँको यो गुण विशिष्ट लाग्छ– उहाँ अप्ठ्याराहरूलाई 'अवसर' ठानेर तीसँग साक्षात्कार गर्ने हिम्मत गर्नुहुन्छ, गरिरहनुहुन्छ ।

उमेरले ८३ औं वसन्त टेकेको व्यक्तिले यत्तिकादौडादौड गर्नु ठूलै कुरा हो भनेर कन्सिडर गरिराख्नुपर्ने व्यक्तित्व नगेन्द्रराज शर्मा होइन । उहाँले ' त्रियासी' भन्नुहोला, उहाँको उत्साह, सक्रियता नजिकबाट देख्नेले 'त्रिचालीस' महसुस गर्छन् । यो हो नगेन्द्रराज शर्माको असली व्यक्तित्व !

पछिल्लो समयसिर्फ लामा-छोटा थुप्रै यात्राहरूको सहयात्री बन्ने मौका पाएकै कारण नगेन्द्रराज शर्मा नामको बृहत् ग्रन्थको समालोचना गर्ने हैसियत मेरो नहोला । तर, आफ्नो उमेर र स्वास्थ्यावस्था दर्शाएर कहीँ, कतै एक कप चिया पिउनसमेत आरक्षण नखोज्ने नगेन्द्रराज शर्मालाई महसुस गर्न आद्योपान्त पढ्नु अनिवार्य छैन । केही पाना पल्टाउनुस्, तपाईंलाई त्यो ग्रन्थको हैसियत थाहा भइहाल्छ । अचेल यत्ति बुझिसकेपछि कसैले उहाँको उमेरलाई प्राथमिकतामा नराखेको देखेर मलाई चित्त दुख्न छाडेको छ ।

असक्तताको नक्कली प्रमाणपत्र झुन्ड्याएर साँच्चैका असक्तहरूको भाग खोस्न उद्यमरतहरूको भीडमा नगेन्द्रराज शर्मा बनेर उभिइरहनु भनेको

नगेन्द्रराज शर्मा हुनु नै हो ।

जसलाई सम्झेपछि प्रेम महसुस हुन्छ, देखेपछि उत्साह अनुभूत हुन्छ, भेटेपछि ऊर्जा उत्पन्न हुन्छ । यसर्थ नगेन्द्रराज शर्मा यौटा नाम होइन, ब्रान्ड हो ।

'अभिव्यक्ति' जस्तो विशिष्ट साहित्यिक पत्रिका५० औँ वर्षसम्म निकाल्नुको धीरता मसँग नहोला । नेपाली साहित्यकै मानक पत्रिकाको २०० औँ अङ्कसम्म गरिमामय सम्पादक हुनुको सामर्थ्य पनि नहोला । तर, मलाई जत्ति बाँच्न पाइन्छ, बाँच्नु छ– लोभ, मोहविनाको एउटा सन्त जिन्दगी ! नगेन्द्रराज शर्मा जिन्दगी !!

ও ও

## नेपाली लेखक सङ्घको कार्यक्रम, प्रज्ञा प्रतिष्ठान (०६७.५.१०)

रोचक घिमिरे : (उद्घोषक सन्ध्या पहाडीले मञ्चमा आसन ग्रहण गर्न– वैरागी काइँला, जगदीश शम्शेर, गङ्गा उप्रेती, डा.गोविन्द भट्टराई, कृष्ण धराबासी, डा.विष्णु विभु घिमिरे, बेञ्जु शर्मा र डा.तुलसी भट्टराईलाई बोलाएपछि) हेर्नुस् न, मञ्चमा बिराजमान भएका आठजनामा छजना झापाका... ... !

डा.माधव पोखेल : कुरै नगर्नुस्, झापाका मान्छे सबै मापाका मान्छे !

ও

## रिचमण्ड बेकरी क्याफे, महाराजगञ्ज (०६७. ५. २०. १)

मातृका पोखेल : मलाई त एकपेग खाए पनि टाउको दुख्छ ।

विष्णुबहादुर सिंह : मलाई चाहिँ पाँचपेग भन्दा घटी खाएँ भने टाउको दुख्छ ।

वियोगी बुढथोकी : मलाई पनि त्यस्तै हो– तीन बोतल (बियर) नखाए टाउको दुख्छ ।

न.रा.श. : खै, मलाई त जति खाए पनि टाउको दुख्दैन... नखाए मात्र दुख्छ ।

ও ও

## १४४/आशियाना, ङ्गच्चोक, ठमेल (०६६.७.६.६)

गोविन्द भट्ट : (पटक पटक बैठकमा आएर भुक्दै राप्रउलाई झम्टन खोजेको देखेर ) होइन, यो कुकुरले रामजी बाबुलाई नै किन यस्तो खेदो गरेको ?

राप्रउ पोखरेल : हो, अगिदेखि नै यस्तै गरिरहेको छ । नगेन्द्र दाइ र म सँगसँगै आएको... उहाँलाई केही गरेन– पुच्छर मात्र हल्लायो... मलाई चाहिँ झम्टेर झण्डै टोकेको ।

शङ्कर शाह : हो, यो कुकुर असाध्यै मान्छे चिन्छ ।

ও ও

# अभिव्यक्ति र म

## विनोद नेपाल

वि.सं. २०३४ सालमा पाल्पाको झडेवा स्थित किसान माध्यमिक विद्यालयमा कक्षा ८ मा पढ्दै गर्दा विद्यालयको वार्षिकोत्वसका अवसरमा आयोजित कविता प्रतियोगितामा कतै प्रकाशित कविताका केही अंशमा आफ्ना टुटेफुटेका शब्द जोडेर पहिलोपटक सुनाएको कविता पुरस्कृत भएपछि म मा लेखनप्रति रुची जागेको थियो । दश कक्षामा पुग्दासम्म त्यतिखेरका नाम चलेका साप्ताहिक पत्रिकाहरुमा पत्रमित्रताका लागि नाम,ठेगाना पठाउने र साथी बनाउने क्रम चल्यो । एसएलसी दिएपछिको समयमा भने पत्रमित्रतासंगै फाट्फुट कलम चलाउने, प्रतिक्रियाहरु लेख्ने तथा पत्रपत्रिका र रेडियो नेपालमा पठाउने क्रम प्रारम्भ भयो । त्यतिखेर रेडियो नेपालको अनुरोध गीतका कार्यक्रममा आफ्ना नाम प्रसारित हुंदा अत्यन्त खुशी लाग्थ्यो भने साप्ताहिक पत्रिकाहरुमा ससाना टुक्रा प्रकाशित हुंदा त झन् हर्षको सीमा नै रहंदैनथ्यो ।

एसएलसी उत्तीर्ण भएपछि २०३७ सालको माघमा त्रिभुवन बहुमुखी क्याम्पस तानसेनमा भर्ना भई प्रमाणपत्र तहको अध्ययन गर्न थाल्दासम्मको अवधिमा झन्डै पचास पत्रमित्र थिए । ती मध्ये कतिपयलाई भेटियो पनि । रेडियोमा दिनदिनै कुनै न कुनै कार्यक्रममा नाम बज्ने भएकाले साथीहरुसंग परिचित हुन सजिलो भयो । पत्रपत्रिकामा कविताहरु छापिन्थे, गोरखापत्रमा सम्पादकलाई चिठी लेख्ने र छापिने क्रम बढ्यो । मधुपर्क साहित्यिक मासिकमा प्रतिक्रियाहरु पठाउने क्रम चल्यो गर्दागर्दै स्थानीय देखि काठमाडौ, हेटौडा र झापा सम्मका साप्ताहिक पत्रिकामा पनि कविता आदि प्रकाशित हुन थाले ।

यसपछि त्यतिखेरका स्थापित साहित्यिक पत्रिकाहरुमा रचना छपाउन पाए हुन्थ्यो भन्ने लाग्न थाल्यो । हुलाकबाट पत्राचार गर्नुपर्ने । हातले लेख्ने, खामबन्दी गर्ने,टिकट टांस्ने र जिल्ला हुलाक कार्यलय अगाडिको ढ्वाङमा खसाल्ने । कहिले पुग्ने, कहिले छापिने, फेरि पत्रिकाहरु सबै पाल्पासम्म नपुग्ने समस्या पनि थियो । यसैले के छापियो, के छापिएन थाहै हुंदैनथ्यो । काठमाडौ टाढा थियो । आवतजावत गर्नै कठिन । नारायणी नदिमाथि पक्की पुल बनेपछि मुग्लिङ सडक चालू भएसंगै काठमाडौ केही नजिक भयो भने रात्री बसहरुको सेवा प्रारम्भ भएपछि झनै सहज भयो । त्यसपछि विस्तारै बेलाबेला काठमाडौ आउने क्रम बढ्यो । कहिले क्याम्पस स्तरीय कार्यक्रमहरुमा भाग लिने र कहिले आफन्तहरुका विहे,व्रतबन्ध आदिको निम्तोमा अभिभावकका पछि लागेर र धेरैजसो,विदाका दिनमा सार्वजनिक वस धनी मित्र जनार्दनसंग काठमाडौ आउने क्रम बढ्यो । त्यसै क्रममा पत्रिका खोज्ने गर्दागर्दै रुपरेखा, रचना, अभिव्यक्ति आदिका ठेगाना जुटे र त्यसपछि तिनमा कविता छपाउने प्रयास थालियो । कतिपय पत्रिका संयोगले

भेटिए, कतिपय भेटिएनन् यसैले कुनकुन रचना प्रकाशित भए भन्ने कुराको पूर्ण जानकारी पनि राख्न सकिएन ।

'अभिव्यक्ति'को हकमा मेरो प्रकाशित पहिलो रचना कविता थियो । 'माग्नेहरु' शीर्षकमा वर्ष १७ पूर्णांक ४८, शरद ऋतु अंक, कात्तिक २०४३ मा प्रकाशित भएको थियो त्यो । त्यो कविता प्रकाशित हुंदा म अत्यन्त उत्साहित भएको थिए । किनकि राष्ट्रिय स्तरको साहित्यिक मासिक प्रकाशनमा कविता प्रकाशित भएको यो नै पहिलो थियो । साथै त्यतिखेर 'अभिव्यक्ति' नयां र सिकारु श्रष्टाको सम्मान गर्ने प्रकाशन रहेछ भन्ने महसुस भएको थियो । यसपछि नै मेरा रचना गोरखापत्र, रुपरेखा, मधुपर्क, गरिमा, आदिमा प्रकाशित भएका हुन् ।

संयोग, त्यसअघि हामी सोही वर्ष भदौ महिनाको मध्यतिर त्यतिखेरको चर्चित संस्था 'सिर्जनशील साहित्यिक समाज'को निमन्त्रणामा 'पाल्पा कवि गोष्ठी'मा सहभागी हुन आएका थियौं । अग्रजहरु कुलमणी देवकोटा, चोलेश्वर शर्मा, बनमाली निराकार,विष्णु खनाल,कविन्द्रमान सिंह, आदिका साथै समकालीन मित्रहरु राजेन्द्रगोपाल सिंह, श्रीमणी खनाल,हरिप्रसाद पोखरेल आदिसंगै सो कार्यक्रममा सहभागी भई अत्यन्त उत्साहपूर्वक कविता पाठ गरिएको त्यस क्षणको सम्झना ताजै छ । पाल्पामा क्याम्पस भित्र र बाहिर पनि कार्यक्रमहरु आयोजना र सञ्चालन गर्ने तथा कार्यक्रमहरुमा कविता पाठ गर्दै र बेलावखत पुरस्कृत समेत हुंदै आएपनि राजधानीमा आमन्त्रित भई जिल्लाकै प्रतिनिधित्व गर्दै आउने मौका तथा अग्रज एवं वरिष्ठ कवि,साहित्यकार एवं विशिष्ट अतिथिहरुका सामुन्ने कविता पाठ गर्न पाउंदा कताकता ठूलै कवि भएछु भन्ने पनि महसुस भएको थियो । अझ कतिपय आफन्तले भर्खरै प्रारम्भ भएको नेपाल टेलिभिजनले हाम्रो कार्यक्रमलाई समाचारमा नै प्रसारण गरेको र हामीलाई समेत देखाएको सुनाउंदा त हर्षको सीमै थिएन । त्यसक्रममा भएका कार्यक्रमहरुमा स्वर्गीय केदारमान व्यथितलगायत थुप्रै अग्रज साहित्यकारहरुसंगको भेट, परिचय र प्राप्त प्रेरणाले अत्यन्त उत्साह थपेको थियो ।

स्नातक तहको अध्ययन पूरा गरेसंगै २०४४ सालमा अध्ययन तथा जागिरको खोजी समेतका लागि काठमाडौं प्रवेश गरियो । लेखन र प्रकाशनको क्रम बढ्यो । २०४५ सालको मध्यतिर जागिरे जीवनको प्रारम्भ भयो । जागिरले शुरुमै नेपालगन्ज हुत्यायो भने त्यसपछि दुई महिना बस्न नपाउंदै र नेपालगञ्जसंग घुलमिल हुन नपाउंदै अझ पर वर्दियाको गुलरिया धके लिदियो । त्यतिखेरको गुलरिया भारतको भूमि हुंदै यात्रा गर्नुपर्ने, र जांदाजांदा भारतकै कुनै गाउं पुगेजस्तो महसुस हुने स्थान थियो । आफू पाल्पामा हुर्केको, पहाड नै भएपनि बुझ्ने हुनासाथ गाउंको बीचबाट सिद्धार्थ राजमार्ग खुलिसकेको कारण गाडी देख्न र अभिभावकहरुको पछि लागेर बेलामौकामा चौध किलोमिटर पश्चिमतर्फ रहेको सदरमुकाम तानसेन बजारसम्म पुग्ने

मौका समेत पाएको विशुद्ध पहाडे आफूलाई भारतीय भूमी हुंदै गर्नुपर्ने गुलरियासम्मको यात्रा बडो असहज लाग्दथ्यो । तर पनि बाध्यता थियो जागिर खानैपर्ने यसैले,बाध्यतावश त्यहां पुगियो र झन्डै चार वर्ष त्यहीं बसाई भयो ।

गुलरिया पुगेका प्रारम्भिक दिनहरुमा केही कविता रचना गरिए । पत्रपत्रिकामा प्रेषित पनि गरियो हुलाक मार्फत प्रकाशनका लागि । तर ती मध्ये अधिकांशको भाग्य थाहा पाउन सकिएन । सानो छंदा बिना कुनै निशाना 'कस्ले टाढा पुऱ्याउने' भन्दै ढुंगा हुत्याए जस्तै हुत्याइएका ती रचनाका बारे मा त्यसपछि कुनै सोधखोज पनि गरिएन ।

लेखनका लागि अध्ययन र वातावरणको ठूलो भूमिका हुन्छ। वातावरणको हकमा गुलरियामा न साहित्यिक कार्यक्रम हुन्थे,न कुनै संघसंस्था नै थिए । यसैले पनि त्यस्तो कुनै अवसर मिलेन जसले लेखनलाई निरन्तरता दिन उत्साह प्रदान गरोस् । पत्रपत्रिकाको नाममा कुनै साहित्यिक पत्रिका नपुग्ने र महिना महिनामा नजिकको भारतीय शहर बहराइचबाट पत्रिका लिएर आई साइकलमा डुलाउने एक व्यक्तिसंग ग्राहक बनी भारतबाट प्रकाशित हुने कादम्बिनी,सरिता, मुक्ता, कम्पिटीसन सक्सेस, हंस, विज्ञान प्रगति, विसडम आदि पत्रिकाहरु नियमित रुपमा पढ्ने गरेपनि नेपाली पत्रिकाको नाममा हुलाकमार्फत छिटोमा पन्ध्र दिनमा र नियमित नभई महिनाको आठ-दश दिनका प्रकाशन मात्र पुग्ने त्यस स्थानमा सिर्जनात्मक क्षमताको विकास होस पनि कसरी ?

सो समयमा पनि नेपालगञ्जमा चाहिं गोरखापत्र दैनिक तथा संस्थानका मासिक प्रकाशन तथा गरिमा पुग्दथे । यसैले नेपालगञ्जमा रहे का भाइ विष्णु गहिरेलाई भेटेसम्मका पत्रिका किनेर राखिदिनु भन्ने र उनले किनिदिएका पत्रिका भेटमा लिने प्रयास भने भयो । यसो गर्दा त्यससमयका ती प्रकाशनको संकलन रहेपनि समयमा अध्ययन गर्न भने असमर्थ हुनुपऱ्यो । त्यतिखेर बर्दियाको गुलरियाबाट काठमाडौ आइपुग्ने सम्भावना क्षीण नै थियो । स्थानीयहरु उपचारका लागि पनि बहराइच, लखनउ वा दिल्ली तर्फ जाने गर्थे, किनकि काठमाडौ आउनु भन्दा दिल्ली पुग्नु छिटो र सहज हुन्थ्यो ।

अंकसंग खेल्ने जागिर, व्यस्तता तथा अनेक किसिमका जोखिमका सम्भावना संगसंगै यताबाट उता हुत्तिनुपर्ने, अवस्थाले लेखनमा सक्रिय हुन सम्भव भएन । जागिरकै क्रममा स्याङ्जाको गल्याङ, चितवनको भर तपुरसमेतका स्थानमा लामो समय विते । गल्याङमा रहंदा केही रचना गरि यो भने सो समयमा केही कविता र अन्य लेख रचना प्रकाशित पनि भए । चितवन पुगिसकेपछि कार्यरत संस्थाबाट प्रकाशित हुने विभिन्न साहित्यिक प्रकाशनहरुमा रचना प्रकाशित हुनुका अतिरिक्त शब्दाङ्कुर जस्ता राष्ट्रिय स्तरका साहित्यिक प्रकाशनमा पनि रचना प्रकाशित भए । त्यसैबीच अखवारी लेखनमा हात हालियो । विभिन्न पत्रपत्रिकामा समसामयिक तथा आर्थिक विषयका लेखहरु प्रकाशित हुन थाले, स्मरणीय छ, गोरखापत्रमा भने मेरा

लेख स्नातक तहमा अध्ययनरत रहेकै समयमा प्रकाशित भईसकेका थिए ।

साहित्यिक पुस्तकहरु किन्ने र पढ्ने क्रम जारी नै रहेपनि त्यतिखेर साहित्य भन्दा अखवारी लेखन प्राथमिकतामा पर्‍यो । कोरेका कविता पनि त्यसै थन्किए । प्रकाशनमा गएनन् । पछि आफ्नो जन्मस्थल 'पोखराथोक'मा साहित्यमा रुची राख्ने त्यहांका अग्रज एवं समकालीन मित्रहरुको प्रयासमा 'पोखराथोक साहित्य संगम'को स्थापना भएपछि हरेक वर्ष प्रकाशित हुने ,' बाटिका'का लागि रचना माग्न थालियो जसले मलाई पुनः साहित्य सिर्जनामा उत्प्रेरित गर्‍यो र २०६० सालपछि लेखन कार्य केही अघि बढ्यो । पुनः केही रचना प्रकाशित पनि भए ।

जागिरे जीवनको उत्तरार्द्ध र त्यसमा पनि अवकाश नजिकिंदै गर्दा अवकाश पछिको जीवन कसरी विताउने भन्ने सोचाई पर्न थाल्यो । आफूसंग भएका हतियार प्रयोग गर्नु नै उपयुक्त हुने भएकाले अखवारी लेखनमा सक्रिय नै भएपनि अत्यन्त न्यून र सुशुप्त अवस्थामा रहेको साहित्य सिर्जनालाई पुनः निरन्तरता दिने अठोट गरी २०७२ सालको प्रारम्भ देखि नै पुनः साहित्यिक लेखनलाई गति दिन थालियो । यात्राका क्रममा टिपोट बनाउने र यात्रा संस्मरणहरु लेख्ने क्रम प्रारम्भ गरियो । रचनाहरु प्रकाशनका लागि प्रेषित गर्ने, पत्रपत्रिकाको खोजी गर्ने जस्ता कार्य गर्न थालियो । यसैको परिणाम लामो समयदेखि विच्छेद भएको 'अभिव्यक्ति'संगको सम्बन्ध पनि पुनः स्थापित हुन पुग्यो । 'अभिव्यक्ति'मा रचना पठाउने र प्रकाशित हुने क्रम शुरु भयो । स्मरणीय छ, यही प्रयास पछि ३१ वर्षपछि आएर 'अभिव्यक्ति'को वर्ष ४८ अंक ३ पूर्णांक १९१मा 'सुर्खेत' शीर्षक कविता प्रकाशित भएसंगै मेरा रचनाहरू पुनः यसमा प्रकाशित हुन थालेका हुन् ।

यो लामो अन्तरालमा अभिव्यक्ति मनमा रहेपनि वेफुर्सदी वा विविध कारणले 'अभिव्यक्ति'बाट टाढा भएजस्तो देखिएपनि लामो विछोड पछिको यो सम्बन्धले ममा ऊर्जा थपिदिएको छ । अहिले 'अनलाइन'मा समेत पत्रिका रहने भएकाले यो प्रकाशित हुनासाथै भेटिने गरेको छ । खुशी लागेको छ । भेटेसम्म प्रकाशित भौतिक प्रति पनि लिने गरेको छु । यस अतिरिक्त अन्य पत्रपत्रिका,जस्तै सरकारी भएर पनि नियमित हुन नसकेको गरिमा, तथा नियमित रुपमा प्रकाशित भईरहेका मधुपर्क, कविता, शारदा, रचना, शिवपुरी सन्देश, मनोभाव, शव्दाङ्कुर, दायित्व, लहरा, अन्तर्वोध, नवप्रज्ञापन, हिमाली गुरांस, नव उद्घोष आदि साहित्यिक प्रकाशनमा कविता, मुक्तक, गीत आदिका साथै यात्रा संस्मरणहरु समेत प्रकाशित भईरहेका छन् । प्रकाशनको क्रम बढेको छ र हालसम्म प्रकाशित रचनाहरुले कृति प्रकाशनका लागि दबाब समेत दिन थालेका छन् । यसरी 'अभिव्यक्ति'संगको सम्बन्ध अत्यन्त पुरानो भईसकेको छ । पुरानो सम्बन्ध पुनः जोडिएको छ । साहित्यिक लेखनलाई पुनः निरन्तरता दिन थाल्दा अभिव्यक्तिले रचना प्रकाशित गरेर दिएको प्रेरणा मेरा लागि आफैमा अविस्मरणीय छ ।

निजी क्षेत्रबाट प्रकाशित 'अभिव्यक्ति' अनेक किसिमका आरोह अवरोह झेल्दै यति लामो समयसम्म निरन्तर प्रकाशित भएर नेपालको साहित्यिक इतिहासको एक स्तम्भ एवं परिवर्तनको साक्षी बन्न पुगेको छ । द्वैमासिक रुपमा प्रकाशित हुदै आएकाले यसमा रचना प्रकाशनको अवसर पनि छ । गर्व गर्न मन लाग्छ, थुप्रै चुनौती र समस्याका बीच 'अभिव्यक्ति' उही इज्जत,प्रतिष्ठा एवं विशिष्ठ पहिचान साथ बांचिरहेको छ । समयसंगै यसले प्रविधिलाई अपनाएको छ । यसको कलेवर र साजसज्जामा समय अनुसारको सुधार आएको छ । भाषा र साहित्यको क्षेत्रमा विशिष्ट योगदान पुऱ्याईरहेको यस प्रकाशनले आफूलाई एउटा अविचल, अटल स्तम्भको रुपमै उंभ्याइरहे को छ । खुशी लाग्छ यसले नवप्रतिभाहरुलाई स्थान दिने परम्परालाई कायमै राखेको छ ।

नेपाली साहित्यको धरोहर, थुप्रै साहित्यकार लेखक जन्माउन सफल 'अभिव्यक्ति' एउटा संस्थाको रूपमा स्थापित भईसकेकोमा गर्वको महसुस हुन्छ । 'अभिव्यक्ति'संगको सम्बन्धको चर्चा गरिरहंदा यसको शुभेच्छुकको है सियतमा यसको निरन्तरताका लागि यसलाई आवश्यक सबैखाले सहयोग गर्ने प्रतिबद्धता जनाउंछु । लहड वा निहीत स्वार्थमा हुने प्रकाशन अल्पायु हुने भएपनि अठोट र प्रतिबद्धताका साथ प्रकाशित भई आधा शताब्दीसम्म निरन्तर प्रकाशित भईरहेको 'अभिव्यक्ति' युगौंयुग प्रकाशित भईरहोस् । अभिव्यक्तिको अटुट प्रकाशनको कामना गदर्छु । हार्दिक शुभकामना ।

२०७५।१०।०८

ꞷꞷ

## मेरा हार्दिक शुभकामना

**घनश्याम राजकर्णिकार**

*कमलपोख्री काठमाडौं*

'अभिव्यक्ति' पत्रिकाको २००औं विशेषाङ्क

तथा

स्वर्णवर्षको अवसरमा मित्र नगेन्द्रराज शर्मा एवं अभिव्यक्ति परिवारमा उत्तरोत्तर सु-समृद्धिका लागि मेरो हार्दिक शुभकामना ।

२०७६ १ २२

ꞷꞷ

# साहित्यिक पत्रिकाका अथक यात्रीलाई सलाम

वियोगी बुढाथोकी
शिवपुरी सन्देश निवास, हात्तीगौंडा

नेपालको परिप्रेक्ष्यमा साहित्यिक पत्रिका निरन्तर प्रकाशन गर्नु भनेको ठट्टाको बिषय होइन । ठूलै जोखिम मोल्नु हो । अन्यत्र दुःख गरेर कमाएको धन खर्च गरेर पत्रिका जोगाउनु हो । त्यस्मा पनि दुईसय अंक प्रकाशित गर्नु भनेको चानचुने कुरा होइन । अतः -

अभिव्यक्ति साहित्यिक पत्रिकाका परिबारलाई हृदयदेखिनै बधाई । अझै निरन्तर यात्राको लागि शुभकामना । यस अभिव्यक्ति द्वैमासिकले कति साहित्यकार जन्मायो । कति साहित्यकारलाई स्थापित गरायो । कति साहित्यकारलाई सम्मानित र पुरस्कृत हुने अवसर प्रदान गऱ्यो । यो त सोध र अनुसन्धानको बिषय हो ।

तर अभिव्यक्ति थाकेको छैन । अझै शिखर चढ्दै गरेको अबस्था हो । यस्को निरन्तर यात्रालाई साहित्यकार, साहित्यानुरागी र असल पाठकको साथ र सहयोगको खाँचो होला । मुख्य खुराक भनेको साहित्यिक पत्रिकाको लागि वजनदार र मीठो रचनाको आवश्यकता हो । साहित्य जति पढियो, उतिनै मात्रामा लेखिएको खण्डमा निखार आउने हो । उदायमानलाई माथि चढाउने काम साहित्यिक पत्रिकाले गरेको हुन्छ । साहित्यको शिखर चढेका वरिष्ठ साहित्यकार जसलाई अभिव्यक्ति र अभिव्यक्तिजस्ता अन्य पत्रिकाको भरमा सिँढी चढेकाहरूले फर्केर हेर्ने समय हो । म कहाँ थिएँ र अभिव्यक्तिकै माध्यमबाट कहाँसम्म पुग्न सफल भए भनेर भन्ने समय हो ।

साहित्यिक पत्रिका भनेको भाषा बचाउने पाठशाला हो । भाषा सिकाउने गुरु हो । अतः यसको विकास र विस्तारमा सरकारले कुनै किसिमको वास्ता नगरेको अबस्थामा साहित्यकारले सहयोग गरेर देखाउनु पर्ने समय भएको छ । कतिपय सरकारी निकायमा पुगेकाहरूबाट साहित्यिक पत्रिकाको आवश्यकता नरहेको जस्ता शब्द कहीं कतै व्यक्त हुनु नेपाली साहित्यिक पत्रिकाका लागि दूर्भाग्य हो ।

त्यसैले साहित्यिक पत्रिकालाई अझै उन्नत बनाउन बिभिन्न निकायको ध्यान जानु पर्ने देखिन्छ । यसै मेसोमा द्वैमासिक अभिव्यक्तिले २०० पूर्णाङ्क प्रकाशन गर्दै गरेको अबस्थामा साहित्यिक पत्रिकालाई बचाएर, जोगाएर र केही गरौं भन्ने यात्रामा निस्किएको शिवपुरी सन्देश, साहित्यिक त्रैमासिक पत्रिका परिबारबाट हार्दिक हार्दिक हार्दिक बधाई नेपाल साहित्यिक पत्रकार संघका अध्यक्ष नगेन्द्रराज शर्मा दाजुलाई । बधाई अभिव्यक्ति परिवारलाई । अभिव्यक्तिले निरन्तर साहित्यिक पत्रकारिताको यात्रा नाप्न सफल होस् । हार्दिक शुभकामना ।

ꕤꕤ

# अभिव्यक्ति र नगेन्द्रदाई

विष्णुबहादुर सिंह

मण्डिखाटार, काठमाडौं

'मान्छे जस्तो देखिन्छ त्यस्तो हुँदैन र जस्तो हुन्छ त्यस्तो देखिदैन'– वास्तविकता भित्र लुकेको यो मेरो अनुभूति हो । तर वरिष्ठ साहित्यकार, अभिव्यक्तिका सम्पादक एवं साहित्यिक पत्रकारिताका अभियन्ता नगेन्द्रदाइमा माथिको उक्ति पटक्कै लागु हुँदैन। नगेन्द्रदाइ जस्तो हुनुहुन्छ उस्तै देखिनुहुन्छ। अत्यन्तै सरल व्यक्तित्वका निश्छल, निर्भीक स्नेहालु, दयालु र पारदर्शी । सबै साहित्यकार तथा साहित्यप्रेमीका एक पथ प्रदर्शक। उहाँ हुनुहुन्छ। जुन सुकै उमेरसमूहका व्यक्तिहरूसँग पनि सहजै घुलमिल गर्नु सक्ने उहाँको स्वभाव छ। त्यसैले अभिव्यक्ति भित्र सबै साहित्यकारहरू अट्टाएका छौ– नयाँ, पुराना, युवा, प्रौढ- सबै हामी अट्टाएका छौं ।

ठ्याक्कै हाम्रो पहिलो भेट कहाँ भएको थियो त्यति सम्झना नभए पनि उहाँलाई चिनेको दशकौं भइसकेको छ। शिवपुरी साहित्य समाजले हरेक वर्ष समर्पण गर्ने सम्मान/पुरस्कारहरूको निर्णय, तथा गुन्द्रुक, मकै, भटमासको कार्यक्रम आदिमा उहाँको उत्साहपूर्वक सहभागिता तथा सल्लाह/सहयोग रहने गरेकोछ । यस्तै कार्यक्रमहरूका सिलसिलामा २०५५-५६ सालतिर हाम्रो भेट भएको हो जस्तो लाग्छ । त्यसैबेला देखि हरेक दोस्रो महिनामा अभिव्यक्ति प्रकाशित भएपछि र हरेक तेस्रो महिनामा शिवपुरी सन्देश प्रकाशित भएपछि हामी चारजना– नगेन्द्रदाइ, वियोगी बुढाथोकी शंकर भारती र म रिचमण्ड बेकरी क्याफेको साहित्यिक कुनोमा जम्ने गर्थ्यौं । त्यसबाहेक, बेलाबेलामा काठमाडौं उपत्यका बाहिरको घुमघाम कार्यक्रममा पनि गइरहन्थ्यौं हामी। म विद्युत प्राधिकरणमा कार्यरत छँदा विभिन्न निरीक्षण भ्रमण अथवा 'विद्युतकर्मी साहित्य समाज'का कार्यक्रममा विभिन्न स्थानहरूको भ्रमणमा जाँदा नगेन्द्रदाइ समेतको टोलीको सहभागिता हुनेगर्थ्यो। यसरी हामीले कालीगण्डकी, मर्स्यांग्दी, कुलेखानी र इलामको पुवाखोला आदिका जलविद्युत आयोजनाहरूको अविस्मरणीय भ्रमण गरेका थियौं । विद्युत निकाल्न कति धेरै संरचनाहरूको निर्माण गर्नु पर्नेरहेछ र कति कठिनाइका बावजुद विद्युत उत्पादन गर्न सकिंदो रहेछ भन्ने कुरा अहिले बारंबार भन्नुहुन्छ। जलविद्युत आयोजनाहरूको भ्रमण गर्नुअघि केही बेर बिजुली जाँदा पनि उहाँलाई रिस उठ्थ्यो रे। पछि जानकारी भए पछि धेरै कुरा बुझ्न सिक्न पाइयो भन्नुहुन्छ।

नगेन्द्रदाइ द्वारा प्रकाशित/सम्पादित अभिव्यक्तिले प्रकाशनको ५०औं वर्षमा पाइला टकेको छ र २००औं अंक एउटा भव्य विशेषाङ्कका रूपमा प्रकाशित हुँदैछ । ५० वर्षदेखि निरन्तर रूपमा प्रकाशित गरेर २००औं अंकसम्म आईपुग्दा सम्पादक प्रकाशकको नाताले उहाँले धेरै पसिना बगाइ सक्नुभएको छ । अब, एउटा मात्र उहाँको चिन्ता भनेको आफ्नो शेषपछि

अभिव्यक्तिले निरन्तरता पाइरहोस् भन्ने छ । त्यसका लागि एउटा अक्षय कोषको स्थापना समेत गरिसक्नु भएको छ । त्यो कोषको लागि थोरै रकम सहयोग गर्न पाएकोमा मैले आफूलाई भाग्यशाली ठानेको छु ।

कहिलेकाहीँ सँगै बसेर पेय पदार्थ लिंदा सकभर आफ्नो स्तर कायम राख्नुहुन्छ । 'जे पायो त्यही र जति पायो उति पिउनु हुन्न' भनेर हामीलाई पनि सीमित मात्रामा स्तरीय ब्राण्डका पेय मात्र पिउने सल्लाह दिनुहुन्छ । त्यसैले त नगेन्द्रदाइ सधैं तन्नेरी देखिनुहुन्छ । त्यही प्रसंगको रमाइलो मुक्तक पनि कार्यक्रमहरूमा सुनाउने गर्नु हुन्छ । जुन यौवनसँग सम्बन्धित छ ।

साहित्यकारहरूको रमाइलो भेटघाटका लागि उहाँले २०५८ सालदेखि कार्की किचेन, गौशालामा अभिव्यक्ति-भेटघाट कार्यक्रमको थालनी गर्नु भएको थियो । हरेक महिनाको पहिलो विहीवार सम्पन्न हुने त्यस रमाइलो साँझमा साहित्यिक छलफल, रचना वाचन, गायन तथा पुस्तक विमोचन आदि कार्य हुन्थ्यो । सबैजना मिलेर रमझम र रमाइलो गर्ने अनि आ-आफ्नो खानापिनाको बिल आफैंले तिर्नुपर्ने नियम थियो ।

त्यस ऐतिहासिक कार्यक्रमका नियमित सहभागीहरूमा मदनमणि दीक्षित, शिव रेग्मी, वासु पासा, शरद शाहा, राममान तृषित, जगदीश घिमिरे, रोचक घिमिरे, ज्ञानुवाकर पौडेल, राप्रउ पोखरेल, नृपेन्द्रसिह केसी, देवीप्रसाद सुवेदी, पद्मा श्रेष्ठ आदि थिए भने कहिलेकाहीं आउनेमा धनुषचन्द्र गौतम, क्षेत्रप्रताप अधिकारी, कुबेर शर्मा, सौरभ, कृष्णमुरारि भण्डारी, नरेन्द्रराज पौडेल, विश्वम्भर चञ्चल, रामबहादुर पहाडी आदि थिए ।

त्यो कार्यक्रम २०७६ पुषदेखि ग्रीन पार्क रेष्टुरेन्ट, चक्रपथमा सरेको छ । त्यसमा पुराना सहभीहरूका साथमा थपिएको आजका वरिष्ठ एवं सकृय साहित्यकारहरूको नयाँ समूहको उल्लेखनीय उपस्थितिले भेटघाट झन् झन् रमाइलो र जीवन्त बनेको छ । बेला बेलामा कुनै कुनै उत्साही साहित्यकारले स्वेच्छाले सबै सहभागीहरूको बिलको भुक्तानी गरिदिने गरेको पक्ष पनि रमाइलो छ ।

अन्त्यमा, शिवपुरी साहित्य समाज द्वारा व्यवस्थापन गरिएको म र मेरो परिवारद्वारा स्थापित 'विष्णु-पुष्पा साहित्यिक पत्रकारिता पुरस्कार– २०६६' ग्रहण गरेर हामीलाई हौसला प्रदान गर्नुहुने नगेन्द्रदाइ प्रति नतमस्तक हुँदै यो २००औं विशेषाङ्कको लागि हार्दिक शुभकामना व्यक्त गर्दछौ ।

बयासी वर्षीय नगेन्द्रदाइको अभिव्यक्तिको २००औं अंक सम्म देखिएको जोश र जाँगरप्रति मेरो हार्दिक सम्मान र शुभकामना छ ।

आभिव्यक्तिका अंकहरू नियमित रूपमा प्रकाशन हुँदै जाउन्, दाइको स्वास्थ्य कहिल्यै पनि प्रतिकूल नहोस्– यही नै मेरो हार्दिक शुभकामना छ ।

ঌঌ

# के अभिव्यक्तिलाई यत्ति नि नभनूँ

**साम्ब ढकाल**

विक्रमाब्द ०५२ कै छेकोबाट हुनुपर्छ अभिव्यक्तिलाई हेटौंडामा खेम बानियाँले (जो २०५४ माघ १० मा जनकपुर नजिक मोटर साइकलमा दुर्घटित भई दिवंगत र सफल कवि एवम् मकवानपुरे सूत्रकथाका सुत्राधार पनि) नियमित बनाए । अशेषमल्लकै सूत्राधारबाट यो काम भएको हो भन्ने सुनेको सम्म हुँ । खेमको असामयिक काल कवलित भएपश्चात् मकवानपुर क्याम्पसमा राजनीतिशास्त्रका अध्यापकीय निर्वाहमा वीरगञ्जबाट रमेश गोर्खाली के आएका थिए उहाँ मार्फत् खेमको जिम्मेवारीबाट मेरोमा अभिव्यक्ति सर्‍यो, सारें वा महामना सुधिजन रमेश गोर्खालीको आग्रह टार्न सकिनँ कि के भयो अभिव्यक्तिको मोहपासमा बाधिएँ । हुँदा हुँदा त भो अब अभिव्यक्ति मेरो जीवनको अपरिहार्य जिनिस भो भईदियो । हाते झोलामा, नभए हातमै भएपनि अभिव्यक्ति बोकेर कार्यक्रमतिर जाँदो भएँ । साहित्य सङ्गम सञ्चालित पुष्पलाल स्मृति पुस्तकालयको मुल गेटभित्र छिर्ने बित्तिकैको गारोमा झुन्डिएको सेतो वोर्डमा 'अभिव्यक्ति चाहिएमा साम्ब ढकाललाई सम्पर्क गर्नुहोला, अभिव्यक्तिको ... औं अङ्क आईपुग्यो'जस्ता सूचना महिना दुई महिनामा कोरिन्थे । हुँदा हुँदा त यस्तो पनि दिन आयो मकवानपुरे स्रष्टाहरूकोमात्रै हेटौंडा अङ्‍ १०४ भनेर नगेन्द्र सरले सूचनै छापिदिनु भो । नभन्दै निक्लियो पनि । यो अङ्कको विशेष चर्चा राजधानीमा धेरै रसम्म चलिरह्यो भन्ने कुरा देखिजान्ने र सुनि जान्नेले अझै सुनाउँछन् ।

नेपाली साहित्यका कखरादेखि वाचस्पतिसम्मकाले अभिव्यक्तिका अङ्कमा आँखा नडुलाएका कमै सुनिन्थे र आफ्ना नाम अभिव्यक्तिका सेता पानामा काला अक्षरले कुँदिनुलाई अहम्‌का विषय बनाइएका हुन्थे । सुनिन्थ्यो– एउटा हृष्टपुष्ट मान्छे मोटरसाइकलको डिक्कीबाट अभिव्यक्तिका नयाँ अङ्कका बिटा बोकेर नयाँ सडकको पीपलबोट परिसरमा बाँडिरहेका हुन्थे । गाडी भाडा रु.पाँच तिरेर रु.तीन पर्ने अभिव्यक्ति लिन अभिव्यक्ति अड्डा चावहिल पुग्थे अरे । केही न केहीका फिरफिरे कागजमा नाममात्रका साहित्यिक पत्रिका अब्बल, विशेष, उत्कृष्ट भनेर बजारमा आउँथे नगेन्द्रसरको अभिव्यक्तिचाहिँ दुई महिने सामान्य साहित्यिक पत्रिका भनिन्थ्यो । हामीचाहिँ चकित हुन्थ्यौं । ती अब्बल, विशिष्ट र उत्कृष्ट आज कहाँ छन्, दुईमहिने सामान्य पत्रिका २०० औं दिव्याङ्कको तैयारीमा जुटेको छ ।

नेपाली वाङ्मयसेवामा अभिव्यक्तिको ईतिहास पक्कै लर्तरो छैन भनेर भन्दा हामीजस्तालाई यस्तो लाग्छ भने साहित्यिक अध्येतालाई झनै लाग्नु पर्ने हो । नयाँनयाँ अनुहार, त्यहीमाथि कुना कन्दरा, देहात, सीमान्तमा रहेका लेख्न र छाप्न असाध्यै रहर भएकाहरू अभिव्यक्तिका हकदारहरू हुन् भनेर नगेन्द्रसरले उहाँसँगका भेटमा दोहोर्‍याउनु भएको छ । उहाँले कति साधारण

किसिमले असाधारण कुरा गर्नु भएको छ– अभिव्यक्तिको भविष्य के छ म त भन्न सक्दिनँ ……मेरै ठेगान छैन … म बाँचुञ्जेल निस्कन्छ …मपछिको चिन्ता मलाई छैन …! योभन्दा निष्काम उद्‌गार के हुन सक्छ !!! बाँचुञ्जेल अभिव्यक्ति कि नराश, नराश कि अभिव्यक्ति एकैखाले सम्बोधनले काम गर्छ। ऊ आउनु भयो अभिव्यक्ति शर्मा …ऊ आउनु भो नगेन्द्र अभिव्यक्ति जे भने नि एउटै जीवन बाँचेर अभिव्यक्तिलाई अक्षर बनाउनु भो…… ननासिने अक्षर ।

मैले तीसकै दशकबाट अभिव्यक्तिको नामाङ्कन मनमस्तिष्कको भित्तामा टाँसेको हुँ भन्दा अर्कै लाग्छ। अर्कै भनेको गर्वानुभूतिभन्दा नि माथिको उच्चारण गरेको अनुभूत हुन्छ । मैले नेपाली वाङ्मयको संगत पाउनुभन्दा धेरै अगाडि, मेरा जायजन्मभन्दा केही पछाडि नेपाली माटोमा अभिव्यक्तिको पदार्पण भएको रहेछ । लेटरप्रेसबाट निस्केका यसका साजसज्जामा भिन्नै अनुहारको लाग्थ्यो । यसका पाना सुम्सुम्याउदाँखेरि शुरुमै खरो, सुरो, पीरो सम्पादकीय, यथातथ्य एवम् हास्य कलेवरमा यायावर अनि सबैभन्दा पछाडि विधागत रचना छनौटमा पर्थे । यो यायावरको पात्रमा म आफैँपनि निक्कै पटक उपस्थित भएको छु। नवैरसका पकवानजस्ता लाग्ने यायावरले नेपाली साहित्यका मूर्धन्य लेखककहरूको आनिबानीदेखि लिएर थाहा पाएका नपाएका सबै पक्षको पटाक्षेप हुन्थ्यो । कताकति यायावरीय पात्रहरूले लखेटेका पनि छन्। केरेका पनि छन्। साहित्यिक चौतारीहरूमा खुबै चर्चाका विषय भएका छन् । लाग्छ यो यायावर स्तम्भ त लेखकका आनिवानीका ज्वलन्त एक्सरे नै हो !

अभिव्यक्तिका सबै अङ्कलाई प्रेसमा लगेर सिलाएर घरभरि थन्क्याउने मा मेरो सामान्य ज्ञान अनुसार हाल काठमाडौंमा बसोबास गर्ने, केही समय मकवानपुरमा प्राध्यापन गर्ने, अभिव्यक्ति परिवारका अभिन्न सदस्य साहित्यकार/समालोचक आदरणीय रमेश गोर्खाली पर्छन् । अभिव्यक्तिमा उनले थप्रै साहित्यकारका जन्मदिनमा भएसम्मका विशेषण झुन्ड्याएर शुभकामना दिन्छन्। यो पनि नेपाली साहित्यका जिज्ञासुहरूलाई बहुत काम लाग्ने कुरा हो । पछुतो लाग्छ, मैले अभिव्यक्तिको सेवा गर्न पाउँदा पनि राम्ररी गर्न सकेको छैन । मौकाको फाइदा उठाउन सकेको छैन । उही नगेन्द्रसरले कुरियर गरेर पठाउनु हुन्छ, मचाहिँ साथीभाइ, अग्रज, अनुजलाई बाँडेर सकिदिन्छु। आक्कलझुक्कल रचना मागेर छाप्न पठाईदिन्छु। यत्तिमै मैले अभिव्यक्तिको हुर्मत लिएको छु। ग्राहक सङ्ख्या बढाए हुने । विज्ञापन खोजेर पठाए हुने । लेखक साहित्यकारसँग रचना मागेर पठाएर सघाए हुने। अहँ केही गर्न सकेको छैन । यस्ताले के फूर्ति गरेर अभिव्यक्तिको केके न हुँ भन्दै हिँड्नु खै ! कहिले त राम्ररी पढेको पनि हुन्न । साहित्यिक मन्डलीबाट मेरो अभिव्यक्तिको फलानो लेख पढिस् भनेका हुन्छन्। आफूले कहिले पढेको हुन्थ्यो कहिले हुन्थेन अनि खप्कीको स्वरमा कत्ति न अभिव्यक्तिको प्रतिनिधि भनाउँदो र छ !

हो मैले अभिव्यक्तिको संगत पाएर पनि केही गर्न नसकेकै हो प्रायश्चित्त त गरिसकें नि बाबा !

अभिव्यक्तिलाई सघाउँदाका र भोगेका केही कुथुङ्ग्रीहरू पनि जम्मा भएका रहेछन् । एकजना स्वनामधन्य लेखक जो हाल अमेरिका पलायन छन् उनले अभिव्यक्तिको मकवानपुर अङ्क निस्केकै बेला जुनबखत उनी नेपालमै रहेछन् उनको रचना छापिएन, उनको चर्चा भएन भनेर राती फोनमा लामै कुरा गर्न भ्याए । जुन कुरामा उनका काठमाडौंमा रहँदाताकाकादेखि अमेरिका भासिउञ्जेलसम्मका कुन्ठा, होची अर्घेली, निराशा र हतास मनस्थिति सबैको भँडास बाहिर फ्याँके । अरू पनि कोही कोही रिसाए । जो साहित्यमा बामे सरेका पनि थिएनन् । सबैलाई एउटै अङ्कमा समावेश गर्न सकिने कुरा पनि भएन । मकवानपुरमा बसेर नेपाली साहित्यलाई उकेरा लाउनेहरू सकेसम्म नछुटुन् भन्ने हामीभित्रको निहितार्थ स्वार्थ बोलेको थियो त्यत्तिखेर । यहाँ नामको लर्को किन लाउनु ? मकवानपुरे साहित्यको चिन्ता हुने सबैले कुनै न कुनै किसिमले सघाएको कुरा आज पनि स्मरण गर्न पाउँदा खुशीले सीमातीत छु ।

मलाई अभिव्यक्तिको गर्व लाग्ने आर्को ईतिहास झनै मन पर्‍यो– आसामबाट आएका र झापाको वृहत साहित्यिक सम्मेलनबाट टिपेर केदार मान व्यथितले काठमाडौं ल्याईएका कवि एवम् गीतकार हरिभक्त कटुवालले पनि अभिव्यक्तिको सम्पादकत्व ग्रहण गरेका रहेछन् । अभिव्यक्तिको नामबाटै चावहिलको कुनै बेलाको ‘अभिव्यक्ति अड्डा’को मार्गको नामै ‘अभिव्यक्ति मार्ग ’ नामकरण भयो । किन किन मानवीय अभिव्यक्तिलाई ‘अभिव्यक्ति’का सेता र कोरा पानाभरिभरि सजिँदाका उन्मुक्तता कसरी व्यक्त्याऊँजस्तो लाग्दोरहेछ । एउटा छुट्टै गौरवान्वित लाग्ने यात्रा गरेर यहाँसम्म आईपुगेको अभिव्यक्तिका पाइलाका हरेक पगका छापभित्र अनेकानेक उतारचढाव छन् होला लाग्ने गर्छ । अब त अभिव्यक्तिले पनि सुरम्य टाकुरीमा पुगेर क्षितिजसम्म नियाल्दै यहाँसम्म हिँडेर आएका नागवेली गोरेटाहरू हेरेर लामो सास फेर्दै ‘ओ हो यत्रो हिँडिएछ गाँठे’ भन्ने बेला भयो । अभिव्यक्तिले हुर्काएका लेखकहरूका बगाल सम्झँदा आफूआफूमै दरिंदो हो, अति खुशी भएको अनुभूत गर्दो हो !

अभिव्यक्तिले नेपाली साहित्यका धेरै भूभागमा आफ्ना बिऊ रोपेको छ । सिँचन गरेको छ । सघन हरियाली नदेखिनु अर्कै कुरा हो । अझ अभिव्यक्ति एउटा वालुवैवालुवा भएको पठारको ओयशिश हो । मरुभूमिमा हरियोको कत्ति महत्व छ नेपाली साहित्यिक मरुभूभिमा त्यस्तो हरियो हो जसका हरियो चमकले पूरै नेपाली साहित्य हरितमय हुन सकेको छ । एकछिन् कल्पौं त, अभिव्यक्तिलाई नेपाली साहित्यिक इतिहासबाट हटाई दियौं भने बाँकी रहने ठाउँ कस्तो होला ? भो त्यतातिर जाँदै नजाऔं । जानै परे अभिव्यक्तिकै यात्रातिर जाउँ जहाँबाट कम्तिमा मान्छेका मनका कुरामा त छिर्न पाईन्छ !

ଓଓ

# अभिव्यक्तिमाथि छोटो अभिव्यक्ति

डा भूपहरि पौडेल
टोपाल कुटी, सानो ठिमी, भक्तपुर

मोहनप्रसाद खनालको अन्वेशन सत्य हो भने अहिलेसम्म प्राप्तभएका नेपाली भाषाका प्राचीन अभिलेख मध्ये सं.१०१६को बामु खड्गाहाको दुल्लू दै लेखमा प्राप्त भएको स्तम्भ अभिलेख पहिलो लेख्य सामाग्री हो । सो मितिको लेख्य सामाग्रीदेखि मोतीराम भट्ट नेपाली साहित्यमा उदय हुनु भन्दा पहिलेको युगसम्म साहित्यिक, समाचारप्रधान, बुलेटिन, कोडपत्रहरू प्रकाशित भएको नपाइए पनि प्राइममिनिष्टर श्री ३ जंगबहादुर राणाले भारतीय उपमहाद्वीपका नेता र जनता मध्येबाट पहिलो पटक बेलायतको भ्रमण गरेका थिए । भ्रमण गरेर स्वदेश फर्कने क्रममा बेलायती सरकारले उपहार दिएको 'हातेप्रेस' जंगबहादुरले साथै ल्याएका थिए । उक्त हातेप्रेसमा गिद्धको आकारअङ्कित भएको हुनाले त्यसलाई गिद्धेप्रेस पनि भनिन्थ्यो । त्यो मिसिनबाट केही पुस्तक तथा ऐनको पुस्तकका साथै राणा सरकारबाट जारी  भएका इस्तिहारहरू पनि छापिएको पाइन्छ । सरकारी आदेश, घोषणा र सूचनाको प्रकाशन परम्परामा यसलाई प्रथम बिन्दुको रूपमा मान्न सकिन्छ ।

त्यसपछि मोतीराम भट्टको प्रयत्नमा १९४८ सालमा 'गोर्खा भारत जीवन' पत्रिका निस्कियो । त्यस्तै, १९५५मा नरदेव पाण्डेको सम्पादनमा सुधासागर , १९५५ देखि १९५८का बीचमा देशविदेशका केही प्रमुख घटनाहरू समावेस गरेर समाचार मुलक लिथोप्रकाशन हुँदै, गोर्खापत्र, सुन्दरी, माधवी, चन्द्र, गोर्खाली, चन्द्रिका, गोर्खासंसार, जन्मभूमि, शारदा, उद्योग, प्रगति, इन्द्रेणी, भारती, रूप-रेखा, रचना, रत्नश्री, कविता, मधुपर्कको सृखंलामा २०२७ सालमा रामेछाप मन्थलीका साहित्यकार तथा समाजसेवी नगेन्द्रराज शर्माको सम्पादनमा अभिव्यक्ति पत्रिका प्रकाशनमा आयो । यस पत्रिकालाई ऋतुपरक पत्रिका पनि भन्न सकिन्छ किनभने प्राकृतिक सौन्दर्यको प्रवाहगर्ने बसन्त, ग्रीष्म, वर्षा, शरद, हेमन्त र शिशिर भएजस्तै अभिव्यक्ति पनि नवीन नवीन भावका सौन्दर्यमय साहित्यिक रचनाहरू प्रकाशन गर्दै १९९ अंकका बिगतहरू व्यतीत गरिरहेछ ।

नेपाली भाषा र साहित्यका इतिहासमा अभिव्यक्तिजस्तो स्वार्थ र क्लेशरहीत पत्रिकाले पुऱ्याएको योगदानलाई अध्ययनीय, अन्वेषणीय र संस्मरणीय घटनाको रूपमा लिन सकिन्छ । मोतीरामदेखि नगेन्द्रराज शर्मासम्मका साहित्यिक पत्रिकाहरूको नेपालको ऐतिहासिक परम्परामा शर्माको अभिव्यक्ति पत्रिकाका माध्यमबाट विधागत नेपाली साहित्यको विकासमा पुऱ्याइएको योगदानलाई अन्य साहित्यिक पत्रकारको योगदानको तुलनामा निस्वार्थ भयरहित र निरन्तरताका रूपमा लिन सकिन्छ । अभिव्यक्तिले प्रकाशनको प्रथम मुहूर्तदेखि नै स्थापित लेखकमा अभ्यस्त हुँदै

गरेका र उदीयमान स्रष्टा र द्रष्टाहरूलाई यथोचित स्थान र सम्मान दिंदै आएको छ । यस द्वमासिक अर्थात् ऋतुपरक पत्रिकाले स्रष्टा र द्रष्टाहरूका उपयोगी सिर्जना, अनुसन्धान र शोधपरक रचनालाई विना भेदभाव स्थान दिदै आइरहेको छ । साथै, अभिव्यक्तिले विभिन्न विशेषांक पनि प्रकाशन गर्दै आएको छ । त्यसैले प्रस्तुत अभिव्यक्ति पत्रिका नेपाली साहित्यको साझा अभिव्यक्तिको शीतल चौतारी हो । यो चौतारी बनाउने कार्यमा प्रधान सम्पादक नगेन्द्रराज शर्माको चिन्तन प्रतिभा, श्रम र धैर्यले विशिष्ट भूमिका निर्वाह गरेको छ ।

नेपाली साहित्यको एक छुट्टै कित्ताको साहित्यिक पत्रिका अभिव्यक्तिको दुईसयौं अंक प्रकाशनको सन्दर्भमा दीर्घप्रकाशनमय योगदानका निम्ति र नगेन्द्रराज शर्माको अग्रणी भूमिका र सफलताका निम्ति समेत् शुभकामनाका केही शब्द अभिव्यक्त गरी लेखनीलाई विश्राम दिन्छु ।

ଔଔ

## १५७/टेलीफोन वार्ता (०६८ ९ २६)

हरि अधिकारी : घिमिरे घिमिरे फगत् घिमिरे आए यायावरमा
घिमिरे बाहेक कोही लायक छैनन् र सहरमा

धनराज गिरी : यतातिर रामबाबु उता जगदीश
किन गऱ्यौ हरिदाजु घिमिरेको रिस ?

हरि अधिकारी : होइन, होइन, त्यस्तो होइन गर्दिन म डाहा
यायावरमा आउन गर्छौं हामी पनि चाहा

धनराज गिरी : हेर्दै जानू, सबैलाई पुऱ्याइन्छ भाग
प्यारा हरि, अबदेखि नबन्नु है नाग

हरि अधिकारी : बुझें कुरा गिरी भाइ चलाउन्न छुरा
थाहा पाएँ सबैजना मेरै काट्छन् कुरा

धनराज गिरी : छैनन् पूर्ण कोही पनि सिर्जनको गाउँमा
राम्रा कुरा पनि लेखौं साहित्यको नाउँमा

हरि अधिकारी : आफ्नो आफ्नो कमाइ हो आफ्नो आफ्नो थैली
मलाई पनि मनपऱ्यो धनराजको शैली ।

ଔଔ

# डेढ दशकको संगत

## चन्द्रप्रसाद भट्टराई

अभिव्यक्ति र नगेन्द्र दाइसँग हिजोआज मेरो नजिकको सम्बन्ध भएपनि दुवैसँग २०६१ सालसम्म मेरो सामान्य चिनजानसम्म पनि थिएन ।

उहाँसँग मात्रहोइन राष्ट्रिय स्तरका साहित्यिक वृत्तका धेरैसँग म निकै वर्षसम्म अपरिचित नै रहें । त्यसका केही ठोस कारण थिए । पहिलो, म साहित्य सिर्जनामा ढिलै लागेको हुँ, २०३९ सालदेखि मात्र, उनन्तीस वर्षको उमेरमा । विराटनगरबाट हुलाकद्वारा पठाइएको पहिलो साहित्यिक रचना रमा दिदी शीर्षकको कथा २०४० असोजमा मधुपर्कमा छापिँदा म तीस वर्षको थिएँ, छोराको बाबु भइसकेको थिएँ, अधिकृतको स्थायी जागिरमा पनि सातवर्ष पुरानो भइसकेको थिएँ । दोस्रो, साहित्यिक संघ संस्थाहरूमा नलाग्दा स्रष्टाहरूसँग चिनाजानी कम हुँदोरहेछ । आफ्ना रचना प्रकाशन हुन थालेको दुई दशकसम्मै म कतैका कुनै साहित्यिक संघ सस्थासँग आबद्ध थिइनँ, एकान्तमै रमाउथेँ, कथा मात्र लेख्थेँ, पठाएका जति सबै नै कथा मधुपर्क र गरिमाले छापिदिन्थे । ती दुईटा पत्रिका नियमित पढ्थेँ, अरू पत्रिकाका बारेमा त्यति खोजखबर पनि गर्दिनथेँ ।

मेरो पहिलो पुस्तकाकार साहित्यिक कृति सहयात्रा' कथासङ्ग्रह वाणी प्रकाशनबाट छाप्ने क्रममा प्राविधिक कारणवश कुनै संस्थाको सदस्यता लिएको हुँ, २०५९ सालमा । धेरै संघ संस्थासँग नाता जोड्दा आफ्नो सिर्जनशीलतामा प्रतिकूल असर पर्ने मेरो बुझाइ छ । घरपरिवार, काम व्यवसायबाट बचाइएको अमूल्य समय साहित्यिक संघ संस्थाका कार्यक्रमका सहभागितामा होइन राम्रा कृतिको अध्ययन र सिर्जनामै लगाउन पाउँदा प्रसन्न हुन्थेँ । स्रष्टा अमर रहने उसका मन छुने सिर्जनाबाटै हो, संघ संस्थासँगका संलग्नता वा कुनै पदीय दायित्वबाट होइन भन्ने मेरो मान्यता छ । त्यसैले धेरै वर्षसम्म साहित्यिक संघसंस्थासँग कोमूलधारमा पस्ने चाह नै भएन । तेस्रो कुरा, साहित्यिक वृत्तमा चिनाजानी गराउने एउटा गतिलो माध्यम कविगोष्ठी रहेछ । मैले कुनै काव्यात्मक सिर्जना नगरेको हुँदा कविगोष्ठीमा जाने गरेको छैन । गोष्ठीहरूमा नजाँदा व्यक्तिगत चिनाजानीको घेरा निकै साँघुरो हुनेरहेछ । चौथो, मेरो औपचारिक अध्ययन भाषा वा साहित्यमा होइन अन्य क्षेत्रमा भएको हो, काम पनि पूर्णतया भाषा साहित्येतर क्षेत्रमा गर्दछु । धेरै वर्षसम्म मेरो भेटघाट, बसउठ, सरसम्पर्क त्यतैका मान्छेहरूसँग मात्र हुने गर्दथ्यो ।

त्यस्ता अवस्थामा काठमाडौंमा २०४० कै दशकदेखि घरवास गरी बसे पनि र प्रतिनिधि साहित्यिक पत्रिकाहरूमा फाटफुट रचना प्रकाशित हुने गरे पनि धेरै वर्षसम्म न राष्ट्रिय स्तरका साहित्यिक अग्रजहरूका छेउमा पुगेँ, न समकालीन साहित्यकारहरूसँग मेरो घनिष्टता भयो । त्यसो हुँदा नगेन्द्र

दाइसँग निकै अगाडि नै मेरो निकटता नहुनुलाई कुनै अर्थमा अस्वाभाविक मान्दिनँ म ।

अब नगेन्द्र दाइ र उहाँको अथक प्रयासबाट एउटा संस्थाकै रूप धारण गरिसकेको अभिव्यक्तिसँग मेरो सम्बन्ध कसरी, कहिलेदेखि र कुन सन्दर्भमा भयो त्यसबारे छोटो चर्चा गर्छु ।

२०६१ साल असारमा मेरो नियात्रासङ्ग्रह 'प्रशान्तका छालहरूमा मेरो नेपाल' प्रकाशित भयो । दक्षिणी प्रशान्त क्षेत्रको मुलुक पपुआन्युगिनीको अर्थ मन्त्रालयमा अन्तर्राष्ट्रिय सल्लाहकारको कामबाट केही महिनाको फुर्सतमा यता आएको बेला थियो । कृति लोकार्पणपछि साहित्यिक पत्रपत्रिकाहरूमा समीक्षाका लागि पठाइदिन घरगाउँकै भाइ गोकुल अधिकारीलाई जिम्मालाएर पुनः उतै लागेँ । उहाँले अभिव्यक्तिलाई पनि दिनुभएछ । २०६२ चैतमा फर्केर म नेपाल आउँदा बिभिन्न पत्रपत्रिकामा सो पुस्तकबारे चर्चा छापिएको पाएँ, तीमध्येको एउटा समीक्षात्मक लेख अभिव्यक्ति पूर्णाङ्क १२२ (वैशाख २०६२) मा पनि रहेछ । 'चन्द्रप्रसाद भट्टराई' भन्ने शब्दावली पहिलो पटक अभिव्यक्तिमा छापिएको हुनुपर्छ । त्यस सँगसँगै नगेन्द्र दाइ र अभिव्यक्तिसँग मात्र होइन, त्यस समीक्षात्मक लेखका स्रष्टा, मैले बिगतमा कहिल्यै नदेखेका नभेटेका, श्री राप्रउ पोखरेलसँग पनि घनिष्टता भएको छ ।

यी सम्बन्धलाई गाढा पार्नमा अत्यन्त ठूलो भूमिका निर्वाह गरेको छ 'अभिव्यक्ति-भेटघाट कार्यक्रम'ले । यो प्रत्येक महिनाको पहिलो बिहीबार साँझ सम्पन्न हुने मासिक साहित्यिक भेटघाट कार्यक्रम २०५८ साल असोज देखि नगेन्द्र दाइकै नेतृत्वमा सुरू गरिएको रहेछ ।

बेलाइत-अमेरिकामा अध्ययन र पपुआन्युगिनीको काम सकेर नेपाल फर्किंदा मेरा दुईटा पुस्तकाकार कृति प्रकाशित भइसकेका थिए । साहित्यिक वृत्तमा तिनले मेरो केही पहिचान त बनाइदिएका थिए तर पनि साहित्यिक व्यक्तित्वहरूसँग मेरो व्यक्तिगत चिनाजानी कमजोर रहेको मलाई निरन्तर अनुभूत भइरहेको थियो । बाँकी जीवन भने पूर्णतया नेपालमै बसेर आर्थिक सामाजिक विकासको अनुसन्धान र परामर्शसम्बन्धी आफ्नो व्यावसायिक कामलाई निरन्तरता दिँदै साहित्यिक मूलधारमा लाग्ने उद्देश्य लिएँ । नेपाल फर्केको महिनादिन नपुग्दै २०६३ बैशाखमा पहिलो पटक अभिव्यक्ति भेटघाट कार्यक्रममा सहभागी हुन जुऱ्यो । नेपालमा हुने गरेका सम्पूर्ण साहित्यिक भेटघाटभन्दा मलाई एकै झलकमा यो भेटघाट फरक र रमाइलो पनि लाग्यो । मैले के बुझेँ भने यो त मेरो उद्देश्यपूर्तिका लागि अत्यन्त उपयुक्त थलो पो रहेछ । यो मूल रूपमा खान पिउन, सम्बन्ध बिस्तार गर्न र अनौपचारिक भेटघाट-कुराकानीमा रमाउने परिपक्व साहित्यकारहरूको क्लब रहेछ । विशेष गरी युरोपेली देशहरूमा अठारौं, उन्नाईसौं, बीसौं शताब्दीतिर लेखकहरूका, कलाकारहरूका, दार्शनिकहरूका यस्ता क्लबबारे पढेको थिएँ । हरेक महिना भाग लिँदै जाँदा राम्रो लाग्यो । अमेरिकीहरूमा ह्याप्पी आवरका

नामबाट प्रचलित यस्तै चलनमा उता पनि भाग लिने गरेको थिएँ, त्यसकै झझल्को पाएँ । बिगत १३ वर्षदेखि अनुकूल भएसम्म नियमित रूपमा सहभागी हुनेगरेको छु ।

म यो अभिव्यक्ति-भेटघाट कार्यक्रममा सहभागी हुन थालेर दोहोरो चिनाजानी भएका स्रष्टाहरूको नामको लिस्ट लामो छ, तैपनि मैले छुटाउनु नहुने केही नाम हुन्– रोचक घिमिरे, राप्रउ पोखरेल, डा देवीप्रसाद सुबेदी, मधुवन पौडेल, दिनेश सत्याल, कृष्णमुरारि भण्डारी, रमेश गोर्खाली, कुवेर शर्मा, शेखर गिरी, शङ्कर भारती, आनन्दराम पौडेल । नियम सजिलो छ– आउने, आफूलाई मन लागेका खाने पिउने वस्तु अर्डर गर्ने, खाने, कुराकानी गर्ने र आफ्नो बिलको पैसा आफैँ तिरेर हिँड्ने । कुनै कुनै महिना पैसा तिर्नु नपर्ने पनि हुन्छ । यो कार्यक्रम २०७५ पुससम्म गौशाला पिङ्गलास्थानस्थित कार्की किचेनमा हुन्थ्यो, अहिले नारायणगोपाल चोकको ग्रीन पार्क रेष्ट्राँमा सरेको छ । न ठ्याक्क यति बजे भेला भइसक्नु पर्ने भन्ने कडा कानुन छ, न यति नबजी हिँड्न नपाइने भन्ने छ, न कसैको निमन्त्रणा पर्खनु पर्ने, न पैसा तिर्ने बेलामा कसैको मुख ताक्नु पर्ने । मैले २०६५ सालतिर यस क्लबमा सम्मिलित गराएका मित्र पवन आलोक अचेल मभन्दा बढी नियमित र बढी सक्रिय रूपमा आइरहनुभएको देख्ता रमाइलो लाग्छ । स्वर्गीय भइसकेका जगदीश घिमिरे, शरदचन्द्र शाहा, र राममान तृषितलाई मैले यहीं चिनेको हुँ ।

अब फेरि अभिव्यक्ति सँगका कुरा । अभिव्यक्ति-भेटघाट कार्यक्रममा नगेन्द्र दाइले अभिव्यक्तिको पछिल्लो अङ्क सबैलाई बाँड्ने गर्नुभएको छ । तेह्रवर्षदेखि म यसको नियमित पाठक भएको छु । घरमा लगेर हरेक अङ्क पूरै पढ्दछु । स्थापित लेखकका रचना पनि छन्, नवागन्तुक पनि छन् । सबै विधाका रचना पढ्न पाइन्छन् । हरेक अङ्कमा कथा/लघुकथा हुन्छन्, लेख/निबन्ध/संस्मरण हुन्छन्, पर्यावलोकन हुन्छ, गीत/गजल/कविता हुन्छन् । त्यस्तै केही स्थायी स्तम्भहरू रहने गरेका छन् । हास्यव्यंग्य, साहित्य धारा, अतीतका कुरा, साभार, जमघटहबाट आदि । पत्रिकाको सधैं एउटै आकारप्रकार छ । आवरण सधैं आकर्षक हुन्छ । दाइको ठूलो मिहिनेत र समर्पणबाट मात्र यो सम्भव भएको हो ।

मेरी श्रीमती उषा भट्टराईले एक पटक मसँगै पपुआन्युगिनीको भ्रमण गरिन् । फर्केर आएपछि यात्रा संस्मरण लेखिन्, अभिव्यक्तिको पूर्णाङ्क १३४ (कात्तिक-मङ्सिर २०६४) ले स्थान दियो । यसैबीच आफ्नो उद्देश्यअनुसार मैले नेपालमा साहित्यिक गतिविधि बढाउँदै लगेँ, स्रष्टाहरूसँगको परिचय पनि धेरै बढिरहेको थियो । २०६४ साल पुसमा परशु प्रधान, शैलेन्द्र साकार, पवन आलोकलगायतका स्रष्टाहरूको सक्रियतामा 'नेपाल स्रष्टा समाज'को स्थापना भएछ, शैलेन्द्र साकारको अध्यक्षतामा तदर्थ समिति बनेछ । २०६५ जेठमा समाजको सदस्यता लिएको मात्र थिएँ, त्यसै महिना सम्पन्न पहिलो साधारणसभाले मलाई अध्यक्षमा नै निर्वाचित गऱ्यो, यसमा परशु दाइको

महत्वपूर्ण भूमिका रहेको थियो । लेखकको संस्थागत सक्रियता बढ्दै गएपछि उसका कृतिहरूको चर्चा पनि बढ्दै जाँदोरहेछ । अभिव्यक्तिको पूर्णाङ्क १३९ (पुस-माघ २०६५) मा समालोचक हरि अधिकारीको लेख छापियो, 'प्रशान्तका छालहरूमा मेरो नेपाल : एउटा पाठकीय अनुभूति' शीर्षकको । २०७१ सालमा मेरो अर्को नियात्रासङ्ग्रह निस्क्यो– 'अनौठो मुलुक अनौठा अनुभूति' । पपुआ न्युगिनीमा चार वर्ष बस्दाखेरिका त्यहाँका प्रान्त प्रान्तका भ्रमणमा आधारित त्यस कृतिमाथि पनि धेरै लेखकहरूबाट समालोचनात्मक लेख लेखिए, प्रतिनिधि साहित्यिक पत्रिकाहरूमा छापिए । अभिव्यक्तिको पूर्णाङ्क १७२ (असार-साउन २०७१)मा यस कृतिबारे राजेन्द्र पराजुलीको लेख आयो 'अनौठो मुलुकको यात्रा' । २०७१ मा हामीले 'नियात्रा समाज नेपाल'को गठन गरेपछि धेरै पटक नगेन्द्र दाइले संस्थाका कार्यक्रममा प्रमुख अतिथि बनेर हाम्रो उत्साह बढाइदिइरहनु भएको छ ।

एउटा कुरामाचाहिँ मलाई अचम्मै लागिरहेछ, नगेन्द्र दाइसँग डेढ दशकदेखि सङ्गत भए पनि र अभिव्यक्तिमा मेरा कृतिबारेका लेख पटकपटक छापिए पनि त्यस पत्रिकामा आजसम्म मेरो आफ्नोचाहिँ कुनै रचना प्रकाशित भएको रहेनछ । म थोरै लेख्ने मान्छे, त्यसमाथि जम्मा दुईटा विधामा मात्र हात हालेको छु । रचना धेरै हुँदैनन्, त्यसैले पठाएनछु होला । अभिव्यक्तिको ऐतिहासिक २०० औंअङ्कमा यसै रचनाका माध्यमबाट मेरो खाता खुल्नु लेखेको रहेछ, त्यसैले यसो भएको हुनुपर्छ । यस कुरामा भने म प्रसन्नछु ।

नगेन्द्र दाइ सदा स्वस्थ रहिरहनुहोस्, हाम्रो प्रेरणाको स्रोत बनिरहनुहोस् । अभिव्यक्ति पत्रिका चिरन्जीवि होस् । अभिव्यक्ति मासिक भेटघाट निरन्तर चलिरहोस् । मेरो हार्दिक शुभकामना ।

ᏡᏡ

# हार्दिक शुभकामना

**आर आर चौलागाईं**

अभिव्यक्ति र नगेन्द्रराज शर्मा पर्यायवाची शब्द हुन् । जहाँ अभिव्यक्ति त्यहाँ नगेन्द्रराज शर्मा । जहाँ नगेन्द्रराज शर्मा त्यहाँ अभिव्यक्ति । एउटा व्यक्तिको प्रयासमा ५० वर्षसम्म निरन्तर साहित्यिक पत्रिका निस्कनु भनेको बिनाअक्सिजन सगरमाथा चढ्नुजत्तिकै कठिन काम हो । अग्रज साहित्यकार तथा वरिष्ठ साहित्यिक पत्रकार आदरणीय नगेन्द्रराज शर्माज्यूले आफ्नो सिङ्गो जिन्दगी अभिव्यक्तिको लागि लगाउनु भएको छ । कैयौं स्रष्टाहरूलाई मजजल गरेर स्थापित र चर्चित बनाउनु भएको छ । उहाँ मात्र हैन उहाँको पुरै परिवार समेत अभिव्यक्तिमा समर्पित भएको छ । उहाँले साहित्यको लागि राज्यले गर्न नसकेको काम गर्नु भएको छ । उहाँको लगनशीलता र अभिव्यक्ति पत्रिकाका अगाडि म नतमस्तक छु ।

ᏡᏡ

# शुभ-कामना

ज्ञानुवाकर पौडेल
मकवरी पार्क सिडनी, अष्ट्रेलिया

नेपालको साहित्यिक पत्रकारिताको इतिहासको गहन अध्ययन र विवेकसम्मत बिश्लेषण गर्ने हो भने साहित्यिक पत्रिका निकाल्नेहरू त धेरै देखिन्छन् । तर वास्तवमै साहित्यिक पत्रकारिताको हीत सोचेर निस्वार्थ सेवा, त्याग र बिशिष्ट योगदान पुर्याउने नगेन्द्रराज शर्मा जस्ता साहित्यिक पत्रकार थोरै मात्र होइन बहुतै थोरै छन् ! 'रचना' का संपादक रोचक घिमिरे जस्ता १ र २ जना अपवादका व्यक्ति बाहेक ।

नेपाली साहित्यमा विरलै भेटिने व्यक्तित्व(सम्पन्न साहित्यिक पत्रकार नराशद्वारा प्रकाशित तथा संपादित पत्रिका 'अभिव्यक्ति' द्वैमासिकको म झंडै ४४र४५ बर्ष अघिदेखीको नियमित पाठक हुँ । म यो पत्रिकाको पुरानो पाठक मात्र नभएर २०३५ साल असारको 'अभिव्यक्ति' मा मेरो पहिलो गजल छापिएको र तेस यता मेरो गजल लेखनले निरंतरता पाएको हो भन्न पाउँदा अहिले मलाई आत्म(गौरवको सुखद अनुभूति पनि भैरहेछ ।

यति मात्र होइन नगेन्द्र राज शर्मा मेरो साहित्यिक अभिवावक पनि हो ! 'रचना' का संपादक रोचक घिमिरे र नगेन्द्रदाई कै संगत,सानिध्य र आशिर्वाद पाएर मैले साहित्यिक पत्रकारिता पनि गर्न सकेको हुँ र लेखनको क्षेत्रमा समेत अनेक प्रतिकुलताको सामना गर्दै अगाडी बढन सकेको हुँ ।

बिगत केहीबर्ष यतादेखी ख़ासगरी २०र२५ यतादेखी साहित्यमा असल र गुणी मान्छे पाउन गाह्रो र भैरहेको अहिलेको यो परिप्क्ष्यमा मलाई नगेन्द्रराज शर्मासंग मेरो निकटता र हार्दिकता छ भन्न पाउँदा मलाई गर्व र सुखको जो अनुभूति प्राप्त हुने गर्छ,तेस तुलनामा मेरा अन्य भौतिक सुख गौण ठान्ने गरेकोछु।

'अभिव्यक्ति' पत्रिकाको सर्व(स्वीकार्य आफ्नै गौरवमय इतिहास छ ! निर्विवाद रूपले 'अभिव्यक्ति' का संपादक नगेन्द्र दाई र 'रचना' का संपादक रोचक घिमिरे साहित्यिक पत्रकारिताका भिष्म पितामह हुनुहुन्छ ।

एतिहासिक महत्वका पत्रिका 'अभिव्यक्ति' ले आफनो २०० औं अंक प्रकाशित गर्नलागेको खवरले म खुसी मात्र हैन अत्यन्त प्रसन्नताको अनुभव पनि गरिरहेछु ।शायद अरू कैंयन स्रष्टाहरू पनि यस्तै खुसी अनुभव गर्दै होलान् । कारण यही पत्रिकामा छापिएर धेरै कवि लेखकहरू नेपाली साहित्यमा स्वनामधन्य भैसकेका छन् ! अचेल पनि यो पत्रिकामा आफनो रचना प्रकाशित गर्न पाए आफूलाइ खुसी र संतोष मिलेको ठान्ने धेरै स्रष्टाहरू मैले भेटेको छु।

आफनो २०० औं अंक निकाल्न लागेको यो स्वर्ण अवसरमा म आदरणीय नगेन्द्रदाईलाई हार्दिक बधाई दिन्छु र यसैगरी अरू अरू बिशेषांक निकाल्ने अभिव्यक्ति को पुरानो यो परंपरा क़ायम रहिरहोस् भन्ने शुभेच्छा व्यक्त गर्दछु ! २०७५चैत २९

ᏇᏇ

# प्रेस काउन्सिल नेपाल

च.नं. १४५४/०७५/०७६

मिति : २०७६/२/७

नगेन्द्रराज शर्माज्यू,
प्रधान सम्पादक
अभिव्यक्ति द्वैमासिक ।

**विषय : शुभकामना सम्बन्धमा ।**

नेपाली साहित्यिक पत्रकारिताको इतिहासमा अभिव्यक्ति द्वैमासिकले पुऱ्याएको योगदान अविस्मरणीय र प्रशंसनीय छ ।

२०२७ साल माघ ६ गते दर्ता भई सञ्चालनमा आएको यो पत्रिकाले २००औँ अङ्क प्रकाशन गर्न लाग्नु चानचुने कुरा होइन । यसलाई मैले त्याग र तपस्याको प्रतिफलको रूपमा लिएको छु । साहित्यिक पत्रकारिताको क्षेत्रमा जे-जस्ता अप्ठयारा-सप्ठयारा छन्, तीसँग जुझ्दै, भिज्दै टिकिरिहनु महत्वपूर्ण सङ्कल्प र अथक साधनाको प्रतिफल हो । साहित्यिक पत्रकारिताको गरिमामय इतिहास निर्माण पनि हो । यस्तो अवसर विरलैले प्राप्त गर्दछौँ । यो सबैका लागि गौरव र प्रेरणाको अनुपम उदाहरण हो । अभिव्यक्ति द्वैमासिकले अग्रजको सम्मान, समकालीनसँग सहकार्य र अनुज पुस्तालाई उत्प्रेरणा प्रदान गरिरहेको छ । यो आफैँमा अनुकरणीय र स्तुत्य योगदान हो ।

तपाईंद्वारा रचित महापुरुष (उपन्यास २०२८), दिवास्वप्न (उपन्यास, २०२९), पीपलको बोटमुनि (कथासङ्ग्रह, २०३९), एकान्तका आफन्तहरु (कथा सङ्ग्रह २०५५)जस्ता गहन आख्यानको अध्ययन गर्ने अवसर पाएका छौँ । यसले हामीलाई सिर्जनशील हुन उत्प्रेरित गरिरहेको छ । यहाँले ८२ वर्षको उमेरमा पनि युवा जोश र जाँगरका साथ नेपाल साहित्यिक पत्रकार सङ्घको अध्यक्ष रही नेतृत्व प्रदान गरिरहनुभएको छ । साथै, एक्लो प्रयत्नले अभिव्यक्ति द्वैमासिकको २०० पूर्णाङ्क प्रकाशित हुन लागेकोमा हर्षित छौँ । यस सुखद् अवसरमा अभिव्यक्ति परिवारलाई सफलताको शुभकामना व्यक्त गर्दछौँ ।

**किशोर श्रेष्ठ**
*कार्यवाहक अध्यक्ष*
प्रेस काउन्सिल नेपाल

# प्रेरणा र हौसलाका मुहान नगेन्द्रराज शर्मा

शंकर भारती
उपन्यासकार

'अभिव्यक्ति' द्वैमासिक साहित्यिक पत्रिकाको २०० औं अंक प्रकाशित हुने जानकारी पाउँदा मेरो मन हर्षले अत्यन्त गद् गद् भएको छ। हर्षविभोर नहुनु पनि कसरी ? नेपाली साहित्यका मूर्धन्य व्यक्तित्व बरिष्ठ साहित्यकार एवं पत्रकार नगेन्द्रराज शर्माद्वारा नेपाली भाषाको विकास, विस्तार र श्रीबृद्धि गर्ने उद्देश्यले २०२७ सालमा सुरु गर्नुभएको 'अभिव्यक्ति' साहित्यिक पत्रिका आजसम्म पनि अविच्छिन्न रूपमा प्रकासित भई ५०औं वर्षमा प्रवेश गरेको छ र अभिव्यक्तिको २००औं अंक विशेषांकका रूपमा प्रकासित हुँदैछ । यस अवसरमा वरिष्ठ साहित्यकार एवं साहित्यिक पत्रकार नगेन्द्रराज शर्मा दाजुलाई शुभकामना दिन पाउँदा मैले आफूलाई धेरै भाग्यशाली सम्झेको छु। यस्तो अवसर थोरैले मात्र पाउँछन् । त्यो अवसर मैले पाएकोमा हर्ष र खुशीको सीमा नै नभएको म महशुस गर्दैछु ।

आज भन्दा ५० वर्ष अघि 'अभिव्यक्ति'को प्रकाशन सुरु भयो । त्यो समयमा म ९, १० वर्षको बालखै थिएँ। त्यसबेला मलाई साहित्यको स समेत थाहा थिएन । त्यहि फुच्चे आज 'अर्को जुनीमा', 'प्रेम तपस्या', 'अनुपम देवता', 'महापुरुषको सन्तान', 'अग्नि परीक्षा' र ठूलो पर्दाको सिनेमा 'अनाथ' जस्ता सामाजिक उपन्यास तथा सिनेमा लेखेर साहित्यकारको दर्जामा गनिन आइपुगेँ ।

यो ५० वर्षको अन्तरालमा यस्ता साहित्यिक दैनिक पत्रिका देखि लिएर मासिक द्वैमासिक, त्रैमासिक, अर्ध वार्षिक आदि हजारौं हजार पत्रिका प्रकासित भए– गनीसाध्य छैन। तर ती सबै कहाँ छन् कता छन् कहिले प्रकासित भए अनि कहिले बन्द भए लेखा जोखा असम्भब छ। कहिले, कहाँ, किन र कुन उद्देश्यले पत्रिकाहरू प्रकाशित भए र के उद्देश्य पूरा भएर ती बन्द भए कसैलाई थाहा छैन। भुसुना सरी जन्मिए र भुसुना सरी नै मरेर गए ।

त्यस्तो जटिल र संघर्षपूर्ण मार्गमा आफ्नै एकल सामर्थ्य, संघर्ष तथा अथक र अबिरल प्रयासले विभिन्न जटिल अवस्था र संघर्षका विभिन्न जङ्घारहरू पार गर्दै आज आफ्नै उमेर ८२ वर्षको अवस्थामा पनि जवान सरह त्यो जाँघर त्यो ऊर्जा कायम गर्दै अभिछिन्न रूपमा २०० औं अंक समेत् प्रकाशित गर्न सफल वरिष्ठ साहित्यकार एवं पत्रकार नगेन्द्रराज शर्मा दाजुमा साहित्यमा बामे सर्दै गर्दाको यो भाइ शंकर भारतीको हार्दिक नमन छ । उहाँ नेपाली साहित्य र पत्रकारिता क्षेत्रका व्यक्तिहरूका लागि प्रेरणा, ऊर्जा, र साहसको मुहान हुनुहुन्छ ।

उहाँ साहित्य र साहित्यिक पत्रकारिताको विकास र विस्तारको लागि कहिले नहार्ने योद्धा, अथक प्रयास र प्रयत्नका प्रतिमूर्ति हुनुहुन्छ ।

नेपालमा रहेका नेपाली भाषी मात्र नभई विश्वभर छरिएर रहेका

सम्पूर्ण नेपाली भाषीहरू नगेन्द्रराज शर्माको ऋणी भएको मैले महसुस गरेको छु। उहाँ र उहाँको पत्रिका 'अभिव्यक्ति' द्वारा निर्माण गरिएका साहित्यकारहरूले गरेको योगदानले नेपाली भाषा साहित्यको नेपालमा मात्र नभई विश्वभर दिनानुदिन श्रीबृद्धि भैरहेको हामी स्पष्ट देखि रहेका छौं । उहाँले साहित्य र पत्रकारितामा पु¥याउनु भएको योगदान, प्रयास, संघर्ष र सफलता नेपाली भाषीहरूका लागि एउटा कहिल्यै भुल्न नसकिने अजर र अमर पाठ भएको छ। दाजु नगेन्द्रराज शर्मासँग स्वदेशका थुप्रै जिल्लाहरूमा पटक पटक भ्रमण गर्ने सौभाग्य/अवसर मैले पाएको छु । ती क्षणहरू मेरो जिन्दगीका अविस्मरणीय क्षणका रूपमा रहिरहने छन् ।

अन्त्यमा, यस्ता मूर्धन्य व्यक्ति दाजु नगेन्द्रराज शर्माले प्रकाशन गर्दै आउनु भएको 'अभिव्यक्ति' २००औं मात्र नभई ३००औं, ४००औं ५००औं अंक प्रकाशित भएको नेपाली जनताले सुन्न र देख्न पाइरहुन् र उहाँले पनि सुनाउन र देखाउन पाइरहनुहोस् । उहाँमा शताब्दियौं सम्म पनि यो जाँगर यो ऊर्जा रहिरहोस् र उहाँको क्षत्र छाँयामा सम्पूर्ण नेपालीहरू रम्न र रमाई रहन शताब्दिऔं सम्म पाइरहुन् । तसर्थ दाजु नगेन्द्रराज शर्मा स्वस्थ र चिरायु हुनुहोस् भन्ने मंगलमय शुभकामना व्यक्त गर्दै म भाइ शंकर उहाँलाई नमन गर्दै कलम यहीं रोक्दछु ।

ॐॐ

## १६०/कार्की किचेन ०६९ ३ ७

बाबु त्रिपाठी– हामीले पनीर पकौडा मगाएको, त्यो केटाले अर्कै थोक ल्याएछ कि क्या हो ! पकौडामा पनीर त देखिंदैन नि ?

मदनकुमार कार्की (प्रो. कार्की किचेन)– के कुरा गऱ्या ? त्यो पनीर पकौडा नै हो । तपाईंले गुलाव जामुन खाँदा त्यसमा कहिल्यै गुलाफ देख्नुभा'छ ?

बाबु त्रिपाठी– ट्वाँ ऽऽऽ

ॐ

मनोज न्यौपाने– (बिल हेरेर एकछिन घोरिएपछि) आज भोड्का नक्कली परेछ कि क्याहो ? टाउको दुख्न थाल्यो ।

मदनकुमार कार्की– भोडकाले हैन, बिलले टाउको दुखाउँछ । बिल देखेपछि धेरैको टाउको दुख्न थाल्छ– तपाईंलाई मात्तै होइन, अरूहरूलाई पनि यस्तो हुन्छ कहिलेकाहीं ।

मनोज न्यौपाने– पहिले त कैल्यै यस्तो भा'थेन ।

मदनकुमार कार्की– पहिले तपाईंले बिल पनि त कहिल्यै हेर्नुभाथेन नि, सधैं अर्कैले तिर्थ्यो– होइन र ?

मनोज न्यौपाने– ट्वाँ ऽऽऽ...

ॐॐ

का.जि.प्र.का.द.नं.४३/०५८/५९

भाषा-साहित्यको श्रीवृद्धिमा समर्पित

# कौशिकी द्वैमासिक

मिति : २०७६/२/७

नगेन्द्रराज शर्माज्यू,
प्रधान सम्पादक
अभिव्यक्ति द्वैमासिक ।

विषय : शुभकामना सम्बन्धमा ।

अभिव्यक्ति साहित्यिक द्वैमासिक २०२७ साल माघ ६ गते दर्ता भई नियमित रूपमा प्रकाशित हुँदै आएको पत्रिका हो । यस पत्रिको म नियमित पाठक पनि हुँ ।

५० औं वर्षगाँठमा अभिव्यक्ति हिँडिरहेको छ । अहिले अभिव्यक्तिको २०० औं अङ्क प्रकाशित हुन लाग्दैछ । यस सुखद अवसरमा म गौरवान्वित भएको छु । २०२७ देखि २०७६ सालसम्म नियमित प्रकाशित हुनुमा तपाईं वरिष्ठ सम्पादक तथा साहित्यकार नगेन्द्रराज शर्माको अतुलनीय योगदान रहेको छ ।

दाई तपाईका उपन्यास र कथाले जसरी पाठकलाई तान्ने सामर्थ्य राख्दछन् । त्यसैगरी अभिव्यक्तिले पनि एउटा ठूलो विश्वास जितेको छ । मलाई पनि अभिव्यक्तिजस्तै पत्रिकाले सर्जक हुन सिकायो । 'कौशिकी' साहित्यिक द्वैमासिक प्रकाशन गर्न प्रेरित गर्‍यो । तसर्थ म तपाईलाई अभिनन्दन गर्दछु । ८२ वर्षको उमेरमा पनि तपाईको सिर्जनशील सक्रियताले नयाँ पुस्तालाई थप प्रेरित गरिरहेको छ । जुन एक्लो प्रयासमा २००औं अङ्क प्रकाशन गर्न लाग्नु आफैंमा चट्टान फुटाएर माटो बनाउनुजस्तै कठिन कार्य हो ।

मेरो विचारमा साहित्यिक पत्रकारिताको इतिहासमा अभिव्यक्ति आफैँमा एउटा युग हो । जसमा सम्प्रेषित साहित्यिक सिर्जना प्रायः स्तरीय र पठनीय रहेको पाएको छु । मैले तपाईलाई साहित्यिक पत्रकारिताको शिखर पुरूषको रूपमा लिएको छु । तसर्थ अभिव्यक्ति अनवरत प्रकाशित भइरहोस् यही सफलताको कामना गर्दछु ।

**चेतनाथ धमला**
बोर्ड सदस्य
प्रेस काउन्सिल नेपाल
तथा
प्रधान सम्पादक कौशिकी द्वैमासिक

# अन्तर्मनबाट हार्दिक शुभकामना

विधान आचार्य
अध्यक्ष, नेपाल स्रष्टा समाज

नेपाली साहित्यको उन्नयन र नेपाल तथा नेपाल बाहिरसम्म विस्तारमा 'अभिव्यक्ति'को आफ्नो विशिष्ट भूमिका छ । हामीमध्ये धेरै अभिव्यक्तिले जन्माएका साहित्याकाशका नक्षत्र हौँ भने कतिको जन्म अन्य क्षेत्र र कालखण्डमा भए पनि अभिव्यक्तिमा आएर आफ्नो सिर्जनाको सफलता पाएका छौँ । निजी क्षेत्रबाट निरन्तर र स्वस्थरूपमा प्रकाशित 'अभिव्यक्ति' धेरैका निम्ति आफूलाई अभिव्यक्त गर्ने माध्यम बनेको छ । यसको निरन्तरतासित आफ्नो पनि साहित्यिक स्वार्थ गाँसिएको छ भन्नुमा मलाई गर्व छ । दुई सय अङ्कसम्मको यसको यात्राको एक साक्षीका नाताले म र मजस्ता धेरैको साहित्यिक आधारभूमि बनेको अभिव्यक्ति चिरस्थायी बनोस्, अन्तर्मनबाट हार्दिक शुभकामना !!

ശ്ശ

# सम्पादकीय

नगेन्द्रराज शर्मा
अभिव्यक्ति परिसर, पम्फु मार्ग, गौरीनगर, चाबेल- ८

दिन, हप्ता र माहना विस्तारै बिते पनि वर्षचाहिं छिट्टै बित्दोरहेछ । अस्तिजस्तो लाग्छ अभिव्यक्ति सुरु गरेको– पचास वर्ष लागिसकेकोछ । अभिव्यक्तिका पनि १९९अंक प्रकाशित भइसकेकाछन् ।

२००औं अङ्क अलि मोटै निकालौं भन्ने लाग्यो तर त्यसका लागि आवश्यक स्तरीय रचना जुटाउन गर्नुपर्ने मिहिनेत र दौडधुप आदिको कल्पना गर्दा अलिक दुविधामा परें– आँट आएन । अनि अभिव्यक्तिकै पुराना अङ्कहरूबाट केही कविता, कथा, लेख-निबन्ध आदि सबै किसिमका सामग्रीहरू तथा विभिन्न स्तम्भहरू समेत् समावेश गरेर २००औं अङ्क तयार गर्ने विचार गरें । यसो गर्दा, अभिव्यक्तिका ती सहयोगी श्रष्टाहरूको सम्मान गर्न पाएको अनुभूति भयो मलाई । अनि सामग्रीअरू चयनगर्न थालें ।

मैले साना रचनालाई प्राथमिकता दिएँ– मुक्तक, गीत, गजल, छोटा कविता अनि अन्य सामगृ पनि सकभर स-सानै खोजें । केही राम्रा रोंजें, केही हाम्रा पनि रोजें, अनि केही बीचबीचबाट अर्थात् र्‍याण्डम स्यांप्लिङका आधारमा पनि छानें । यसरी, साबिकभन्दा निकै मोटो त बनाएँ । तरपनि सन्तुष्ट हुन सकिन किनभने यहाँ छुट्नु नहुने धेरै स्रष्टा अझै छुटेका छन् ।

विषय-सूचीमा स्रष्टाहरूका नाम अकारादि क्रममा राखिएका छन् । तर कवितामा राष्ट्रकवि माधवप्रसाद घिमिरे, लेख-निबन्धमा मदनमणि दीक्षित, कथामा ध्रुवचन्द्र गौतम र शुभकामना मन्तव्यमा कुलपति गङ्गाप्रसाद उप्रेतीका नामहरू शीर्षस्थानमा राखेको छु– सम्मानार्थ ।

अभिव्यक्तिमा प्रकाशित सामान्य अनुरोधका आधारमा थुप्रै शुभकामना, मन्तव्यहरू प्राप्त भए। प्राप्त सबै शुभकामनाहरू पनि सादर समावेश गरेको छु। प्राय: सबैमा अभिव्यक्तिको/मेरो बढी नै प्रशंसा छ– यो उहाँहरूको सदासयता हो– उदारता हो। तिनमा अभिव्यक्त स्नेह, सद्भाव र सम्मानका शब्दावलीले मलाई भावविह्वल बनाएका छन्। त्यसका लागि सबै आदरणीय मित्रहरूप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछु। र साथै, त्यस्तो प्रशंसालायक म छैन भन्ने कुरा पनि विनम्रतापूर्वक अवगत गराउँछु।

अभिव्यक्तिसँगको यात्राका क्रममा मैले व्यहोरेका कथा व्यथा, सुख दुख वा भन्नुपर्ने नपर्ने धेरै कुरा अभिव्यक्तिका विभिन्न सम्पादकीयहरूबाट भनिसकेको छु। यसै अङ्कमा पनि पुराना छवटा सम्पादकीय छापिएका छन्– तिनै पर्याप्त छन्। अत: अब भन्नुपर्ने विशेष केही छैन।

र पनि, केही भन्ने हो भने– अभिव्यक्तिको भविष्यका बारेमा केही भन्नु उपयुक्त होला। म बयासी वर्ष लागिसकें। अब मैले अभिव्यक्ति सञ्चालनको कामबाट अवकाश लिनेबेला भएको छ। र मेरो अवकाशपछि अभिव्यक्ति चलाउने कसले भन्नेतर्फ पनि सोच्नु परेको छ।

आज अभिव्यक्ति आफ्नो खर्च लगभग आफैं बेहोर्न सक्ने अवस्थामा छ। सानै भएपनि एउटा अक्षय कोषको व्यवस्था गरिएको छ। त्यसको ब्याजबाट आवश्यक जनशक्ति उपलब्ध गर्न केही सहयोग पुग्नेछ।

अहिले मेरो दृष्टिमा 'उपलब्धि बहुउद्देश्यीय सहकारी संस्था' छ। सहकारी भएर पनि यो संस्था साहित्यिक कृयाकलापमा पनि सकृय छ।

यो संस्था २०६५मा बचत तथा ऋण सहकारी संस्थाका रूपमा स्थापित भएको हो। अहिले बहुउद्देश्यीय संस्थाका रूपमा कार्य गर्दै आएको छ। आफ्नो कार्यगत विकासका लागि यसले विभिन्न उपसमिति गठन गरेको छ। तिनमा 'साहित्य विकास उपसमिति' पनि छ। त्यसमा धेरै साहित्यकारहरूको सहभागिता छ। सञ्चालक समितिमा पनि साहित्यकार/साहित्यप्रेमीहरू छन्। साहित्य विकास उपसमितिले विभिन्न साहित्यक कार्यक्रम सम्पन्न गर्ने गरेको छ। प्रत्येक वर्ष वैशाख २५ गते 'उपलब्धि आख्यान दिवस' मनाउने गरेको छ। त्यसदिन आख्यानसम्बन्धी कार्यपत्र प्रस्तुति, पुस्तक विमोचन आदिका साथै 'उपलब्धि आख्यान सम्मान' पनि प्रदान गरिन्छ। साहित्यक पुस्तकहरूको प्रकाशन र वितरणको काम पनि गर्ने गरेको छ। अनि, 'उपलब्धि' त्रैमासिक साहित्यिक पत्रिका पनि प्रकाशन गर्दै आएको छ।

अत: 'उपलब्धि बहुउद्देश्यीय सहकारी संस्था' र 'अभिव्यक्ति परिवार'को सहकार्यमा 'अभिव्यक्ति' सुचारू रूपले चल्न सक्छ भन्ने मैले ठानेको छु। यस विषयमा उपलब्धिका पदाधिकारीहरू पनि सहमत हुनुहुन्छ। बस्, अहिलेलाई यत्ति।

सबैमा नयाँ वर्षको हार्दिक शुभकामना।

ƠƠ